# विषयसूची

## परिच्छेद - पाँच

## शास्त्र र शास्त्रीय सिद्धान्तमा श्रीगणेश



## परिच्छेद - छ

## नेपाली जनजीवनमा श्रीगणेश



## परिच्छेद - सात

## गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्तिहरू

## परिच्छेद - आठ
## निष्कर्ष र उपसंहार



## श्रीगणेश-पूजाविधिखण्ड



## माहात्म्यखण्ड



## श्रीगणेशपुराणम्
## उपासनाखण्डः

## क्रीडाखण्ड

**परिशिष्ट - एक**

**गणेशमन्दिर, मूर्ति एवं तीर्थपरिचय सन्दर्भ**



**परिशिष्ट - दुई**



**परिशिष्ट - तीन**

**पूजाविधिसन्दर्भ**



**परिच्छेद - चार**

**यन्त्रादि सहस्रनामान्त-सन्दर्भ**



**परिशिष्ट - पाँच**

**गणेशगीतासन्दर्भ**



**परिशिष्ट - छ**

**गणेशस्तोत्रसन्दर्भ**

श्रीगणेशपुराण

# भूमिकाखण्ड

श्रीगणेशपुराणको आलोकमा गणेशतत्त्व,
अवतरण, स्वरूप-सौन्दर्य एवं उपासनाका
अनेक रूप-रङ्ग र श्रीगणेशको अनुशंसा
एवं विश्वव्यापी प्रभावका
विविध प्रसङ्ग

ॐ

सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः ।
लम्बोदरश्च विकटो विघ्ननाशो गणाधिपः ।।

धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः ।
द्वादशैतानि नामानि यः पठेच्छृणुयादपि ।।

विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा ।
सङ्ग्रामे सङ्कटे चैव विघ्नस्तस्य न जायते ।।

शुक्लाम्बरधरं देवं शशिवर्णं चतुर्भुजम् ।
प्रसन्नवदनं ध्यायेत् सर्वविघ्नोपशान्तये ।।

- ग.पु. १/१२/३६-३९

ॐ

## परिच्छेद - एक

# स्वरूप, सार, सन्महिमा, समानता, सौन्दर्य एवं सम्बन्धको आलोकमा श्रीगणेशपुराण

**गणेशो वः पायात् प्रणमत गणेशं जगदिदम्**
**गणेशेन त्रातं नम इह गणेशाय महते ।**
**गणेशान्नास्त्यन्यत् त्रिजगति गणेशस्य महिमा**
**गणेशे मच्चित्तं निवसतु गणेश ! त्वमव माम् ।।**

परब्रह्मरूप श्रीगणेश निराकार एवं साकार परमात्मा हुनुहुन्छ । निराकार अवस्थामा ॐकारवाच्य हुनुहुन्छ भने साकार अवस्थामा गौरी-शङ्करका प्राणप्रिय पुत्र बन्नुहुन्छ । धर्मको रक्षा र अधर्मको विनाशका लागि विभिन्न युगमा विभिन्न माता-पितालाई कृतकृत्य बनाउँदै अवतार ग्रहण गर्नुहुने श्रीगणेश एकदन्त, गजानन, शूर्पकर्ण, लम्बोदर आदि स्वरूपज्ञापक नामबाट प्रसिद्ध हुनुहुन्छ । अरुणाभ, अरुणाम्बर र मूषकवाहन श्रीगणेश अपूर्व सौन्दर्यका पर्याय बनेर रहनुहुन्छ । मङ्गलमूर्ति श्रीगणेश नामस्मरण, ध्यान, जप, आराधना र प्रार्थनाबाट प्रसन्न हुनुहुन्छ । उहाँका सच्चा उपासकहरू उहाँको अनुकम्पाबाट विघ्न एवं विपत्ति निवारण गर्दै धर्म, अर्थ, काम र मोक्षनामक पुरुषार्थ प्राप्त गर्न सफल हुन्छन् भन्ने कुरा श्रीगणेशपुराण र अन्य गणेशपरक वाङ्मयमा राम्ररी खुलाइएको छ । भूमिकाभागको यस परिच्छेदमा श्रीगणेशको अद्भुत योगैश्वर्य, रोमाञ्चक बाललीला र अभ्युदय एवं निश्रेयसका साधक उपासनाका सरणि, सोपान र रहस्य अवगत गराई सुपात्र पाठकलाई सत्यं शिवं सुन्दरम्को गन्तव्यसँग परिचित गराउने श्रीगणेशपुराणका स्वरूप, सार, सन्महिमा, सादृश्य प्रसङ्ग, साहित्यिक सौन्दर्य उजागर गर्दै श्रीगणेशपुराण र हिमाली सुन्दर राष्ट्र नेपालको सुमधुर सम्बन्धको विषयमा पनि विमर्श गरिनेछ ।

## १.१ श्री गणेशपुराणको स्वरूप

श्रीगणेशको उपासना, लीला र महिमा प्रतिपादन गर्ने वैनायक सम्प्रदायको उच्च आदर्शरूप आर्षग्रन्थ श्रीगणेशपुराण उपासनाखण्ड र क्रीडाखण्ड गरी दुई भागमा विभाजित छ । प्रथम भाग उपासनाखण्डमा ९२ अध्याय र दोस्रो भाग क्रीडाखण्डमा १५५ अध्याय रहेका छन् । यसलाई द्वादशसाहस्री संहिता भनिन्छ । यसअनुसार गणेशपुराणमा १२ हजार श्लोक हुनुपर्ने देखिन्छ तर विनायक रायद्वारा गोपालनारायण कम्पनी, मुम्बईबाट सन् १९९२ मा प्रकाशित गणेशपुराण र डा. रामकरण शर्माको सम्पादकत्वमा नाग प्रकाशन, दिल्लीबाट सन् १९९३ मा प्रकाशित गणेशपुराणमा पनि गणना गर्दा ११ हजारभन्दा बढी श्लोक पाइन्छन् तर १२ हजार श्लोकसंख्या पुग्दैन । मार्कण्डेयपुराणअन्तर्गत दुर्गामाहात्म्य दुर्गा सप्तशतीका नामबाट विश्वमा प्रसिद्ध छ । त्यहाँ पनि श्लोकसंख्या ७ सय पुगेको देखिँदैन । शक्तितत्त्वका मर्मज्ञ विद्वान्हरूले श्लोक फुटाएर अथवा उवाच सन्दर्भलाई जोडेर भए पनि ७ सय सङ्ख्या पुऱ्याएको देखिन्छ । यसरी नै गणेशपुराणमा पनि गणेशतत्त्वका विशेषज्ञहरूले १२ हजार श्लोक संख्या पुऱ्याएको हुनुपर्छ । अथवा लामो कालक्रमका कारण श्लोक सङ्ख्या यताउति भएको हुन सक्छ । ।[१]

श्रीगणेशपुराणको गणना प्रमुख उपपुराणहरूमा हुन्छ । कूर्मपराणको सूचीमा अठारौं भार्गव उपपुराणको नामबाट

---
[१] डा. रामकरण शर्मा, गणेशपुराण (भूमिका भाग), नागेशप्रकाशन, दिल्ली, सन् १९९३ ।

यसको उल्लेख गरिएको छ –

**आद्यं सनत्कुमारोक्तं नारसिंहमतः परम् । तृतीयं स्कान्दमुद्दिष्टं कुमारेण तु भाषितम् ।।**
**चतुर्थं शिवधर्माख्यं साक्षान्नन्दीशभाषितम् । दुर्वाससोक्तमाश्चर्यं नारदीयमतः परम् ।।**
**कापिलं वामनं चैव तथैवोशनसेरितम् । ब्रह्माण्डं वारुणं चैव कालिकाह्वयमेव च ।।**
**माहेश्वरं तथा साम्बं सौरं सर्वार्थसञ्चयम् । पराशरोक्तं मारीचं तथैव भार्गवाह्वयम् ।।[२]**

उक्त सूचीअनुसार उपपुराणहरू यस प्रकार छन् – सनत्कुमार, नारसिंह, स्कान्द, शिवधर्मोत्तर, दौर्वसस, नारदीय, कापिल, वामन, औशनस, ब्रह्माण्ड, वारुण, कालिका, माहेश्वर, साम्ब, सौर, पाराशर, मारीच र भार्गव । यसरी नै स्कन्द, ब्रह्मवैवर्त आदि पुराण र आनन्दरामायणमा पनि उपपुराणहरूको नामनिर्देश गरिएको छ । उक्त १८ उपपुराणहरूमध्ये अन्तिम भार्गव उपपुराणलाई नै गणेशपुराण मानिएको छ । वास्तवमा भृगु ऋषिले राजा सोमकान्तलाई उपदेश गरेको गणेशपुराण लोकमा भार्गवपुराणको नामबाट प्रसिद्ध भयो । पछि आएर गणेशपुराण अथवा विनायकपुराणका नामबाट पनि यसको प्रसिद्धि थपिँदै गयो ।

महर्षि वाल्मीकिद्वारा प्रणीत आनन्दरामायणमा अठार उपपुराणहरूको नामनिर्देशन गर्ने क्रममा श्रीगणेशपुराणको उल्लेख विनायकपुराणका नामबाट भएको छ –

**विष्णुधर्मोत्तरं शैवं बृहन्नारदमेव च । भगवतीपुराणञ्च लघुनारदमेव च ।।**
**भविष्यत्पर्वषष्ठं स्यात् तन्त्रं भागवतं तथा । अष्टमं नारसिंहं स्यात् पुराणं रेणुकाभिदम् ।।**
**दशमं तत्त्वसारं स्याद् वायुप्रोक्तं तथैव च । नन्दिप्रोक्तं द्वादशं स्यात् तथा पाशुपताभिधम् ।।**
**यमनारदसंवादस्तथा हंसपुराणकम् । विनायकपुराणञ्च बृहद्ब्रह्माण्डमेव च ।।**
**पुण्यं विष्णुरहस्यं स्यादिति ह्यष्टदशानि वै । एतान्युपपुराणानि पुराणार्धफलानि च ।।[३]**

आनन्दरामायणको सूचीअनुसार विष्णुधर्मोत्तर, शैव, बृहन्नारद, भगवतीपुराण, लघुनारद, भविष्यत्पुराणको षष्ठपर्व, भागवततन्त्र, नारसिंह, रेणुकापुराण, तत्त्वसार, वायुपुराण, नन्दिकेश्वरपुराण, पाशुपतपुराण, यमनारदसंवाद, हंसपुराण, विनायकपुराण, बृहद्ब्रह्माण्डपुराण र विष्णुरहस्य नामक उपपुराण रहेका छन् । तीमध्ये सोह्रौं उपपुराण विनायक नामबाट प्रसिद्ध छ ।

वेदार्थलाई सर्वसाधारणका निमित्त बोधगम्य बनाउन महापुराणहरूको रचना गरियो । महापुराणहरूलाई वेदझैं प्राचीन मानिएको छ । महापुराणहरूमा छुटेका विषयलाई पूर्ण गर्न सापेक्षरूपमा र स्वतन्त्ररूपमा पनि उपपुराणहरूको रचना गरिएको पाइन्छ । आधुनिक विद्वान्हरू भारतमा गुप्तशासकहरूको शासनकालमा उपपुराणहरूको रचना भएको कुरा बताउँछन् । हाजरा आदि आधुनिक विद्वान्हरूले एघारौं शताब्दी र चौधौं शताब्दीको बीचमा गणेशपुराणको रचना भएको भनेका छन् ।[४] वीरमित्रोदयका रचनाकार मित्रमिश्रले महर्षि याज्ञवल्क्यलाई सम्पूर्ण उपपुराणहरूको ज्ञान थियो भन्ने कुरा बताएका छन् ।[५] यसबाट स्मृतिकालमा पनि उपपुराणको उपस्थिति प्रमाणित हुन्छ । कूर्मपुराण र स्कान्दपुराणको

२. कूर्मपुराण, पूर्वभाग, १/१७-२० ।
३. आनन्दरामायण, मनोहरकाण्ड ८/७३-७७ ।
४. डा. रामकरण शर्मा, पूर्ववत् ।
५. वीरमित्रोदय, प्रथमकाण्ड ।

सूतसंहितामा ऋषिहरूले व्यासका मुखबाट पुराणहरूको श्रवण गरेपछि उपपुराणहरूको लोकमा प्रवचन र विस्तार गरेका हुन् भनिएको छ ।[६] मत्स्यपुराणमा उपपुराणहरूलाई पुराणहरूका दोस्रा रूप अथवा पुराणहरूबाट उत्पन्न रचना मानिएको छ ।[७]

वैष्णव, सौर, शैव, शाक्त र गाणपत्य सम्प्रदायबाट प्रभावित ती उपपुराणहरूमा तत् तत् सम्प्रदायका आचार - विचार, व्यवहार, उपासना, वर्णाश्रमधर्म आदिको वर्णन गरिएको पाइन्छ । तिनमा समाज, संस्कृति, इतिहास, धर्म, साहित्य एवं दर्शनसम्बन्धी विचारहरू पनि रहेका छन् । जुन देवतासँग सम्बद्ध उपपुराण छन् तिनमा ती देवताको आराधनापद्धति व्यक्त भएको हुन्छ र तदनुसारका योग, तप, व्रत, पूजा, तीर्थमहिमा र देवताहरूको वर्णन गरिएको पाइन्छ । श्रीगणेशसम्बन्धी दुइटामात्र पुराण उपलब्ध छन् - श्रीगणेशपुराण र मुद्गलपुराण । यी दुवै उपपुराणहरूमा श्रीगणेशको अवतारलीलाको विशद चर्चाका साथ श्रीगणेशको अनुपम महिमा प्रकट गरिएको छ । गणेशपुराणमा श्रीगणेशको उपासनाका अनेक सरणिहरू प्रकाशित छन् र यो पुराण गणेशसहस्रनाम र गणेशगीताजस्ता महत्त्वपूर्ण विषयद्वारा अनुप्राणित छ ।

## १.२ श्रीगणेशपुराणको सार

श्रीगणेशपुराण नैमिषारण्य क्षेत्रमा भएको सूत र शौनकादि ऋषिहरूको संवादबाट आरम्भ हुन्छ । शौनक आदि ऋषिहरूले श्रीसूतजीबाट १८ महापुराणहरूको श्रवण गरेपछि गणेशपुराणको श्रवण गर्ने इच्छा प्रकट गरे । शौनक आदि ऋषिहरूको तीव्र जिज्ञासा रहेको बुझेर श्रीसूतले तिनीहरूलाई यो पुराण सुनाएका थिए । गणेशपुराणको प्रवचन गर्ने मनस्वीहरूको सूचीमा ब्रह्मा, व्यास र भृगुका नाम प्रमुख छन् । यस पुराणमा अनेकौं उपासनाप्रसङ्ग र कथाप्रसङ्ग रहे पनि केन्द्रीय पात्र भृगु र सोमकान्त हुन् । कुष्ठरोगबाट पीडित राजा सोमकान्तलाई भृगु ऋषिले गणेशपुराण सुनाएपछि ती राजा रोगमुक्त भई गणेशधाममा प्राप्त भएका थिए । यस प्रसङ्गमा ब्रह्माजीले लोमशलाई र मूक ऋषिले राजा संवरणलाई गणेशपुराण सुनाएको तथ्य पनि स्मरणीय छ ।

### क ) उपासना खण्डको विषयवस्तु

**श्रीविघ्नेशपुराणसारमुदितं व्यासाय धात्रा पुरा,**
**तत्खण्डं प्रथमं महागणपतेश्चोपासनाख्यं यथा ।**
**संहर्तुं त्रिपुरं शिवेन गणपस्यादौ कृतं पूजनम्,**
**कर्तुं सृष्टिमिमां स्तुतः स विधिना व्यासेन बुद्ध्याप्तये ।।**
**सङ्क्षेपाच्च विनायकस्य च मनोः स्थानस्य तीर्थस्य वै,**
**दूर्वाणां महिमेति भक्तचरितं तत्पार्थिवस्यार्चनम् ।**
**तेभ्यो यैर्यदभीप्सितं गणपतिस्तत्तत्प्रतुष्टो ददौ,**
**ताः सर्वा न समर्थ एव कथितुं ब्रह्मा कुतो मानवः ।।**

---

६ आचार्य ऋषि गुरागाईं, उपपुराणहरूमा सदाचारको अवधारणा, गौरी, वर्ष ३, अङ्क ४, पूर्णाङ्क २६, २०६४ पौष, पृष्ठ २६ ।
७ पूर्ववत् ।

पुराणका रचयिता वेदव्यासले गणेशको स्मरणरूप मङ्गलाचरण नगर्नुहुँदा उहाँमा भ्रान्ति उत्पन्न भयो र ब्रह्माजीका सामु पुग्नुभयो । त्यसबेला ब्रह्माजीले व्यासलाई गणेशमन्त्रको उपदेश गर्नुभएको थियो । श्रीगणेशको आज्ञानुसार सदाशिवले त्रिपुरासुरको वध गर्न श्रीगणेशको आराधना गर्नुभयो । सृष्टिमा विघ्न आइपर्दा ब्रह्माजीले गणेशको स्तुति गर्नुभएको थियो । त्यसबेला तपस्या गर भन्ने आकाशवाणी भयो । ब्रह्माजीले तप गर्नुभएपछि गणेशको दर्शन पाउनुभयो। शङ्करले कुनै दिन महाविष्णुलाई गणेशमन्त्रको उपदेश दिनुभयो । महाविष्णुले पनि मन्त्रानुष्ठानपछि गणेशको दर्शन र वरदानसमेत प्राप्त गर्नुभयो ।

राजा भीमले कमला नामक रानीबाट दक्षनामक विरूप पुत्र पैदा गरे । विरूप दक्षले वनमा गई मुद्‌गल ऋषिको उपदेशअनुसार आराधना गरेर श्रीगणेशको दर्शन पाए । अहल्याको पतिव्रताधर्म भङ्ग गर्ने इन्द्रले पनि गौतम ऋषिको उपदेशअनुसार षडक्षर मन्त्रको जपबाट श्रीगणेशको दर्शन पाए । रुक्माङ्गदले श्रीगणेशको आराधनाबाट दिव्यलोक प्राप्त गरे । यी उपासनाखण्डका मुख्य विषय हुन् ।

गृत्समदको अद्‌भुत तपस्या र गणेशदर्शन, त्रिपुरासुरको उत्पत्ति, शङ्करद्वारा श्रीगणेशको आराधना एवं सहस्रनामद्वारा स्तुतिजस्ता उपासनाखण्डमा निरूपित महिमामय विषय हुन् । पार्वतीद्वारा पार्थिवगणेशको पूजन, पार्थिव पूजाको प्रभाव, शिव-पार्वतीको मिलन, भ्रुशुण्डीको महिमा, सङ्कष्टचतुर्थीव्रत, दूर्वामहिमा, मयूरेशको महिमाजस्ता विषयका साथै यस खण्डमा स्कन्दको उत्पत्ति, स्कन्दलाई वरदचतुर्थीव्रतद्वारा श्रीगणेशको आराधना गर्न उपदेश एवं वरदचतुर्थीव्रतविधि निरूपण र लक्ष्यविनायकको उत्पत्तिजस्ता विषय पनि महत्त्वपूर्ण छन् । कामदेवद्वारा गणेशको आराधना गरिँदा गणेशले वरदान दिएको प्रसङ्ग र शेषनागद्वारा गणेशको आराधना गरिएका प्रसङ्ग पनि महत्त्वपूर्ण रहेका छन् । उक्त विषयहरूका साथै उपासनाखण्डको अन्तमा निम्नानुसार गणेशका बाह्र नाममन्त्रहरूको महिमा प्रकाशन गरिएको छ –

**सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः । लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः ।।**
**धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः । द्वादशैतानि नामानि यः पठेत् शृणुयादपि ।।**
**विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा । सङ्ग्रामे सङ्कटे चैव विघ्नस्तस्य न जायते ।।**[८]

## ख ) क्रीडाखण्डको विषयवस्तु

**क्रीडाकाण्डमथो वदे कृतयुगे श्वेतच्छविः काश्यपः,**
**सिंहाङ्कः स विनायको दशभुजो भूत्वाथ काशीं ययौ ।**
**हत्वा तत्र नरान्तकं तदनुजं देवान्तकं दानवम्,**
**त्रेतायां शिवनन्दनो रसभुजो जातो मयूरध्वजः ।।**
**हत्वा तं कमलासुरं च सगणं सिन्धुं महादैत्यपम्,**
**पश्चात् सिद्धिमती सुते कमलजस्तस्मै च ज्ञानं ददौ ।**
**द्वापारे तु गजाननो युगभुजो गौरीसुतः सिन्दुरम्,**
**सम्मर्द्य स्वकरेण तं निजमुखे चाखुध्वजो लिप्तवान् ।।**

---

८. गणेशपुराण १/९२/३६–३७ ।

गीताया उपदेश एव हि कृतो राज्ञे वरेण्याय वै,
तुष्टायाथ च धूम्रकेतुरभिधो विप्रः सधर्मर्धिकः ।
अश्वाङ्को द्विभुजो सितो गणपतिः म्लेच्छान्तकः स्वर्गदः,
क्रीडाकाण्डमिदं गणस्य हरिणा प्रोक्तं विधात्रे पुरा ।।

क्रीडाखण्डमा देवान्तक र नरान्तक दानवहरूको उत्पात हुँदा धर्मको रक्षा र पापको विनाशका लागि कश्यपकी पत्नी अदितिको कोखबाट भगवान् गणेशको महोत्कट अवतार भएको वर्णन गरिएको छ । यस खण्डमा श्रीगणेशको दैत्यवधरूप क्रीडाले उत्कर्ष प्राप्त गरेको छ । भगवान् गणेश काशिराजका साथ काशी पुग्नुहुन्छ । त्यहाँ उहाँले कूप, कन्दर, अन्धकासुर, अम्भासुर, जम्भासुर आदि दैत्यहरूको वध गर्नुहुन्छ । दरिद्र भक्त शुक्ल ब्राह्मणका घरमा भोजन गरी तिनीहरूको उद्धार गर्नुहुन्छ । यसका साथै सनक र सनन्दनलाई दिव्यज्ञान प्रदान गर्नुहुन्छ ।

यस खण्डमा विविध कथाको माध्यमबाट शमी र मन्दारको महिमा व्यक्त गरिएको छ । यहाँ काशीका ढुण्ढिराज गणेश र सात आवरणमा रहेका छपन्न विनायकहरूको पनि महिमा व्यक्त गरिएको छ । यस खण्डमा गणेशलोकको वर्णनका साथै विनायक र नरान्तकको युद्ध वर्णन गरी नरान्तकलाई श्रीगणेशले विराट्रूप दर्शन गराउनुभएको प्रसङ्ग रहेको छ । देवान्तकमाथि नियन्त्रण गरेपछि भगवान् गणेश कश्यपाश्रमबाट स्वानन्दभुवनमा पाल्नुभएको विवरण पनि रहेको छ ।

दैत्यराज सिन्धुको उत्पत्ति, देवताहरूको पराजय र विष्णुको पराक्रम वर्णन गर्ने क्रममा श्रीगणेशको मयूरेश अवतारको वर्णन गरिएको छ । गृध्रासुर, बालासुर, व्योमासुर आदि दैत्यहरूको वधका साथै शलभासुर, शैलासुर आदिको वधको वर्णन पनि गरिएको छ । यसमा पार्वतीले विराट्रूपको दर्शन गर्नुभएको वर्णन र पार्वती एवं अदितिका बीचमा गणेशलाई लिएर भएको मानसिक द्वन्द्व पनि चित्रण गरिएको छ ।

मयूरेश गणेशको नागलोक यात्रा, भगासुरको वध, कमलासुरसँग संग्राम, ब्रह्माजीको गर्वहरणजस्ता विषयहरूको वर्णनका साथै बालगणेशका विनोदहरूको पनि यहाँ वर्णन गरिएको छ । मयूरेशको सेना र सिन्धुसेनाको युद्ध, कल-विकल आदि दैत्यहरूको वध र सिन्धुका पुत्रहरूको वधजस्ता विषयहरूको वर्णनका साथ सिन्धुको पराजय पनि देखाइएको छ । यसैगरी पर्यन्तमा सिन्धुको वध, श्रीगणेशको गण्डकीनगरमा प्रवेश, सिद्धि र बुद्धिका साथ मयूरेश भगवान्‌को विवाह र मयूरेशचरित्रको फलश्रुति पनि बताइएको छ । यस खण्डमा सिन्दूरासुरको उत्पत्ति, पार्वतीको कथा र गजाननको अवतारकथाको निरूपण गरिएको छ । यसमा श्रीगणेशले मूसालाई वाहन बनाउनुभएको सन्दर्भ खुलाउनुका साथै सिन्दूर दैत्यका साथ गणेशको युद्ध र सिन्दूरवधको बयान गरिएको छ ।

१३८ अध्यायदेखि १४८ अध्यायसम्मका एघार अध्यायमा रहेको गणेशगीतामा साङ्ख्ययोग, कर्मयोग, ब्रह्मार्पणयोग, योगावृत्तिको प्रशंसा, योगावृत्ति र बुद्धियोग, वीक्षणयोग, क्षेत्र-क्षेत्रज्ञ-विवेकयोग, उपदेशयोग, गुणत्रयकृतियोगजस्ता विषयहरूको निरूपण गरिएको छ । व्यासद्वारा श्रीगणेशको दर्शन, व्यासलाई गणेशद्वारा वरदान, सोमकान्तको देवलोकप्राप्ति, भावी धूम्रकेतु अवतारको सूचना, वाराणसीका विनायकहरूको वर्णन र श्रीगणेशपुराण यज्ञको फलश्रुतिका साथ दोस्रो खण्ड समाप्त भएको छ ।

## १.३ श्रीगणेशपुराणको महिमा

सनातन संस्कृतिलाई पल्लवन गराउने र आर्षपरम्पराको यथार्थ दिग्दर्शन गराई पुस्ता दरपुस्ता त्यसलाई अग्रसारित गराउने काममा श्रीगणेशपुराणको प्रभावकारी भूमिकाको विषयमा कसैको कत्ति पनि विमति हुने छैन । आध्यात्मिक, आधिदैविक र आधिभौतिक तापबाट सन्तप्त मानिसहरूका लागि यो पुराण सहजबोध्य र अमोघ फलदायी उपायका रूपमा रहेको छ । यस अतिरिक्त प्रारब्धपरिवर्तन गराउन सक्नु गणेशपुराणको अर्को उल्लेखनीय विशेषता रहेको छ । ब्रह्माजीबाट वेदव्यासले, वेदव्यासबाट भृगुले र भृगुबाट सोमकान्तले श्रवण गरी लोकमा फैलाइएको यो पुराण चमत्कारी शैलीमा भाग्यपरिवर्तन गराउने अमोघ सामर्थ्यका कारण भक्तहरूका माझमा अत्यन्त लोकप्रिय छ ।

गणेशपुराण श्रवण गरेपछि कुष्ठरोगले ग्रस्त सोमकान्तले दिव्य देह प्राप्त गरे । खुसीको त्यस अवसरमा आफूलाई पुराण सुनाउने भृगु ऋषिलाई सम्बोधन गर्दै राजा सोमकान्तले भने- हे मुनिवर ! गणेशपुराण श्रवण गरेपछि मजस्तो कुष्ठरोगी, पतित र निन्दित मानिस पनि दिव्य देह पाएर शोभायमान भएँ । मेरो यस देहका निर्माता माता-पिता हजूर नै हुनुहुन्छ ।[९]

सोमकान्तलाई उत्तर दिँदै भृगुले भने - जन्म जन्मका पुण्यका प्रतापले तपाईंले मेरो मुखबाट गणेशपुराण श्रवण गर्ने अवसर पाउनु भयो । तपाई धन्य हुनुहुन्छ । जुन श्रवणबाट आज तपाईंको पापराशि नष्ट भएको छ ।[१०]

यसरी हेर्दा श्रीगणेशपुराण प्रारब्धमा रेखाङ्कित पापलाई नाश गर्न समर्थ रहेछ भन्ने कुरा सोमकान्तको कुष्ठरोग नाश भई दिव्य देह प्राप्त हुनुले प्रमाणित गर्दछ । नैमिषारण्यमा गणेशपुराणको प्रवचन गरिरहेका श्रीसूतजी शौनक आदि ऋषिहरूलाई भन्दै थिए - 'हे ऋषिगण ! श्रीगणेशपुराणको श्रवणबाट अपरिमित पुण्यराशि प्राप्त हुन्छ । ब्रह्माजीले ठूला ठूला यज्ञ-याग गर्दा प्राप्त हुने पुण्य र गणेशपुराणको श्रवणबाट प्राप्त हुने पुण्यको तुलना गर्दा गणेशपुराण सुनेको पुण्य चहकिलो देखियो । अतः श्रीगणेशपुराणको श्रवणबाट प्राप्त हुने पुण्यका सामु अरू व्रत, दान आदि कर्मबाट हुने पुण्य त निम्नकोटिका नै ठहर्छन् ।[११] जुन घरमा श्रीगणेशपुराण राखिएको हुन्छ, त्यहाँ राक्सस, भूत, प्रेत, बालग्रह, बालमारिका आदिको भय हुँदैन र श्रीगणेशले त्यस घरको रक्षा गर्नुहुन्छ ।[१२]

श्रीगणेशपुराण पवित्रताको आधान गर्ने र पद-प्रतिष्ठा एवं सामाजिक मान्यता प्रदान गर्ने पवित्र ग्रन्थका रूपमा पनि सम्मानित पुराण हो । सूतजीले शौनक आदि ऋषिहरूलाई भनेका छन् - जसले श्रीगणेशपुराणको श्रवण गर्दछ र एकाग्रचित्त भई श्रीगणेशपुराण एवं श्रीगणेशको पूजा गर्दछ त्यस उपासकको दर्शनबाट पतित प्राणीहरू पवित्र हुन्छन् । त्यस्तो उपासक ब्रह्मा आदि देवताहरूका लागि पनि मान्य बन्दछ ।[१३] श्रीगणेशपुराणको दिनदिनै श्रवण गर्नाले उपासकले अणिमा-महिमा आदि अष्टसिद्धि प्राप्त गर्दछ । त्यस उपासकले कहिल्यै पनि दरिद्रता र सङ्कट भोग्नु पर्दैन ।[१४] श्रीगणेशपुराणको श्रवण गर्ने साधक पाँच महापाप एवं स्त्रीहत्या र बालहत्याको पापबाट पनि मुक्त हुन्छ र त्यसले अन्त्यमा श्रीगणेशको

---

९. पुराणश्रवणस्यापि येनाऽहं पतितोऽपि च । गतकुष्ठी दिव्यदेहो जातो माता पिताऽपि च ॥ अस्य देहस्य निर्माता त्वमेव मुनिसत्तम । गणेशपुराणमाहात्म्य, ४ ,९-१०।

१०. जन्मान्तरीयपुण्येन पुराणश्रवणं तव । सञ्जातं मन्मुखाद् धन्यं दुरितं येन तेऽनशद् ॥ -पूर्ववत् ५,१३ ।

११. यज्ञानां साङ्गजातानां सर्वेषां दक्षिणावताः । फलं समतुलयामास पुराणश्रवणस्य च ॥
पुराणश्रवणस्यास्य फलं तस्माद् विशेषवत् । व्रतानां जलदानानां तत्र का गणना मता ॥ - पूर्ववत् ५,५-६ ।

१२. यस्य गेहे गणेशस्य पुराणं लिखितं भवेत् । न तत्र राक्षसा भूता वेताला पूतनादयः ॥
ग्रहा बालग्रहा नैव पीडां कुर्वन्ति कर्हिचित् । तद् गृहं हि गणेशेन रक्ष्यते सर्वदा स्वयम् ॥ - पूर्ववत् ५, ९-१० ।

१३. इदं पुराणं शृणुयात् पूजयेद् यः समाहितः । तस्य दर्शनतः पूता भवन्ति पतिता नराः ॥
ब्रह्मादीनां मुनीनां स मान्यो भवति मानवः । - पूर्ववत् ५,११ -१२ ।

१४. अष्टसिद्धीः समाप्नोति श्रवणात् प्रत्यहं नरः । न दारिद्र्यं समाप्नोति सङ्कटं न नरः क्वचित् ॥ पूर्ववत् ५, १३ ।

सान्निध्य प्राप्त गर्दछ ।[१५] जसले गणेशपुराणमा रहेका गणेशका स्तोत्रहरूको पाठ गर्दछ त्यसका लागि संसारमा कुनै पनि वस्तु दुर्लभ हुँदैन ।[१६] भाद्रशुक्ल चतुर्थीका दिन भगवान् श्रीगणेशको पार्थिवपूजन गरी गणेशपुराणको श्रवण गर्ने साधकका सम्पूर्ण मनोरथ पूरा हुने र त्यस्तो साधकले अन्त्यमा मोक्ष प्राप्त गर्ने कुरा बताइएको छ ।[१७] इक्ष्वाकुकुलका प्रसिद्ध राजा संवरणलाई सन्तान भएनन् । तिनले विधिवत् पुत्रेष्टि गरे तर सन्तानप्राप्ति हुन सकेन । फेरि तिनले हरिवंशपुराण लगाए । त्यसबाट पनि सन्तानको मुख हेर्ने रहर पूरा हुन सकेन । एक दिन राजा संवरणले मूक नामक महर्षिलाई व्यासासनमा राखी विधिवत् गणेशपुराण श्रवण गरे । फलस्वरूप संवरणले पुत्रमुख दर्शन गर्ने अवसर पाए । राजा ज्यादै प्रसन्न भए । त्यसपछि उनले आजीवन श्रीगणेशको आराधना गरी अन्त्यमा गणेशधाम प्राप्त गरेका थिए ।[१८]

उक्त सन्दर्भले श्रीगणेशपुराण सन्तानप्राप्तिका लागि अमोघ उपाय भएको तथ्य प्रमाणित गरेको छ । अन्त्यमा श्रीसूतले शौनक आदि ऋषिहरूलाई भने – श्रीगणेशपुराणको सम्पूर्ण महिमा बताइसक्नु छैन । ब्रह्मा, कुमार र शेषले पनि पूरापूर बयान गर्न सक्दैनन् भने अरूको चर्चा नै नगरौं ।[१९]

माथिका विभिन्न सन्दर्भहरूबाट श्रीगणेशपुराण पापनाशक, सर्वकामनापूरक, पुण्यदायक, सन्ततिप्रदायक, भुक्तिप्रद र मुक्तिप्रद पनि रहेछ भन्ने कुरा अवगत हुन्छ । श्रीसूतले नैमिषारण्यमा श्रोता शौनक आदि समक्ष उक्त विभिन्न प्राप्तिहरूको विषयमा आफ्ना विचार राख्दै भनेका थिए – 'हे मुनिहरू ! तपाईंहरूले जुन गणेशपुराणको विषयमा जिज्ञासा राख्नुभएको थियो त्यसको उत्तर मैले दिएँ । लीलामय भगवान् श्रीगणेशको महिमा व्यक्त गर्ने यो पुराण सबै पाप नाश गर्ने, सबै कामना पूरा गर्ने, पुण्य बढाउने, भुक्ति एवं मुक्ति दिने र वक्ता एवं श्रोताका सबै पाप नाश गरी सबै प्रकारका मङ्गल प्रदान गर्ने पवित्र रचना हो ।[२०]

श्रीगणेशको महिमा प्रकाशनका दृष्टिबाट मात्र यस पुराणको उपादेयता छैन अपितु हिन्दूजातिको सांस्कृतिक इतिहास प्रतिपादन गर्दै प्राचीन कला, भाषा, साहित्य, दर्शन, धर्म, व्रत, तीर्थ र उपासनापद्धतिको यथार्थ जानकारी गराउने आर्षग्रन्थको रूपमा पनि यसको अपरिमित महत्त्व रहेको छ ।

## १.४ श्रीमद्भागवत र गणेशपुराणको विषयगत समानता

श्रीगणेश र श्रीगणेशपुराणको विशेषता उजागर गर्ने उद्देश्यले श्रीमद्भागवत र श्रीगणेशपुराणको आधारमा श्रीकृष्णलीला र श्रीगणेशलीलाका समान प्रसङ्ग प्रस्तुत गरिँदैछ ।

श्रीमद्भागवतको दशमस्कन्धमा वर्णित कृष्णलीलाको गहन प्रभाव गणेशपुराणमा परेको कुरा यस पुराणका विषयवस्तुलाई गम्भीरतापूर्वक अनुशीलन गरेपछि स्पष्ट हुन्छ । वस्तुतः ब्रह्मवैवर्तपुराणमा श्रीकृष्ण र गणेशको एकरूपता प्रतिपादन गर्दै तेजस्विताका कारण श्रीगणेश कृष्णसमान हुनुन्छ, त्यसैले उहाँ कृष्णका अंशावतार हुनुहुन्छ । अरू देवताहरू षोडशकलावतार

---

१५. महापापाद् विनिर्मुक्तः स्त्रीबालहत्यकापि च । सान्निध्यं प्राप्नुयादन्ते गणेशस्य न संशयः ॥ -पूर्ववत् ५, १७ ।
१६. असाध्यमपि यत् किञ्चित् तेषां पाठाद् लभेन्नरः । -पूर्ववत् ५, २३ ।
१७. भाद्रशुक्लचतुर्थ्यां यः कृत्वा मूर्तिं महीमयीम् । मण्डपे तोरणे रम्ये सम्पूज्य परमादरात् ॥
पुराणं शृणुयाद् सकलस्य तुष्टो विनायकः । ददाति निखिलान् कामानन्ते मोक्षञ्च विन्दति ॥ पूर्ववत् ५, २०-२१ ।
१८. पूर्ववत्, ५, २४-२५ ।
१९. सम्पूर्णो महिमा वक्तुं न शक्यो वर्षकोटिभिः । ब्रह्मणा षण्मुखेनापि शेषेणापि मुनीश्वराः ॥ - पूर्ववत् ५,६४ ।
२०. युष्माभिः परिपृष्टं यत् सर्वपापप्रणाशनम् । सर्वकामप्रदं भुक्तिमुक्तिदं पुण्यवर्धनम् ॥
गणेशस्य चरितस्य नानालीलाधरस्य च । वक्तृश्रोतृसर्वाघहरं सर्वमाङ्गल्यकारणम् ॥ पूर्ववत् ५, ६४-६६ ।

कृष्णका कला हुन् । श्रीगणेश कृष्णरूप हुनुभएकाले उहाँको प्रथम पूजा गर्ने विधान रहेको कुरा बताइएको छ -

**तेजसा कृष्णतुल्योऽयं कृष्णांशश्च गणेश्वरः । देवाश्चान्ये कृष्णकलाः पूजास्य पुरतस्ततः ।।**[२१]

श्रीमद्भागवत र श्रीगणेशपुराणका श्रीकृष्ण र श्रीगणेशको एकताका प्रतिपादक केही समान प्रसङ्गहरू रहेका छन् । श्रीमद्भागवतमा कंस देवकीलाई मार्न तम्सिन्छ भने श्रीगणेशपुराणमा सिन्दूरासुर पार्वतीलाई मार्न तम्सिन्छ । श्रीमद्भागवतमा देवकीनन्दन कृष्णलाई जन्मनासाथ यशोदाको सूतिकागारमा पुऱ्याइन्छ भने श्रीगणेशपुराणमा पार्वतीनन्दन गणेशलाई जन्मनासाथ राजा वरेण्यकी रानी पुष्पिकाको सूतिकागारमा पुऱ्याइन्छ । श्रीमद्भागवतमा कृष्णको प्राणहरण गर्ने उद्देश्यले पूतना आउँछे भने श्रीगणेशपुराणमा गणेशको प्राणहरण गर्ने उद्देश्यले विरजा आउँछे । श्रीमद्भागवतमा श्रीकृष्णले गोपिनीहरूका साथ बाललीला गर्नुभएको छ भने श्रीगणेशपुराणमा श्रीगणेशले मुनिपुत्रहरूका साथ दिव्य बाललीला गर्नुभएको छ । श्रीमद्भागवतमा यशोदाले कृष्णका मुखभित्र ब्रह्माण्डदर्शन गरेको वर्णन पाइन्छ भने श्रीगणेशपुराणमा पार्वतीले गणेशका मुखभित्र ब्रह्माण्डदर्शन गरेको वर्णन पाइन्छ । श्रीमद्भागवतमा कृष्णले सज्जन ब्राह्मण सुदामाको उद्धार गर्नुभएको छ भने श्रीगणेशपुराणमा श्रीगणेशले सज्जन ब्राह्मण शुक्लको उद्धार गर्नुभएको छ । श्रीमद्भागवतमा श्रीकृष्णको वियोगका कारण गोपिनीहरूको व्याकुलता देखाइएको छ भने श्रीगणेशपुराणमा श्रीगणेशको वियोगमा काशीका नर-नारीहरूको रुवावासी देखाइएको छ । श्रीमद्भागवतअनुसार श्रीकृष्णले हजारौं दैत्यहरूको वध गर्नुभएको छ भने श्रीगणेशपुराणअनुसार श्रीगणेशले हजारौं दुर्जेय दानवहरूको वध गर्नुभएको छ । श्रीमद्भागवतमा श्रीकृष्णले ब्राह्मणपत्नीहरूसँग भोजन मागेर मित्रहरूलाई दिनुभएको छ भने श्रीगणेशपुराणमा श्रीगणेशले गौतमऋषिको भोजन हरण गरी भोका बालमित्रहरूलाई खुवाउनुभएको छ । यस्ता कतिपय श्रीमद्भागवत र गणेशपुराणमा समानसन्दर्भमा प्रस्तुत गरिएका दृष्टान्तहरूलाई यहाँ पाठकहरूको जानकारीका लागि प्रस्तुत गरिँदैछ ।

## क ) श्रीकृष्ण र श्रीगणेशका दिव्य बाललीला

### १. श्रीकृष्णको दिव्य बाललीला

श्रीमद्भागवत महापुराणको दशम स्कन्ध श्रीकृष्णका अद्भुत, विलक्षण र दिव्य लीलाद्वारा अनुप्राणित छ । दशम स्कन्धका प्रत्येक अध्यायका प्रत्येक पद्य श्रीकृष्णको हृदयाभिराम सौन्दर्यबाट चमत्कृत छन्। विशेषतः रासाध्यायका विषयवस्तुमा श्रीकृष्णको मुरलीध्वनि ब्रह्मतत्त्वको वंशीध्वनिसमान अनुभूतिगोचर हुन्छ । श्रीकृष्णले आफ्नी आमा यशोदालाई ब्रह्माण्डदर्शन गराउनुभएको छ । मुस्कान छर्दै प्रीतिपूर्वक ग्वालबालहरूसँग गाई चराउनुभएको छ । समग्र सृष्टिलाई अन्तर्धान गराई रमिता हेर्न चाहने ब्रह्माजीलाई हतप्रभ तुल्याउँदै उस्तै नयाँ सृष्टिको रचना गर्नु भएको छ । आफ्नो यज्ञभङ्ग गरिएको घटनाबाट रिसाएका इन्द्रले प्रलयकालसमान घोर वर्षा गराई व्रजभूमिलाई जलमग्न तुल्याउँदा बालकृष्णले आफ्नो हातको कान्छी औंलाले गोवर्धनपर्वत धारण गरी व्रजवासीलाई सुरक्षा प्रदान गर्नु भएको छ । उहाँले लीलैलीलामा वत्सासुर, बकासुर, अघासुर, धेनुकासुर, प्रलम्बासुर, अरिष्टासुर, केशी, चाणूर, मुष्टिक, कंस आदि खलनायकहरूको वध गरी त्यहाँका नरनारीहरूलाई अमन-चैन प्रदान गर्नु भएको छ र संसारलाई शान्ति, सदाचार एवं मङ्गलद्वारा महनीय तुल्याउनु भएको छ ।[२२]

२१. ब्र.वै., गणपतिखण्ड ४४/२७ ।
२२. श्रीमद्भागवत दशमस्कन्ध पूर्वार्ध ।

## २. श्रीगणेशको दिव्य बाललीला

श्रीगणेशपुराणको क्रीडाखण्ड श्रीगणेशका महोत्कट, मयूरेश्वर एवं गजानन अवतारका विचित्र बाललीलाका कारण अनिर्वचनीय आनन्दको केन्द्रबिन्दु बनेर रहेको छ । अदिति र कश्यपमा पुत्रका रूपमा महोत्कटको नामबाट अवतार लिनु हुने बालगणेशले बाललीलाको क्रममा आफुलाई विष्णु, शिव, सूर्य, शक्ति र गणेशका रूपमा परिणत गराई दर्शन दिएर गन्धर्वहरूको भ्रम हटाउनुभएको छ । ब्रह्मा एवं इन्द्रको घमण्ड तोड्नुभएको छ । काशिराजका साथमा काशीमा गई दिव्य बाललीला देखाउँदै कूपासुर, कन्दरासुर, देवान्तक र नरान्तक जस्ता दैत्यहरूको संहार गर्नुभएको छ । भ्रुशुण्डी जस्ता परमभक्तलाई आफू जस्तै तुल्याएर उनले चाहना गरेको दशबाहु स्वरूपमा दर्शन दिई कृतार्थ तुल्याउनुभएको छ । श्रीगणेशले शुक्ल ब्राह्मणको निष्ठा र समर्पणमा आधारित तीव्र भक्तिबाट पग्लिएर विचित्र ऐश्वर्य प्रदान गरी उनलाई आनन्दमा डुबाउनुभएको छ । उहाँले सनक, सनन्दनजस्ता ज्ञानीहरूमा देखिएको अभिमानको अङ्कुरलाई निमठी सर्वत्र आफूलाई देखाएर तत्त्वबोध गराउनुभएको छ ।

अन्धकासुरद्वारा काशीमा दिउँसै घनघोर अन्धकारको सिर्जना गरिएपछि अम्भासुरद्वारा भीषण वर्षा गराई काशीलाई जलमग्न तुल्याउने काम भएको थियो । त्यसपछि तुङ्गासुरद्वारा विशाल पर्वतहरूको सृष्टि गरी तिनलाई उचालेर प्रहार गरी काशीलाई धुलो-पीठो बनाउने प्रयास गरियो । त्यसबेला बालगणेशले आफुलाई स्थूलकाय चरो बनाउनु भयो र काशीको माझमा ठूलो वटवृक्ष खडा गर्नु भयो । बालगणेशले वटवृक्षको टुप्पामा चराको रूपमा रहेर आफ्नो प्रकाश काशीमा वितरण गर्नुहुँदा काशी प्रकाशमान भयो। अन्धकासुरले फैलाएको अन्धकारलाई चिरेपछि चराको रूपमा रहनुभएका श्रीगणेशले अम्भासुरद्वारा वर्षा गराई फैलाइएको पानी आफ्नै ठूँडले पान गरी काशीको जलराशि सुकाउनु भयो । विशाल पर्वतराशि खडा गरेर काशीवासीहरूलाई यताउति जान अवरोध पैदा गर्ने तुङ्गासुरले खडा गरेका पर्वतहरूको भेदन गरी उहाँले ती तीनैवटै दानवलाई जोडले आकाशमा पुऱ्याई भुइँमा पछारेर निष्प्राण तुल्याउनु भयो ।

महोत्कट अवतारको लीला समेटेर स्वानन्द धाममा पुग्नु भएका श्रीगणेशले दैत्यराज सिन्धुको अत्याचारबाट संसारलाई मुक्ति दिलाउन पार्वती-परमेश्वरका पुत्रका रूपमा मयूरेश्वर नामबाट अवतार लिएर विलक्षण बाललीला देखाउँदै गृध्रासुर, बालासुर, व्योमासुर, कमठासुर, शलभासुर, शैलासुर, वृकासुर आदि दानवहरूको वध गरी धर्म र सत्यको रक्षा गर्नुभयो । तेस्रो गजानन अवतारमा पार्वती-परमेश्वर एवं पुष्पिका-वरेण्यका पुत्रका रूपमा अवतार लिएर दुर्जेय दानवहरूको वध गर्दै राजा वरेण्यलाई गणेशगीताको उपदेश गर्नु भयो ।[२३]

श्रीकृष्णको बाललीला र श्रीगणेशको बाललीलाको स्पन्दन र मर्म एउटै भए तापनि श्रीकृष्णको बाललीलामा गोपिनीजस्ता नारीपात्र पनि सम्मिलित छन् । तर श्रीगणेशको बाललीला भने वासनानिर्मुक्त, सात्त्विक र विलक्षण छ । कलेवरको आधारबाट हेर्दा पनि श्रीमद्भागवतको बाललीला ४९ अध्यायमा समेटिएको छ भने श्रीगणेशको बाललीला गणेशपुराणको क्रीडाखण्डका १५५ अध्यायमा वर्णन गरिएको छ ।

---

२३. गणेशपुराण, क्रीडाखण्ड ।

## ख ) कंसद्वारा देवकी र सिन्दूरासुरद्वारा पार्वतीको वध गर्ने प्रयास

### १ ) कंसद्वारा देवकीको वध गर्ने प्रयास

श्रीमद्भागवत महापुराणको दशम स्कन्धमा देवकी एवं वसुदेवको विवाहप्रसङ्ग रहेको छ । विवाह सम्पन्न भएपछि दाजु कंसले देवकीलाई साथमा राखी घरमा पुऱ्याउन रथ हाँकिरहेको थियो । त्यसबेला अचानक कंसलाई आकाशवाणी भयो– 'हे मूर्ख ! तँ जुन बहिनीलाई घरमा पुऱ्याउन रथ हाँकिरहेको छस्, तिनको आठौं गर्भबाट पैदा हुने बालकले तेरो वध गर्ने छ ।'

यस्तो आकाशवाणी सुनेपछि डराएको कंसले बहिनी देवकीलाई मारिदिएपछि बालक नै पैदा हुँदैन भन्ने विचार गरेर उनलाई मार्नका लागि हातमा तरबार लिएर केशमा समात्यो । यो देखेर देवकीको हत्या नगर्न वसुदेवले अनुनय गर्नुका साथै आठौं गर्भको बच्चा पैदा भएपछि कंसलाई सुम्पने वाचा गरेपछि देवकीको रक्षा भयो ।[२४]

### २ ) सिन्दूरासुरद्वारा पार्वतीको वध गर्ने प्रयास

गणेशपुराणको क्रीडाखण्डमा सिन्दूरासुरद्वारा पार्वतीको वध गर्ने प्रयासको वर्णन गरिएको छ । एक दिन राजसभामा सिंहासनासीन दानवहरूको राजा सिन्दूरासुरले सभासद्हरूसंग भनेको थियो – 'अहिले स्वर्ग, पृथिवी र पातालमा म समानको वीर योद्धा कुनै नभएकाले मेरो पराक्रम व्यर्थ भयो ।' त्यस बेला त्यसले आकाशवाणी सुन्यो – 'हे मूर्ख ! तँ किन व्यर्थ बकवास गरिरहेको छस् ? तँलाई युद्धको मैदानमा बिरालोले मुसो खेलाएझैं खेलाएर मृत्युको गास बनाई बिदा गर्ने वीर बालक पार्वतीको कोखबाट पैदा भएको छ । त्यो बालक अहिले राजा वरेण्यको दरबारमा पुगेको छ । अनन्त लीलामय त्यो बालक शुक्ल पक्षको चन्द्रमाझैं बढिरहेको छ ।' यस्तो आकाशवाणी सुनेपछि रिसाएको सिन्दूरासुरले पार्वती बस्नु भएको पर्यलीवनमा पुगेर प्रसूतिकक्षमा नजर लगायो । त्यहाँ बालक नदेखेर आगोझैं दन्किदै मनैमन भन्न लाग्यो – 'आकाशवाणी झुट्टा हुँदैन, पार्वतीको छोराले मलाई अवश्य मार्नेछ । अहिले बालक देखिएन । पैदा नभइसकेको पनि हुनसक्छ अथवा त्यो भविष्यमा पैदा हुनसक्छ । त्यसकारण म पार्वतीलाई नै मारिदिन्छु । यिनलाई मारेपछि जरो नै काटिने छ ।' यसरी विचार गरेर सिन्दूरासुरले हातमा खड्ग लिई पार्वतीको शरीरमा प्रहार गर्ने लागेको बेला सिन्दूरासुरका सामु चतुर्भुज बालगणेश देखिनु भयो ।[२५]

दुवै पुराणका आख्यानहरूमा दुराचारी दानवराजले अवतारपुरुषका माताहरूलाई मार्ने प्रयास गरेको देखिन्छ । तिनीहरूको कुत्सित प्रयासलाई दिव्यादिव्य प्रकृतिका सज्जन र दिव्य प्रकृतिका अवतारपुरुषले विफल तुल्याएका छन् । यो सादृश्य प्रसङ्गले श्रीकृष्ण र श्रीगणेशको एकरूपतालाई प्रमाणित गर्दछ ।

## ग ) देवकीनन्दन श्रीकृष्ण र गौरीनन्दन गणेशको अन्यत्र लालनपालन

### १ ) नन्द र यशोदाको घरमा श्रीकृष्ण

कंसद्वारा कारागारमा थुनाइएकी देवकीले भाद्र कृष्ण अष्टमीका दिन सोह्र कलाका श्रीकृष्णलाई पैदा गरिन् । कंसबाट डराएका वसुदेवले तत्कालै श्रीकृष्णलाई नन्द र यशोदाको घरमा पुऱ्याएर भर्खरै

२४. श्रीमद्भागवत १०/१/२४-३९ ।

२५. गणेशपुराण २/१३३ अध्याय ।

सुत्केरी भएकी यशोदाको काखमा सुताए । त्यसपछि यशोदाबाट पैदा भएकी भगवती योगमायालाई लिएर मथुरातर्फ फर्किए । श्रीकृष्णको लालन-पालन यशोदा र नन्दले गरे । सम्पूर्ण कृष्णलीलामा नन्दबाबा र यशोदाले मातापिताको रूपमा सम्मान र श्रद्धा प्राप्त गरेका थिए ।[२६]

**२ ) पुष्पिका र वरेण्यको घरमा श्रीगणेश**

पार्वतीबाट भर्खरै गजाननका रूपमा पैदा हुनुभएका श्रीगणेशले आफ्ना पिता शिवजीसँग निवेदन गर्दै भन्नु भयो- 'हे भगवान् ! म हजुरको पुत्र भएर पैदा भएँ । मैले माहिष्मतीका राजा वरेण्य र तिनकी रानी पुष्पिकालाई छोराको रूपमा पैदा हुने वचन दिएको थिएँ । यतिबेला पुष्पिकाले बालक पैदा गरेकी छिन् र उनी मूर्च्छित अवस्थामा रहेकीछिन् । त्यस बालकलाई राक्षसहरूले अपहरण गरिसकेका छन् । त्यसले अब छिट्टै प्राणत्याग गर्नै छ । पुष्पिका होसमा नआउँदै हजुरले मलाई त्यहाँ पुऱ्याउनुहोस् । जसरी पुष्पिकालाई आफ्नो बालक चोरिएको थाहा हुँदैन र गजानन बालकलाई मैले नै पैदा गरेको भन्ने विश्वास हुन्छ, त्यसरी नै हजुरले मलाई त्यहाँ पुऱ्याउनु होस् ।' श्रीगणेशको प्रार्थना सुनेर भगवान् शिवजीले नन्दिकेश्वरलाई श्रीगणेशले भनेका कुरा संझाई पुष्पिकाको प्रसूतिकक्षमा पुऱ्याउन आदेश दिनु भएपछि उनले छिट्टै श्रीगणेशलाई त्यहाँ पुऱ्याए । यसरी श्रीगणेशको लालन-पालन अन्यत्र भयो ।[२७]

उक्त दुवै आख्यानलाई हेर्दा श्रीकृष्णलाई नन्दको घरमा र श्रीगणेशलाई वरेण्यको घरमा पठाइएका घटनाहरूमा समानता पाइन्छ ।

**घ ) पूतनाद्वारा श्रीकृष्णको र विरजा एवं शतमहिषाद्वारा श्रीगणेशको हत्याको प्रयास**

**१ ) पूतनाद्वारा श्रीकृष्णको हत्या गर्ने प्रयास**

बालरूप श्रीकृष्णद्वारा भयभीत कंसले उहाँलाई मार्नका लागि पूतना नामक राक्षसीलाई प्रयोग गरी व्रजभूमिमा रहेका बालबालिकाको हत्या गर्न पठाएको थियो । बालबालिकाको हत्या गर्न पल्किएकी डरलाग्दी पूतना अत्यन्त सुन्दरी बनेर श्रीबालकृष्ण खेलिरहेको ठाँउमा आएकी थिई । श्रीकृष्ण भुइँमा खेलिरहनुभएको थियो । त्यसले एक्कासि काखमा राखी स्तन चुसाउन थाली । बालक श्रीकृष्णले पूतनाको दुराशय तत्काल थाहा पाउनुभयो । उहाँले स्तनपान गर्ने क्रममा दूधका साथ त्यसको प्राण पनि खिँचेर पिउनुभयो । त्यसको विकराल शरीर भुइँमा फैलियो । श्रीकृष्णले बालघातिनीको प्राण लिएर त्यस क्षेत्रका बाँकी बालबालिकाको सुरक्षा गर्नुभयो ।[२८]

**२ ) अ ) विरजाद्वारा बालगणेशको हत्या गर्ने प्रयास**

श्रीगणेश अदिति र कश्यपका पुत्रका रूपमा महोत्कट नाम लिएर पैदा हुनुभएको थियो । उहाँ भुइँमा सुतिरहनु भएको बेला हलोझैं दाँत भएकी र गुफाझैं नाक भएकी बच्चाहरूलाई मार्ने विरजानामक राक्षसी आइपुगी । त्यसले बालगणेशलाई निलेर पेटभित्र पुऱ्याएपछि उहाँले त्यसको मनसाय बुझ्नु भयो र आफ्नो आकार बढाउन थाल्नुभयो । श्रीगणेशको आकार विशाल हुँदै

२६. श्रीमद्भागवतमहापुराण १०/३ ।
२७. श्रीगणेशपुराण २/१३०-१३१ ।
२८. श्रीमद्भागवत, १०/६ अध्याय ।

गएपछि त्यो राक्षसी आत्तिन थाली । उहाँ आफ्नो बढेको आकारद्वारा त्यसको पेट फुटाएर बाहिर निस्कनुभयो । त्यतिबेला नै विरजा पनि प्राणत्याग गरी भुइँमा ढलेकी थिई । समाजमा अशान्ति मच्चाउने दुष्ट राक्षसीको वध गरेर श्रीगणेशले लोककल्याण गर्नु भयो ।[२९]

### आ ) शतमाहिषाद्वारा श्रीगणेशको हत्या गर्ने प्रयास

गौरी-शङ्करका प्यारा पुत्रका रूपमा पैदा हुनु भएका बालगणेशले खेल खेलमा व्योमासुरको वध गर्नु भएपछि व्योमासुरकी बहिनी शतमाहिषा सोह्र शृङ्गारले सजिएर पार्वतीको निवासमा पुगेकी थिई । त्यहाँ त्यसले आफ्नो मीठो बोलीद्वारा सबैलाई विश्वासमा पारेर बालक गणेशलाई काखमा राखेर गालामा चुम्बन गर्न थाली । बालक गणेशले तुरुन्तै त्यसको दुराशय थाहा पाउनुभयो र त्यसलाई कानमा समातो भुइँमा पछार्नुभयो । त्यो पर्वताकार भएर लडिरहेकी थिई । श्रीगणेशले यसरी खेलखेलमा शतमाहिषाको वध गरी पृथिवीको भार हरण गर्नुभयो ।[३०] बालमारिकाहरूलाई मारेर बालक-बालिकाहरूको सुरक्षा गर्ने अवतारलीलामा आधारित तीनवटै कथाहरूको मर्म एउटै देखिन्छ ।

## ङ ) यशोदा र पार्वतीद्वारा श्रीकृष्ण र श्रीगणेशको मुखभित्र ब्रह्माण्डदर्शन

### १ ) यशोदाद्वारा श्रीकृष्णको मुखभित्र ब्रह्माण्डदर्शन

एक दिन माता यशोदाले आफ्ना प्यारा छोरा श्रीकृष्णलाई - 'बाबु कृष्ण ! तिमीले माटो खाएको सिकायत आएको छ। यो बानी राम्रो होइन, अब यस्तो गर्न हुँदैन' भनी उपदेश दिँदा श्रीकृष्णले बालस्वभाव-अनुसार भन्नुभयो- 'आमा ! मैले माटो खाएको छैन, ज-जसले मेरो सिकायत गरेका छन् ती ढँटुवा हुन् ।' कृष्णका कुरा सुनेर माता यशोदाले- 'बाबु ! आँ गर त' भनिन् । अनन्त ऐश्वर्य र सामर्थ्यका धनी श्रीकृष्णले आमाको आज्ञानुसार मुख खोल्नुभयो । यशोदाले श्रीकृष्णको मुखभित्र चराचरसहित सम्पूर्ण ब्रह्माण्डको दर्शन गरिन् । त्यसपछि श्रीकृष्णको अद्‌भुत लीला संझेर ती विस्मित एवं मोहित भइन् ।[३१]

### २ ) पार्वतीद्वारा श्रीगणेशको मुखभित्र ब्रह्माण्डदर्शन

आमा पार्वतीले बालगणेशलाई आफ्नो पीठबाट भुइँमा ओराल्नु भयो । भुइँमा ओर्लिएका श्रीगणेश एकाएक बेहोस भई पल्टिनुभएको थियो । उहाँलाई पटक पटक हाई लागिरहेको थियो । आफ्नो प्यारा पुत्रलाई बेहोसीको हालतमा हाई गरिरहेको देखेर नजिकै आई हेर्दा हाईका कारण खुला भएको श्रीकृष्णको मुखभित्र चराचरसहित सम्पूर्ण ब्रह्माण्डको दर्शन गर्दा भयभीत र विस्मित बनेकी पार्वती मूर्च्छित हुनुभयो। मूर्च्छाबाट ब्यूँझे पछि उहाँले आँखा चिम्लेर भगवान् शिवजीको ध्यान गर्नु भयो । आँखा खुल्दा उहाँका सामु बालगणेश पहिलेझैं खेलिरहनु भएको थियो ।[३२] उक्त दुवै प्रसङ्गले मुखभित्र ब्रह्माण्डदर्शन गराउने दुवै अवतारपुरुषहरूको तात्त्विक एकरूपता प्रकाशित गर्दछन् ।

२९. श्रीगणेशपुराण २/७ अध्याय ।
३०. पूर्ववत्, २/८७ अध्याय ।
३१. श्रीमद्भागवत १०/८ अध्याय ।
३२. गणेशपुराण २/९३/ ४०-४६ ।

## च ) श्रीकृष्ण र श्रीगणेशको भक्तवात्सल्य

### १ ) श्रीकृष्ण र सुदामाको अनिर्वचनीय प्रेम

सुदामासँग उनकी पत्नीले तपाईंले श्रीकृष्ण मेरा बालसखा हुन् भन्नुहुन्छ, हामी यस्ता दीन र हीन छौं, एक पटक द्वारका पुगेर भेट गरे त हुन्थ्यो नि ! भनिरहिन् । श्रीकृष्णमा अपार भक्ति गर्ने तर आफ्ना लागि केही नचाहने सुदामा भने द्वारका जान सङ्कोच मानिरहेका थिए । पतिव्रता पत्नीले सारै आग्रह गरेपछि वचन हार्न नसकेर सुदामा आफ्नी पत्नीले दिएको चिउरा रुमालमा पोको पारी द्वारका गए । रुक्मिणीसहित श्रीकृष्णले सुदामाको स्वागत-सत्कार एवं पूजा गर्नुभयो । सुदामा दंग परे, सकुचाए र लजाए पनि । श्रीकृष्णले मनमनै भन्नुभयो - 'आफ्नी पत्नीको आग्रहका कारण उनले चिताएको प्यारो काम गराउन विचरा सुदामा मेरो नजिकमा आइपुगे । अब म यिनलाई आफ्नो शक्तिबाट देवताका लागि पनि दुर्लभ सम्पत्ति प्रदान गर्नेछु ।' यसरी विचार गरेपछि श्रीकृष्णले सुदामाको हातमा रहेको चिउराको पोको हेरी यो के ल्याउनु भयो भनी खोस्नु भयो । एक गास चिउरा चपाएर निल्नु भएपछि श्रीकृष्णले भन्नुभयो - 'अहा ! मेरा बालसखा ! कति मीठो र कति स्वादिष्ट चिउरा उपहारमा ल्याउनुभएछ । म तृप्त छु र सन्तुष्ट छु ।' यसरी सम्मानित भएका सुदामा केही दिन द्वारका बसेर भगवान्सँग बिदा लिई रित्तै घर फर्किए । घरमा आउँदा कुटीमा जेन तेन निर्वाह गरी जिन्दगी गुजारिरहेका सुदामा संसारका सर्वोत्तम ऐश्वर्यशाली एवं भाग्यशाली पुरुष भइसकेका थिए ।[33]

### २ ) शुक्लको श्रीगणेशमा अनिर्वचनीय भक्तिभाव र श्रीगणेशको शुक्लमाथि परम करुणा

काशीनगरीमा रही अद्‌भुत बाललीलाद्वारा सबै नरनारीहरूलाई मन्त्रमुग्ध तुल्याउनु हुने बालगणेशलाई सबैले स्वागत एवं अभिनन्दनका लागि आ-आफ्नो घरमा आतिथ्य ग्रहण गर्न अनुरोध गरिरहेका थिए । श्रीगणेश भने काशीको सीमान्त गाउँमा कुटी बनाएर आफ्नो आराधना गरिरहेका दरिद्रभक्त शुक्लमाथि कृपा गर्ने उद्देश्यले सम्पन्न नगरवासीहरूको घरमा फेरि जानेछु भन्ने विचार गरी बालमित्रहरू साथमा लिएर शुक्लको कुटीमा पुग्नु भयो । शुक्लले आफ्ना आराध्य प्रभुलाई घरमा आउनु भएको देखेर हर्षगद्‌गद भई श्रद्धापूर्वक, पुष्प, चन्दन, अक्षता, पुष्पमाला, दूर्वाङ्कुर, शमीपत्र, मन्दारपुष्प, सुगन्धित तेल र केतकी पुष्प अर्पण गरी धूप-दीप टक्र्याए पछि नैवेद्यका रूपमा वनमा फलेका फल टक्र्याए । मन्त्रपाठ गर्दै पुष्पाञ्जलि अर्पण गरी भक्तिपूर्वक प्रणाम गरे । त्यसबेला शुक्लले मनमनै भने- 'मसँग कुत्सित अन्नमात्र छ, मैले भगवान्लाई के टक्र्याऊँ ?' शुक्लको मनको अभिप्राय बुझेर बालगणेशले शुक्लकी धर्मपत्नीलाई भन्नुभयो - 'आमा ! तपाईंको घरमा जस्तोसुकै अन्नबाट तयार गरिएको भोजन भए पनि म खान्छु, दिनुहोस् । भक्तिपूर्वक अर्पण गरिएको कुत्सित अन्न पनि मेरा लागि अमृतभन्दा तृप्तिदायक हुन्छ । दम्भ र स्वार्थद्वारा प्रेरित भई प्रदान गरिने अमृतमय अन्न पनि मेरा लागि विषबराबर हुन्छ ।' यो कुरा सुनेर लज्जित हुँदै शुक्लकी धर्मपत्नीले पातलो माडसहित नीरस भातले भरिएको भाँडो, वन र खेतहरूबाट ल्याइएका अन्नहरूको पीठो र तेल ल्याएर टक्र्याइन् । भोजनको यो रूप देखेर गणेशका बालसखाहरू मरी मरी हाँस्न थाले । श्रीगणेशले पीठाको प्रत्येक गाससँगै पानी पिएर बल्लबल्ल निल्नुभयो । त्यसपछि

33. श्रीमद्‌भागवत १०/८१ अध्याय ।

भक्तशुक्लले श्रीगणेशका सामु राखिएको माड-भातको भाँडो पूरै टपरीमा खन्याइदिए । पातलो माडसहितको भातबाट माड बग्न थाल्यो । श्रीगणेशले आफ्ना साना-साना हातले बगिरहेको माड-भात छेक्न थाल्नुभयो तर सक्नुभएन । तुरुन्तै श्रीगणेश आफ्नो रूपपरिवर्तन गरी दसहाते गणेशका रूपमा सुहाउनुभयो । उहाँ दसवटै हात प्रयोग गरी बगिरहेको माड-भातलाई थुत्र सफल हुनुभयो । भगवान्को यो अवस्था देखेर बालमित्रहरू ताली पिटी-पिटी हाँस्न थाले । भगवान् श्रीगणेशको यो बाललीला सबैका लागि आश्चर्यदायक थियो । यसरी भक्तदम्पतीको सत्कार र अनुपम भक्तिको अनुभव गर्दै भगवान् फर्किनुभयो । काशिराजको दरबारमा आई उहाँले मनमनै भक्तदम्पतीका लागि मैले जे दिए पनि थोरै हुन्छ भन्दै इन्द्रको दरबारभन्दा राम्रो घर, सुन्दर रूप, ऐश्वर्य र आध्यात्मिक ज्ञानसमेत दिएर कृतकृत्य तुल्याउनु भयो ।[३४]

यी दुवै आख्यानले भक्तहरूमाथि भगवान्को अनुपम वात्सल्य रहने कुरा उजागर गर्दछन् । यी आख्यानका भक्तहरू सुदामा र शुक्ल दुवै धनहीन, सज्जन, निःस्वार्थ र भगवान्का परम भक्त छन् । श्रद्धा, भक्ति, निष्ठा र समर्पणका पर्याय रूपमा रहेका दुवै भक्तहरूको स्वरूपगत समानता रहे पनि परिस्थितिगत पर्याप्त अन्तर छ । सुदामाका आराध्य देवता श्रीकृष्ण सद्गृहस्थ हुनुहुन्छ भने शुक्लका आराध्य देवता श्रीगणेश ब्रह्मचारी बालकका रूपमा हुनुहुन्छ । सुदामाको आख्यानमा सुदामा आराध्यका घर पाहुना भएर गएका छन् तर शुक्लको आख्यानमा स्वयम् गणेश आराधक भक्तको घरमा पाहुना भएर जानुभएको छ । त्यसैले द्वारकामा सुदामाको स्वागत सत्कार भएको छ भने काशीमा श्रीगणेशको स्वागत सत्कार गरिएको छ । यी दुवै आख्यानमा केही अन्तर देखिए पनि गणेशपुराणमा श्रीमद्भागवतीय शैलीको प्रभाव परेको कुरा ठम्याउन सकिन्छ ।[३५]

## छ ) श्रीकृष्ण र श्रीगणेशका अनेक रूप एवं अनेक लीला

### १ ) श्रीकृष्णका अनेक रूप र अनेक लीला

श्रीमद्भागवतको दशम स्कन्धमा एउटै श्रीकृष्णले हजारौं रूप धारण गरी आफ्ना १६ हजारभन्दा बढी महारानीहरूका कक्षमा एकैपटक लीला गर्नुभएको विषय उजागर गरिएको छ । श्रीकृष्णको विचित्र लीला नजर गर्न द्वारका पुगेका नारदजी सर्वप्रथम १६ हजार कृष्णपत्नीहरूमध्ये एउटीको आवासमा पुगे। त्यहाँ श्रीकृष्णले नारदजीको पाउ पखाली पूजा गर्नुभयो । नारदजी अर्को आवासमा पुग्दा त्यहाँ उनले उद्धव आदि भक्तहरूसँग बसी अक्षक्रीडा गरिरहनुभएका श्रीकृष्णको दर्शन गरे । त्यसपछि नारदजी अर्को आवासमा पुगे । त्यहाँ श्रीकृष्ण आफ्ना सानासाना बालकहरूको लालन गरिरहनुभएको थियो । यसैगरी नारदजी प्रत्येक आवासमा पुगेका थिए । कुनैमा श्रीकृष्ण पञ्चमहायज्ञ गर्दै हुनुहुन्थ्यो, कहीं ब्राह्मणहरूलाई भोजन गराउँदै हुनुहुन्थ्यो, कहीं स्वयं यज्ञावशिष्ट भोजन गर्दै हुनुहुन्थ्यो र कहीं सन्ध्योपासन गर्दै हुनुहुन्थ्यो। फेरि नारदजी अरू आवासहरूमा भ्रमण गर्दै थिए । त्यस बेला श्रीकृष्ण कहीं तरबार धारण गरी वीरहरूसँग युद्धकौशल देखाइरहनुभएको थियो, कहीं ओङ्कारको जप गर्दै हुनुहुन्थ्यो, कहीं घोडा, रथ, हात्ती एवं पैदलसेनाका साथ सल्लाह गर्दै हुनुहुन्थ्यो र कहीं पलङ्गमा बिराजमान भई स्तुतिपाठकहरूको प्रशस्ति सुन्दै हुनुहुन्थ्यो । भगवान् श्रीकृष्ण कुनै आवासमा उद्धव आदि मन्त्रीहरूका साथ गोप्य मन्त्रणा गर्दै

३४. गणेशपुराण २/२३ अध्याय ।
३५. पूर्ववत्, २/२३ अध्याय ।

हुनुहुन्थ्यो, कहीँ जलक्रीडा गर्दै हुनुहुन्थ्यो, कहीँ वाराङ्गनाहरूद्वारा घेरिएर बस्नुभएको थियो, कहीँ गोदान गर्दै हुनुहुन्थ्यो र कहीँ मङ्गलपाठ एवं पुराणपाठ सुन्दै हुनुहुन्थ्यो । भगवान् श्रीकृष्ण कुनै आवासमा आफ्नी प्रियतमालाई हास्य कथा सुनाएर मनोरञ्जन प्रदान गर्दै हुनुहुन्छ, कहीँ पुरुषार्थहरूका कार्य गर्दै हुनुहुन्थ्यो र कहीँ निष्कल ब्रह्मको ध्यान गर्दै हुनुन्थ्यो । उहाँ कहीँ गुरुसेवा गर्दै हुनुहुन्थ्यो, कहीँ विषयभोगमा अनुरक्त देखिनुहुन्थ्यो र कहीँ पूजाउपासनामा व्यस्त हुनुहुन्थ्यो । श्रीकृष्ण कहीँ युद्ध, कहीँ सन्धि र कहीँ आफ्ना दाजु बलरामका साथ राजकीय मन्त्रणा गर्दै हुनुहुन्थ्यो । भगवान् श्रीकृष्ण कहीँ छोराहरूको उपयुक्त कन्याहरूका साथ विवाह गराउँदै हुनुहुन्थ्यो भने कहीँ छोरीहरूको उपयुक्त वरका साथ विवाह गराउँदै हुनुहुन्थ्यो । श्रीकृष्ण कहीँ पञ्चमहायज्ञ गर्दै, कहीँ कुँवा, बगैँचा र मठ बनाउँदै, कहीँ धर्मको संरक्षण गर्दै विराजमान हुनुहुन्थ्यो । कहीँ अरबी घोडामा सवार भई सिकार खेल्दै हुनुहुन्थ्यो भने कहीँ अरूले नचिनिने रूप धारण गरी मानिसहरूका घरघरमा पुगेर सुखदु:खको ख्याल गर्दै हुनुहुन्थ्यो । यसरी नारद ऋषि अनन्तवीर्य श्रीकृष्णको योगमायाजनित प्रभाव अनुभाव गरेर चकित भए र श्रीकृष्णसँग आज्ञा लिई ब्रह्मलोकतर्फ फर्किए ।[३६]

## २ ) श्रीगणेशका अनेक रूप र अनेक लीला

काशिराजको निमन्त्रणामा काशीमा रही अनेकौँ दानवहरूको वध गर्दै विचित्र लीला गरिरहनुभएका श्रीगणेशले काशीनिवासी नरनारीहरूको भावभक्ति हृदयङ्गम गरी एकैचोटि प्रत्येक काशीवासीका घरमा पुगेर आतिथ्य ग्रहण गर्नुभयो । त्यसबेला श्रीगणेशले प्रत्येक घरमा छुट्टाछुट्टै लीला देखाउनुभयो । उहाँ कुनै घरमा सिँढीबाट माथिल्लो तलामा उक्लिँदै गरेका देखिनुभयो भने कहीँ बालक बनेर झोलुङ्गामा सुतिरहनुभएको थियो । अर्को घरमा उहाँ घर भित्र बस्नुभएको थियो । कुनै घरमा श्रीगणेश पलङ्गमा विराजमान हुनुहुन्थ्यो । कुनै घरमा त्यो घरका बालकहरूसँग क्रीडा गर्दै हुनुहुन्थ्यो भने कहीँ भोजन गरिरहनुभएको थियो । कहीँ शास्त्रको अध्ययन गर्दै हुनुहुन्थ्यो । कहीँ वटुहरूलाई शास्त्र पढाउँदै हुनुहुन्थ्यो। कुनै घरमा श्रीगणेश काशिराजसहित क्रीडा गरिरहनुभएको थियो । कहीँ भक्तहरूले उहाँको शरीरमा मालिस गरिरहेका थिए । कहीँ श्रीगणेश सफा र पवित्र जलले नुहाउँदै हुनुहुन्थ्यो । कहीँ भक्तहरूले उहाँको चरण पखालिरहेका थिए । कहीँ भक्तहरू षोडशोपचारले उहाँको पूजा गरिरहेका थिए । कहीँ श्रीगणेश खीर खाइरहनुभएको थियो, कहीँ भक्तहरू अनेकथरिका सुगन्धित पदार्थ श्रीगणेशको शरीरमा दलिरहेका थिए । कहीँ भक्तहरू फलफूल र मीठा नैवेद्य टक्र्याएर श्रीगणेशको स्वागत गरिरहेका थिए । कहीँ गृहपत्नीहरू, कहीँ शिशुहरू र कहीँ सेवकहरूले श्रीगणेशको सेवा गरिरहेका थिए । श्रीगणेश कहीँ इच्छापूर्वक भोजन गरी तृप्त भएर आराम गर्दै हुनुहुन्थ्यो । कुनै घरमा उहाँ वेद पाठ गर्दै हुनुहुन्थ्यो भने कहीँ गीत गाउँदै हुनुहुन्थ्यो । कुनै घरमा गई मीठामीठा कथा सुन्दै हुनुहुन्थ्यो भने कहीँ हरिगाथा सुन्दै हुनुहुन्थ्यो। कुनै घरमा श्रीगणेश सुन्दरीहरूको नृत्य हेर्दै हुनुहुन्थ्यो भने कहीँ भक्तहरूद्वारा टक्र्याइएको पूजा र आरती ग्रहण गर्दै हुनुहुन्थ्यो । कहीँ साना बालकहरूसँग खेल्दै हुनुहुन्थ्यो भने कहीँ पुराणपाठ गर्दै हुनुहुन्थ्यो । कहीँ धर्मशास्त्र र वेद पढ्दै हुनुहुन्थ्यो भने कहीँ प्रवचन सुन्दै हुनुहुन्थ्यो । यसरी एउटै समयमा सबै घरमा गई लीला गर्नुहुने श्रीगणेशले एकैचोटि भक्तहरूका घरमा उपस्थित भएर ती सबैका मनोरथ पूरा गराउनुभयो ।[३७]

---

३६. श्रीमद्भागवत, १०/६९ अध्याय ।

३७. श्रीगणेशपुराण, २/५४/११-२१ ।

दुवै कथाको प्रकृति समान छ । दुवै कथाले अवतारपुरुषको विलक्षण सामर्थ्य प्रकाशन गर्दछन् । अत: श्रीकृष्णको लीला प्रकाशित गर्ने श्रीमद्‌भागवतबाट श्रीगणेशपुराण पूर्ण प्रभावित भएको तथ्य अवगत गर्न सकिन्छ ।

## ज ) श्रीकृष्ण र श्रीगणेशका विशिष्ट नाम

### १ ) श्रीकृष्णका विशिष्ट नाम

यशोदा र नन्दका पुत्र बनेर प्रसिद्ध हुनुभएका श्रीकृष्णको नामकरण संस्कारमा आएका गर्ग ऋषिले भनेका थिए – 'हे नन्दजी! तपाईंका छोराका अनेक नाम र अनेक रूप छन्– युगानुसार सेता, राता, पहेँला र नीला । आज उहाँ तपाईंको घरमा नीलो घनश्याम रूप लिएर प्रकट हुनुभएको छ । तपाईंको घरमा आउनुभन्दा पहिले कारागारमा देवकी र वसुदेवका पुत्रका रूपमा पैदा हुनुभएका तपाईंका पुत्र वसुदेवका छोरा हुनाले वासुदेवका नामबाट प्रसिद्ध हुनुहुन्छ । उहाँका अरू करोडौं गुण र कर्मका अनुसारका नाम रहेका हुन्छन् ।'[३८]

### २ ) श्रीगणेशका विशिष्ट नाम

भगवान् गणेशले अदिति र कश्यपका पुत्रका रूपमा विनायक अवतार लिनुभयो । नामकरण संस्कारमा कश्यप ऋषिले भने – 'यी बालक सबैभन्दा श्रेष्ठ भएकाले **महोत्कट**का नामबाट विश्रुत हुनेछन् ।' त्यसपछि बालकको दर्शन गर्न आएका वशिष्ठले भने – 'यी विनायक हुन् । यिनले विचित्र एवं डरलाग्दा काम गर्नेछन् । कश्यपका छोरा बनेर पैदा भएका हुनाले यिनलाई **कश्यपनन्दन** पनि भनिनेछ ।'[३९]

भगवान् गणेश पाँच वर्षमा लाग्नुभएपछि उहाँको व्रतबन्ध संस्कार गरियो । त्यस बेला ब्रह्माजीले कमल टक्र्याउँदै **ब्रह्मणस्पति** नाम राखे । बृहस्पतिले पूजाआजा गरी **भारभूति** नामबाट सम्बोधन गरे । कुबेरले आफ्नो घाँटीको रत्नमाला झिकेर अर्पण गर्दै **सुरानन्द** नाम राखे । वरुणले आफ्नो पाश टक्र्याउँदै **सर्वप्रिय** नामबाट सम्बोधन गरे । भगवान् शङ्करले डमरु र त्रिशूल टक्र्याई **विरूपाक्ष** नामबाट सम्बोधन गर्नुभयो र आफ्नो शिरको चन्द्रकला अर्पण गर्दै **भालचन्द्र** भनेर पनि बोलाउनुभयो । परशुरामकी आमा रेणुकाले बालगणेशका निमित्त सँगै खेल्ने एउटी सुन्दरी किशोरी टक्र्याएर परशु प्रदान गरिन् । त्यसपछि **परशुहस्त** नामकरण गरिन् । तिनले श्रीगणेशको पूजा गरी उहाँलाई वाहनको रूपमा सिंह टक्र्याएर **सिंहवाहन** भनी सम्बोधन पनि गरिन् । ब्राह्मणका रूपमा आएका महासागरले मोतीको माला टक्र्याई **मालाधर** भनी नामकरण गरे । शेषनागले श्रीगणेशको आसनका रूपमा आफूलाई सुम्पिदिए र **फणिराजासन** भनी नामकरण गरे । अग्नि देवताले आफ्नो दाहशक्ति प्रदान गरी **धनञ्जय** भनी नामकरण गरे । वायु देवताले ठूलो बल प्रदान गर्दै **प्रभञ्जन** भनी नाम राखे । यसरी अनेक देवता एवं ऋषि मुनिहरूले उपहार टक्र्याउँदै आफ्नै गुणस्वभावअनुसारका श्रीगणेशका नाम राखे ।[४०]

श्रीगणेशले त्रेतायुगमा पार्वती र शङ्करका पुत्रका रूपमा मयूरेश्वर नामबाट अवतार लिनुभयो ।

---

३८. श्रीमद्भागवत १०/८/१३-१५ ।
३९. गणेशपुराण २/७ अध्याय ।
४०. पूर्ववत्, २/१० अध्याय ।

एघारौं दिनमा नामकरण संस्कारका लागि आमन्त्रित गरिएका मुनिहरूले आई शिवनन्दन बालकको विघ्ननाशक **गुणेश** भन्ने नाम राखे । गुणमय र सम्पूर्ण प्रपञ्चका स्वामी हुनुभएकाले श्रीगणेशको गुणेश नामलाई अति उत्तम ठहऱ्याई अनुमोदन गर्दै शिवजीले भन्नुभयो - 'हे मुनिगण ! तपाईंहरूले गुणस्वभावअनुसारको अति उत्तम नाम राखिदिनुभएको छ । म प्रसन्न छु ।' यति भनेर शिवजीले श्रीगणेशलाई 'तिम्रो पूजा सम्पूर्ण शुभकर्मको आरम्भमा गरिनेछ' भनी वर पनि दिनुभयो ।[४१]

द्वापर युगमा श्रीगणेश पार्वती एवं शिव र पुष्पिका एवं वरेण्यका पुत्रका रूपमा **गजानन** नामबाट पैदा हुनुभयो । त्यस अवतारमा श्रीगणेशले सिन्दूरासुरको वध गर्नुभएका कारण मुनिहरूले उहाँलाई **सिन्दूरहा** नामबाट सम्बोधन गरे । मुनिहरूले नै पूजा गरी **दैत्यविमर्दन** भन्ने नाम पनि राखे ।[४२]

श्रीमद्भागवत दशमस्कन्धमा गर्ग ऋषिले श्रीकृष्णको नामकरण गरी वासुदेव र कृष्ण भनी सम्बोधन गरे । श्रीकृष्णका अनन्त नामका विषयमा भने – 'उहाँका अनेक नाम छन् र गुण पनि । ती सबैको विषयमा मलाई राम्रो ज्ञान छ ।'[४३] गणेशपुराणमा भने सूत्रात्मक रूपमा नाम निरूपण गरिएको छैन । यहाँ प्रत्येक अवतारका प्रत्येक लीलामा श्रीगणेशका सैकडौं नामहरूको निरूपण गरिएको छ । श्रीमद्भागवतमा व्यापकरूपमा श्रीकृष्ण लीलाको वर्णन गरिएता पनि सहस्रनामको निरूपण भएको छैन । गणेशपुराणमा भने गणेशसहस्रनामको माध्यमबाट पनि श्रीगणेशका विशेषताहरूलाई उजागर गरिएको छ ।

## झ) वेदव्यासको चिन्ता

### १) श्रीमद्भागवतमा वेदव्यासको चिन्ता

श्रीमद्भागवतको प्रथम स्कन्धमा सत्र पुराण एवं महाभारतसमेतको रचना गरी गङ्गातटमा शम्याप्रास आश्रममा बस्नुभएका वेदव्यासलाई मानसिक चिन्ता परेको कुरा देखाइएको छ । उनले मनमनै 'किन हो यतिविधि रचनात्मक काम गर्दा पनि मेरो आत्मा असम्पन्न भएझैं असन्तुष्ट छ' भनिरहेका थिए । त्यतिखेर नै घुम्दै आइपुगेका देवर्षि नारदजीले वेदव्यासलाई सम्बोधन गर्दै भने – 'हे मुनिवर! तपाईंले आफ्ना रचनाहरूमा जसरी धर्म, अर्थ, काम र मोक्ष नामक पुरुषार्थहरूको व्यापक वर्णन गर्नुभएको छ, त्यसरी भगवान् श्रीकृष्णको महिमा प्रकाशित गर्नुभएन । यसैले तपाईंलाई भ्रान्ति, उद्‌विग्नता, खेद र असन्तोषले घेरिरहेका छन् । अब तपाईंले श्रीकृष्णको महिमा प्रकाशित गर्ने श्रीमद्भागवत महापुराणको रचना गर्नुहोस्, शान्ति प्राप्त हुनेछ ।'[४४]

### २) श्रीगणेशपुराणमा वेदव्यासको चिन्ता

वेदव्यासले वेदका चार भाग लगाएपछि विद्याको मदले सम्पन्न भई वैदिक ज्ञानलाई लोकमा फैलाउने हेतुले पुराणवाङ्मय रचना गर्न आरम्भ गरे । तर, निर्विघ्न समाप्तिका लागि गर्नुपर्ने मङ्गलमूर्ति गणेशको स्मरण एवं वन्दना केही गरेनन् । फलस्वरूप विघ्न आइलाग्यो । उनले वेदका अर्थ बिर्सिए र पुराणलाई वेदार्थले अनुप्राणित गराउन सकेनन् । लौकिक र अलौकिक मार्गका विधि–विधानको वर्णन गर्ने सन्दर्भमा पनि वेदव्यासलाई भ्रान्ति भयो । उनी साह्रै चिन्तित भए । पिता ब्रह्माजीसमक्ष गएर आफ्नो

---

४१. पूर्ववत्, २/८२ अध्याय ।
४२. पूर्ववत्, २/१३७ अध्याय ।
४३. श्रीमद्भागवत १०/८ अध्याय ।
४४. पूर्ववत्, १/५ अध्याय ।

समस्या बताए । ब्रह्माजीले भन्नुभयो - 'हे व्यास ! तिमीले पुराणरचनाको आरम्भमा श्रीगणेश अथवा अरू कुनै देवताको सम्झना, वन्दना आदि केही पनि गरेनौ । त्यसकारण तिमीलाई भ्रान्ति उत्पन्न भएको छ। अब तिमीले श्रीगणेशको पवित्र मन्त्र जप गरी आराधना गर । उहाँको दर्शन पाउनेछौ र पुराणवाङ्मयको रचनामा समर्थ पनि हुनेछौ ।'[४८] परमात्मा १६ कलाका अवतार श्रीकृष्णको महिमाको वर्णन नगरेका कारण व्यासलाई असन्तोष भएको कुरा श्रीमद्भागवतबाट ज्ञात हुन्छ । अर्कोतर्फ वेदको विभाग गरेर चार भाग लगाउने समग्र ज्ञानका सागर वेदव्यासलाई पुराणरचना आरम्भ गर्दा विघ्न आइलाग्यो भन्ने कुरा गणेशपुराणबाट थाहा हुन्छ ।

दुवै पुराणको प्रकृति एउटै भए पनि श्रीमद्भागवतको आख्यानमा पुराण रचनापछि असन्तोष भएको छ भने गणेशपुराणको आख्यानमा पुराणरचनाको आरम्भमा नै असन्तोष भएको छ । यी दुवै आख्यानको भिन्नता यही नै हो । श्रीमद्भागवतको आख्यानमा कृष्णको महिमा वर्णन नगरिएका कारण असन्तोष भएको छ भने गणेशपुराणको आख्यानमा प्रथमपूज्य देवता श्रीगणेशको प्रथमपूजा नभएका कारण असन्तोष देखिएको छ । निष्कर्षरूपमा भन्नुपर्दा गणेशपुराण र श्रीमद्भागवतमा व्यासको चिन्ताको प्रमुख कारण परमात्मा श्रीगणेश वा श्रीकृष्णको उपेक्षा नै हो भन्ने समान हेतु प्रकाशित भएको छ ।

## ञ ) श्रीकृष्ण र श्रीगणेशद्वारा ब्रह्माजीको गर्वहरण

### १ ) श्रीकृष्णद्वारा ब्रह्माजीको गर्वहरण

श्रीमद्भागवत महापुराणमा भगवान् श्रीकृष्णको शक्ति जान्न खोज्ने ब्रह्माजीले श्रीकृष्णका ग्वालबाल र बाच्छाबाच्छीको अपहरण गरी चिन्तित उहाँलाई तुल्याए । श्रीकृष्णले यो ब्रह्माजीको काम हो भन्ने बुझी उनले अपहरण गरेका ग्वालबाल र बाच्छाबाच्छी जस्ता थिए त्यस्तै नयाँ सृष्टि गर्नुभयो । एक वर्षसम्म पनि कसैले पत्तो पाएनन् । भगवान् श्रीकृष्णको यो शक्ति देखेर ब्रह्माजी दङ्ग परे । उनको मनमा पछुतो भयो, शरण परे र आफूले अपहरण गरेका ग्वालबाल र बाच्छाबाच्छी फिर्ता गरे । अन्तमा उनले श्रीकृष्णको चरणमा शरण पर्दै स्तुति, प्रार्थना, परिक्रमा र वन्दना गरे ।[४९]

### २ ) श्रीगणेशद्वारा ब्रह्माजीको गर्वहरण

भगवान् गणेशको मयूरेश्वर अवतार भयो । उहाँले अनेकौं दानवहरूको वधका साथै भयङ्कर दानव कमलासुरको पनि वध गर्नुभयो । ऋषिमुनि एवं ब्रह्मादि देवताहरूले श्रीगणेशको स्तुति गरे । त्यसबेला गणेशले ब्रह्माजीका मनमा माया फैलाइदिनुभयो र एक्कासि उहाँमा अहङ्कारको उदय भयो । ब्रह्माजीले मनमनै भने - 'म सबैको पितामह हुँ । मैले किन गणेशजस्तो ११ वर्षको बच्चालाई नमस्कार गर्ने ? मेरो ज्ञान, मेरो पद र मेरो महिमा सबै धिक्कारयोग्य भए । अब म मेरो सृष्टि लुकाउँछु । यदि गणेश शक्तिशाली रहेछन् भने अर्को सृष्टि गर्नेछन् ।' यसरी विचार गरी ब्रह्माजीले सम्पूर्ण सृष्टि लुकाए, संसार शून्य भयो । श्रीगणेशले ध्यानदृष्टिबाट यो सबै काम ब्रह्माजीको हो भन्ने बुझ्नुभयो । त्यसपछि उहाँले ब्रह्माजीको जस्तै नयाँ सृष्टि गरेर देखाउनुभयो । ब्रह्माजीले श्रीगणेशको महिमा बुझे । उनलाई मनमा पछुतो भयो । त्यसपछि

४८. गणेशपुराण १/१० अध्याय ।
४९. श्रीमद्भागवत १०/१३-१४ अध्याय ।

श्रीगणेशको शरणमा परी स्तुति गरे । त्यस बेला गणेशले ब्रह्माजीलाई विराट् रूप देखाउनुभयो । अन्तमा ब्रह्माजीले क्षमाप्रार्थना गरेपछि श्रीगणेशले क्षमा दिनुभयो ।[६७]

दुवै पुराणका आख्यानहरूमा पूर्ण समानता देखिए पनि केही प्रस्तुतिगत भिन्नता रहेको छ । प्रस्तुति शैलीमा भिन्नता देखिइएकाले दुवै आख्यान रोचक छन् । निष्कर्षमा भन्नुपर्दा गणेशपुराणको कथामा श्रीमद्भागवत कथाको घनीभूत प्रभाव परेको बुझ्न सकिन्छ ।

## ट) श्रीकृष्ण र श्रीगणेशद्वारा इन्द्रको गर्वहरण

### १) श्रीमद्भागवतमा श्रीकृष्णद्वारा इन्द्रको गर्वहरण

परम्परागत रूपमा इन्द्रयाग गर्दै आएका यदुवंशीहरूले इन्द्रयागको तयारी गरिरहेको देखेर श्रीकृष्णले आई इन्द्रको यज्ञ गर्नु व्यर्थ छ, इन्द्रको पूजाभन्दा गाई, ब्राह्मण र पर्वतको पूजा गर्नु फलदायी हुने कुरा बताउनुभयो । फलत: प्रतिवर्ष गर्दै आएको इन्द्रयाग त्यो वर्ष भएन । आफ्नो मखभङ्ग भएका कारण रिसाएका इन्द्रले प्रलयकालिक वर्षा गराए । व्रजभूमि जलमग्न भयो । व्रजवासी आपत्तिमा परे । श्रीकृष्णले सात दिनसम्म आफ्नो कान्छी औंलामा गोवर्धनपर्वत धारण गरी व्रजवासीको रक्षा गर्नुभयो । श्रीकृष्णको अद्भुत एवं पराक्रमपूर्ण लीला देखेर हतप्रभ भएका इन्द्रले श्रीकृष्णको शरणमा परी स्तुति र क्षमायाचना गरे ।[६८]

### २) श्रीगणेशद्वारा इन्द्रको गर्वहरण

अ) श्रीगणेश अदिति कश्यपका पुत्र बनेर महोत्कटका नामबाट अवतीर्ण हुनुभयो । उहाँ पाँच वर्षमा लाग्नुभएपछि उपनयन संस्कार गरियो । त्यसबेला आमन्त्रित देवी-देवता एवं ऋषि-मुनि सबैले भावभक्तिअनुसार नाम राखे । त्यहाँ भेला भएका आमन्त्रितहरू समक्ष कश्यपले श्रीगणेशको विशेषता बताउँदै 'जसले श्रीगणेशको विरोध गर्छ त्यो पदभ्रष्ट हुन्छ' भने । कश्यपका कुरा सुनेर इन्द्रले जवाफ दिए – 'हे कश्यपमुनि ! तपाईले गुणगान गर्नुभए पनि आफ्नै आँखाले पराक्रम नदेखेसम्म गणेशलाई उत्तम देवता कसरी मान्न सकिन्छ ? म भर्खरै परीक्षा लिन्छु' भनी उनले वायु देवतालाई गणेशलाई उडाएर आकाशमा पुऱ्याउन आदेश दिए । इन्द्रको आज्ञा पाउनासाथ प्रलयकालिक विध्वंसकारी हावा चल्यो । हावाले गणेशलाई उडाउन भरमग्दूर प्रयास गऱ्यो । तर, गणेशको रौं पनि कँपेन । त्यसपछि श्रीगणेशलाई डढाउन भनी अग्निदेवतालाई आदेश दिए । प्रलयकालिक अग्निज्वाला दन्किन थाल्यो, विश्व नै ज्वालामालाले ढाकियो र सम्पूर्ण प्राणी आत्तिए । श्रीगणेशले रोगीले दबाईको गोली निले झैं अग्निलाई निलिदिनुभयो । त्यसपछि इन्द्रले विराट्रूप धारण गर्नुहुने श्रीगणेशको दर्शन पाए । गणेशका रोमरोममा असङ्ख्य ब्रह्माण्डको दर्शन गरे । ती ब्रह्माण्डहरूमध्ये एउटा ब्रह्माण्डमा प्रवेश गरी रुमलिएका इन्द्रले बाटो पाएनन् । शिर झुकाएर विनम्र प्रार्थना गर्दै भने- 'प्रभो ! म अज्ञानी छु । मेरो अपराध क्षमा गर्नुहोस् ।' भनी दण्डवत् प्रणाम गरी स्तुति गरे । यसरी स्तुति, प्रणाम र पूजा गरेपछि इन्द्रले श्रीगणेशलाई अङ्कुश, कल्पवृक्ष र दासीहरू टक्ऱ्याई विनायक भनी नामकरण गरे । भगवान् गणेशले प्रसन्न भई इन्द्रलाई अभयदान दिनुभयो ।[६९]

---

६७ गणेशपुराण २/१०४ अध्याय ।

६८ श्रीमद्भागवत १०/२४-२७ अध्याय ।

६९ गणेशपुराण २/१ अध्याय ।

आ) पार्वती र शङ्करका पुत्रका रूपमा पैदा हुनुभएका श्रीगणेश १४ वर्षमा लाग्नुभयो । पार्वतीले एक दिन मुनिहरूसमक्ष भन्नुभयो – 'हे मुनिहरू ! मेरा छोरा गणेश १४ वर्षमा लागे । यी जन्मेपछि दानवहरूको उत्पात भइरहेकाले कहिल्यै पनि शान्तिसँग बस्न पाइएन । बालकले पनि दुःख पाए, के गर्दा अमनचैन हुन्छ बताउनुहोस् ।' मुनिहरूले भने – 'हे पार्वती! इन्द्रयाग विघ्ननाशको उपाय हो । यज्ञ गरेर इन्द्रलाई खुसी तुल्याउनुहोस् ।' त्यसपछि सबैले मिलेर इन्द्रयाग आरम्भ गरे । इन्द्रको पूजन, हवन, तर्पण र मार्जनबाट पार्वतीको आश्रम गुञ्जायमान भयो । त्यसै बेला राँगोको रूप लिएका दुई दानवहरूको वध गरी श्रीगणेश पनि आइपुग्नुभयो र यज्ञमण्डप हेर्न जानुभयो । त्यहाँ इन्द्रको पूजा र हवन भइरहेको देखेर रिसाउनुभएका गणेशले इन्द्रको यज्ञभङ्ग गरी त्यहाँका सम्पूर्ण सामान लथालिङ्ग पारिदिनुभयो । इन्द्रको प्रतिमालाई टाढा हुत्याउँदै ऋषिहरूलाई भन्नुभयो– 'हे ऋषिगण ! तपाईंहरू भन्नुहोस् त, इन्द्रले खुसी भएर हामीलाई के दिन सक्छन् ? के बाछीको पूजा गरेर गाईको दूध पाउन सकिन्छ ?' श्रीगणेशको यस्तो व्यवहारबाट इन्द्र साह्रै रिसाए । अग्नि देवतालाई लुक्न आज्ञा दिए । त्यसपछि पार्वतीको आश्रममा आगो बलेन । काँचै कचिलै खानुपर्ने विवशता आइलाग्यो । श्रीगणेशले नयाँ अग्निको सृष्टि गर्नुभयो । यो देखेर इन्द्रले वायुलाई लुक्न पठाए । सबैमा प्राणसङ्कट आइलाग्यो । श्रीगणेशले आफैं वायु बनेर सबैको रक्षा गर्नुभयो । फेरि इन्द्रले सूर्यलाई प्रचण्ड ज्वाला छरेर प्रलयकालको विभीषिका खडा गर्न आज्ञा दिए । सूर्यले प्रलयकालिक प्रचण्डता देखाएपछि श्रीगणेश बादल बनेर बर्सिनुभयो । कुनै उपायबाट पनि श्रीगणेशलाई झुकाउन असमर्थ भएका इन्द्र हैरान भएर श्रीगणेशको शरणमा परे । श्रीगणेशको स्तुति गरी प्रणाम गरेर इन्द्रलोकतर्फ फर्किए ।[६०]

गणेशपुराणका इन्द्रसम्बन्धी दुवै कथामा श्रीमद्भागवतमा वर्णित इन्द्र कथाको पूरा प्रभाव देखिन्छ। गणेशपुराणको पहिलो कथामा इन्द्रले गणेशको महिमामा शङ्का गरी शक्तिपरीक्षण गरेका छन् र परिणाममा आफैं हतप्रभ भएका छन् । दोस्रो कथा श्रीमद्भागवतकै विषय र शैलीअनुसार प्रस्तुत गरिएको छ । श्रीकृष्णले झैं श्रीगणेशले पनि इन्द्रयागको औचित्य नरहेको स्पष्ट गर्दै यज्ञभङ्ग गर्नुभएको छ । दोस्रो कथामा श्रीमद्भागवतको पूर्ण प्रभाव परेको देखिन्छ ।

## १.५ श्रीगणेशपुराणमा प्रतिबिम्बित साहित्यिक सौन्दर्य

पुराणहरू व्यास र व्यासजस्ता कविहृदयसम्पन्न आप्त मनीषीहरूका रचना हुन्। कुनै विशिष्ट देवताको चरित्रवर्णन र महिमप्रकाशनमा आधारित भए पनि पुराणहरूले तत्कालीन समाज, संस्कृति र जनभावनालाई पनि प्रतिबिम्बित गराउँछन्। पुराण आप्तहरूका रचना हुनाले आर्षकाव्य मानिन्छन् । पुराणहरूमा प्रस्तुत आख्यानहरूका पात्र-पात्रीहरूको संवादमा व्यक्त हुने सुललित भाषा र अर्थमा अलङ्कार, रीति, गुण, रस, ध्वनि र वक्रोक्ति पनि पुष्ट एवं अभिव्यक्त हुँदै जान्छन् ।

गणेशपुराण सरल, सुललित र अर्थगाम्भीर भाषामा लेखिएको आर्षकाव्य हो । यस पुराणका महानायक श्रीगणेश हुन् । यसको उद्देश्य नर-नारीहरूले सदाचार एवं सच्चरित्रताको माध्यमबाट सत्यनिष्ठ भई जीवनयापन गर्दै आस्थावान्

६०. पूर्ववत्, २/१०३ अध्याय ।

बनुन् भन्ने नै हो । चाहेमा जे गर्न पनि सक्ने, न चाहेमा केही पनि नगर्ने र विपरीत पनि गर्न सक्ने सर्वसमर्थ ओङ्काररूप परमात्मा हुनुहुन्छ र उहाँ लोककल्याणका लागि सूँढे गणेशका रूपमा अवतरित हुनुहुन्छ । उहाँको परोपकारमय, सत्यनिष्ठ र करुणाकोमल व्यक्तित्वबाट पाठ सिकेर मानिसहरूले भौतिक जीवनलाई चमत्कारपूर्ण र पारमार्थिक जीवनलाई ज्योतिर्मय तुल्याउनु पर्दछ । सबैले यस्तै आचरण गर्दा जीवन सफल तुल्याउन सक्छन् तर यसको विपरीत आचरण गरेमा तिनको जीवन व्यर्थ हुन्छ ।

यस पुराणमा श्रीगणेशका अवतारचरित्रहरूमा कहीं वात्सल्य, कहीं वीर, कहीं शान्त र कहीं अद्भुत रसको परिपाक भएको छ । दुर्जेय दानवहरूसंग संग्राम गर्दा कतै भयानक, कतै रौद्र र कतै बीभत्स रसको पनि परिपाक भएको कुरा ती ती प्रसंगमा अनुभव गर्न सकिन्छ । दैत्यराज सिन्धुको देहावसान पछि त्यसका माता-पिता र पत्नीहरूको क्रन्दनमा करुणरस अभिव्यक्त भएको छ । उक्त सबै रसहरूको अभिव्यक्ति आत्मसात् गरिएता पनि यो पुराण गणेशभक्तिपरक भएकाले रसहरू भन्दा पनि माथि मूल केन्द्रमा भावकै साम्राज्य अनुभूतिगोचर हुन्छ । ती ती रसहरूको परिपाक भएका स्थलमा तिनका अनुकूल गुण र रीति पनि प्रकट भएका छन् । अर्थानुकूल सुन्दर शब्दहरूको चयन गरिएका स्थलहरूमा शब्दालङ्कार र शब्दहरूको चारुतालाई पनि उछिनेर अर्थको चमत्कृति प्रकट गर्ने पद्यहरूमा अर्थालङ्कारको आस्वाद लिन सकिन्छ । विदग्ध काव्यहरूमाझैं शृङ्खलाबद्ध रूपमा काव्यतत्त्वको अनुभूति गर्न न पाइएता पनि विकीर्ण रूपमा रहेका काव्यतत्त्वले साहित्यिक सौन्दर्यको सिर्जना गरेका छन् । साहित्यभित्र चिन्तन र कल्पना दुवैलाई समेटिने हुँदा गणेशपुराणमा निहित गणेशगीता र विभिन्न स्तुतिपद्यहरूमा व्यक्त दार्शनिक तथ्यहरूका कारण पनि गणेशपुराणमा सङ्लो साहित्यिक सौन्दर्य अनुभव गर्न सकिन्छ । यहाँ काव्यतत्त्वसम्बन्धी केही उदाहरण प्रस्तुत गरी वस्तुतथ्यलाई प्रमाणित गर्ने प्रयास गरिंदै छ ।

### क) करुण रसको अभिव्यक्ति

श्रीगणेशद्वारा दैत्यराज सिन्धुको वध गरिएपछि विलाप गर्दै दैत्यपत्नी दुर्गाले भनेकी थिइन् – 'हे प्राणनाथ! विधाताले वेदमा दम्पतीको शरीरमा एकता हुने कुरा बताएका छन् । तर ती दुवैको प्राणमा एकता हुने कुरा किन बताएनन् ? ब्रह्मा वास्तवमा मूर्ख हुन् । आफ्ना पराक्रमी पतिको सहवासमा प्राप्त गरेको सौभाग्यका कारण म गर्वित भएँ र मैले इन्द्राणी र सावित्री जस्ता देवनायिकाहरूलाई रौं बराबर पनि गनिनँ । तर आज म सबैका सामु कसरी विधवा हुन पुगें ? हे प्राणनाथ ! म कामावेशमा हुँदा हजुरले आफ्ना हातले मेरा भत्भती पोलिरहेका अङ्गहरूमा कस्तूरी र चन्दनको लेप लगाइदिनुहुन्थ्यो । मेरा अङ्ग-प्रत्यङ्गमा शीतलता फैलिन्थ्यो । आज मेरा ती सबै अङ्ग शोकका कारण जलिरहेका छन् । हजुर छिटो आउनुहोस् र पहिलेजस्तै मेरा ती अङ्गहरूमा कस्तूरी र चन्दनको लेप लगाइदिनुहोस् । हे प्राणनाथ ! हजुरले म नभएका बेला पानीको थोपा पनि खानुहुन्थेन, अहिले किन मलाई एक्लै छाडेर स्वर्गको सुखमा रम्नु भएको छ ? हे पतिदेव ! हजुरले मसंग निस्वार्थ र आनन्ददायक प्रेम गर्नुभएको थियो । आज कुन स्वार्थका कारण मलाई बिर्सेर एक्लै स्वर्गतर्फ जानुभयो ?'

**देहैक्यं कृतवान् धाता दम्पत्योर्वेददर्शनात् । प्राणैक्यं न कृतं कस्माद् ब्रह्मणा मूढबुद्धिना ।।**
**नाहं शचीञ्च सावित्री सौभाग्यमदगर्विता । गणयामि न चान्याश्च सा कथं विधवाऽभवम् ।।**
**स्वहस्तेन च कस्तूरी चन्दनं च यदा भवान् । चर्चति स्म तदाङ्गानि शीतलानि ममाभवन् ।।**
**इदानी दह्यमानानि शोकेन तानि निर्वप । न भक्षयसि पूर्वं त्वं मद्विना विषमण्वपि ।।**

**स कथं मां विना स्वर्गसुखं भोक्ष्यसि तादृशम् । उपाधिरहितं प्रेम कृतं नानाविधं पुरा ।।**
**अनिर्वाच्यं कथं त्यक्त्वा तद्गतोसि सुरान्तक ।।**[५१]

उक्त भनाइमा मरेका पतिको निष्प्राण शरीर आलम्बन विभाव हो । क्षत-विक्षत शरीरमा घाउ लागेको उद्दीपन विभाव हो । पूर्वस्मृति अनुभाव हो र निर्वेद व्यभिचारिभाव हो । यिनै विभावहरूद्वारा पुष्ट शोकनामक स्थायी भाव करुण रसमा परिणत भएको छ ।

### ख) भाव

गणेशपुराण भक्तिप्रधान आर्ष रचना भएकाले यहाँ भावतत्त्व मुख्य बनेर रहेको छ । भावप्रधान पद्यहरूमध्ये एउटा पद्यको अर्थ यसप्रकार छ- 'हे भगवान् गणेश ! हजुरले सधैं आफ्ना भक्तहरूलाई आत्माको आनन्द र शरीरको सुख प्रदान गर्नुहुन्छ । हजुरले नै दुखी मानिसहरूप्रति ठूलो दया राख्नुहुन्छ । हे प्रभु ! काम, क्रोध, लोभ, मोह, मद र ईर्ष्याको वेगलाई नाश गरिदिनुहोस् । त्यसपछि अनन्त सुख दिने हजुरको भजन गरेर हामीले मुक्ति पाउन सक्नेछौं ।'

**सदा भक्तानां त्वं प्रसभपरमानन्दसुखदो**
**यतस्त्वं लोकानां परमकरुणामाशु तनुषे ।**
**षडूर्मीणां वेगं सुरवर सदा नाशय विभो ततो**
**मुक्तिः श्लाघ्या तव भजनतोऽनन्तसुखदात् ।।**[५२]

यस पद्यमा भक्तको भावनाबाट भक्तितत्त्व अभिव्यक्त भएको छ र त्यो भावमा परिणत भएको छ ।

### ग) शब्दालङ्कार

गणेशपुराणमा रहेका शब्दालङ्कारका उदाहरण हुनसक्ने पद्यहरूमध्ये एउटा पद्यको अर्थ यसप्रकार छ - - 'कमलनयन, आफ्नो ठूलो सूँढको टुप्पामा कमल धारण गर्नुहुने, कमलको माला लगाउनु भएका, सिन्दुरले रञ्जिनुभएका र आफ्नो शरीरमा सबै देवताहरूलाई धारण गर्नुहुने भगवान् गणेश इन्द्रका सामु प्रकट हुनुभयो ।'

**यः पुष्कराक्षः पृथुपुष्करोपि वृहत्करः पुष्करशालिमालः ।**
**आविर्वभूवाखिलदेवमूर्तिः सिन्दूरशाली पुरतो मघोनः ।।**[५३]

उक्त पद्यमा इन्द्रका सामु प्रकट हुनुभएका श्रीगणेशको वर्णनमा प्रयोग गरिएका शब्दहरूमध्ये पुष्कर शब्दको बारम्बार आवृत्ति भएको छ । यहाँ पुष्कर शब्दको आवृत्तिबाट चमत्कार पैदा हुनुका साथै उच्चारणजनित आस्वाद पनि थपिएको हुँदा अनुप्रासनामक शब्दालङ्कार निष्पन्न भएको छ ।

### घ) अर्थालङ्कार

गणेशपुराणमा रहेका अनेकौं अर्थालङ्कारका उदाहरण बन्न सक्ने पद्यहरूमध्ये एउटा पद्यको अर्थ यसप्रकार छ - परशुराम विद्यामा बृहस्पतिसमान थिए, क्षमादान दिने व्यक्तित्वहरूमा पृथिवीसमान थिए र गम्भीरतामा उनी

---

५१. पूर्ववत्, २/१२४/१८-२४ ।
५२. पूर्ववत्, २/१२३/४८ ।
५३. पूर्ववत्, २/२४/५ ।

समुद्रसमान थिए । उनी आफ्ना पिताका आज्ञाकारी पुत्रका रूपमा पनि प्रसिद्ध थिए । उक्त अर्थको प्रकाशन गर्ने पद्य यसप्रकार छ –

**वाक्ये बृहस्पतिसमः क्षमायां पृथिवीसमः । गाम्भीर्येऽब्धिसमो यस्तु पितृवाक्यपरायणः ।।**[५४]

यस पद्यमा वाचक पद समले परशुरामको तुलना बृहस्पति, पृथिवी र समुद्रसंग गराउन सघाउ पुऱ्याएको छ । यसै समपदका माध्यमबाट पाठकले परशुरामको विशाल व्यक्तित्वलाई राम्ररी बुझ्न सक्दछ ।

यी माथिका उदाहरण नमूनामात्र हुन् । गणेशपुराणमा यस्ता अनेकौं पद्यहरूबाट विभिन्न रूपमा साहित्यसौन्दर्यका किरणहरू प्रकाशित भइरहेका छन् ।

## १.६ श्रीगणेशपुराणमा नेपाल

श्रीगणेशपुराण नेपालीहरूका लागि ज्यादै श्रद्धास्पद पुराण हो र श्रीगणेश नेपालीहरूका औधि प्यारा एवं परम पूज्य देवता हुनुहुन्छ । श्रीगणेशको उपासनासरणि र अद्भुत लीलालाई केन्द्रीय विषय बनाई सनातन संस्कृतिको मर्म पस्किने श्रीगणेशपुराणमा नेपाली भूभाग, गण्डकीक्षेत्र, विश्वविख्यात नेपाली नदी कालीगण्डकी र कालीगण्डकीमा मात्र पाइने शालग्राम शिलाको चर्चा गरिएकाले हिमाली राष्ट्र नेपाल र श्रीगणेशको घनिष्ठ सम्बन्ध रहेको तथ्य अनुभूतिगोचर हुन्छ ।

भगवान् विष्णुले मधु र कैटभनामक दानवहरूसँग दीर्घकालिक युद्ध गर्दा थाकेपछि आफूमा आएको निर्बलता महसुस गरेर शक्ति र विजय प्राप्त गर्न श्रीगणेशको प्रार्थना गर्नुभयो । श्रीगणेशले प्रसन्न भई प्रकट भएर तथास्तु भन्नुभएपछि कृतज्ञ श्रीविष्णुले स्फटिकको रत्नजडित सुन्दर मन्दिर तयार गरी शालग्राम शिलाद्वारा निर्मित श्रीगणेशमूर्तिको प्रतिष्ठा गर्नुभएको विषय गणेशपुराणमा प्रकाशित गरिएको छ ।[५५]

उक्त सन्दर्भबाट श्रीगणेशपुराणमा नेपाली नदी कालीगण्डकीमा पाइने शालग्राम शिलाले महत्त्वपूर्ण स्थान पाएको तथ्य प्रमाणित हुन्छ ।

यसैगरी केदारक्षेत्रमा केही समय बसी श्रीगणेशको कृपाबाट काशी फर्किनुभएका भगवान् शिवजीले कालीगण्डकीमा पाइने शालग्रामशिलाबाट ढुण्ढिराज गणेशको मूर्ति तयार गराई काशीमा ढुण्ढिराज गणेशको मन्दिर बनाएर मूर्तिप्रतिष्ठा गर्नुभएको विषय गणेशपुराणमा उल्लिखित छ ।[५६]

विशाल मिथिलाअन्तर्गत रहेको गण्डकीनगरमा शासन गर्ने राजा चक्रपाणि विष्णुसमान नै पालनीशक्तिद्वारा सम्पन्न थिए ।[५७] गण्डकीनगर हालको चितवन जिल्लाअन्तर्गत पर्ने नारायणगढ–भरतपुरक्षेत्र नै हो भन्ने स्थानीय निवासी एवं बुद्धिजीवीहरूको विश्वास रहेको छ । चितवनकै सीमावर्ती तीर्थको नाम देवघाट रहनु र चक्रपाणिका छोरा दैत्यराज सिन्धुले विष्णु, इन्द्र आदि देवताहरूलाई गण्डकीनगरको कारागारमा थुनेर राखेको वर्णन गणेशपुराणमा पाइनुले पनि देवघाटको नजिकमा रहेको नारायणगढ–भरतपुरक्षेत्र पौराणिक गण्डकीनगर भएको ठहर गर्न सकिन्छ ।[५८]

चितवनको मैदानी भाग केही वर्ष पहिले जंगल फडानी गरी मानिसहरू बसाइएको भूभाग हो । यस्तो क्षेत्र कसरी

---

५४ पूर्ववत्, १/७७/१२ ।

५५ प्रासाद निर्ममे तत्र स्फाटिकं भूरिरत्नकम् । लसत्काञ्चनशिखरं चतुर्द्वारसुशोभनम् ।।
प्रतिमां स्थापयामास गण्डकीयोपलैः कृताम् । – पूर्ववत्, १/१८/२०–२२ ।

५६ एवमुक्त्वाऽस्थापयत् स गण्डकीयोपलैः कृताम् । मूर्तिं ढुण्ढेर्महादेवः प्रासादे चारुनिर्मिते ।। – पूर्ववत्, १/४८/२०–२१।

५७ मैथिले विषये राजा गण्डकीनगरे शुभे । चक्रपाणिरिति ख्यातः साक्षाद् विष्णुरिवापरः ।। – पूर्ववत्, २/११०/३ ।

५८ सर्वे निगृहीता देवाः सिन्धुना प्रभविष्णुना । – पूर्ववत्, २/७८/१ ।

गण्डकीनगर हुनसक्छ भन्ने सामान्य रूपमा प्रश्न उठ्नु स्वभाविक हो । तर, कालको महाप्रवाहमा विशाल नदीका तीरमा रहेका के कति महानगर, नगर एवं गाउँहरू बाढी आदि प्रकृतिप्रकोपका कारण बालुवामा र घनाजंगलका रूपमा परिणत भए भन्ने कुरा लेखाजोखा गर्न गाह्रो छ । त्यस्तै यहाँ पनि कुनै प्रकृतिप्रकोपका कारण पहिलेको गण्डकीनगर पछि आएर घनाजंगलका रूपमा परिणत हुन सक्छ । त्यस्ता प्रकृतिप्रकोप हुँदा पनि देवघाट र नारायणगढका केही स्थानहरूमा प्राचीन मन्दिरहरूका भग्नावशेष पाइन्छन् । त्यसकारण यो क्षेत्र नै प्राचीन गण्डकीनगर हो भन्ने तथ्यलाई सत्यापन गर्ने देवघाट तीर्थ छँदैछ । पुनश्च हामीहरूले नारायणगढ एवं रामपुरका बीचमा रहेको आदिगणेशको मन्दिर र त्यस्तै अनेक साक्ष्यहरू रहेको तथ्यलाई पनि बिर्सनुहुँदैन ।

देवताहरूको एकै ठाउँमा जमघट भएकाले देवघाटलाई देवाट र देवघाट दुवै नामबाट चिनिन्छ । सिन्धु दैत्यले देवताहरूलाई गण्डकीनगरको कारागारमा थुनेर एकै ठाउँमा गराएको चर्चा गरिसकिएको छ । अर्कोतर्फ नारायणगढ र रामनगरको बीचबाट भरतपुरतर्फ जाने बाटोमा रहेको आदिगणेशमन्दिर गण्डकीनगरका राजा चक्रपाणिले बनाएको हो भन्नेसमेत जनविश्वास रहेको छ ।[५९] एतावता, सप्तगण्डकीको तीरमा रहेको नारायणगढनगरलाई गण्डकीनगर भन्नुसिवाय अर्को विकल्प छैन । श्रीगणेशपुराणमा नेपाली भूभाग, नेपाली नदी कृष्णागण्डकीलगायतका अरू गण्डकीहरू र नेपालमा मात्र पाइने शालग्रामको चर्चा गरिएकाले गणेशपुराण र नेपालको घनिष्ठ सम्बन्ध प्रमाणित हुन्छ ।

गण्डकीनगरमा थुनिएका देवताहरूले संकटमोचनका लागि गण्डकीनगरक्षेत्रमा मण्डप बनाई गणेशका माटोको मूर्ति तयार गरेर श्रीगणेशको आराधना गरे ।[६०] त्यसपछि गणेशले दर्शन दिएर मैले पार्वतीपुत्रका रूपमा मयूरेश्वर अवतार लिएर सिन्धु दैत्यको वध गर्नेछु भनी आश्वस्त तुल्याउनुभयो । श्रीगणेशले मयूरेश्वरको अवतार लिनुभएपछि आफू गण्डकीनगरभन्दा चार कोश पर विराजमान भएर दैत्यराज सिन्धुलाई सम्झाउन दूतका रूपमा नन्दीलाई पठाउनुभएको थियो ।[६१] नन्दीले श्रीगणेशको समाचार सुनाई सम्झाइबुझाई गर्दा पनि सिन्धुले नमानेपछि दुवै पक्षको बीचमा घोर संग्राम भयो । अन्त्यमा श्रीगणेशका हातबाट सिन्धुले वीरगति प्राप्त गर्‍यो । सिन्धुका पिता चक्रपाणि श्रीगणेशको शरणमा परे र तिनले श्रीगणेशलाई गण्डकीनगरमा आउन अनुरोध गरे । भगवान् श्रीगणेशले पनि शिवपार्वतीसहित गण्डकी नगरमा गई देवताहरूलाई कारामुक्त गराउनुभयो ।[६२] सबैले श्रीगणेशको पूजाआराधनाका साथै जयजयकार गरे । भगवान् श्रीगणेशले सबैसँग भेट गरी आशीर्वाद दिएर बिदा हुनुहुँदा राजा चक्रपाणि चार कोशको बाटोसम्म बिदाइ गर्न गएका थिए । श्रीगणेशले तिमी फर्केर गण्डकीनगरमा गई मेरो आराधना गर भनी बिदा गर्नुभयो । उनले पनि गण्डकीनगरमा आएर आफ्ना जनताहरूसँग मिली श्रीगणेशलगायत सूर्य, विष्णु आदि पञ्चायन देवताका पाँच मन्दिर बनाई श्रीगणेश आदि सबै देवताहरूको आराधना गरे ।[६३] त्यो गणेश मन्दिर नारायणगढनजिकै रहेको कुरा उल्लेख गरिसकिएको छ ।

यसरी गण्डकी नदी, शालग्राम शिला, गण्डकीनगर र गणेश मन्दिरको श्रीगणेशपुराणमा वर्णन गरिएकाले गणेशपुराणमा नेपालको महत्त्वपूर्ण स्थान रहेको तथ्य प्रमाणित हुन्छ ।

---

५९. प्रा.डा. दुर्गादत्त शर्मोपाध्याय पौडेलबाट प्राप्त जानकारी ।
६०. गणेशपुराण २/७८ अध्याय ।
६१. योजनावधि गण्डक्या अवरुद्ध सिन्धुदैत्येन: । आतिष्ठत् स मयूरेशो महर्षीसत्तमुत्तमम् ।। – पूर्ववत्, २/११०/३ ।
६२. पूर्ववत्, २/१२४/५२-५४ ।
६३. पूर्ववत्, २/१२५/३-९ ।

## १.७ नेपालमा श्रीगणेशपुराण

नेपालको गण्डकीक्षेत्रमा श्रीगणेशपुराणको व्यापक प्रसिद्धि रहेको छ । नेपाल राष्ट्रिय अभिलेखालय, धवलागिरि अञ्चलका बागलुङ, पर्वत, म्याग्दी आदि जिल्लाका विद्वत् परिवार र काठमाडौंलगायत केही प्राचीन नगरहरूमा गणेशपुराणका प्राचीन पाण्डुलिपिहरू पाइएकाले नेपालमा धेरै अघिदेखि गणेशपुराणको भौतिक उपस्थिति रहेको तथ्य प्रमाणित हुन्छ ।

श्रीगणेशपुराणको धार्मिक उपादेयता र उपयोगको छुट्टै महत्त्व रहेको छ । धार्मिक पारायण र प्रवचनका माध्यमबाट सनातन संस्कृतिका सबै अङ्गहरूको संरक्षण, संवर्द्धन र प्रचार-प्रसारमा श्रीगणेशपुराणको योगदान अविस्मरणीय छ । धवलागिरि अञ्चलका बागलुङ, पर्वत र म्याग्दी जिल्ला, गण्डकी अञ्चलका स्याङ्जा एवं कास्की जिल्ला र नारायणी अञ्चलको चितवन जिल्लामा गणेशपुराणका धेरै पाण्डुलिपि पाइनुले गण्डकीप्रवाह क्षेत्रमा श्रीगणेशपुराणको व्यापक प्रभाव रहेको तथ्य स्पष्ट हुन्छ । नेपाली समाजमा श्रीगणेशपुराणयज्ञद्वारा श्रीगणेशको आराधना गरिनुमा विघ्नध्वंस, विपत्तिविदारण, संकटमोचन र मनोरथसिद्धिजस्ता सामान्य प्रयोजनका साथै पुत्रप्राप्ति अथवा सन्तानप्राप्तिजस्तो विशिष्ट प्रयोजनले अहं भूमिका खेलेको तथ्य प्रतीत हुन्छ ।

सन्तानप्राप्ति वा पुत्रप्राप्तिका लागि नेपालका अरू भागमा महाभारतको खिलपर्व हरिवंशपुराण लगाई बालकृष्णको उपासना गर्ने प्रचलन अत्यधिक मात्रामा रहेको पाइन्छ । तर, गण्डकीक्षेत्रमा भने व्यापकरूपमा श्रीगणेशपुराण यज्ञद्वारा बालगणेशको आराधना गर्ने प्रचलन रहेको देखिन्छ । गणेशपुराणमा गण्डकीनगरको चर्चा गरिनु र शालग्रामनिर्मित गणेशप्रतिमाको उल्लेख हुनुबाट गण्डकी र शालग्रामशिलासँग श्रीगणेशको घनिष्ट सम्बन्ध रहेको देखिन्छ । यसैले गण्डकीक्षेत्रमा गणेशपुराणको र परब्रह्मरूप श्रीगणेशको पनि उत्तिकै प्रभाव रहेको छ ।

गण्डकीप्रवाहक्षेत्रका जिल्ला र गाउँहरूमा श्रीगणेशपुराण यज्ञद्वारा श्रीगणेशको आराधना गरिने कुरा ज्यादै प्रसिद्ध छ । यसैले श्रीकृष्णभक्तिको पवित्र भूमि वृन्दावन, मथुरा र गोकुल भएझैं गण्डकीप्रवाहक्षेत्र श्रीगणेशभक्तिको पवित्र भूमि हो भन्न सकिन्छ ।

बागलुङ जिल्लाका सदाचारी एवं गणेशभक्त विद्वान् पं. लक्ष्मीपति रेग्मीले पुत्रको कामना गर्ने १०८ सदाचारी परिवारमा गणेशपूजन, गणेशपुराणको पारायण र प्रवचन गरेका थिए । ती सबै परिवारले पुत्र प्राप्त गरेको सत्यघटना गण्डकीक्षेत्रमा नै चर्चाको विषय बनेको कुरा ज्ञात हुन आएको छ ।[१४] गोरखपुरका एकजना विशिष्ट विद्वान्ले नेपालको पर्वत जिल्लामा पर्ने पाङ गाउँबाट गणेशपुराणको पाण्डुलिपि झिकाई गणेशपुराण यज्ञ लगाउँदा एक वर्षभित्र नै तिनलाई पुत्र प्राप्त भएको घटनाबाट श्रीगणेशपुराणको क्षिप्र प्रभावकारिता बुझ्न सकिन्छ ।

गण्डकीक्षेत्रका अतिरिक्त नेपालका अन्य भागमा पनि श्रद्धालुहरूले गणेशपुराण यज्ञ लगाउँछन् । नेपालका सबै जिल्लाहरूमा श्रीगणेशसँग सम्बन्धित विशिष्ट पर्वहरूमा गणेशपुराण यज्ञ लगाई श्रीगणेशको आराधना गरिन्छ । नेपालका शिवशक्ति मन्दिर एवं सन्तहरूका आश्रमहरू र श्रद्धालु गृहस्थहरूका घरमा पनि गणेशपुराण यज्ञ लगाउने परम्परा रहिआएको छ । गणेशपुराणअन्तर्गतको गणेशसहस्र नामका नाममन्त्रहरूका पाठ र गणेशपुराणको उत्तरार्धमा रहेको गणेशगीताको अनुशीलनमा पनि गणेशभक्तहरूको प्रवृत्ति रहेको बुझिन्छ । नेपालमा गणेशपुराणमा बताइएका संकष्टचतुर्थीव्रत, वरदचतुर्थीव्रत, मङ्गलचतुर्थीव्रत गर्ने दीर्घ परम्परा रहेको छ ।

एतावता गौरी र शंकरको क्रीडाभूमि नेपालमा गौरी र शंकरका प्यारा पुत्र परब्रह्मरूप श्रीगणेशको महिमगायन गर्ने श्रीगणेशपुराण गौरी, शंकर र गणेशझैं श्रद्धास्पद र लोकप्रिय रहेको कुरा निर्धक्क भन्न सकिन्छ ।

ॐ

१४. पं. लक्ष्मीपति रेग्मीका स्रोतहरूबाट प्राप्त जानकारी ।

## परिच्छेद - दुई

# गणेशपुराणका महत्त्वपूर्ण सन्दर्भ

श्रीगणेशपुराण सदाचार, उपासना एवं अध्यात्म चिन्तनको कोषका रूपमा रहेको छ । यसमा श्रीगणेशका लीलापरक कथाहरूका साथै श्रीगणेशको विलक्षणता अवगम गराउने विभिन्न सन्दर्भ रहेका छन् । यस परिच्छेदमा श्रीगणेशको दर्शन पाउने भक्तहरूले कसरी र कुन रूपमा दर्शन पाए यसको लेखाजोखा गरिएको छ । यसैगरी विभिन्न भक्तहरूले गरेका प्रभावकारी स्तुतिहरूको माध्यमबाट श्रीगणेशको स्वरूप र आध्यात्मिक तत्त्व प्रस्तुत गरिएको छ भगवान् श्रीगणेशका दाजु प्रथम पूज्य देवता स्वामी कार्तिकेयको महिमा प्रस्तुत गरिएको छ । यसका साथै गणेशपुराणमा श्रीमद्भगवद्गीताकै तुलनामा रहेको महिमामय गणेशगीताको सार प्रस्तुत गरिएको छ । यसमा रहेको गणेशको धाम स्वानन्दभुवनको विलक्षण सौन्दर्यलाई पनि प्रस्तुतिको विषय बनाइएको छ ।

## २.१ गणेशदर्शनपरक सन्दर्भ

भगवान् गणेशले श्रद्धा एवं भक्तिपूर्वक आफ्नो आराधना गर्ने भक्तहरूलाई तिनीहरूको प्रकृति एवं स्तरअनुसार वेलाबेलामा दर्शन दिनुभएका अनेक प्रसङ्ग गणेशपुराणमा रहेका छन् । तीमध्ये केही प्रसङ्गहरूलाई दृष्टान्तका रूपमा प्रस्तुत गरिँदैछ ।

### क) कमलासुरद्वारा विश्वरूपदर्शन

भगवान् गणेशको गुणग्राहिता अनुपम छ । आफ्नो परम शत्रु कमलासुरको युद्धनिष्ठा, समर्पण र अपूर्व शौर्य देखेर श्रीगणेशले त्यसलाई आफ्नो विश्वरूप देखाउनुभएको कुरा गणेशपुराणमा यसरी वर्णन गरिएको छ - 'कमलासुरको विलक्षण शौर्य देखेर सन्तुष्ट हुनुभएका गुणग्राहकहरूमा उत्तम भगवान् गणेशले त्यसलाई आफ्नो अनन्त विश्वरूपको दर्शन गराउनुभयो । त्यसपछि त्यसले दशै दिशामा श्रीगणेशको दर्शन पायो । अत्यन्त चकित भई आँखा चिम्लिदा त्यसले आफ्नो हृदयभित्र पनि श्रीगणेशको दर्शन प्राप्त गरेको थियो ।'[१]

### ख) गन्धर्वहरूद्वारा पञ्चायतनका रूपमा श्रीगणेशको दर्शन

कैलासको यात्रामा निस्केका हाहा, हुहु र तुम्बुरुनामक गन्धर्वहरू विश्रामका लागि कश्यप आश्रममा गए । भोजनका लागि प्रार्थना गरिएका ती पाहुनाहरूले पञ्चायतन देवताको पूजा गरेपछिमात्र भोजन गर्ने कुरा बताई विधिपूर्वक देवी, शिव, विष्णु, विनायक र सूर्यको पूजन गरे । त्यस बेला कश्यपनन्दन महोत्कट गणेश बाहिरबाट घर आउनुभयो। उहाँले गन्धर्वहरूद्वारा पूजा गरिएका पञ्चायतन देवताका प्रतिमाहरूको दर्शन गरेपछि कौतूहलवश ती प्रतिमा लुकाउनुभयो ।

---

१ ततस्तुतोष भगवान् मयूरेशो गुणाग्रणीः । दर्शयामास तस्मै स विश्वरूपमनन्तकम् ॥
दश दिक्षु मयूरेशं ददर्श कमलासुरः । विस्मितश्चाक्षि नयनं हृदि तं परिदृष्टवान् ॥ - श्रीगणेशपुराण २/१०३/३-४ ।

गन्धर्वहरूले प्रतिमा हराएको थाहा पाएपछि प्रतिमा नभेटिएसम्म भोजन नगर्ने आफ्नो निर्णय सुनाए। प्रतिमा लुकाउने मामलामा श्रीगणेशमाथि शङ्का गरी सोधपुछ गरियो । तर उहाँले 'मैले लिएको छैन, खाएको भए मेरो मुखमा हेर्नुहोस्' भन्दै मुख खोल्नुभयो । गणेशले मुख खोल्नासाथ उहाँको मुखभित्र विराट्‌रूपको दर्शन गर्दा पार्वती मूर्च्छित हुनुभयो । सदाशिवले पनि गणेशका मुखभित्र कैलास, वैकुण्ठसहित विष्णु, सत्यलोक, अमरावतीसहित इन्द्र, पर्वत, वन, समुद्र, नदी, यक्ष, पन्नगसहित पृथिवी, चौध भुवन, लोक, पाताल, दशै दिशा र अद्‌भुत सृष्टि नजर गर्नुभयो ।

देवप्रतिमा नभेटिएसम्म भोजन नगर्ने प्रतिज्ञा गरेका गन्धर्वहरूले गणेश अलप हुँदा उहाँको ठाउँमा देवी, विष्णु, शिव, विनायक र सूर्यको प्रत्यक्ष दर्शन पाए । ती गन्धर्वहरूले क्षमायाचनापूर्वक महोत्कट भगवान्‌को चरणमा प्रणाम गरेपछि भोजन ग्रहण गरे । त्यसबेला तिनीहरूले श्रीगणेशलाई अनेक रूपमा दर्शन गरेको विषयमा भनिएको छ – 'तिनीहरूले केही बेर पञ्चायतनदेवताको रूपमा श्रीगणेशको दर्शन गरे, त्यसपछि भयानक आकारका ईश्वरका रूपमा दर्शन गरे र केही बेरमै विराट्‌रूपधारी प्रभुका रूपमा पनि दर्शन गरे ।'[२]

## ग ) तपस्यारत शिवजीद्वारा शिवरूप श्रीगणेशको दर्शन

त्रिपुरासुरको वध असम्भवझैं प्रतीत हुँदा स्वयं शिवजीले पनि श्रीगणेशको आराधना गर्नुभयो । त्यसबेला उहाँले जुन रूपको दर्शन गर्नुभयो र उहाँलाई जस्तो भ्रान्ति भयो त्यो यसरी वर्णन गरिएको छ – 'पाँच मुख, दश भुजा र दश प्रकारका आयुधहरूले सुहाउनुभएका भालचन्द्र, मुण्डमालाधारी, सर्वालङ्कारद्वारा अलङ्कृत र चन्द्रसुन्दर श्रीगणेशको दर्शन पाउँदा भगवान् शिवजीले आश्चर्य मान्दै मनमनै भन्नुभयो – अहिले मैले आफ्नै स्वरूप आफैले देखेझैं लाग्यो । के म आफै दुई रूपमा परिणत भएको छु ?'[३]

## घ ) परमभक्त गृत्समदद्वारा श्रीगणेशको दर्शन

आफ्ना भक्त गृत्समदको तपस्याबाट प्रसन्न हुनुभएका श्रीगणेशले आफू अनिर्वचनीय स्वरूपका हुनुभए तापनि गजानन स्वरूपमा उनलाई दर्शन दिनुभएको विषय गणेशपुराणमा यसरी वर्णन गरिएको छ – 'त्यस बेला सृष्टिका कारणरूप भगवान् श्रीगणेशका ताडीपत्राकारका कानहरू कम्पायमान थिए । उहाँ विशाल गजराजको लीला देखाइरहनुभएको थियो । सहर्ष सुन्दर क्रीडा गरिरहनुहुँदा उहाँको मस्तकमा दिव्यकान्ति भएका चन्द्रमा शोभायमान थिए । कमलद्वारा बनेको सुन्दर र विशाल माला धारण गर्नुहुने भगवान् गणेशका सुँढको टुप्पामा एउटा सुन्दर कमलको फूल देदीप्यमान थियो । देवता र महर्षिहरूले उहाँलाई चारैतिरबाट घेरिरहेका थिए । त्यसबेला श्रीगणेश सिंहमा सवार हुनुहुन्थ्यो र दश भुजाद्वारा शोभायमान पनि । उहाँको छातीमा सर्पराज शेषनाग यज्ञोपवीतका रूपमा रहेका थिए । कुङ्कुम, अगर, कस्तूरी र चन्दनको लेपन गरेका कारण श्रीगणेशको श्रीविग्रहबाट आह्लादक सुगन्ध चारैतिर फैलिएको थियो । कोटिसूर्य भन्दा पनि अधिक कान्तिले सुहाउनुभएका प्रभुका साथमा सिद्धि र बुद्धि शोभायमान थिए ।'[४]

---

२ अथ ते ददृशुर्बालं क्षणं पञ्चस्वरूपिणम् । क्षणं महाभीतिकरं क्षणं तं विश्वरूपिणम् ॥ – पूर्ववत्, २/१/३१ ।

३ पञ्चास्यो दशभुजो ललाटेन्दुः शशिप्रभः । मुण्डमालः सर्पभूषो मुकुटाङ्गदभूषणः ॥
अग्न्यर्कशशिनो भाभिः तिरस्कुर्वन् दशायुधः । तद्भासा धर्षितो देवोऽपश्यत्तं पुरःस्थितम् ॥
विनायकं पञ्चमुखं पञ्चास्यमपरं शिवम् । तं दृष्ट्वाऽचिन्तयद् देवः किमहं द्विविधोऽभवम् ॥ – पूर्ववत्, २/१४४/२६-२८ ।

४ चलत्कर्णतालो बृहद्दन्तिलीलो मुदा चारुखेलो लसच्चन्द्रभालः । बृहत्पद्ममाली जगत्कार्यमूलः करे कञ्जनालो नमत्लोकमेलः ॥
सिंहारूढो दशभुजो व्यालयज्ञोपवीतवान् । कुङ्कुमागरुकस्तूरीचारुचन्दनचर्चितः ॥
सिद्धिबुद्धियुतः श्रीमान् कोटिसूर्याधिकद्युतिः ॥ – पूर्ववत्, १/३७/४१-४२ ।

### ङ) स्कन्दद्वारा चतुर्भुज गणेशको दर्शन

शिवजीबाट षडक्षर गणेशमन्त्रको दीक्षा पाएका स्कन्द एकान्त एवं पवित्र वनमा तपस्या गर्न गए । एउटा पाउले टेकेर कठोर तपस्या गरे । भगवान् शिवजीले बताउनुभएको विधिबाट व्रत गरे । मन्त्रानुष्ठान र व्रतका प्रभावले स्कन्दमाथि श्रीगणेश प्रसन्न हुनुभयो । उहाँले स्कन्दलाई योगिध्येय चतुर्बाहुका रूपमा दर्शन दिनुभयो । गणेशपुराणमा स्कन्दले दर्शन गरेको गजाननको स्वरूपसौन्दर्य यसरी वर्णन गरिएको छ – 'चार भुजाद्वारा सुशोभित, महामुकुटद्वारा अलङ्कृत, कुण्डल एवं केयूर धारण गर्नुहुने, एकदन्त, निधारमा चन्द्रमा धारण गरी सुहाउनुभएका, दण्डाकार सूँढद्वारा रमणीय देखिनुहुने, हातमा पाश एवं अङ्कुश लिनुहुने र माला एवं स्वदन्त धारण गर्नुहुने, सौन्दर्यसम्पन्न, मोती एवं मणिबाट बनेका अलङ्कारले सुहाउनुभएका, नाभिमा शेषनागलाई यज्ञोपवीत बनाएर धारण गर्नुहुने, दिव्य वस्त्र र दिव्य परिधानद्वारा सुशोभित, दिव्य गन्धको लेपन गर्नुहुने, अनेकौं सूर्यका कान्तिले जाज्वल्यमान, तेजको ज्वालाका कारण झलमल्ल चम्किनुभएका श्रीगजाननको दर्शन स्कन्दले गरे ।'[५]

### च) कश्यपसन्ततिद्वारा श्रीगणेशको दर्शन

कश्यपद्वारा श्रीगणेशको मन्त्रदीक्षा पाएर आफ्नो प्रकृतिअनुसार विभिन्न उद्देश्यले तपस्या गर्ने कश्यपका सन्ततिहरूलाई श्रीगणेशले दर्शन दिनुभएको विषय वर्णन गर्दै भनिएको छ – जुन साधकले जसरी ध्यान गरेका थिए त्यसरी नै श्रीगणेशले कसैलाई मेघवर्ण अष्टभुज, शशिवर्ण चतुर्भुज, कसैलाई षड्भुज, कसैलाई सहस्रभुज, कसैलाई सिंहवाहन, कसैलाई अश्ववाहन, कसैलाई मयूरवाहन, कसैलाई मूषकवाहन, कसैलाई बालक, कसैलाई युवा एवं कसैलाई वृद्धरूपमा समेत दर्शन दिनुभयो ।[६]

### छ) अदितिद्वारा पुत्रका रूपमा अवतरित श्रीगणेशको दर्शन

भगवान् श्रीगणेशले महोत्कट अवतार लिएर अदितिलाई दर्शन दिनुभएको विषयमा भनिएको छ– 'अदितिले गर्भधारण गरेको नौ महिनापछि पुत्ररत्न पैदा गरिन् । ब्रह्माजीले कश्यपनन्दन भनी बालकको नामकरण गर्नुभयो। बालक गणेश बलवान्, दशभुजाद्वारा सुहाउनुभएका, कर्ण र कुण्डलले अलङ्कृत, कस्तूरीतिलक धारण गर्नुहुने, मुकुट र मालाद्वारा विभूषित एवं सिद्धिबुद्धिद्वारा सेवित हुनुहुन्थ्यो ।'[७]

### ज) विश्वदेव ब्राह्मणद्वारा नारायणका रूपमा श्रीगणेशको दर्शन

भोजन गर्ने इच्छाले कैलासमा पार्वतीको निवासमा पाहुना बनेर आएका नारायणभक्त विश्वदेव ब्राह्मणलाई

---

५. *निजं रूपं महातेजाश्चतुर्भुजविराजितम् । महामुकुटसंशोभि कुण्डलाङ्गदशोभितम् ॥*
*एकदन्तं भालचन्द्रं शुण्डादण्डविराजितम् । पाशाङ्कुशकरं मालादन्तहस्तं सुशोभनम् ॥*
*मुक्तामणिगणोपेतं सर्पराजयुतोदरम् । दिव्यवस्त्रपरीधानं दिव्यगन्धानुलेपनम् ॥*
*अनेकसूर्यसङ्काशं तेजोज्वालासुदीपितम् । ददर्श षण्मुखस्तत्र विस्मयोत्फुल्ललोचनः ॥ – पूर्ववत्, १/८७/२६–२९ ।*

६. *यो यथा ध्यातवान् देवं तथारूपस्तदाऽभवत् । कस्यचित् पुरत आसीद् मेघाभोऽष्टमहाभुजः ॥*
*कस्यचित् पुरत आसीच्छशिवर्णश्चतुर्भुजः । अग्रे कस्यचिदासीत् स षड्भुजोऽसौ गणेश्वरः ॥*
*सहस्रनयनस्तावद्भुजोऽभवदपि कस्यचित् । भाति बालस्वरूपोऽपि युवा वृद्धोऽपि भासते ॥*
*तेजोरूपी महाकाय आखुवाहनगः पुनः । सिंहगो वाजिगो वापि गजास्योऽनेकवक्त्रवान् ॥ – पूर्ववत्, १/९१/३८–४१ ।*

७. *सम्पूर्णे नवमे मासि सुषुवे पुत्रमुत्तमम् । ब्रह्मवाक्यादभूत् ख्यातो नाम्ना कश्यपनन्दनः ॥*
*दशभुजो महाबलः कर्णकुण्डलमण्डितः । कस्तूरीतिलसद्भालो मुकुटभ्राजिमस्तकः ॥*
*सिद्धिबुद्धियुतः कण्ठे रत्नमालाविभूषितः ॥ – पूर्ववत्, २/६/२२–२४ ।*

श्रीगणेशले आफ्नो दिव्य चतुर्बाहुरूप देखाउँदा पनि सन्तोष भएन । 'म नारायणको दर्शन नगरी भोजन गर्दिनँ' भन्ने तिनको प्रतिज्ञा सुनेर चतुर्बाहुरूपलाई अन्तर्हित गराई श्रीगणेशले नारायणको रूपमा दर्शन दिनुभएको विषयमा भनिएको छ - 'श्रीगणेश चतुर्बाहु रूप अन्तर्धान गरी नारायणका रूपमा प्रकट हुनुभयो । पीताम्बरधारी, शङ्ख, चक्र, गदा एवं पद्मद्वारा सुहाउनुभएका, अन्तर्यामी, अनेक अलङ्कारद्वारा सुशोभित, सर्वालङ्कार सुन्दर, छातीमा कौस्तुभमणि धारण गर्नुहुने, वनमालाले सुहाउनुभएका, शेषनागमा शयन गर्नुहुने, महालक्ष्मीद्वारा पाउमा सेवा गरिनुभएका नारायणरूप गणेश प्रकट हुनुभयो । विश्वदेवले नारायणको दर्शन गरी खुसी भएर पूजा गरे र दर्शन पाएका स्वरूपमा मुग्ध भई तन्मय भए । शरीरभाव बिर्सेर आनन्दमग्न भए । सच्चिदानन्दमा रमाएका विश्वदेवले भगवान्को स्तुति गरे ।'[८]

### झ) पार्वतीद्वारा पुत्रका रूपमा अवतरित श्रीगजाननको दर्शन

श्रीगणेशलाई पुत्रका रूपमा प्राप्त गर्ने इच्छाले तपस्या गरिरहेकी पार्वतीले श्रीगणेशको दर्शन पाएपछि उहाँको कृपाबाट श्रीगणेशलाई गर्भमा धारण गर्नुभयो । नौ महिना पुगेपछि पार्वतीले पुत्रका रूपमा अवतार ग्रहण गर्नुहुने श्रीगणेशको दर्शन गर्नुभएको विषय यसरी वर्णन गरिएको छ - 'किरीट-केयूरधारी, कोटिसूर्यसमान प्रकाशमान, चतुर्बाहु र प्रवालझैं रक्तिम आभासम्पन्न ओंठद्वारा सुहाउनुभएका श्रीगणेशको दर्शन पाउनुभयो ।'[९]

### ञ) काशीका नरनारीहरूद्वारा अनेकरूपमा श्रीगणेशको दर्शन

काशिराजसहित श्रीगणेशले धूम्राक्षको वध गर्नु भएपछि काशी नगरीमा आउँदा त्यहाँका नरनारीहरूले सहर्ष उहाँहरूको पूजा र स्वागत गरे । त्यसबेला श्रीगणेशले काशीवासी नरनारीहरूलाई भावभक्ति र अवस्थाअनुसार दर्शन दिएर कृतार्थ गराउनुभएको विषयलाई लिएर गणेशपुराणमा भनिएको छ - 'त्यसबेला ब्राह्मणहरूले श्रीगणेशलाई परमात्मा, क्षत्रियहरूले रणाकाङ्क्षी महावीर, दैत्यहरूले सर्वसंहारक रुद्र र शूद्रहरूले श्रीहरि र राजाका रूपमा दर्शन गरे । शुद्ध स्फटिकमा रातो र पहेंलो रङ्ग चम्किएझैं जसका मनमा जस्तो भावना थियो तदनुसार भक्तहरूले भगवान् गणेशको दर्शन गरी आनन्द प्राप्त गरिरहेका थिए ।'[१०]

### ट) काशीनिवासी नरनारीहरूद्वारा श्रीगणेशको अनन्तरूप दर्शन

काशीका कतिपय मानिसहरूले श्रीगणेशलाई आ-आफ्ना घरमा भोजन गर्न निमन्त्रणा गरेका थिए । भगवान् समयमा आउनुभएन । त्यसकारण ती सबै बेचैन भए । उनीहरूले शुक्लब्राह्मणका घरमा श्रीगणेशले रुखा-सुखा भोजन गर्नुभएको थाहा पाए । तीमध्ये केही पाखण्डी गृहस्थीहरूले आफूलाई बेवास्ता गरी दरिद्र ब्राह्मणका घरमा भोजन गर्न गएका कारण जगद्गुरु श्रीगणेशको निन्दा गरे। तिनले फेरि पनि भगवान्लाई आफ्नो घरमा जान आग्रह गरे । भगवान्ले भन्नुभयो - 'म शुक्लब्राह्मणको घरमा पेटभर भोजन गरेर टन्न अघाएको छु ।'

---

८ अन्तर्धाय प्रादुरासीन्नारायणस्वरूपवान् । पीताम्बरः शङ्खचक्रगदापद्मधरो विभुः ॥
नानालङ्कारशोभितः सर्वालङ्कारसुन्दरः । कौस्तुभेन लसद्वक्षा वनमालाविभूषितः ॥
शेषशायी महालक्ष्म्या संवाहितपदाम्बुजः । विश्वदेवस्तु तं दृष्ट्वा ननाम परिपूज्य च ॥
आनन्दमग्नवान् भक्त्या विस्मृत्य च शरीरताम् । उवाच च चिदानन्दपरिपूर्णो द्विजोत्तमः ॥ - पूर्ववत्, २/१०५/२७-३० ।

९ किरीटकेयूरधरं कोटिसूर्यसमप्रभम् । प्रवालाधरशोभाढ्यं चतुर्बाहुविराजितम् ॥ - पूर्ववत्, २/१३०/१ ।

१० ब्राह्मणाः परमात्मानं पश्यन्ति स्म विनायकम् । क्षत्रियास्तं महावीरं पश्यन्ति स्म रणोत्सुकम्॥
दैत्यास्तं ददृशुः सर्वे रुद्रं संहारकारकम् । शूद्रास्तं हरिरूपेण नृपरूपेण चापरे ॥
यस्य यस्य यथा भावस्तादृशं सोऽभ्यवीक्षत । यथा रक्ते सिते पीते स्फटिकस्तादृशाकृतिः ॥ - पूर्ववत्, २/१३/१९-२१ ।

भगवान्‌को उत्तर सुनेपछि ती पाखण्डीहरूले आफ्नो घरमा गणेशका लागि तयार गरेको भोजन आफै खाए। सज्जन भक्तहरू भने भक्तिपूर्वक भोजन तयार गरी उहाँको प्रतीक्षा गरिरहेका थिए । भगवान्‌ले भोजन ग्रहण नगरेसम्म हामी भोजन गर्दैनौं भनी उहाँको ध्यान गरिरहेका थिए । ती सबैको भक्तिभावना बुझेर श्रीगणेशले आफूलाई अनेक रूपमा परिणत गरी प्रत्येक भक्तका घरमा गएर तिनलाई दर्शन दिई भोजन ग्रहण गर्नुभयो ।

त्यसबेला श्रीगणेशले आफूलाई अनेकरूपमा परिणत गराउनुभएको विषय यसरी प्रस्तुत गरिएको छ - 'आफ्ना श्रद्धालु भक्तहरूका लागि श्रीगणेशले एउटै आकाश अनेक घटाकाशमा परिणत भएझैं आफू एकरूप भए तापनि अनेकरूप बन्नुभयो अथवा एउटै सूर्य जसरी जलपूर्ण पात्रहरूमा प्रतिबिम्बित भएर अनेक देखिन्छन् त्यसैगरी सर्वज्ञानसम्पन्न र बुद्धिवारिधि श्रीविनायकले प्रत्येक भक्तको भावअनुसार दर्शन दिएर त्यसलाई तृप्त गराउनुभयो। उहाँका कसैका घरमा गएर पलङमा बस्नुभयो । कसैका घरमा गई जप गर्न लाग्नुभयो । कहीं गएर उहाँ दानकर्ममा प्रवृत्त हुनुभयो भने कहीं भोजन ग्रहण गर्न उत्सुक देखिनुभयो । कहीं उहाँले वैदिक बटुहरूलाई अङ्गसहित वेदको अर्थबोध गराउनुभयो। कुनै घरमा गई उहाँले शास्त्रार्थ गर्नुभयो । कहीं उहाँ आफै अध्ययनमा लाग्नुभयो। यसरी अनेक रूप धारण गरी अनेक घरमा गएर श्रीगणेश दिव्यरूपमा सुहाउनुभयो । सबै नरनारीहरू आफ्नो घरमा श्रीगणेशलाई विराजमान हुनुभएको देखेर भगवान्‌सँग आफू पूर्वपरिचित रहेको र उहाँ पहिले पनि पटक पटक आफ्नो घरमा आएसमान सहज आत्मीयताको अनुभूति गरिरहेका थिए ।[११]

## ठ) सनक र सनन्दनद्वारा सर्वत्र श्रीगणेशको दर्शन

ब्रह्मज्ञानी सनक र सनन्दन श्रीगणेशको दर्शन गर्न काशिराजको दरबारमा आएका थिए । भगवान् बाहिर जानुभएको थाहा पाएर तिनीहरू पनि नगरतर्फ गए । त्यहाँ तिनीहरूले श्रीगणेशको विश्वव्यापी स्वरूपको दर्शन गरेका थिए । त्यस घटनाको गणेशपुराणमा यसरी निरूपण गरिएको छ – त्यहाँ तिनीहरूले पूर्व-पश्चिम-उत्तर-दक्षिण-तल-माथि सर्वत्र एउटै विनायकलाई सर्वत्र देखे। कहीं हात्तीमा सवार, कहीं बाटोमा हिंडिरहनु भएका, कहीं रथमा सवार, कहीं शिविकामा सवार र कहीं भक्तहरूका घर-घरमा गई भोजन गर्न लाग्नुभएका श्रीगणेशको दर्शन गरे । सनक, सनन्दन जुन जुन घरमा जान्थे त्यहाँ त्यहाँ श्रीगणेश उपस्थित हुनुहुन्थ्यो । उहाँको यो लीला देखेर ती दुबै चकित भए । तिनीहरूको दृष्टिमा भगवान् गणेश कहीं नैवेद्य ग्रहण गर्दै हुनुहुन्थ्यो, कुनै घरमा हातपाउ पखाल्दै हुनुहुन्थ्यो, कहीं फल खाँदै हुनुहुन्थ्यो, कहीं पान चपाउँदै हुनुहुन्थ्यो भने कहीं पलङमा विराजमान भई भक्तहरूलाई आशीर्वाद दिंदै हुनुहुन्थ्यो । यसरी ती दुबै ऋषिले श्रीगणेशको अद्‌भुत विभूतिको दर्शन गरे । ती दुबैले पृथिवीमा, घरभित्र, घरबाहिर, दशै दिशामा र अनन्त अन्तरिक्षमा पनि भगवान्‌को दर्शन गरिरहेका थिए । त्यसबेला श्रीगणेशबाट आफ्नो ध्यान हटाउन तिनीहरूले विष्णु र शिवजीको ध्यान गरे । ध्यानमा पनि तिनले विष्णु र शिवजीको सट्टा श्रीगणेशको दर्शन पाए । आँखा बन्द गरेर हृदयभित्र विष्णु र शिवजीको ध्यान गरे । त्यहाँ पनि तिनीहरूले श्रीगणेशको दर्शन पाए । त्यसपछि आँखा खोल्दा तिनीहरूले आफ्ना सामु सिंहवाहन, दशभुज, दशायुधधारी, सिद्धिबुद्धिसेवित, भालचन्द्र, कस्तूरीतिलक-विभूषित, किरीटी, कुण्डली, मुक्तामाला, केयूर एवं दिव्य परिधानद्वारा अलङ्कृत, सुवर्णमय कटिसूत्र र औंठी आदि आभूषणद्वारा अलङ्कृत, करोडौं

११. एको नानास्वरूपोऽभूद् घटाकाश इव स्फुटम्। जलपूर्णेषु कुम्भेषु रविर्नाना यथेक्ष्यते॥
क्वचित् पर्यङ्कशयनः क्वचिज्जपपरायणः। क्वचिद् दानरतः क्वापि भोजनाय समुत्सुकः॥
क्वचित् पाठयते शिष्यान् साङ्गं वेदं सहार्थकम्। क्वचिद् व्याकुरुते शास्त्रं क्वचिच्च पठति स्वयम्॥
एवं नानास्वरूपैः स नानागृहगतो विभुः। अयमस्मद्गृहं यातः पूर्वमित्यभिमेनिरे॥ – पूर्ववत्, २/२४/१६-१९ ।

सूर्यसमान कान्तिसम्पन्न, सृष्टि; स्थिति र संहारका देवता श्रीगणेशको दर्शन गरे । त्यसपछि तिनीहरूले आफ्नो मनमा रहेको गणेशप्रतिको भेदबुद्धि हटाएर विनम्रतापूर्वक चरणकमलमा प्रणाम गरे ।[१२]

ती दुबैले आफू ज्ञानी भएको गर्व हटाएर भक्तिपूर्वक श्रीगणेशको स्तुति गर्दै भने – हे प्रभुं! हजुरको यथार्थ स्वरूप नजानेर श्रुतिले पनि नेति नेति भन्दछ । हामी पनि हजुरकै मायाले मोहित भएका छौं र हजुरको उत्तम एवं वास्तविक स्वरूपको ज्ञान गर्न असमर्थ छौं । हे अन्तर्यामी प्रभु ! हामीले अनेक रूप र लीला धारण गर्नुहुने हजुरको महिमा बुझ्न सकेका छैनौं तर हजुरका चरणकमलको दर्शन पाएर कृतकृत्य भएका छौं ।[१३]

श्रीगणेशले अनेकरूप र अनेक वाहनसहित विभिन्न अवतार लिंदा भक्तहरूलाई दर्शन दिएर कृतार्थ गराउनुभएका महत्त्वपूर्ण प्रसङ्गले श्रीगणेशको विलक्षण भगवत्ता संसूचित गर्दछन् ।[१४]

## ङ) भक्त भ्रुशुण्डीद्वारा आफूले चाहेअनुसारको स्वरूपमा श्रीगणेशको दर्शन

महोत्कटको रूपमा अवतार लिएर कश्यपाश्रममा रमाउनु हुने श्रीगणेश काशिराजको निमन्त्रणा स्वीकार गरी काशीमा बाललीला गरिरहनुभएको थियो । काशिराजको दरबारमा निवास गरी काशीवासीहरूलाई स्निग्ध दर्शन दिनुहुने श्रीगणेश क्रूर दानवहरूलाई भयङ्कर दर्शन दिएर निर्मूल गर्दै हुनुहुन्थ्यो । स्वयं काशिराज श्रीगणेशको विलक्षण लीला नजर गरी चकित थिए । उनी श्रीगणेशको खान–पान र विश्राम–आरामको ख्याल गरिरहन्थे । एक दिन पूर्वाह्नमा काशिराजले श्रीगणेशको दर्शन गर्न उहाँको कक्षमा गई निवेदन गरे – 'प्रभु ! भोजन ग्रहण गर्ने बेला भएको छ । जाउँ भोजन गरौं ।' त्यसबेला श्रीगणेश भोजन गरेर अघाएको सूचना दिने डकार गर्दै हुनुहुन्थ्यो। काशिराजले भगवान्का कोठाका चारैतर्फ नजर लगाउँदा खाएर बाँकी रहेका लड्डु, खिर, मालपुवा, दूध, दही, घ्यू, मह, अनेक किसिमका मिठाई र भोज्य सामग्रीका साथै फूल, चन्दन, माला, अक्षता आदि पूजा सामग्री पनि नजर गरे । काशिराजले नयाँ नयाँ अलङ्कार र परिधानले सुहाउनुभएको अवस्थामा श्रीगणेशको दर्शन गरे । चकित हुँदै उनले भने – 'भगवान् ! आज एकाबिहानै कुन भक्तले यहाँ आएर हजुरको पूजा गर्‍यो ? म ती भक्तको परिचय पाउन र दर्शन गर्न चाहन्छु ।' त्यसपछि श्रीगणेशले काशिराजलाई भक्तराज भ्रुशुण्डीको त्याग, तपस्या, समर्पण, निष्ठा, भक्ति र महिमा बताउँदै भन्नुभयो – 'आँखीभौंबाट मेरो जस्तो सूँढ निस्केकाले ती भक्तलाई सबैले भ्रुशुण्डी भन्दछन् र तिनलाई गणेशकै रूप मानी पूजा गर्दछन् । निरन्तर मेरो चिन्तन गर्नाले ती

---

१२ *तच्च प्रतीच्याङ्ग दिशि तमेवैतौ समन्ततः। अधश्चोर्ध्वं सर्वगतं विनायकमपश्यताम्॥*
*विनायकस्वरूपञ्च तौ पुनर्विश्वरूपिणम्। सर्वं विनायकमयं वस्तुमात्रमपश्यताम्॥*
*ब्रह्मभावगतौ शम्भु विष्णु तौ भृशविस्मितौ। अपश्यतां हृदि तदा तत्र तत्र विनायकम्॥*
*निमील्य नयने ध्यानात्सामेव मुनिसत्तमौ। उद्घाट्य नयने चापि स्वान्त एनमपश्यताम्॥*
*किरीटिनं कुण्डलिनं मुक्तामालाम्बराङ्गदम्। कटिसूत्रेण हैमेन मुद्रिकाभिश्च भूषितम्॥*
*सिंहारूढं दशभुजं सिद्धिबुद्धियुतं शुभम्। भालचन्द्रं मृगमदतिलकं नागभूषणम्॥*
*सूर्यकोटिप्रभं सृष्टिस्थितिसंहारकारिणम्। त्यक्त्वा भेदं तत्त्वविदौ नेमतुश्चरणाम्बुजम्॥* – पूर्ववत्, २/२४/३९–४५ ।

१३ *नेति नेति ब्रवीति स्म त्वद्रूपमजानतः श्रुतिः। आवां विमोहितौ जातु नैवाथे रूपमुत्तमम्॥*
*महिमानं न जानीवोऽनेकरूपस्य ते विभो। कृतकृत्यौ भवत्पाददर्शनात् स्वः प्रभोऽधुना॥* – पूर्ववत्, २/२५/४–५ ।

१४ *श्रीगणेशले तपस्यारत दक्ष र तिनको मातालाई चतुर्भुजका रूपमा दर्शन दिनुभएको प्रसङ्ग (गणेशपुराण १/२०), गौतम ऋषिको अभिशाप परेका इन्द्रले आराधना गरी श्रीगणेशको दर्शन पाएको प्रसङ्ग (गणेशपुराण १/३४), तपस्वी मङ्गललाई दशभुज श्रीगणेशले दर्शन दिनुभएको प्रसङ्ग (गणेशपुराण १/६०), तपस्यारत स्कन्दलाई श्रीगणेशले योगीहरूद्वारा ध्यान गर्न योग्य दिव्यस्वरूप धारण गरी दर्शन दिनुभएको प्रसङ्ग (गणेशपुराण १/८७), तपस्वी शेषनागलाई दर्शन दिनुभएको प्रसङ्ग (गणेशपुराण १/९०), तपस्यारत भगवान् वामनलाई सिद्धि एवं बुद्धिद्वारा सेवित मयूरवाहन श्रीगणेशले दर्शन दिनुभएको प्रसङ्ग (गणेशपुराण २/३०), तपस्यारत और्व एवं शौनकलाई सिंहवाहन र दशभुज श्रीगणेशले दर्शन दिनुभएको प्रसङ्ग (गणेशपुराण २/३५), तपस्विनी पार्वतीलाई दशभुज र भालचन्द्र श्रीगणेशले दर्शन दिनुभएको प्रसङ्ग (गणेशपुराण २/८०) ले श्रीगणेश सबैभन्दा श्रेष्ठ र सबैभन्दा ज्येष्ठ देवता हुनुभएको तथ्य प्रमाणित गर्दछन् ।*

भक्त मजस्तै निष्पाप, निर्मल र पवित्र पनि भएका छन् । आज शुक्लपक्षको चतुर्थी तिथि भएकाले तिनले एकाबिहानै मेरो पूजा गरे, पदार्थहरू टक्र्याए, अलङ्कार र परिधान पहिऱ्याए । हेर्नुहोस् त मेरो कोठामा फैलिएका यी पदार्थहरूले उनकै भक्तिभावको परिचय दिइरहेका छन् । यो सुनेर काशिराजले निवेदन गरे - 'प्रभु ! म तो विलक्षण भक्तको दर्शन गर्न चाहन्छु ।' श्रीगणेशले उनको स्वरूप, आश्रम र आश्रम जाने यात्रामार्ग बताउँदै भन्नुभयो- 'काशिराज ! तपाईं आजै जानुहोस् र आफ्ना छोराको विवाहको निमन्त्रणा टक्र्याउनुहोस् । उनलाई गएर भन्नुहोस् - तपाईंका आराध्य देवता श्रीगणेश मेरो घरमा हुनुहुन्छ, उहाँ पनि तपाईंलाई भेट्न चाहनुहुन्छ । म उहाँले पठाएर यहाँ आएको हुँ ।' तपाईंले यसो भनेपछि भक्तराज भ्रुशुण्डी खुसी हुँदै तत्काल मेरो दर्शन गर्न यहाँ आउने छन् ।

श्रीगणेशको आज्ञानुसार काशिराज घोडामा सवार भई सैंकडौं नदी, वन र पर्वत नाघेर भ्रुशुण्डीको आश्रममा पुगे । दिव्य आश्रमको दिव्यता अनुभव गरी चकित र अभिभूत भए । भ्रुशुण्डीको पाउमा परी पूजा गरेर उनले आफ्नो परिचय दिए । त्यसपछि श्रीगणेशले अह्राउनु भएझैं सबै कुरा बताए । विवाहको निमन्त्रणा टक्र्याएपछि आफ्नो घरमा भगवान् गणेश विराजमान हुनुभएको र उहाँले लिन पठाउनुभएकाले म आएको हुँ भनी निवेदन गरे । आफ्ना आराध्य प्रभु काशिराजको दरबारमा विराजमान हुनुभएको थाहा पाएर भ्रुशुण्डीलाई पत्याउन गाह्रो भयो । उनले भने - हे राजन् ! वेद, वेदान्त, मन एवं वाणीका अगोचर प्रभु गणेश तपाईंको घरमा बस्नुहुन्छ भन्ने कुरा सुन्दा मलाई विश्वासको सट्टा सन्देह लागिरहेको छ । आज मेरो आश्रममा मेरो दर्शन गर्न तेंत्तीस कोटि देवताहरू आउनुभएको छ । उहाँहरूलाई छाडेर तपाईंका कुरामा विश्वास गरी म कसरी जाउँ ? तपाईं भन्नुहोस् तपाईंका घरमा आउनुभएका देवता कस्ता हुनुहुन्छ ? उहाँको स्वरूपसंरचना थाहा पाएपछि चित्त बुझेमा म तपाईंको घरमा अवश्य जानेछु । काशिराजले भने - ' हे तपस्विराज ! श्रीगणेशका अनन्त रूपहरूको गणना गर्न ब्रह्माजी पनि समर्थ हुनुहुन्न । अहिले उहाँ कश्यपका पुत्र बनेर अवतीर्ण हुनुभएको छ । लोकमा विनायकका नामबाट विख्यात हुनुहुन्छ । जम्मा ७ वर्षको उमेरमा उहाँले अद्‌भुत लीला गरिसक्नुभएको छ । अहिले मेरो घरमा उहाँ ब्रह्मचारीको रूप लिएर विराजमान हुनुहुन्छ । उहाँ कश्यपका पुत्र भएर अवतीर्ण हुनुहुँदा दिव्यरूपसम्पन्न चतुर्बाहु हुनुहुन्थ्यो । कश्यपले प्रार्थना गरेपछि उहाँ सामान्य दुइहाते बालक बन्नुभयो ।'

काशिराजका कुरा सुनेर भ्रुशुण्डीले भने - 'तपाईंले गरेको स्वरूप वर्णनअनुसार तपाईंका घरमा बस्ने देवता मेरा आराध्य गणेश होइनन् । तपाईं फर्किएर जानुहोस्, म जाँदिन । मेरा आराध्य देवताले बोलाउनुभयो भने म जहाँ पनि जान सक्छु ।' काशिराजले चिन्तित हुँदै बिन्ती गरे - 'प्रभु ! म हजुरलाई लिएर जाने आशाले कैयौं दिन लगाएर नदी, वन र पर्वत नाघेर यहाँ आएँ । अहिले म एक्लै कसरी फर्किउँ ?' यो कुरा सुनेर भ्रुशुण्डीले काशिराजको शिरमा वरदहस्त राख्दै भने - 'हे राजन् ! एकै छिन आँखा चिम्लिनुहोस् ।' आँखा चिम्लिएर केही बेरपछि खोल्दा काशिराज आफ्नो दरबारमा पुगिसकेका थिए । आएर श्रीगणेशको दर्शन गरी सबै कुरा बताए । श्रीगणेशले भन्नुभयो - 'हे राजन् ! तपाईं साह्रै थाक्नु भएको छ । तर, तपाईं फेरि भ्रुशुण्डीको आश्रममा जानुपर्छ । प्रभु गजाननले तपाईंलाई लिन पठाउनुभएको छ भन्नुहोस् । तपाईंले गजानन नाम लिएपछि उनी तुरुन्त आउनेछन् ।' भगवान् गणेशको आज्ञा सुनेर काशिराज फेरि भ्रुशुण्डीको आश्रमतर्फ प्रस्थान गरे । श्रीगणेशको कृपाबाट उनले तुरुन्त आफूलाई भ्रुशुण्डीको आश्रममा पाए । काशिराजलाई फर्किएर आएको देखी भ्रुशुण्डीले मनमा अनेक तर्क-वितर्क गरे । काशिराजले प्रणाम गर्दै भने - म तुरुन्तै फर्केर आएँ किनकि हजुरलाई प्रभु गजाननले बोलाउनुभएको छ । गजानन नाम सुन्नासाथ भ्रुशुण्डी खुसी भए र आनन्दको मूर्च्छामा परे । तिनको शरीरमा रोमाञ्च भयो र आँखाबाट हर्षका आँसु बग्न थाले। उनले आत्तिएर हस्याङफस्याङ गरी

मेरा प्रभुले मलाई बोलाउनुभयो भनी खुसी हुँदै पाइला चाले । तेस्रो पाइला चाल्नासाथ भ्रुशुण्डी काशिराजका साथ काशी पुगिसकेका थिए । काशिराजले दरबारमा लगेर भ्रुशुण्डीको पूजा-सत्कार गरे । त्यसबेला त्यहाँ श्रीगणेश हुनुहुन्नथ्यो । भ्रुशुण्डीले आत्तिँदै भने – खोई मेरा प्रभु ? हे राजन् ! तपाईंले छल गरेको त होइन, उहाँलाई तुरुन्त देखाउनुहोस् । देखाउन सक्नुहुन्न भने म तपाईंलाई सराप दिएर आश्रमतर्फ फर्किनेछु । त्यसै बेलामा बालक्रीडा गरेका कारण धूलैधूलाले ढाकिनुभएका सूर्यसमान तेजस्वी द्विभुज, सूँढधारी श्रीगणेश आइपुग्नुभयो। उहाँलाई देखेर भ्रुशुण्डीले भने – यी मेरा आराध्य देवता होइनन्, यस्तालाई म किन नमस्कार गरूँ ? भ्रुशुण्डीको कुरा सुनेर श्रीगणेशले भन्नुभयो – 'हे भ्रुशुण्डी ! तपाई भन्नुहोस्, तपाईंका आराध्य भगवान् कस्ता हुनुहुन्छ ?' भ्रुशुण्डीले उत्तर दिए – 'दिव्य परिधान धारण गर्नुहुने, दशभुजाले सुहाउनुभएका, मोतीको माला लगाएर सजिनुभएका, वरिपरि सिद्धि एवं बुद्धिलाई लिएर रहनुभएका कानमा कुण्डल धारण गर्नुहुने, सुन्दर सूँढले अत्यन्त सुहाउनुभएका, ठूला-ठूला कान धारण गर्नुहुने, शरीरभरि सिन्दूर दल्नुभएका, नाभिमा शेषनागलाई यज्ञोपवीतका रूपमा धारण गर्नुहुने, पाउमा नूपुर लगाउनु हुने, मस्तकमा महामुकुट धारण गर्नुहुने, दश हातमा दशथरि आयुध लिनुहुने, एकदन्त, भालचन्द्र, साना-साना घण्टी धारण गर्नुहुने, मयूरमा सवार हुनुभएका, देवताहरूद्वारा पाउमा पूजा गरिनुभएका मेरा आराध्य भगवान् गजानन हुनुहुन्छ ।'

भ्रुशुण्डीको स्वरूप वर्णन सुनेपछि बालगणेशले उनले बताएकै स्वरूप लिएर दिव्यदर्शन दिनुभयो । आफूले चाहेको रूपमा प्रभुको दर्शन पाएपछि भ्रुशुण्डी गद्गद, हर्षविह्वल, रोमाञ्चित, आनन्दसागरमज्जित र भावातीत भए । केहीबेरपछि चेतमा आएर रोमाञ्चका साथ नाच्न थाले । नृत्य सकिएपछि देहभावमा आएर तिनले विधिपूर्वक श्रीगणेशको पूजा गरे । काशिराज भने चुपचाप भगवान् र भक्तको अद्‌भुत मिलनको दृश्य देखेर आफ्नो अहोभाग्य सम्झिँदै आनन्दको सागरमा पौडिरहेका थिए । भगवान् गणेशले भक्तभ्रुशुण्डीलाई दश हात फैलाएर आलिङ्गन गर्नुभयो । यो दृश्य अपूर्व आनन्दमय थियो । श्रीगणेशले भन्नुभयो – 'हे भ्रुशुण्डी ! तपाईंको गजानन रूपमा अद्‌भुत निष्ठा बुझेर मैले दशबाहुका रूपमा दर्शन दिएँ । जुन भक्तले जुन रूपमा मेरो भजन गर्दछ, मैले त्यसलाई त्यहीरूपमा दर्शन दिने गर्दछु ।' यो कुरा सुनेर भ्रुशुण्डीले कृतार्थ हुँदै भने – प्रभु ! म आज हजुरको कृपाले कृतकृत्य र पवित्र भएको छु । अब उप्रान्त मैले जुन बेला दर्शन गर्न चाहन्छु त्यसबेला यस्तै रूपको दर्शन पाउँ, हजुर आशापूरकका नामबाट प्रसिद्ध हुनुहोस् । भ्रुशुण्डीको याचना सुनेर श्रीगणेश मन्द मुस्कानका साथ तथास्तु भनी आशीर्वाद दिएर उनलाई आश्रमतर्फ पठाई फेरि बाललीलामा लीन हुनुभयो ।[१५]

भगवान् श्रीगणेशले आफ्ना भक्तहरूलाई स्वरूपदर्शन गराउँदा कतै चतुर्भुज, महाकाय, गजानन, शूर्पशङ्काश, मुक्तमालाविभूषित, मणिमनोहर, मुकुटधारी, पीताम्बरधारी, स्वर्णकेयूरद्वारा शोभित, नूपुरधारी र कमलनयनरूपमा दर्शन दिनुभएको छ । कतै शुण्डामण्डित कमलमालाद्वारा शोभित, सिन्दूरवदन, प्रवालमालाभूषित, परशुकमलदन्त र मोदक धारण गर्ने सुन्दर स्वरूपबाट दर्शन दिनुभएको छ । कतै दशभुज, दशायुध र सिंहवाहन बनेर दर्शन दिनुभएको छ । कतै अष्टभुज, कतै षड्‌भुज र कतै द्विभुजका रूपमा पनि दर्शन दिनुभएको छ । कुनै प्रसङ्गमा बालक, कहीं युवा, कहीं वृद्ध, कहीं मुनि र कहीं ब्राह्मण बनेर पनि दर्शन दिनुभएको छ । कतै उहाँले शिवजीलाई भ्रममा पार्न शिवजी बनेर पनि दर्शन दिनुभएको छ । कतै उहाँले विष्णुका भक्तको मानसिक सन्तोषका लागि नारायणका रूपमा पनि दर्शन दिनुभएको छ । अनन्त शक्तिका स्रोत श्रीगणेशका यी लीलामय चरित्र पापनाशक, मङ्गलदायक र परमानन्ददायक पनि छन् ।

---

१५. पूर्वार्द्ध, क्रीडाखण्ड, १६-१७ अध्याय ।

## २.२ स्तुतिपरक सन्दर्भ

गणेशपुराणमा विभिन्न देवता, ऋषि-महर्षि र मानिसहरूले श्रीगणेशको स्तुति गरेका छन् । ती स्तुतिहरूमा श्रीगणेशको निराकारता र साकारतामा आधारित विशेषताहरू व्यक्त भएका छन् । यस सन्दर्भमा तीमध्ये केही स्तुतिहरूका विशेषता प्रकट गर्दै तिनका नमुना पद्यहरू प्रस्तुत गरिनेछ ।

### क ) राजा सोमकान्तद्वारा श्रीगणेशको प्रातःस्मरणसम्बन्धी उपदेश

वन प्रस्थान गर्न चाहने राजा सोमकान्तले आफ्ना उत्तराधिकारी पुत्र हेमकण्ठलाई आचारोपदेश गर्ने क्रममा श्रीगणेश आदि देवताहरूको प्रातःस्मरण गर्नुपर्ने कुरा बताएका छन् । त्यस क्रममा सर्वप्रथम सकल संसारका कारण, ब्रह्मा आदि देवतालाई वर प्रदान गर्नुहुने, सम्पूर्ण शास्त्र र विद्याका निधि, धर्म; अर्थ; काम र मोक्षजस्ता पुरुषार्थहरूका फलदाता, वाणी र मनदेखि पर रहनुभएका, अनादि, अनन्त श्रीगणेशलाई प्रातःकालमा स्मरण गर्दछु भनी प्रातःस्मरण गर्न निर्देश दिइएको छ । त्यसको एउटा नमुनापद्य यसप्रकार छ –

**प्रातर्नमामि गणनाथमशेषहेतुं ब्रह्मादिदेववरदं सकलागमाढ्यम् ।**
**धर्मार्थकामफलदं जनमोक्षहेतुं वाचामगोचरमनादिमनन्तरूपम् ।।**[१६]

### ख ) ब्रह्मा, विष्णु र शिवजीद्वारा श्रीगणेशको स्तुति

उपासना खण्डको तेह्रौं अध्यायमा ब्रह्मा, विष्णु र शङ्करद्वारा समवेतस्वरमा गरिएको श्रीगणेशको स्तुतिलाई **स्तोत्रराज** भनिएको छ । एघार पद्यमा गुम्फित स्तोत्रराजले श्रीगणेशलाई अज, निर्विकल्प, निराकार, निरालम्ब, अद्वैत, आनन्दपूर्ण, निरीह, परब्रह्मरूप, विधिरूप, विष्णुरूप, शङ्कररूप, सूर्यरूप, चन्द्ररूप, शक्तिरूप र विश्वरूपका रूपमा चिनाएको छ । त्यसको एउटा पद्य उदाहरणार्थ यहाँ प्रस्तुत छ –

**अजं निर्विकल्पं निराकारमेकं निरालम्बमद्वैतमानन्दपूर्णम् ।**
**परं निर्गुणं निर्विशेषं निरीहं परब्रह्मरूपं गणेशं भजेम ।।**[१७]

### ग ) महाविष्णुद्वारा श्रीगणेशको स्तुति

मधु र कैटभको वधका लागि शक्ति प्राप्त गर्न श्रीमहाविष्णुले श्रीगणेशको स्तुति गर्नुहुँदा व्यक्त भएका तीन पद्यहरूमा उहाँलाई सर्वात्मा, सर्वग, सर्वशक्तिमान्, सर्वव्यापी, सर्वकर्ता, सर्वद्रष्टा, सर्वसंहारक, परेश, पालक, पिता, विश्वनेता, व्यक्ताव्यक्तरूप, ब्रह्मा, विष्णु र शङ्कररूपजस्ता विशेषणहरूको प्रयोग गरी स्तुति गर्नुभएको छ । दृष्टान्तका लागि एउटा पद्य यहाँ प्रस्तुत गरिएको छ –

**सर्वस्यात्मा सर्वगः सर्वशक्तिः सर्वव्यापी सर्वकर्ता परेशः ।**
**सर्वद्रष्टा सर्वसंहारकर्ता पाता धाता विश्वनेता पिताऽसि ।।**[१८]

---

१६. पूर्ववत्, १/२/७ ।
१७. पूर्ववत्, १/१३/३ ।
१८. पूर्ववत्, १/१८/१३ ।

### घ) त्रिपुरपीडित देवताहरूद्वारा श्रीगणेशको स्तुति

त्रिपुरासुरको अत्याचारबाट अत्यन्त दीन, हीन र विपन्न बनेका देवताहरूले सङ्कटमोचनका लागि श्रीगणेशको भावपूर्ण स्तुति गरेका थिए । आठ पद्यमा गुम्फित त्यस स्तुतिमा श्रीगणेशलाई परमार्थरूप, अखिलकारणरूप, इन्द्रियाधिष्ठाता, सङ्कटनाशक, विघ्नकारण, गुणेश्वर, सर्वसाक्षी र दयासागरका रूपमा प्रार्थना गरिएको छ । उक्त स्तुतिलाई गणेशपुराणमा **सङ्कष्टनाशनस्तोत्र** भनी अत्यन्त ठूलो महिमाका साथ प्रकाशित गरिएको छ । त्यसको एउटा पद्य यस प्रकार छ –

**नमो नमस्ते परमार्थरूप नमो नमस्तेऽखिलकारणाय ।**
**नमो नमस्तेऽखिलकारकाय सर्वेन्द्रियाणामधिवासिनेऽपि ।।**[१९]

### ङ) शिवजीद्वारा श्रीगणेशको स्तुति

त्रिपुरवधका लागि आवश्यक शक्ति प्राप्त गर्न श्रीगणेशको स्तुति गर्नुहुने सदाशिवले उहाँको दर्शन पाउनुभयो। उहाँको अनिर्वचनीय विशेषताबाट भावविह्वल भएर उहाँले निवेदन गर्दै भन्नुभयो - हे प्रभु ! आज हजुरको दर्शन पाउनाले मेरा दश आँखा धन्य भएका छन् । आज हजुरको अर्चनाको अवसर पाउनाले मेरा दश हात धन्य भएका छन् । हजुरलाई प्रणाम गर्न पाउनाले मेरा पाँचै शिर धन्य भएका छन्। यसै गरी हजुरको स्तुति गर्न पाउनाले मेरा पाँचै मुख धन्य भएका छन् ।

**दशापि नेत्राणि ममापि धन्यान्यथो भुजाः पूजनतस्तवाद्य ।**
**तथानतेः पञ्चशिरांसि धन्यान्यथ स्तुतेः पञ्चमुखानि देव ! ।।**[२०]

चार पद्यमा गुम्फित उक्त स्तुतिमा विश्वरूप, सर्वगुणसम्पन्न, निर्गुण, शैव; वैष्णव; शाक्त; सौर र वैनायक सम्प्रदायका साधकहरूद्वारा समान रूपमा वन्दनीय देवेश्वर भनी श्रीगणेशको गुणप्रशंसा गरिएको छ ।

### च) शुक्ल ब्राह्मणद्वारा श्रीगणेशको स्तुति

आफ्नो घरमा आई आफूले टक्र्याएको रूखा-सुखा भोजन रुचिपूर्वक ग्रहण गर्नुहुने श्रीगणेशको अनुकम्पाबाट अनुगृहीत र कृतकृत्य भएका दरिद्र ब्राह्मण शुक्लले भावपूर्ण हुँदै भगवान् श्रीगणेशको स्तुति गरेका छन् । त्यसअन्तर्गतका दुई पद्यमा भनिएको छ – 'हे प्रभु ! हजुरको जुन दीननाथ भन्ने पापनाशक नाम तीनै लोकमा विख्यात छ त्यो नामलाई हजुरले हामीजस्ता दरिद्रलाई दर्शन दिएर सार्थक तुल्याउनु भएको छ ।'

**तत ऊचे मुनिर्देवं दीननाथेति यत्तव । विख्यातं त्रिषु लोकेषु नाम पापहरं तव ।।**
**सार्थकं कृतमद्यैव जन्म नः पाददर्शनात् ।।**[२१]

### छ) वामनावतार श्रीविष्णुद्वारा श्रीगणेशको स्तुति

वामनावतार विष्णुद्वारा गरिएको स्तुतिमा श्रीगणेशका लागि अव्यक्त, व्यक्तहेतु, निगमागमवन्दित, देवाधिदेव,

---

१९. [illegible] १/३८/२३ ।
२०. [illegible] १/४५/३ ।
२१. [illegible] २/२३/३०-३१ ।

अनेकब्रह्माण्डाधिपति, सर्ववेदान्तवेद्य, मायातीत, स्ववेद्य, सकलभयहर्ता, सुन्दर, विघ्नराज, विधिशिवनागादिवन्दित, सर्वेश, सर्वरूप, तेजोराशि, त्रिसत्य, त्रिगुणरहित, तत्त्वमसि आदि वाक्यद्वारा वेद्य तथा तत्त्वबुद्धिप्रकाश आदि विशेषणहरूको प्रयोग गरिएको छ -

**तं वन्दे विघ्नराजं विधिहरमुनिभिः सेव्यमानं सनागै-**
**र्भक्तेच्छोपात्तदेहं निजजनसुखदं तत्त्वबुद्धिप्रकाशम् ।**
**साम्बाद्यैः स्तूयमानं सकलतनुगतं भुक्तिमुक्तिप्रदं तं**
**तेजोराशिं त्रिसत्यं त्रिगुणविरहितं तत्त्वमस्यादिवेद्यम् ।।**[२२]

### ज ) भगवान् शिवजीद्वारा ढुण्ढिराज श्रीगणेशको स्तुति

दिवोदास काशीका राजा भएपछि वाराणसी छाडी केदारक्षेत्रमा रहनुभएका भगवान् विश्वनाथ दुःखी हुनुहुन्थ्यो । श्रीगणेशको कृपाबाट दिवोदासको राज्यभङ्गपछि वाराणसीमा फर्किनुभयो । त्यस बेला उहाँले श्रीगणेशको स्तुति गर्दा उहाँलाई विश्वेश्वर, विश्वरूप, शुभाशुभफलदाताजस्ता गुणवाचक शब्दहरूको प्रयोग गरी स्तुति गर्नुभएको थियो । त्यसको एउटा पद्यमा भनिएको छ - 'हे विश्वरूप ढुण्ढिराज ! हे विश्वका ईश्वर गणेश ! हजुरले नै विश्वको रचना गर्नुहुन्छ, पालन गर्नुहुन्छ र संहार पनि गर्नुहुन्छ । हे देव ! हजुरले मानिसहरूका शुभ र अशुभ कर्महरूको मूल्याङ्कन गरी फल प्रदान गर्नुहुन्छ ।'

**त्वमेव विश्वेश्वर विश्वरूप ! विश्वं सृजस्यत्सि हि पासि देव !**
**शुभाशुभं कर्म निरीक्ष्य तस्य ददासि भोगं विविधं गणेश ! ।।**[२३]

### झ ) काशिराजद्वारा श्रीगणेशको स्तुति

काशिराजले श्रीगणेशको स्तुति गर्दै उहाँलाई ब्रह्मध्येयपदाम्बुज, पद्म, पाश, खड्ग, परशु आदि आयुधहरूले सम्पन्न इत्यादि गुणस्वभावका व्यञ्जक पदहरूको प्रयोग गरी प्रार्थना गरेका थिए । भावगम्भीर ती स्तुतिपद्यहरूमध्ये एउटामा भनिएको छ - 'हे नाथ ! ब्रह्मा, विष्णु, शिव, इन्द्र आदि देवताहरूद्वारा आत्ममङ्गलका लागि ध्यान गरिने, कमल-पाश-खड्ग, बन्चरो आदि आयुधहरूद्वारा चिह्नित र सबैका विघ्नपुञ्जको निराकरण गर्ने हजुरका चरणकमलमा प्रणाम गर्दछु ।'

**नमामि ते नाथ ! पदारविन्दं ब्रह्मादिभिर्ध्येयतमं शिवाय ।**
**यत् पद्मपाशासिपरश्वधादिसञ्चिह्नितं विघ्नहरं जनानाम् ।।**[२४]

### ञ ) जनसमूहद्वारा श्रीगणेशको स्तुति

श्रीगणेशले त्रिलोकीकण्टक दैत्यराज सिन्धुको वध गर्नुभएपछि प्रसन्न भएका नर-नारीहरूले श्रीगणेशलाई परब्रह्मरूप, चिदानन्दरूप, सदानन्दरूप, गुणसागर, गुणेश आदि गुणबोधक पदहरूको प्रयोग गरी स्तुति गरेका थिए । ती स्तुतिपद्यहरूमध्ये एउटा पद्यमा भनिएको छ - 'हामीहरू परब्रह्मरूप, चैतन्यमय, आनन्दघन,

२२. पूर्ववत्, २/३१/२५ ।
२३. पूर्ववत्, २/४८/६ ।
२४. पूर्ववत्, २/५३/२७ ।

सत्स्वरूप, देवाधिपति, परमाधिपति, गुणसागर, गुणहरूका अधिपति, गुणहरूदेखि पर रहनुभएका, आत्मानन्दमा रमाउनुहुने, सम्पूर्ण ब्रह्माण्डका स्वामी आद्यदेव मयूरवाहनलाई वारंवार प्रणाम गर्दछौं ।

**परब्रह्मरूपं चिदानन्दरूपं सदानन्दरूपं सुरेशं परेशम् ।**
**गुणाब्धिं गुणेशं गुणातीतमीशं मयूरेशमाद्यं नताः स्मो नताः स्मः ।।**[25]

यसरी भक्तहरूले आफ्ना आराध्य भगवान् श्रीगणेशमा भक्तिभाव अर्पण गरी विभिन्न स्तुतिहरूद्वारा आफूलाई निर्मल तुल्याई भगवान्का चरणारविन्दमा समर्पित गरेका अनेक प्रसङ्ग गणेशपुराणमा रहेका छन् ।[26] प्रार्थना, गुणगान, आत्मदोषख्यापन, उद्धारको याचना, स्तुत्यको सौन्दर्यप्रकाशन, दार्शनिक तत्त्वको विशदीकरणजस्ता विषयहरूको विनम्रतापूर्वक प्रस्तुति गर्दा सम्पन्न हुने स्तुतिले स्तोताको मानस निर्मलीकरणमा ठूलो सघाउ पुर्‍याउँछ । गणेशपुराणमा रहेका गणेशपरक स्तुतिहरूबाट श्रीगणेशको स्वरूपसौन्दर्य प्रकाशनका साथै उहाँको साकार ब्रह्मरूपता र निराकार ब्रह्मरूपता पनि सबैले बुझ्ने गरी व्यक्त भएको छ । सिद्धपुरुषका निर्मल आत्माबाट प्रकाशित यी स्तुतिहरूमा रहेको विलक्षण तैजस तत्त्वले स्तोताको पापनाश र विघ्ननिवारण गर्दै अपूर्व बुद्धिमत्ता दिएर कार्यसिद्धि एवं आत्मसिद्धिमा सफल तुल्याउँछन् ।

## २.३ विलक्षण लीलापरक सन्दर्भ

श्रीगणेशका अवतरणसन्दर्भ र स्तुतिसन्दर्भबाट उहाँका महत्ता र विशेषता व्यक्त हुन्छन् । ती सन्दर्भबाट नै उहाँ महान् देवता र विशिष्ट शक्तिका स्रोत हुनुहुन्छ भन्ने विषय पनि प्रमाणित भइसकेको छ । गणेशपुराणमा निरूपित गणेशको विचित्र बाललीला र काशीलीलाजस्ता विषयमा आधारित विशिष्ट सन्दर्भलाई सङ्क्षेपमा प्रस्तुत गरिँदैछ ।

### क ) श्रीगणेशको विलक्षण भगवत्ता

हेमनामक कपटज्योतिषी राक्षसले काशिराजलाई एक दिन कुरैकुरामा भनेको थियो – 'हे राजन् ! कश्यप ऋषिका छोरा गणेश काशीमा रहेसम्म यस राज्यमा अमनचयन हुँदैन र विघ्नमात्र भइरहन्छन् । यी बालक गणेश काशीका निमित्त दुर्लक्षण बनेर आएका छन् ।' यो कुरा सुनेर काशिराजले कपटज्योतिषी दानवलाई भनेका थिए– 'तपाईंले श्रीगणेशको महिमा बुझ्नु भएको छैन । उहाँले सानातिना कुराहरू छाडेर दोस्रा ब्रह्मा, विष्णु एवं शङ्करको रचना गर्न सक्नुहुन्छ र अनन्त ब्रह्माण्ड बनाउनु सक्नुहुन्छ । उहाँले इन्द्रलाई पदबाट च्युत गर्न सक्नुहुन्छ। असमर्थलाई समर्थ, सानोलाई ठूलो, ठूलोलाई सानो, नीचलाई उच्च, उच्चलाई नीच र ईश्वरलाई अनीश्वर एवं अनीश्वरलाई ईश्वर बनाउन सक्नुहुन्छ ।'[27]

---

२५. पूर्ववत्, २/१२३/४० ।

२६. गणेशपुराणमा – दक्षकृत गणेशस्तुति (१/२०), इन्द्रकृत गणेशस्तुति (१/३५), मङ्गलकृत गणेशस्तुति (१/६०), चन्द्रकृत गणेशस्तुति (१/६१), परशुरामद्वारा गरिएको गणेशस्तुति (१/८२), स्कन्दकृत गणेशस्तुति (१/८७), शेषनागद्वारा गरिएको गणेशस्तुति (१/९०), कश्यपकृत गणेशस्तुति (१/९१), अदितिकृत गणेशस्तुति (२/५), काशीका नरनारीहरूद्वारा गरिएको गणेशस्तुति (२/२१), सनक-सनन्दनकृत गणेशस्तुति (२/२५ एवं २/५४), महारानी कीर्तिद्वारा गरिएको गणेशस्तुति (२/३२), औरव एवं शौनककृत गणेशस्तुति (२/३५), देवताहरूद्वारा गरिएको गणेशस्तुति (२/३७), देवता एवं ऋषिहरूद्वारा गरिएको गणेशस्तुति (२/४०), विश्वकर्माद्वारा गरिएको गणेशस्तुति (२/९५), विनताद्वारा गरिएको गणेशस्तुति (२/९८), ब्रह्माद्वारा गरिएको गणेशस्तुति (२/१०४), चक्रपाणिकृत गणेशस्तुति (२/१२४), गन्धर्वकृत गणेशस्तुति (२/१३४) जस्ता अनेक स्तुति सन्दर्भ रहेका छन् ।)

२७. ब्रह्माणं कमलाकान्तमपरं शूलिनं हरम् । जनयिष्यति यावन्तः चेद् ब्रह्माण्डानि बहूनि सः ॥
करोतीन्द्रमविन्द्रं बाशकं शक्तं लघु गुरुम् । उच्चं नीचं तथा नीचमुच्चमीशमनीश्वरम् ॥ – गणेशपुराण २/१८/२५, २६ ।

## ख ) शुक्लदम्पतीमाथि श्रीगणेशको अनुपम स्नेह र स्वरूपपरिवर्तन

काशीका सम्पन्न मानिसहरूद्वारा श्रद्धापूर्वक भोजनका लागि आमन्त्रित गरिनुभएका श्रीगणेश ती सबैको निमन्त्रणलाई बेवास्ता गरी एकाएक काशीको कुनामा बुकुरो बनाएर बस्ने शुक्लब्राह्मणका घर पुग्नुभयो । यस कुराको काशिराजलाई पनि पत्तो भएन । सबै लोकका स्वामी श्रीगणेशलाई अर्पण गर्न भनी शुक्लको घरमा पातलो माडले भरिएको भातको भाँडोबाहेक केही थिएन । श्रीगणेश त्यहाँ पुग्नु हुँदा शुक्लदम्पती हर्षले नाच्न थाले । तिनीहरूले श्रद्धापूर्वक पूजा गरी जगत्का स्वामी श्रीगणेशलाई पातलो माडमा रुमल्लिएको भात टक्र्याउन सङ्कोच मानिरहेका थिए । त्यसैले ती दुबै धेरै बेरसम्म हात जोडेर उभिइरहे । भगवान्ले ब्राह्मणी विद्रुमासँग भन्नुभयो – 'आमा ! तपाईंले कस्तो भोजन तयार गर्नुभएको छ ? तपाईंको भान्सामा जे जस्तो भोजन पाकेको छ त्यो सङ्कोच नमानीकन मलाई दिनुहोस् । भक्तिपूर्वक दिएको नमीठो वस्तु पनि मलाई अमृतभन्दा मीठो लाग्छ । भक्ति र श्रद्धा नभई टक्र्याएको पकवान पनि मेरा लागि विष बराबर हुन्छ ।'[२८]

श्रीगणेशका यस्ता कुरा सुनेर माता विद्रुमाले हर्षपूर्वक जङ्गली अन्नबाट बनेको पीठो, तेल र भातको भाँडो ल्याएर श्रीगणेशका सामु राखिदिइन्। भोजनको त्यो रूप देखेर गणेशका बाल साथीहरू गिज्याउँदै हाँस्न थाले । श्रीगणेशले श्रद्धापूर्वक त्यो पीठो पानीसँग खानुभयो । त्यसपछि शुक्लले माडसहित भात पस्किएर टक्र्याए । त्यो देखेर केही केटाहरूले हाँस्दै भने – 'पण्डित जी ! के तपाईंले घुँडासम्म आउने पानी राखेर भात पकाउनुभयो ?' तर भगवान्ले भने त्यस्ता कुरा वास्ता नगरी भात खानुभयो । भोजन गरेपछि भन्नुभयो – 'मैले जीवनमा यति मीठो भोजन खाएको थिइनँ । अरू भात मलाई दिनुहोस् ।' शुक्लले पनि पकाएको सबै माड र भात टपरीमा खन्याइदिए । पातलो माड धेरै भएकाले भात बग्न थाल्यो र चारैतिर फैलियो । भगवान् श्रीगणेशले आफ्ना साना साना हातले टपरीबाट बगिरहेका भातका सिता रोक्न सक्नुभएन । हेर्दाहेर्दै उहाँ दश भुजाले सुहाउनुभयो र ती भुजाहरूबाट भात खान लाग्नुभयो ।[२९] भक्तप्रिय श्रीगणेशले आफ्नो वर्तमान स्वरूप बिर्सेर भक्तका लागि वास्तविक स्वरूप देखाउनुभयो । शुक्लदम्पतीले मोक्षको कामना गर्दै स्तुति र प्रार्थना गरे । भोजन गरेपछि श्रीगणेश आफ्ना बालमित्रहरूका साथ अन्यत्र कतै जानुभयो ।

## ग ) श्रीगणेशको विचित्र लीला र काशिराजको आश्चर्य

श्रीगणेश भक्तका घर-घरमा अतिथि बनेर जानुभएको थियो । काशिराज भने आफ्नो दरबारमा भगवान् श्रीगणेशसँगै भोजन गर्न प्रतीक्षारत थिए । लामो प्रतीक्षापछि ती आफै श्रीगणेशको खोजी गर्न दरबारबाट बाहिर निस्किए । घरघरमा गई काशिराजले बालगणेश कहाँ जानुभयो भनी प्रश्न गरिरहेका थिए। सबैले भने – 'बालविनायक त तपाईंसँगै भोजन गरेर यहाँबाट बालक्रीडा गर्न भनी जानुभएको हो ।' काशिराज चकित भए ।[३०] त्यसपछि ती श्रीगणेशको खोजी गर्न शुक्लब्राह्मणका घरमा गए र तिनले त्यहाँ बालविनायकको दर्शन पाए । काशिराजले भने- 'प्रभु ! शिशुहरूको सङ्गतिका कारण के हजुरले मेरो प्रेम बिर्सनु भएको हो ? किन मलाई छाडेर सबै गृहस्थहरूका घरमा गई मिष्टान्न भोजन गर्नुभयो ?' त्यो सुनेर श्रीगणेशले भन्नुभयो- 'महाराज ! तपाईंले बालकले झैं झुट्टा बोल्नु हुँदैन । तपाईंले सबै नरनारीहरूसँग सोध्नुहोस् मैले जुन जुन घरमा भोजन गरें त्यहाँ त्यहाँ तपाईं

२८. पूर्ववत्, २/२३/२५-५२ ।

२९. तण्डुलं चलितं दिक्षु बालो रोद्धुं न चाशकत् । ततोऽभवद् दशभुजो बुभुजे चौदनं च तैः ॥ - पूर्ववत्, २/२३/४१ ।

३०. पूर्ववत्, २/५६/१-१६ ।

पनि उपस्थित हुनुहुन्थ्यो ।' यो संवाद सुनिरहेका नरनारीहरूले भने - ' हे काशिराज ! के राजाले असत्य बोल्न सुहाउँछ ? तपाईंले हाम्रा सामु श्रीगणेशका साथ रहेर भोजन गर्नुभएको थियो ।' यी सबै घटनाहरूको विश्लेषण गर्दै काशिराजले भने- 'हे श्रीगणेश प्रभु ! हजुरको अजेय मायाबाट योगिराजहरू पनि पराजित हुन्छन् भने मेरो के गणना हुनसक्छ ? हजुर सर्वव्यापी, अन्तर्यामी, सर्वशक्तिमान् र वन्दनीय हुनुहुन्छ ।[३१] त्यसपछि काशिराज गणेशभक्तिले रोमाञ्चित भए र श्रीगणेशको ध्यानमा लीन भए । ध्यानमा तत्पर हुँदा तन्मयताका कारण काशिराज श्रीगणेशको रूपमा नै परिणत भएका थिए ।[३२]

## घ ) शरणागत-शत्रुवत्सल श्रीगणेश

[३३]काशीमा रही लीला गर्नुहुने बालक श्रीगणेश एक दिन शिविकामा सवार भई नगरबाट दरबारतर्फ आउँदै हुनुहुन्थ्यो । त्यसबेला दैत्यराज नरान्तकका सेनानी शूर र चपलनामक दानवहरूले श्रीगणेशलाई घेरेर घोर गर्जन गरे। तिनीहरूको गर्जन सुनेर श्रीगणेश शिविकाबाट ओर्लिनुभयो । तिनीहरू आफूलाई समाप्त पार्ने उद्देश्यले आएको थाहा पाएपछि श्रीगणेशले फूर्तिसाथ ती दुबैलाई दुई हातले उचालेर वेगपूर्वक भुईंमा पछार्नुभयो र उठाएर चपक्क समाउनुभयो । बालक श्रीगणेशले यस्तो गर्न सक्छन् भन्ने कल्पना पनि नगरेका ती दुबै डरले थरथर काँप्न थाले र श्रीगणेशको स्तुति गर्दै प्राणको भिक्षा माग्न थाले । श्रीगणेशले भन्नुभयो - 'तिमीहरूले आफ्नो परिचय दिएर सबै कुरा साँचो साँचो बतायौ भने मैले प्राणहरण गर्नेछैन । अन्यथा तिमीहरूको मृत्यु निश्चित छ ।' ती दुबै दानवले भने- 'हे करुणासागर प्रभु ! हजुर हाम्रा पिता हुनुहुन्छ । गर्भाधान गर्ने, उपनयन गराउने, विद्या दिने, अभय दिने र अन्न दिएर प्राणरक्षा गर्ने पाँचथरि पिता मानिएका छन् ।[३४] तसर्थ हजुरले हामीलाई क्षमा दिनुहोस् । हामी असुरराज नरान्तकका गुप्तचर हौं । काशीका सम्पूर्ण घटनाहरूको सूचना हामीले उहाँसमक्ष पुऱ्याउँछौं । हजुरलाई जुनसुकै किसिमले भए पनि मार्ने उद्देश्यले हामी काशीमा आएका थियौं । यसैले हामीले काशीमा अनेकथरि विघ्न पैदा गर्ने काम गरिरहेका थियौं ।'

काशीका नागरिकहरूले श्रीगणेश र दानवहरूको संवाद सुनेर श्रीगणेशसँग निवेदन गरे - 'हे प्रभु ! सर्पलाई दूध पियाउँदा सर्पको विषमात्र बढ्दछ, अरू कुनै लाभ हुँदैन । यी सर्प हुन् । यिनीहरूको कल्याण गरेर आफूले आपत्तिमात्र पाइन्छ । तसर्थ हजुरले अविलम्ब यिनीहरूको वध गर्नुहोस् ।' नर-नारीहरूका कुरा सुनेर श्रीगणेशले भन्नुभयो- 'हे नर-नारीहरू! मैले यी दुबैलाई अभयदान दिइसकेको छु । मेरो प्रतिज्ञाभङ्ग हुँदैन ।' त्यसपछि श्रीगणेश ती दुबैलाई काशी छोड्ने आज्ञा दिएर शिविकामा सवार भई काशिराजको महलतर्फ जानुभयो । ती दानवहरू पनि भगवान् बालगणेशलाई प्रणाम गरी शरणागतवत्सल श्रीगणेश प्रभुको जय होस् भन्दै काशीबाट आफ्नो राज्यतर्फ लागे ।

## ङ ) श्रीगणेशको काशीलीला र काशिराजको भावपूर्ण कृतज्ञताज्ञापन

श्रीगणेशले आफ्नो दिव्य पराक्रमबाट लोककण्टक दैत्यराज नरान्तकको वध गर्नुभएपछि देवताहरू आई श्रीगणेशको भावपूर्ण स्तुति गरेर बिदा भए । भगवान् बालगणेश पनि तुरुन्तै कुनै घटना नभएझैं सामान्यरूपमा सिंहमा सवार भई बालमित्रहरूका साथ बालक्रीडा गर्न लाग्नुभयो । भगवान् श्रीगणेशको सहजता, सरलता,

३१ अजेया ते परा माया योगिनामपि मोहिनी । धन्योऽस्मि सर्वरूपेण सर्वत्र मानितो यतः ॥ - पूर्ववत्, २/५५/१३ ।

३२ रोमाञ्चिताङ्गः स ध्यानमेवान्वपद्यत । ततो वैनायकं रूपं स्वयमेवान्वपद्यत ॥ - पूर्ववत्, २/५५/१४ ।

३३ पूर्ववत्, २/५५/३०-४९ ।

३४ जनकश्चोपनेता च विद्यादोऽभयदोऽपरः । अन्नदः पञ्च पितरो विख्याता भुवनत्रये ॥ - पूर्ववत्, २/५५/४० ।

निस्पृहता र सौम्य बालभाव देखेर चकित एवं भावविह्वल भएका काशिराजले श्रीगणेशलाई भक्तिपूर्वक आलिङ्गनपाशमा कसे । त्यसबेला भक्त र भगवान्का आँखाबाट प्रेमका आँसु बगिरहेका थिए। काशिराजले गद्गद भएर भावपूर्ण निवेदन गर्दै भने – 'हे प्रभु ! मेरो अपूर्व सौभाग्यको उदय भएको छ र जन्मजन्मान्तरमा सञ्चित गरेका पुण्य फलदायक हुन थालेका छन् । किनकि मैले ब्रह्मा आदि देवताहरूका लागि पनि दुर्लभ मानिएका सनातन ब्रह्मको प्रत्यक्ष अनुभव गरिरहेको छु । जुन तत्त्व ब्रह्माण्डको कारणको पनि कारण, कारणशून्य, वेदान्तवेद्य, सद्रूप, स्वयंप्रकाश, ज्योतिको पनि ज्योति, नानारूपसम्पन्न एवं रूपरहित छ र पृथिवीको भारहरण गर्न समर्थ छ, त्यही तत्त्व बालरूप लिएर मेरो आँगनमा स्वेच्छापूर्वक क्रीडा गरिरहेको छ । आज मैले मेरो भाग्यको प्रशंसा कुन शब्दले गरूँ?' काशिराजको भक्तिपूर्ण वाणी सुनेर श्रीगणेशले भन्नुभयो – 'हे काशिराज ! म तपाईंजस्ता भक्तलाई एक्लै छोडेर एकछिन पनि यताउति लाग्नेछैन ।'[३५]

## च ) विद्रुमा एवं शुक्लमाथि श्रीगणेशको अपूर्व कृपा

बालक श्रीगणेशले गरीब ब्राह्मणदम्पतीमाथि अपूर्व कृपा गर्नुभएको प्रसङ्ग ज्यादै हृदयाभिराम रहेको छ । आफ्नो घरमा भोजन गरी तृप्त हुनुभएका भगवान्को बिदाइका लागि काशिराजको दरबारसम्म पछि लागेर आएका शुक्लब्राह्मणलाई देखेर श्रीगणेशले मनमा विचार गर्दै भन्नुभयो – 'यो दम्पतीको भक्तिभाव र श्रद्धा हेर्दा यिनलाई दिन नहुने कुरा केही पनि छैन । तर यो दुवैको पवित्र प्रेमका सामु त्रिलोकीको सम्पत्ति पनि तुच्छ छ ।' यसरी विचार गरेर उहाँले शुक्ल दम्पतीलाई आफ्नो दिव्य सम्पत्तिका साथै कुबेरको भन्दा पनि उत्तम वैभव प्रदान गर्नुभयो ।

भगवान्को बिदाइ गरी घर फर्केका शुक्लब्राह्मण अलौकिक र लौकिक अनन्त सम्पत्तिका स्वामी बनिसकेका थिए । तिनको कुटी भव्य महलमा परिणत भइसकेको थियो र विश्वदुर्लभ सामग्रीको सङ्ग्रहालय पनि । यो देखेर शुक्लकी सहधर्मिणी विद्रुमा चकित थिइन् । तिनलाई सम्बोधन गर्दै शुक्लले भने – 'हे भाग्यवती सुन्दरी ! यो भक्तवत्सल दयासागर भगवान् श्रीगणेशका कृपाको परिणाम हो । प्रभुले हामीलाई हाम्रा सामु केही पनि दिनुभएन। तिमीले टक्र्याएको माड-भातले खुसी भएर परोक्षरूपमा सबै कुरा दिनुभयो। दयासिन्धु प्रभुले आफ्ना भक्तले प्रदान गरेको तुच्छ वस्तुलाई पनि अमूल्य मानेर भक्तलाई सर्वस्व सुम्पनु हुन्छ । तर आफूले दिएको महत्त्वपूर्ण वस्तुलाई तुच्छ संझनुहुन्छ । त्यसकारण कल्याण चाहने मानिसले प्रेम, भय, कामना र शत्रुभावले भए तापनि सर्वदा भगवान् श्रीगणेशको स्मरण, पूजन र स्तुति गर्नुपर्दछ । त्यसैगरी उहाँका कल्याणमय चरणकमलमा बारबार प्रणाम निवेदन गर्नुपर्दछ ।[३६]

## छ ) दानवकुलकी बुद्धिमती नारी दुर्गाको अनुपम गणेशभक्ति

प्रचण्ड शासक दैत्यराज सिन्धु र श्रीगणेशको घोर सङ्ग्राम भयो । सूर्यदेवको ध्यान गर्दै दैत्यराज सिन्धुले भगवान् श्रीगणेशमाथि धनुष बाण प्रहार गऱ्यो । श्रीगणेशले आफ्नो बञ्चरोले हानेर त्यसलाई छिन्नभिन्न तुल्याउनुभयो। सिन्धुले फेरि भगवान्लाई ताकेर चक्र प्रहार गऱ्यो । श्रीगणेशले प्रहार गरेको त्रिशूल सिन्धुको चक्रलाई टुक्रा टुक्रा बनाई त्यसका मस्तकमा रहेको मुकुट टुक्र्याउँदै दुवै कानसमेत छिनालेर श्रीगणेशसामु आइपुग्यो । कान काटिएपछि रिसाएर श्रीगणेशमाथि जाइलागेको दैत्यराज सिन्धुले आफ्ना चारैतर्फ आयुधधारी श्रीगणेशको दर्शन

३५. पूर्ववत्, २/३०/२६-३० ।
३६. पूर्ववत्, २/५५/१७-२९ ।

गऱ्यो । त्यसले जता दृष्टि लगाउँथ्यो त्यता सायुध श्रीगणेश विराजमान हुनुहुन्थ्यो । अन्तमा दिक्क भएर त्यसले आँखा चिम्लियो । त्यसबेला पनि त्यसले आफ्नो हृदयमा श्रीगणेशको दर्शन पायो । आँखा खोल्दा पनि दैत्यराज सिन्धुले आफ्ना सामु आयुधधारी श्रीगणेशको दर्शन पायो। यसबाट लज्जित, दु:खी र विस्मित भएको सिन्धु चुपचाप घर फर्की मुख ढाकेर सुत्यो ।[३७]

शय्यामा पल्टिरहेको सिन्धुका सामु सहसा त्यसकी महारानी दुर्गाले आएर भनिन् – 'हे स्वामी ! तपाईं किन चिन्तित र उदास हुनुहुन्छ ? प्रत्येक प्राणी ईश्वरको अधीनमा हुन्छ, जुन कुरा हुनुपर्नेछ त्यो नभई छाड्दैन । हजुरले चिन्ताको कारण बताउनुभएमा मैले आफ्नो बुद्धिअनुसार केही उपाय बताउने साहस गर्ने थिएँ ।' दुर्गाका वचन सुनेर सिन्धुले भन्यो – 'हे प्रिया ! मैले कसरी मेरो पराजयको विषयमा कुरा गरूँ ? मैले कुनै समयमा सातकोटि देवता र शिवगणसमेतलाई धूलो चटाएको थिएँ । तर आज शिवजीको फुच्चे छोराले त्रिशूल प्रहार गरेर मेरा दुबै कान काटिदियो । यसैले लज्जित भई मुख छोपेर सुतिरहेको छु । मैले त्यस शत्रुको वध कसरी गर्नसक्छु ?' दुर्गाले भनिन् –'हे स्वामी ! हजुरले वीरधर्म अँगालेर युद्धमा कोटिकोटि शत्रुको वध गर्नुभएको सत्य हो । तर देवता, ब्राह्मण र गाईसँग द्वेष गर्ने प्राणीले कहिले पनि कल्याण र कीर्ति प्राप्त गर्न सक्दैन । भगवान् श्रीगणेश कल्याणकारी देवता हुनुहुन्छ । उहाँसँग द्वेष र शत्रुभाव राख्ने कसैको पनि उत्तम गति हुँदैन । हेर्नुहोस् देवता, गाई र ब्राह्मणको सेवा, वन्दना, स्तुति, ध्यान, स्मरण र पूजन गर्नाले मात्र इन्द्र आदि लोकपालहरूले स्थिर पद प्राप्त गरेका हुन् । जस्तो बिउबीजन छरिन्छ त्यस्तै अङ्कुर लाग्दछ । अशुभ कर्मको परिणाम दु:ख र शुभ कर्मको परिणाम सुख हुन्छ। यसैले सज्जन पुरुषहरूले श्रद्धापूर्वक शुभ कर्म गर्दछन् । तिनले आफ्ना मन, वाणी एवं शरीरबाट जस्तोसुकै परिस्थितिमा पनि अरूको हित गर्दछन् ।'[३८]

फेरि दुर्गाले आफ्ना पतिलाई सुझाव दिँदै भनिन् – 'हे प्राणनाथ ! पटक पटक मैले संझाउँदा पनि हजुरले मान्नुभएन, विपरीत आचरण गर्नुभयो र देवता एवं ऋषिहरूलाई दु:खी तुल्याउनुभयो । जुन आचारबाट आफ्नो मन परधन र परस्त्रीमा लुब्ध हुँदैन त्यस्तो आचार गर्नु नै पुरुषार्थ हो । जुन मानिसले अनिन्द्य पुरुषको निन्दा गर्दैनन्, शरणागतहरूको रक्षामा निरन्तर तत्पर रहन्छन्, धर्मपरायण हुन्छन् र सबै प्राणीमा समदृष्टि राख्दछन् ती नै पुरुषार्थी कहलाउँछन् । हजुरले मेरो प्रार्थनामा ध्यान दिनुभयो भने हजुरको परम कल्याण हुनेछ । आफूले कारागारमा बन्दी बनाएका देवताहरूलाई मुक्त गरेर आनन्दपूर्वक जीवन बिताउनुहोस् र श्रीगणेशको शरणमा परी क्षमायाचना गर्नुहोस्। त्यसो गरेमा संसारका स्वामी गणेश फर्किनु हुनेछ । हामी दम्पती पनि सुखपूर्वक जीवन बिताउन पाउनेछौं ।' महारानी दुर्गाले यसरी सद्बुद्धि प्रदान गरे तापनि **विनाशकाले विपरीतबुद्धि: भनेझैं** सिन्धुको घैंटामा घाम लागेन । त्यसले श्रीगणेशसँग अन्तिम कालसम्म द्वेष गऱ्यो र परिणाममा श्रीगणेशबाट नै मृत्युवरण गऱ्यो।

## २.४ स्कन्द-सन्दर्भ

पार्वती र परमेश्वरका प्रथम पुत्रका रूपमा लोकवन्दित स्कन्दको महिमा महाभारत एवं पुराणवाङ्मयमा व्यापक रूपमा चर्चा गरिएको पाइन्छ। श्रीगणेश र स्कन्दको अपूर्व प्रेम र बाललीलाका सन्दर्भ पनि अनेकौं पुराणहरूमा रहेका छन्। कल्पभेद र पुराणभेदका कारण कथावस्तुमा केही अन्तर देखिए पनि सारतत्त्व एउटै पाइन्छ ।

---

३७. पूर्ववत्, २/११५/३४-५६ ।

३८. पूर्ववत्, २/११७/१-२४ ।

## क ) गणेशपुराण

गणेशपुराणमा तारकासुरको आतङ्कबाट पीडित देवताहरूले कामदेवका माध्यमबाट समाधिस्थ शङ्करको तपोभङ्ग गराई शङ्कर-पार्वतीबाट पुत्रोत्पत्तिका लागि अनुकूल वातावरण तयार गरेको विषय उल्लेख गरिएको छ। महाबली तारकासुरले कठोर तपस्या गर्दा प्रसन्न हुनुभएका ब्रह्माजीले अभयदान दिँदै भन्नुभयो- देवता, ऋषि, गन्धर्व, सर्प, राक्षस र तिनका शस्त्रअस्त्रबाट तिम्रो मृत्यु हुने छैन। शिव र पार्वतीका पुत्रका रूपमा जब स्कन्द पैदा हुनेछन् तबमात्र तिनका हातबाट तिम्रो मृत्यु हुनेछ ।

उग्र तारकासुरलाई यो वरदानले आगोमा घ्यूको काम गर्‍यो। त्यो झन् उग्र हुँदै गयो। त्रिलोकीका सम्पूर्ण प्राणीहरू त्यसको अत्याचारबाट सन्तप्त भए। विद्या, आचारनिष्ठा, धर्म र संस्कृतिमा कुठाराघात भयो। साधु-सज्जन, मुनि र देवताहरूका लागि हिमालयका गुफा आश्रय बने। त्यस अवस्थामा मुनिहरूले भगवान् शङ्करसँग प्रार्थना गरे- हे संहारका देवता ! हजुरले कि त संसारको संहार नै गरिदिनुहोस्, कि त यो दानवलाई मारिदिनुहोस्। यसरी प्रार्थना गरेर ती मुनिहरू तपस्या गर्न लागे। यता तारकासुरले ब्रह्मा, विष्णु र शिवजीमाथि पनि आक्रमण गर्‍यो। कालको अधीनमा रहेका ती शक्तिशाली देवताहरू पनि स्थानत्याग गरी पलायन गरे। हिमालयका गुफामा रहेका इन्द्रादि देवताहरूले शङ्करको स्तुति गरे। स्तुतिपछि तिनीहरूले 'जबसम्म शिवजीलाई पुत्र जन्म हुँदैन तबसम्म तारकासुरको अत्याचार जारी रहनेछ। शिवजीलाई पुत्र जन्माउने कार्यमा तिमीहरू प्रयत्नशील बन' भन्ने आकाशवाणी सुने ।[३९]

हिमालयको गुफामा रहेका इन्द्रादि देवताहरू शङ्करको दर्शन गर्न कैलाशमा पुगे। तर, तिनीहरूले उहाँको दर्शन पाउन सकेनन्। त्यहाँ पार्वतीमात्र हुनुहुन्थ्यो। उहाँलाई सबै कुरा निवेदन गर्दै भने – 'त्रिलोकीलाई निकै सताउने दुष्ट तारकासुरका कारण पदमुक्त भएका हामीहरूलाई हजुरले सङ्कटको सागरबाट पार लगाउनुहोस्।'[४०]

पार्वतीले देवताहरूको दयनीयता देखेर दया जागी भन्नुभयो – हे देवगण! आकाशवाणीको तात्पर्य मैले बुझेँ। भगवान् शङ्करले कल्याण गर्नुहुनेछ। तपाईंहरू मेरा साथ लागेर हिँड्नुहोस् । हामी शङ्कर जहाँ समाधिमा हुनुहुन्छ त्यसै ठाउँमा जानेछौँ। यसरी आफ्ना कुरा राखेपछि पार्वतीले भिल्लनारीको रूप धारण गर्नुभयो। उहाँको रूप सौन्दर्य देखेर देवता, ऋषि, मुनि सबै मुग्ध भए। उर्वशी, मेनका, रम्भा आदि सुरसुन्दरीहरू पनि हीनताबोध गर्न थाले। देवताहरूले भगवान् शङ्कर समाधि रहनुभएको ठाउँमा पुगेर उहाँलाई अविचलभावले ब्रह्मको ध्यानमा लाग्नुभएको देखे। त्यसबेला पार्वतीले देवताहरूलाई भन्नुभयो – हे देवगण ! तपोनिष्ठ भगवान् शङ्कर अहिले देहातीत भावमा हुनुहुन्छ। जब उहाँलाई देहभावको बोध हुन्छ तबमात्र हाम्रो कार्य सफल हुनेछ। तसर्थ शिवजीलाई देहभावमा ल्याउन कामदेवलाई लगाउनुहोस् ।[४१]

त्यसपछि सबै देवताहरूले कामदेवसँग शङ्करलाई देहभावमा ल्याउन अनुरोध गरे। कामदेवले पनि देवताहरूको प्रस्ताव स्वीकार गरी जहाँ शङ्कर तपस्यामा लीन हुनुहुन्थ्यो त्यहाँ गई मायाद्वारा अत्यन्त सुन्दर बगैँचा तयार गरे। सुन्दर बगैँचाका सुगन्धित फूलहरूको वासना चारैतिर फैलियो। बिहानको समयमा त्यो गन्ध शिवजीको नाकभित्र पुग्यो र उहाँले आँखा खोली हेर्दा आफ्नो चारैतिर अद्भुत सौन्दर्य नजर गर्नुभयो। त्यसबेला उहाँको मनमा कामभावना पैदा भयो। आफ्नो विकारापन्न मनको अवस्था बुझेर रिसाउँदै शिवजीले भन्नुभयो -

---

३९. एष ते दुष्टबुद्धिर्वधार्थं बुद्धिमानयं हि । नभोवाणी सर्वदेवा हरपुत्रो यदा भवेत् ॥
तदास्य नाशो भविता यत्नं कुरुत तत्र वै । – पूर्ववत्, १/८३/२९-३०

४०. तारके तारक त्राणप्रदे तारय तारकात् । त्रैलोक्यपीडकाद् दुष्टाद् पदभ्रष्टान् मुनीन् सुरान् ॥ – पूर्ववत्, १/८३/३२-३३

४१. देहातीत इवास्तेऽसौ तपोनिष्ठ सदाशिवः । यास्यते देहभावं स तदा कार्यं भविष्यति ॥ – पूर्ववत् १/८३/४२ ।

कुन अधमले मेरा तपस्या भङ्ग गर्ने उद्देश्यले यो बगैंचाको रचना गर्‍यो ? शिवजीका रिसले राता भएका आँखा देखेर कामदेव एकान्तमा लुके। तिनले आफ्नो रक्षाका लागि देवताहरूको याद गरे। देवताहरू पनि छिट्टै त्यहाँ आइपुगे। देवता र कामदेवको कुराकानी नहुँदै भगवान् शङ्करले दुर्बल शरीरका कामदेवलाई नजर गर्नुभयो। त्यसबेला उहाँले कामदेवलाई भस्म गराउने उद्देश्यले तेस्रो आँखा खोल्नुभयो। पृथिवी, स्वर्ग र पाताल कम्पायमान भए। देवताहरूले हात जोडेर भने- हे प्रभु! कामदेवलाई नमार्नुहोस् । तर, शिवजीले तिनीहरूका कुरा सुन्नुभएन। एक्कासि आफ्ना आँखाको तेजबाट कामदेवलाई खरानी तुल्याउनुभयो। भिल्लीको भेषमा रहेकी पार्वतीले शिवजीको पाउमा परी क्रोधशमन गर्न प्रार्थना गर्दै भन्नुभयो - हे प्रभु ! ब्रह्माजीबाट वर पाएर मातिएको तारकासुरको आतङ्कबाट दुःखी भएका देवताहरूले हजुरको ध्यानसमाधि भङ्ग गरी तारकासुरको विनाशको उपाय गर्न कामदेवलाई उपयोग गरेका थिए। तर, ठूलाबडासँग अपराधपूर्ण व्यवहार गर्नाले आज कामदेवलाई खरानी हुनुपर्‍यो। यसमा हामीहरू पनि सहभागी छौं। हे भगवान्! हाम्रो अपराध क्षमा गर्नुहोस्। हजुर शरणागतवत्सल हुनुहुन्छ । भिल्ली रूप पार्वतीका यी कुरा सुनेर प्रसन्न हुनुभएका शङ्करले प्रेमपूर्ण मीठा वचन बोल्दै भन्नुभयो - 'हे प्यारी ! भिल्ली उठ, तिमीले मेरो क्रोधबाट देवताहरूलाई जोगायौ ।' यसरी पार्वतीलाई सम्बोधन गरेर एक्कासि शिवजीले काखमा लिनुभयो। र आलिङ्गनपाशमा बाँध्नुभयो। त्यसपछि उहाँले पार्वतीलाई समेत आफ्नो वाहन नन्दीमाथि राखी कैलाशतर्फ प्रस्थान गर्नुभयो। शिवजीको आलिङ्गनका कारण अत्यन्त कामसंतप्त भएकी पार्वती आत्तिनु भयो । कामको संताप निवारण गर्न जति उपाय गरेता पनि ताप बढ्दै गयो । एक दिन उहाँले भगवान् शिवजीसमक्ष पुगेर भन्नुभयो - हे प्रभु ! हजुरले कामदेवलाई खरानी तुल्याउनुभए तापनि मलाई त्यसले सताइरहेको छ। उपाय गर्नुहोस् ।

पार्वतीका यी कुरा सुनेर शिवजीले पार्वतीलाई अङ्कशायिनी बनाई दीर्घकालसम्म रमण गर्नुभयो। भगवान् शिवजी दीर्घकालसम्म रमणमा भुल्नुहुँदा आतङ्कपीडित देवताहरू फेरि कैलाशमा पुगे। शिवजीलाई त्यस अवस्थाबाट छुटाउने सामर्थ्य नभएकाले चुप लागेर पर्खिरहे । त्यस बेला देवगुरु बृहस्पतिले अग्निदेवतालाई शिवपार्वतीको खोपी बाहिर गई भिक्षा माग्न लगाउँदा कल्याण हुने युक्ति बताए। देवताहरूले गुरुको परामर्शअनुसार अग्निको प्रार्थना गरी शिवजीसमक्ष भिक्षार्थी बन्न सहमत गराए ।

काषायवस्त्रधारी ब्राह्मणका रूपमा परिणत भएका अग्नि शिवजीको खोपी बाहिर गई भिक्षां देहि भन्दै चिच्याउन थाले। नग्न अवस्थामा रहेका शिवपार्वतीले हतार गर्दै वस्त्र धारण गरेपछि भिक्षुकलाई के दिने ? हामीसँग यहाँ केही छैन भन्ने चिन्ता गर्दा पार्वतीले शिवजीको वीर्य हातमा लिएर अग्निलाई प्रदान गरिन्। यो वीर्य भुइँमा खस्यो भने त्रिलोकीलाई नै खरानी तुल्याउँछ भन्ने सोची अग्निले आफै धारण गरे र उनलाई गर्भ रह्यो। तेजिलो शिववीर्यको रापले सन्तप्त भएका अग्निदेवता निकै आत्तिए। उनले गङ्गामा गई गर्भमोचन गरे। त्यस बेला कृत्तिकाहरू त्यहाँ नुहाउन आइपुगे। ती सबैले नुहाउँदा अग्निद्वारा परित्यक्त जलमा मिसिएको शिववीर्य पान गरे र ती सबै गर्भवती भए। नुहाएर घर फर्किंदा तिनका पतिहरूले आफ्ना श्रीमतीका पेटमा गर्भ रहेको थाहा पाई घरबाट निकालिदिए। ती कृतिकाहरूले फेरि गङ्गामा आई आआफ्ना गर्भ त्याग गर्दा ६ मुख भएका सुन्दर बालक पैदा भए। बालकले हुङ्कार गर्दा सम्पूर्ण ब्रह्माण्ड कम्पायमान भयो। त्यसै समयमा पृथिवीमा पर्यटन गर्दै नारदजी त्यहाँ आए। तिनले सबै कुरा थाहा पाई कैलाशमा गएर पार्वतीलाई भने - 'तपाईंका सुन्दर बालक गङ्गा तटमा लडिरहेका छन्, तपाईं भने निष्ठुर भई यहाँ बस्नुभएको छ ।' नारदजीका कुरा सुनेपछि पार्वती पनि तीव्र वेगले गङ्गातटमा पुग्नुभयो। पार्वतीले बालकलाई आलिङ्गन गरी माया गर्नुभयो। त्यस बेला गङ्गाले भनिन् - यो

मेरो पुत्र हो । अग्निले भने - यो मेरो पुत्र हो । छवटी कृतिकाले भने - यो हाम्रो पुत्र हो । पुत्रमा अधिकारप्राप्तिका लागि विवाद बढेपछि पार्वती ती सबैलाई साथ लिएर कैलाश पुग्नुभयो। काखमा बालक लिएकी पार्वतीलाई देखेर शिवजीले खुसी भई ती बालकलाई आफ्नो काखमा लिएर शिरमा सुँघ्नुभयो। शिवजीले त्यसरी माया गरेको देखेर मेरो छोरा, मेरो छोरा भन्दै आएका गङ्गा, अग्नि र कृतिकाहरू केही बोल्न हिम्मतै नगरी आआफ्ना घरतर्फ फर्किए। बालकको नामकरण संस्कार गर्न शिवजीले बृहस्पति र ब्रह्माजीलाई बोलाउनुभयो। ती दुवैले भने - बालक कार्तिक मासमा पैदा भएका हुन्। तसर्थ यिनको नाम **कार्तिकेय** हुनेछ। यी बालक पार्वतीका पुत्र हुन्, त्यस कारण यिनलाई **पार्वतीनन्दन** भनिनेछ। शरवणको झाडीमा पैदा भएकाले यी **शरजन्मा** कहलाउने छन्। कृतिकाहरूबाट पैदा भएकाले पनि यी **कार्तिकेय**का रूपमा प्रसिद्ध हुनेछन्। छवटी आमाका छोरा भएकाले यिनलाई **षाण्मातुर** भनिनेछ। यिनले भविष्यमा तारकासुरको वध गर्ने हुनाले यिनलाई **तारकजित्** भनिनेछ। भावी समयमा यी देवताहरूका सेनापति हुनेछन्। तसर्थ यिनलाई **सेनानी** भनिनेछ। त्यसै अर्थमा यिनलाई **महासेन** पनि भनिनेछ। यिनका छवटा मुख भएकाले यी **षणमुख**को नामबाट पनि प्रसिद्ध हुनेछन्। शिवजीबाट पार्वतीमा, पार्वतीबाट अग्निमा, अग्निबाट गङ्गामा वीर्यपतन भएकाले यिनलाई **स्कन्द** भनिनेछ ।[४२]

यसरी बृहस्पति र ब्रह्माजीले नामकरण गरिरहेको बेला इन्द्र आदि देवताहरू त्यहाँ आइपुगे । शिवपुत्रको उत्पत्तिबाट आनन्दित भएका ती सबैले शिवपुत्रलाई प्रणाम गरे र श्रद्धापूर्वक पूजा गरे। त्यस बेला दिव्य बाजा घन्किए र सम्पूर्ण संसारमा वाद्यवादनको ध्वनि भरियो। त्यसपछि तिनीहरूले शिवपुत्र कार्तिकेयलाई सेनापतिपदमा अभिषिक्त गरी प्रार्थनाको स्वरमा भने - हे प्रभु! त्रिलोकीकण्टक तारकासुरको वध गरेर हामी सबैको कल्याण गर्नुहोस्। यसरी प्रार्थना गरेपछि देवताहरू आआफ्नो धामतर्फ गए । शिवपुत्र कार्तिकेय शुक्लपक्षको चन्द्रमाझैं बढ्दै गए। एक दिन कार्तिकेयले चन्द्रमालाई समाउँछु भनी आकाशमा उड्ने प्रयास गर्दा ब्रह्माजीले रोक्नुभयो। कार्तिकेयले बुद्धिबाट बृहस्पतिलाई र शक्तिबाट इन्द्रलाई पनि परास्त गर्ने क्षमता राख्दथे।

एक दिन शिव-पार्वती आनन्दपूर्वक बस्नुभएको समयमा कार्तिकेयले नजिकमा गएर नम्रतापूर्वक भने - हे प्रभु! मलाई सबै प्रकारको सिद्धि प्रदान गर्ने, शत्रुविनाशमा सघाउने र सबै संसारको उपकार गर्न सहयोग गर्ने कुन व्रत हो, त्यसको विधि बताउनुहोस् । शिवजीले भन्नुभयो - 'तिमीले भनेजस्तो सबै कुरा गर्न सहयोग पुऱ्याउने व्रत वरदचतुर्थी व्रत हो। यो व्रत श्रावण शुक्ल चतुर्थीका दिन आरम्भ गर्नुपर्दछ । यो दिन विधिपूर्वक श्रीगणेशको पूजा गरी २१ दूर्वादल अर्पण गर्नुपर्दछ। त्यसपछि भगवान् गणेशको ध्यान गर्नुपर्दछ। एक महिनासम्म यो व्रत गरी भाद्र शुक्ल चतुर्थीका दिन श्रीगणेशको पूजा गरेर साङ्गता गर्नुपर्दछ। गणेशसहस्रनामद्वारा भगवान्को स्तुति गर्नुपर्दछ। यसरी शास्त्रमा बताएका विधिले व्रत पूरा गर्ने उपासकका सबै कामना पूरा हुन्छन्, दुःख एवं तापको नाश हुन्छ, सबै प्रकारका सिद्धि प्राप्त हुन्छन् र अन्तमा उपासक गणेशको धाममा प्राप्त हुन्छ। हे कार्तिकेय ! ब्रह्मा, विष्णु र मैले पनि श्रीगणेशको आराधना गरेर संसारको सृष्टि, पालन र संघार गर्ने शक्ति प्राप्त गरेका हौं। तिमीले पनि यसैगरी व्रत गर। म तिमीलाई गणेशको ६ अक्षरको मन्त्र पनि बताउँछु। त्यसको जप गरी आफ्नो लक्ष्य प्राप्त गर्नेछौ ।'

त्यसपछि शिवजीले कार्तिकेयलाई मन्त्रदीक्षा दिनुभयो । कार्तिकेय पनि हिमाली क्षेत्रको सुन्दर वनमा गई एक पाउले टेकेर तपस्यामा लीन भए । शिवजीले बताएअनुसार वरदचतुर्थीव्रत सम्पन्न गरे । भगवान् गणेशले एक दिन कार्तिकेयलाई सुन्दर रूप लिएर दर्शन दिई बर माग भन्नुभयो। कार्तिकेयले भने - 'हे प्रभु ! युद्धमा मैले पराजय भोग्न नपरोस्, जतिबेला हजुरको याद गर्दा पनि मैले दर्शन पाउन सकूँ, हजुरका

४२. पूर्ववत् १/८६/८-१२।

चरणयुगललाई कहिल्यै नबिर्सूँ र सबै देवताहरूका माझमा वरिष्ठ देवता भएर रहन पाऊँ।' यसरी स्कन्दले वर मागेपछि श्रीगणेशले पनि कार्तिकेयलाई आफ्नो वाहन मयूर टक्र्याउनुभयो र **मयूरध्वज** नामले कार्तिकेयलाई सम्बोधन गर्नुभयो। अन्तमा श्रीगणेशले भन्नुभयो – 'हे कार्तिकेय ! तिम्रो हातबाट तारकासुर मर्नेछ। तिम्रो इच्छा पूरा गराउन म यसै क्षेत्रमा लक्ष्यविनायकका नामबाट रहनेछु।' यसरी वर दिएर श्रीगणेश अन्तर्धान हुनुभयो। कार्तिकेयले पनि भगवान् लक्ष्यविनायकको मूर्ति बनाई मन्दिर तयार गरेर प्रतिष्ठा गराए। त्यसपछि कार्तिकेय भगवान् शिवजीसँग आज्ञा लिएर तारकासुरसँग युद्ध गर्न गए। त्यो युद्ध अवर्णनीय छ ।

तारकासुरसँग दीर्घकालसम्म युद्ध गरेपछि कार्तिकेयले तारकासुरमाथि शक्तिले प्रहार गरे। शक्तिपुत्र कार्तिकेयको त्यो अमोघ शक्ति नामक अस्त्र तारकासुरको छाती चिर्दै भित्र पस्यो । मुटु टुक्राटुक्रा भयो र अपरिमित बलशाली एवं महापराक्रमी दैत्यको शरीर निष्प्राण भई भुइँमा लड्यो । संसारमा अमनचैन फैलियो। देवता एवं मुनिहरू निर्विघ्न भई आआफ्ना स्थानमा आफ्ना कर्म गर्दै विराजमान भए। यसरी श्रीगणेशको आराधनाबाट कार्तिकेयले अपूर्व विजय प्राप्त गरेको प्रसङ्ग गणेशपुराणमा रहेको छ ।[३३]

शिवपरिवारमा श्री दाजु स्कन्दका साथ श्रीगणेशले बाललीला गर्नुभएका प्रसङ्ग, दुई भाइका बीचमा भएका प्रतिस्पर्धाका प्रसङ्गलगायतका विषय अन्य पुराणहरूमा वर्णन गरिएका छन् । श्रीगणेशले मयूर प्रदान गरेका कारण त्यति बेलादेखि कार्तिकेय मयूरवाहन हुनुभयो र सबै देवताहरूमा वरिष्ठ हुने वर पाएका कारण श्रीगणेशका साथै प्रत्येक कर्ममा प्रथमपूज्य भएको विषय पनि यहाँ रहेको छ ।

### ख ) पद्मपुराण

प्रथमपूज्य देवता श्रीस्कन्दको सन्दर्भ पद्मपुराणमा पनि रहेको छ । हिमालयकी छोरी पार्वतीको आफ्ना प्राणनाथ आशुतोष शङ्करमा अपूर्व स्नेह थियो। उहाँहरू दुवै एकान्त वन र रमणीय उद्यानहरूमा विहार गर्नुहुन्थ्यो। आफ्ना प्राणनाथको मीठो माया पाएर भगवती पार्वती पुलकित र प्रसन्न हुनुहुन्थ्यो । एक दिन भगवती पार्वती एउटा सरोवरको समीपमा जानुभएको थियो । सरोवरको निर्मल जलराशिमा स्वर्णकमल फुलिरहेका थिए। पार्वतीले जलविहार गर्नुभयो र निर्मल जल पिउने मन बनाउनुभयो । त्यसबेला उहाँले छ बहिनी कृत्तिकाहरूलाई कमलको पातमा जल लिएर जान लागेको अवस्थामा भेट्नुभयो । त्यति बेला पार्वतीले भन्नुभयो – कृत्तिका बहिनीहरू! म तपाईंहरूले लिएको कमलपत्रको निर्मल जल पिउन चाहन्छु । कृत्तिकाहरूले विनम्र स्वरमा भने– 'तपाईंको गर्भबाट पैदा हुने बालकले हामी कृत्तिकाहरूलाई पनि आमा मान्ने शर्तमा हामी यो जल तपाईंलाइ दिन सक्छौं ।' पार्वतीले तथास्तु भन्नुभयो । कृत्तिकाहरू खुसी भए । पार्वतीले मधुर जल पिउनुभयो । पार्वतीले जलपान गर्नासाथ उहाँको बायाँ कोखबाट अत्यन्त तेजस्वी बालक पैदा भए । सूर्यसमान तेजस्वी ती बालक स्वर्णसमान गौरवर्णका थिए । तिनका करकमलहरूमा शक्ति, शूल र अङ्कुश सुहाएका थिए । ती बालक कुत्सित दैत्यहरूको संहारका लागि पैदा भएका कारण **कुमार** कहलाए । ती बालक कृत्तिकाप्रदत्त जलबाट शाखासहित प्रकट भएका थिए र ती शाखा ६ मुखका रूपमा फैलिएका थिए । त्यसैले ती बालक **विशाख**, **षण्मुख**, **स्कन्द**, षडानन र **कार्तिकेय** आदि नामबाट विख्यात भए । ती बालक अग्निसमान प्रकाशमान थिए । तिनको शरीरको आकार दिव्य थियो । हेर्दा ती प्यारा थिए । सरकण्डाको वनमा पैदा भएका ती शिशु दिनदिनै बढ्न थाले। कृत्तिकाहरूले असाध्यै माया गर्दै ती बालकलाई स्तनपान गराए। कृत्तिकाहरूद्वारा पोषित भएकाले

३३ गणेश० ३/८६ अध्याय )

ती कार्तिकेयको नामबाट प्रसिद्ध भए। शिववीर्यको स्कन्दन अर्थात् स्खलन भई जन्मेका कारण ती स्कन्द कहलाए । गुफामा निवास गर्ने भएकाले ती गुहनामबाट सम्बोधित भए ।[५४] देवताहरूले चन्दन, माला, अङ्गराग आदि टक्र्याई सेनापतिको पदमा अभिषेक गरेर प्रार्थना गर्दै भने – 'हे सेनापति! तारकासुरको अत्याचारबाट हामी पीडित छौं । त्यो तारकासुर शक्तिशाली, दुर्जेय, क्रूर, दुराचारी र क्रोधी छ । त्यसबाट हामी संत्रस्त छौं। कृपया हजुरले त्यसको वध गर्नुहोस् ।'

कार्तिकेयले तथास्तु भन्नुभयो र तुरुन्तै तारकासुरको वध गर्न देवताहरूका पछि लाग्नुभयो। इन्द्रले तारकासुरलाई युद्ध गर्ने आह्वान गर्दै सन्देश पठाए । सन्देश प्राप्त भएपछि तारकासुरले शस्त्र धारण गरी युद्धभूमिमा सेना सजायो । परस्पर वीरतापूर्ण संवादपछि तारकासुरले कार्तिकेयमाथि मुद्गर प्रहार गर्‍यो । कार्तिकेयले त्यसलाई चक्रद्वारा काटिदिनुभयो। यसैगरी ती दुवै वीरहरूको एकले अर्कोमाथि शस्त्र प्रहार गर्ने र तिनलाई निरस्त गर्ने क्रम जारी रह्यो । पर्यन्तमा कार्तिकेयले गदाप्रहार गर्नुभयो र तारकासुर सारै आत्तियो । त्यसपछि तारकासुरका सेनापति कालनेमि आदि वीरहरूले कार्तिकेयमाथि आक्रमण गरे । पराक्रमी कार्तिकेय विचलित हुनुभएन । उहाँले शस्त्रप्रहारबाट दैत्यसेनालाई ध्वस्त गर्नुभयो । कालनेमि आदि वीरहरूले पलायन गरे । तारकासुर व्याकुल भयो । सेनाको पलायनबाट क्रुद्ध तारकासुरले कार्तिकेयमाथि भीषण गदाप्रहार गर्‍यो । त्यस प्रहारबाट कार्तिकेयका वाहन मयूरलाई ठूलो चोट लाग्यो । त्यसपछि ज्यादै रिसाउनुभएका कार्तिकेयले अत्यन्त क्रुद्ध भई शक्तिप्रहार गर्नुभयो । शक्तिपुत्र कार्तिकेयको अमोघ शक्तिप्रहारबाट तारकासुरको छाती विदीर्ण भयो । अजेय दैत्य तारकासुरको निष्प्राण शरीर धराशायी भयो । तारकासुरको वध भएपछि पृथिवी निष्पाप र हलुका भइन् । सबैतिर अमनचैन बहाली भयो । देवताहरूले कार्तिकेयको स्तुति गरे । श्रीगणेशका दाजु श्रीकार्तिकेयको लोकमा धेरै प्रशंसा भयो ।[५५]

## ग ) शिवपुराण

कार्तिकेय र गणेश यी दुई भाइमा परम प्रीति थियो । सँगै बालक्रीडा गरी रमाउँथे । मातापिताको सेवा गर्न प्रतिस्पर्धा गर्थे । विवाहको कुरा चल्यो । कार्तिकेयले मेरो विवाह पहिले हुनुपर्छ भन्नुहुँदा गणेशले पनि त्यसैगरी मेरो विवाह पहिले हुनुपर्छ भन्नुभयो । शिव-पार्वती अप्ठ्यारोमा पर्नुभयो । एक दिन विवाहका लागि शर्त तयार गरी शिवजीले भन्नुभयो – 'तिमीहरू दुई भाइमा जसले पहिले पृथिवीको परिक्रमा गर्दछ, त्यसको पहिले विवाह हुन्छ ।' शिवजीको आज्ञा सुनेपछि कार्तिकेय तुरुन्तै पृथिवीको परिक्रमा गर्न गए । गणेशलाई चिन्ता पर्‍यो । मेरो वाहन मूसो सानो छ, त्यसले पृथिवी परिक्रमा गर्दा प्रतिस्पर्धामा विजयी हुन सहयोग पुर्‍याउँदैन । म के गरूँ ? श्रीगणेशले केहीबेर विचार गरी मातापिताको भक्तिपूर्वक पूजा गरी सातपटक परिक्रमा गर्नुभयो । फलस्वरूप पृथिवीपरिक्रमाको सम्पूर्ण फल प्राप्त गरी श्रीगणेश प्रतिस्पर्धामा प्रथम हुनुभयो र विवाहका प्रथम अधिकारी पनि। शिव-पार्वतीले प्रजापति विश्वरूपका दुई छोरी सिद्धि र बुद्धिसँग श्रीगणेशको विवाह सम्पन्न गराउनुभयो । पृथिवीपरिक्रमा गरी फर्किएर आएका कार्तिकेयले गणेशको विवाहको समाचार सुनेपछि खिन्नता अनुभव गरे । त्यसपछि तिनले कैलाश छाड्ने र विवाह नगर्ने निश्चय पनि गरे । त्यस दिनदेखि कार्तिकेय कुमारका रूपमा संसारमा विख्यात भए ।[५६]

---

५४. महाभारत, अनुशासन पर्व, ८६/१२-१४
५५. पद्मपुराण, ८६ अध्याय ।
५६. शिवपुराण, रुद्रसंहिता, कुमारखण्ड, २०/२७-२८।

## २.५ गणेशगीता-सन्दर्भ

### क ) गणेशगीतामृत

गणेशपुराणको क्रीडाखण्डको १३८ औं अध्यायदेखि १४८ औं अध्यायसम्म जम्मा ११ अध्यायमा रहेको गणेशगीता श्रीगणेशका वचनामृतको सागर हो । गणेशगीतालाई योगमार्गको प्रकाशक गीता भनिएको छ । यसमा कर्मयोग, ज्ञानयोग र भक्तियोगका तत्त्वलाई राम्ररी विश्लेषण गरी प्रतिपादन गरिएको छ ।

श्रीगणेश वरेण्य राजाका पुत्रका रूपमा पैदा हुनुभएको थियो । श्रीगणेशको स्वरूपगत विरूपता देखेर वरेण्यले उहाँलाई वनमा फ्याँकिदिएका थिए । मुनि पराशरले बालक गणेशको रक्षा गरे । त्यसै अवतारमा ९ वर्षका बालगणेशले सिन्दूरासुरको बध गर्नुभएको थियो । पछि श्रीगणेशको प्रभाव थाहा पाएका राजा वरेण्यले पश्चात्ताप गर्दै भनेका थिए- 'मेरो घरमा प्रभुले अवतार लिनुहुँदा पनि दुर्भाग्यका कारण मैले चित्र सकिनँ र उहाँलाई वनमा फ्याँकिदिएँ ।' पछि श्रीगणेशको शरणमा परी उनले योगामृतको उपदेश प्राप्त गर्न याचना गर्दा श्रीगणेशले गणेशगीताको उपदेश गर्नुभयो । उक्त गीता गणेशगीताको नामबाट प्रसिद्ध छ । यसमा विभिन्न शीर्षकका एघार अध्याय क्रमशः - शाङ्ख्यसारार्थ योग, कर्मयोग, ब्रह्मार्पण योग, कर्मसंन्यास योग, योगावृत्तिप्रशंसनयोग, योगावृत्तिबुद्धियोग, उपासनायोग, विश्वबीक्षणयोग, क्षेत्रक्षेत्रज्ञविवेकयोग, उपदेशयोग र गुणत्रयकृतियोग रहेका छन् । उक्त गीताको उपदेश दिँदै श्रीगणेशले भन्नुभएको थियो – हे वरेण्य ! योगामृतले परिपूर्ण गीताको उपदेश गर्नेछु ।[८७]

साङ्ख्ययोगसारनामक प्रथम अध्यायमा योगतत्त्वको व्याख्या गर्दै भगवान् गजाननले भन्नुभयो - योगशास्त्रलाई योग भनिँदैन, श्रीसम्पत्तिको योग योग होइन, विषय र इन्द्रियको संयोग योग होइन, बाबु-आमा-पत्नी-पुत्र आदि पारिवारिक जनको संयोग योग होइन, इन्द्रिय र तन्मात्राको योग योग होइन, बन्धु-बान्धवसँग भेटघाट हुनु योग होइन, अणिमा-महिमा आदि विभूति प्राप्त गर्नु योग होइन, सुन्दर पत्नी पाउनु योग होइन, राज्यलाभ गर्नु योग होइन, हात्ती-घोडा आदिको सङ्ग्रह गर्नु योग होइन, इन्द्र पदको योग योग होइन, सत्यलोकमा प्राप्त हुनु योग होइन, शिवलोकमा प्राप्त हुनु योग होइन, वैकुण्ठलोकमा प्राप्त हुनु योग होइन, सूर्यसमान बन्नु योग होइन, चन्द्रमासमान बन्नु योग होइन, कुबेरसमान बन्नु योग होइन, वायुसमान बन्नु योग होइन, अग्निसमान हुनु योग होइन, देवता बन्नु योग होइन, कालस्वरूप हुनु पनि योग होइन, वरुण र निर्ऋतिको रूपमा प्राप्त हुनु पनि योग होइन र पृथिवीको सम्राट् हुनु पनि योग होइन । योग त त्यो हो जसलाई ज्ञानीहरूले योग भनेर उपयोग गर्ने गर्दछन् ।[८८]

योगको सही परिभाषा गर्दै भगवान् गणेशले भन्नुभयो – 'शिव, विष्णु, शक्ति, सूर्य र म गजाननमा जुन एउटै ब्रह्मबुद्धि हो, त्यही नै सक्कली योग हो ।'[८९] म गजानन गणेश नै विष्णु, शिव, शक्ति, सूर्य र गणेश गरी पाँच

---

८७ सम्यक्व्यवसिता राजन् मतिस्तेऽनुग्रहान्मम । शृणु गीतां प्रवक्ष्यामि योगामृतमयीं नृप ॥ – गणेशपुराण २/१३८/६ ।

८८ न योगं योगमित्याहुर्योगो योगो न च श्रियः । न योगो विषयैर्योगो न च मात्रादिभिस्तथा ॥
योगो यः पितृमात्रादेर्न स योगो नराधिप । यो योगो बन्धुपित्रादेर्यश्चाष्टभूतिभिः सह ॥
न स योगः स्त्रिया योगो जगदद्भुतरूपया । राज्ययोगश्च नो योगो न योगो गजवाजिभिः ॥
योगो नेन्द्रपदस्यापि योगो योगार्थिनः प्रियः । योगो यः सत्यलोकस्य न स योगो मतो मम ॥
शैवस्य योगो नो योगो वैष्णवस्य पदस्य च । न योगो भूप ! सूर्यत्वं चन्द्रत्वं न कुबेरता ॥
नानिलत्वं नानलत्वं नामरत्वं न कालता । न वारुण्यं न नैर्ऋत्यं योगो न सार्वभौमता ॥ – पूर्ववत्, २/१३८/७-१२ ।

८९ शिवे विष्णौ च शक्तौ च सूर्ये मयि नराधिप । याऽभेदबुद्धिर्योगः स सम्यग्योगो मतो मम ॥ – पूर्ववत्, २/१३८/२२ ।

स्वरूपमा परिणत भएको हुँ । जगत्‌का स्रष्टा ब्रह्मा आदि देवताको पनि स्रष्टा मलाई अज्ञानका कारण मानिसहरूले त्यस रूपमा चिन्दैनन् ।[५०] सर्वप्रथम कर्महीन साधक अज्ञानावस्थामा रहन्छ र त्यसबेला त्यसको ज्ञानमा अधिकार हुँदैन, त्यसले सत्कर्म गर्नु पर्दछ । कर्म गर्दै जाँदा त्यसको हृदय निष्पाप र निर्मल बन्दछ । शुद्ध हृदयले चिन्तन गर्दा त्यसले उक्त पाँचवटै देवतामा समानभाव राख्दछ । सबै देवता एउटै श्रीगणेशका रूप हुन् भन्ने बोध हुनु नै योग हो । यो योग नै योगामृत बन्दछ ।[५१]

पशु, पुत्र, मित्र, शत्रु, बन्धु आदि सबैमा समान दृष्टिले व्यवहार गर्नुपर्दछ । सुख, दुःख, हर्ष, विषाद, ईर्ष्या र भयमा पनि समान दृष्टि राख्नुपर्दछ । रोग, योग, जय, पराजय, सम्पत्ति, विपत्ति, लाभ, हानि, जन्म र मृत्युमा पनि मलाई सर्वत्र दर्शन गर्नु योग हो । चन्द्र, सूर्य, तारा, अग्नि, शिव, शक्ति, ब्राह्मण, सरोवर, महानदी, तीर्थ, पुण्यक्षेत्र, विष्णु र सबै देवता, यक्ष-सर्प, गन्धर्व, मनुष्य एवं पशुमा पनि मेरो दर्शन गर्नु नै योग हो । जसले योगको प्रयोग गर्दछ त्यसलाई योगवेत्ता भनिन्छ ।[५२] विवेकपूर्वक इन्द्रियहरूलाई तिनका विषयबाट हटाएर सर्वत्र समभावले हेर्नुलाई योग भनिन्छ ।[५३] नित्य स्वधर्मको पालनमा रमाउने मानिसले यो आत्मतत्त्व हो र यो आत्मतत्त्व होइन भन्ने बुद्धिद्वारा सच्चिदानन्दरूप ईश्वरको पहिचान गर्नुनै योग हो ।[५४] कर्ममा कुशलताको नाम पनि योग हो र यी सबै योगमा साधकले नित्य आफ्नो प्रवृत्ति लगाउनुपर्छ भनिएको छ ।[५५] जसका इन्द्रिय वशमा हुन्छन्, त्यो स्थितप्रज्ञ हो[५६] भनेर प्रथम अध्यायको अन्त्यमा विस्तृतरूपमा स्थितप्रज्ञको लक्षण बताउँदै विषयासक्तिबाट हुने हानिको वर्णन गरिएको छ ।[५७]

कर्मयोग नामक द्वितीय अध्यायमा साधकले आफ्ना तिर्सनाहरू हटाएर इन्द्रियको समूहलाई मनको अधीनमा ल्याई इन्द्रियहरूद्वारा उत्तम कर्म गर्नुलाई कर्मयोग हो भनिएको छ ।[५८] भोगका लागि गरिने कर्महरू संसारका कारण हुन्छन् तर परब्रह्मरूप गजाननको प्रीतिका लागि गरिने कर्मले साधकलाई संसारको बन्धनबाट मुक्त गराउँछन् । वासनापूर्वक गरिने कर्म संसारका कारण बन्दछन् ।[५९] कर्म नगर्ने मानिस निष्क्रिय र असफल हुन्छ । कर्म व्यर्थ छ, तसर्थ कर्मको त्याग गरी कर्मसंन्यासी हुनुपर्छ भन्ने मानिस पनि सफल हुँदैन । संसारयात्राका लागि कर्म गर्नु आवश्यक हुन्छ, तर कर्मफलमा आसक्ति गर्न हुँदैन । कर्म गर्ने साधकले नित्य र नैमित्तिक कर्म

---

५०. अहमेको नृणां नाथो जातः पञ्चविधः पुरा । अज्ञानान्मां न जानन्ति जगत्कारणकारणम् ॥ – पूर्ववत्, २/१३८/२८ ।

५१. जहाति यदि कर्माणि ततः सिद्धिं न विन्दति । आदौ ज्ञाने नाधिकारः कर्मण्येव स युज्यते ॥
कर्मणा शुद्धहृदयोऽभेदबुद्धिमुपेष्यति । स च योगः समाख्यातोऽमृतत्वाय हि कल्पते ॥ – पूर्ववत्, २/१३८/२९-३० ।

५२. योगमन्यं प्रवक्ष्यामि शृणु भूप । तमुत्तमम् । पशौ पुत्रे तथा मित्रे शत्रौ बन्धौ सुहृज्जने ॥
बहिर्दृष्ट्या च समया हृत्स्थयालोकयेत् पुमान् । सुखे दुःखे तथामर्षे हर्षे भीतौ समो भवेत् ॥
रोगाप्तौ चैव भोगाप्तौ जये वा विजयेऽपि च । श्रियोऽयोगे च योगे च लाभालाभे मृतावपि ॥
समो मां वस्तुजातेषु पश्यन्नन्तर्बहिः स्थितम् । सूर्ये सोमे जले वह्नौ शिवे शक्तौ तथाऽनिले ॥
द्विजे ह्रदे महानद्यां तीर्थे क्षेत्रेऽघनाशिनि । विष्णौ च सर्वदेवेषु तथा यक्षोरगेषु च ॥
गन्धर्वेषु मनुष्येषु तथा तिर्यग्भवेषु च । सततं मां हि यः पश्येत् सोऽयं योगविदुच्यते ॥ – पूर्ववत्, २/१३८/३१-३६ ।

५३. सम्परिहृत्य स्वार्थेभ्य इन्द्रियाणि विवेकतः । सर्वत्र समताबुद्धिः स योगो भूप । मे मतः ॥ – पूर्ववत्, २/१३८/३७ ।

५४. आत्मानात्मविवेकेन या बुद्धिर्दैवयोगतः । स्वधर्मासक्तचित्तस्य तद्योगो योग उच्यते ॥ – पूर्ववत्, २/१३८/३८ ।

५५. धर्माधर्मौ जहातीह तया युक्त उभावपि । अतो योगाय युञ्जीत योगो वैधेषु कौशलम् ॥ – पूर्ववत्, २/१३८/३९ ।

५६. पूर्ववत्, २/१३८/४२-५८ ।

५७. सङ्गिनस्त्वतो विषयान् सङ्गस्तेषूपजायते । कामः संजायते तस्मात् ततः क्रोधोऽभिवर्द्धते ॥
क्रोधादज्ञानसम्भूतिर्विभ्रमस्तु ततः स्मृतेः । भ्रंशात् स्मृतेर्मतिध्वंसस्तद्ध्वंसात् सोऽपि नश्यति ॥ – पूर्ववत्, २/१३८/५९-६० ।

५८. पूर्ववत्, २/१३९/६ ।

५९. मदर्थं यानि कर्माणि तानि बध्नन्ति न क्वचित् । सकामनमिदं कर्म बध्नाति देहिनं बलात् ॥ – पूर्ववत्, २/१३९/९ ।

सम्पादन गरी त्यस कर्मलाई गजानन प्रभुमा अर्पण गर्नुपर्दछ । अहंबुद्धि र ममताबुद्धिको त्याग गरेपछि साधकले उत्तम गति प्राप्त गर्दछ ।[५०] यसरी भगवान् गणेशले कर्मयोगनामक द्वितीय अध्यायमा कर्म, कर्मफल र कर्मफलको ईश्वरार्पणजस्ता विषयमा उपदेश गर्नुभएको छ ।

ब्रह्मार्पण योग नामक तेस्रो अध्यायमा भगवान् गणेशले वरेण्यलाई भन्नुभएको छ – सम्पूर्ण कर्म परब्रह्मरूप श्रीगणेशमा अर्पण गरेपछि कर्मयोगी मानिस संसारको चक्रमा पर्दैन । द्वन्द्व र ईर्ष्याको त्याग गरी फल प्राप्ति र अप्राप्तिमा समानभावमा रहने र जे उपलब्ध हुन्छ त्यसमा सन्तुष्ट रहने साधक कर्म गरे तापनि बन्धनमा पर्दैन।[५१] श्रीगणेशले भन्नुभएको छ – 'हे राजा वरेण्य ! म नै अग्नि हुँ, म नै हवि हुँ, म नै यजमान हुँ र जुन हव्य हवन गरिएको हुन्छ, त्यो पनि म नै हुँ । यी सबै कुरालाई ब्रह्मार्पण गर्नुपर्दछ । यसरी सम्पूर्ण कर्म र कर्मका साधनलाई ब्रह्मार्पण गर्ने साधक ब्रह्ममा प्राप्त हुन्छ ।'[५२] सबै यज्ञहरूमा ज्ञानयज्ञ उत्तम मानिन्छ । मोक्षको साधन ज्ञानमा सम्पूर्ण कर्म विलीन हुन्छन् ।[५३] ज्ञानको प्राप्तिका लागि उत्तम पुरुषको सङ्गति गर्नुपर्दछ । उत्तम प्रश्न गरेर पारदर्शी उत्तरको अपेक्षा गर्नुपर्दछ । उत्तम पुरुषलाई प्रणाम गरेर तत्त्वजिज्ञासा गर्नुपर्दछ । उत्तम पुरुषहरूको सेवा-सुसार गर्नुपर्दछ । यसरी प्रणाम, सेवा र सम्मान गरिएका तत्त्वज्ञानीहरूले तत्त्वज्ञान प्रदान गर्नेछन् ।[५४]

कर्मसंन्यासयोगनामक चतुर्थ अध्यायमा कर्मसंन्यासको विषयमा श्रीगणेशले वरेण्यलाई तत्त्वोपदेश गर्नुहुँदै भन्नुभएको छ । कर्मको त्याग गरेर संन्यासीरूपमा रहँदा ब्रह्मप्राप्त हुन्छ भन्ने धारणा भ्रान्तिपूर्ण छ । कर्मको संन्यासबाट मात्र संन्यासधर्म गतार्थ हुँदैन । योगीले अनिच्छापूर्वक भए पनि कर्म गर्नुपर्दछ । अनिच्छापूर्वक कर्म गर्दा योगी कर्मसंस्कारमा लिप्त हुँदैन । यस्तो योगी ब्रह्मरूप नै बन्दछ ।[५५] योगका ज्ञाताहरू चित्तशुद्धिका लागि कुनै पनि आशा नराखीकन शारीरिक, वाचनिक, बौद्धिक, ऐन्द्रियिक र मानस कर्म गर्दछन् ।[५६] योगहीन मानिसले फलको आशाले कर्म गर्दछन् । यस्ता मानिस कर्मका बीजद्वारा बन्धनमा पर्दछन् र दुःखमा पनि ।[५७] आफ्नै आत्मामा रमाउने साधकले परम आनन्दलाभ गर्दछ । ब्रह्मानन्द अविनाशी हुन्छ । विषयभोगबाट पाइने आनन्द सुख-दुःखमूलक हुन्छ ।[५८] विषयजनित सुखनै दुःखका कारण बन्दछन् । ती सुख उत्पत्ति र विनाशले युक्त हुन्छन् । विषयसुखमा आसक्त मानिस कहिले पनि तत्त्वज्ञाता हुनसक्दैन ।[५९] कर्मसंन्यासयोगको व्याख्यापछि श्रीगणेशले वरेण्यलाई अष्टाङ्गयोगको पनि उपदेश दिनुभयो । गजानन भन्नुहुन्छ – योगमार्गमा अग्रसर हुन चाहने साधकले पूरक, रेचक र कुम्भक गरी प्राणायाम साधना गर्नुपर्दछ । प्राणायाम सिद्ध भएपछि त्यो साधक भूत-भविष्य र वर्तमानको ज्ञाता बन्दछ ।[६०]

---

५० अनारम्भेण वैधानां निष्क्रियः पुरुषो भवेत् । न सिद्धिं याति सन्न्यासात् केवलात् कर्मजाद्भुप ॥
नित्यं नैमित्तिकं तस्मान्मयि कर्माण्यर्पयेद् बुधः । त्यक्त्वाऽहंममताबुद्धिं परां गतिमवाप्नुयात् ॥ – पूर्ववत्, २/१३९/३, ३०

५१ अद्वन्द्वोऽमत्सरो भूत्वा सिद्ध्यसिद्ध्योः समश्च यः । यथाप्राप्त्येह संतुष्टः कुर्वन् कर्म न बध्यते ॥ – पूर्ववत्, २/१४०/२८

५२ अहमग्निर्हविर्होता हुतं यन्मयि चार्पितम् । ब्रह्माप्तव्यं च तेनाथ ब्रह्मण्येव यतो रतः॥ – पूर्ववत्, २/१४०/३०

५३ सर्वेषां भूप ! यज्ञानां ज्ञानयज्ञः परो मतः। अखिलं लीयते कर्म ज्ञाने मोक्षस्य साधने ॥ – पूर्ववत्, २/१४०/३१

५४ तज्ज्ञेयं पुरुषव्याघ्र ! प्रश्नेन नतितः सताम् । शुश्रूषया वदिष्यन्ति सन्तस्तत्त्वविशारदाः ॥ पूर्ववत्, २/१४०/४०

५५ केवलं कर्मणां न्यासं संन्यासं न विदुर्बुधाः । कुर्वन्ननिच्छया कर्म योगी ब्रह्मैव जायते ॥ – पूर्ववत्, २/१४१/८

५६ कायिकं वाचिकं बौद्धमैन्द्रियं मानसं तथा । त्यक्त्वाशां कर्म कुर्वन्ति योगज्ञाश्चित्तशुद्धये ॥ – पूर्ववत्, २/१४१/१०

५७ योगहीनो नरः कर्म फलेहया करोत्यलम् । बद्ध्यते कर्मबीजैः स ततो दुःखं समश्नुते ॥ – पूर्ववत्, २/१४१/११

५८ आनन्दमश्नुते सक्तः स्वात्मारामो निजात्मनि । अविनाश्यं सुखं तद्धि न सुखं विषयादिषु ॥ – पूर्ववत्, २/१४१/२१।

५९ विषयोत्थानि सौख्यानि दुःखानां तानि हेतवः । उत्पत्तिनाशयुक्तानि तत्रासक्तो न तत्त्ववित् ॥ – पूर्ववत्, २/१४१/२२

६० पूरकं कुम्भकं चैव रेचकं च ततोऽभ्यसेत् । अतीतानागतज्ञानी ततः स्याज्जगतीतले ॥ – पूर्ववत्, २/१४१/२३

योगावृत्तिप्रशंसायोग नामक पाँचौं अध्यायमा श्रीगणेशले वरेण्यलाई योगावृत्तिबारे उपदेश गर्नुभएको छ । सर्वत्र ब्रह्मदर्शनको योग प्राप्त गराउने प्रथम कारण कर्म नै हो । योग सिद्ध भएपछि त्यसलाई कायम राख्न शम र दमको पालन गर्नुपर्दछ । इन्द्रियका लागि भोगको परिकल्पना गरी कर्म गर्ने मानिस आफ्नै शत्रु बन्दछ । तर जुन योगीले इन्द्रियका भोगहरूको कामना नगरी कर्म गर्दछन् तिनले सिद्धि प्राप्त गर्दछन् ।[७१] मान-अपमान, सुख-दुःख, मित्र-सज्जन, तटस्थ-वैरी, माटाका डल्ला र सुवर्णजस्ता विषयमा समान दृष्टि राख्ने आत्मज्ञानी, अपराविद्या र पराविद्यामा पारङ्गत योगीले निरन्तर अष्टाङ्गयोग र ब्रह्मदर्शन योगको अभ्यास गरिरहनुपर्दछ । यसरी अभ्यास गरिरहँदा त्यो योगी नित्य योगसम्पन्न बन्दछ ।[७२] जसले योगद्वारा मलाई प्राप्त गर्दछ, त्यसलाई मैले दर्शन दिइरहन्छु, बन्धनमुक्त तुल्याउँछु । मैले त्यसलाई कहिले पनि छाड्दिन र त्यसले पनि मलाई छाड्दैन ।[७३] योगसाधकले सिद्धिका लागि मनको वशीकार गर्नुपर्दछ । मनमा विजय गर्न नसक्ने हो भने योग दुर्लभ हुन्छ ।[७४] ज्ञान, तपस्या र कर्ममा निष्ठा राख्ने साधकभन्दा योगसाधक श्रेष्ठ मानिएको छ । योगसाधकहरूमा पनि जसले श्रीगणेशमा भक्ति गर्दछ, त्यो उत्तम योगी मानिएको छ ।[७५]

योगावृत्तिबुद्धियोग नामक छैठौं अध्यायमा भगवान् गणेशले प्रकृतिको परिचय दिनुका साथै प्रकृतिविजयका उपाय पनि बताउनुभएको छ । भगवान् भन्नुहुन्छ – हे वरेण्य ! सर्वप्रथम योगसाधकले मेरो प्रकृतिसँग परिचित हुनुपर्दछ । त्यसपछि त्यो साधक ज्ञानमार्गमा अग्रसर हुन्छ, ज्ञानको पात्र बन्दछ । ज्ञानद्वारा मलाई प्राप्त गरेपछि विज्ञानका सबै वैभवसँग पनि त्यो परिचित हुन्छ । पृथिवी, वायु, आकाश, अहङ्कार, जल, चित्त, बुद्धि, सूर्य, चन्द्र र यजमान गरी प्रकृतिका दश रूप हुन्छन् । पुरुषसँग क्रियाशील हुने आद्याप्रकृति प्रत्येक जीवसँग टाँसिएर रहन्छिन् । ती आद्याप्रकृतिले तीनै लोकलाई ढाकेकी छन् । यिनै प्रकृतिको आश्रयमा सम्पूर्ण चेतन-अचेतनको सृष्टि हुन्छ ।[७६] भगवान् भन्नुहुन्छ – माया अथवा प्रकृतिद्वारा मोहित पापात्माहरूले मलाई प्राप्त गर्न सक्दैनन् । सत्त्व, रज र तम गुणद्वारा अनुप्राणित भएकी प्रकृतिले तीनै लोकलाई मोहित बनाउँछिन् ।[७७] जुन मानिसले गणेशलाई एकमात्र शरण मानी भक्तिपूर्वक भजन गर्दछ, त्यसका अविद्या एवं अज्ञान सबै काटिन्छन् र त्यसले योग एवं क्षेम प्राप्त गर्दछ ।[७८]

उपासनायोग नामक सातौं अध्यायमा भगवान् गणेशले राजा वरेण्यलाई उपासनाका विविध पद्धतिबारे जानकारी गराउनुभएकोछ । भगवान् भन्नुहुन्छ – हे राजन् ! उपासकले सर्वप्रथम भूतशुद्धि गरी प्राणायाम गरेर चित्तलाई एकाग्र बनाई न्यास गर्नुपर्दछ । अन्तर्मातृकान्यास, बहिर्मातृकान्यास, षडङ्गन्यास र मन्त्रन्यास गरी

७१. योगप्राप्त्यै महाबाहो ! हेतुः कर्मैव मे मतम् । सिद्धयोगस्य संसिद्धौ हेतु शमदमौ मतौ ॥
इन्द्रियार्थांश्च सङ्कल्प्य कुर्वन् स्वस्य रिपुर्भवेत् । एतानिच्छन् यः कुर्वन् सिद्धिं योगी स सिद्ध्यति॥ – पूर्ववत्, २/१४२/२-३ ।

७२. मानेऽपमाने दुःखे च सुखे सुहृदि साधुषु । मित्रेऽमित्रेऽप्युदासीने द्वेष्ये लोष्टे च काञ्चने ॥
समो जितात्मा विज्ञानी ज्ञानीन्द्रियजयावहः । अभ्यसेत् सततं योगं तदा युक्ततमो हि सः ॥ – पूर्ववत्, २/१४२/५-६ ।

७३. योगेन यो मामुपैति तमुपैम्यहमादरात् । मोचयामि न मुञ्चामि तमहं मां स न त्यजेत् ॥ – पूर्ववत्, २/१४२/१६ ।

७४. अभ्यासाद् वा वशीकुर्यान्मनो योगस्य सिद्धये । वरेण्य ! दुर्लभो योगो विनाऽस्य मनसो जयात् ॥ – पूर्ववत्, २/१४२/२३ ।

७५. ज्ञाननिष्ठः तपोनिष्ठः कर्मनिष्ठो नराधिप ! । श्रेष्ठो योगी श्रेष्ठतमो भक्तिमान् मयि तेषु यः ॥ – पूर्ववत्, २/१४२/२७ ।

७६. ज्ञेया मत्प्रकृतिः पूर्वं ततः स्याज्ज्ञानगोचरः । ततो विज्ञानसम्पत्तिर्मयि ज्ञाते नृणां भवेत् ॥
क्ष्मानलौ खमहङ्कारः कं चित्तं धीः समीरणः । रवीन्दू यागकृच्चैकादशधा प्रकृतिर्मम ॥
अन्यां मत्प्रकृतिं वृद्धा मुनयः सङ्गिरन्ति च । यया त्रिविष्टपं व्याप्तं जीवत्वं गतयाऽनया ॥
आभ्यामुत्पाद्यते सर्वं चराचरमयं जगत् । सङ्गाद्विश्वस्य सम्भूतिः परित्राणं लयोऽप्यहम् ॥ – पूर्ववत्, २/१४३/३-६ ।

७७. न मां विन्दन्ति पापिष्ठा मायामोहितचेतसः । त्रिविकारा मोहयति प्रकृतिर्मे जगत्त्रयम् ॥ – पूर्ववत्, २/१४३/११ ।

७८. अनन्यशरणो यो मां भक्त्या भजति भूमिप ! योगक्षेमौ च तस्याहं सर्वदा प्रतिपादये ॥ – पूर्ववत्, २/१४३/२० ।

भगवान्‌को ध्यान गरेर स्थिरचित्त भई गुरुबाट प्राप्त मन्त्रको जप गर्नुपर्दछ । निश्चित सङ्ख्यामा जप गरेपछि भगवान्‌लाई जप निवेदन गरेर स्तुतिमन्त्रहरूबाट स्तवन गर्नुपर्दछ । यसरी जसले उपासना गर्दछ त्यसले मोक्ष प्राप्त गर्दछ । जसले उपासना गर्दैन त्यसको जन्म व्यर्थ छ र त्यो धिक्कारयोग्य छ ।[७९] जसले मेरो साकाररूपमा अथवा निराकाररूपमा राम्ररी उपासना गर्दछन् तिनले परब्रह्मरूप मलाई प्राप्त गर्दछन् ।[८०]

विश्वरूपवीक्षणयोग नामक आठौं अध्यायमा श्रीकृष्णले वरेण्यलाई दिव्यचक्षु प्रदान गरी आफ्नो विराट्‌रूप देखाउनुभएको वृत्तान्त प्रतिपादन गरिएको छ । श्रीगणेशबाट दिव्यदृष्टि पाएका राजा वरेण्यले परमेश्वर गजाननको अद्भुत विराट्‌रूप दर्शन गरे । त्यस रूपमा असङ्ख्य मुख थिए, असङ्ख्य चरण थिए र असङ्ख्य आँखा थिए । त्यो रूप दिव्य गहना र परिधानले सुसज्जित थियो । सुगन्धै सुगन्धले त्यो रूप परिपूर्ण थियो । करोडौं सूर्यझैं चहकिला अस्त्रहरूले सुहाएको थियो । राजा वरेण्यले गणेशको त्यो विराट् रूपमा स्वर्ग, मर्त्य र पाताल तीनै लोकको दर्शन गरे ।[८१]

क्षेत्रक्षेत्रज्ञविवेकयोग नामक नवौं अध्यायमा श्रीगणेशले राजा वरेण्यलाई क्षेत्र र क्षेत्रज्ञको परिचय दिई भक्तिद्वारा क्षेत्रज्ञ गणेशको उपासना गर्दा परब्रह्मरूप गणेशको प्राप्ति हुने कुरा बताउनुभएको छ । पञ्चभूत, पञ्चतन्मात्रा, पञ्चकर्मेन्द्रिय, पञ्चज्ञानेन्द्रिय, अहङ्कार, मन, बुद्धि, इच्छा, प्रकृति, धृति, द्वेष, सुख, दुःख र चैतन्यसहितको समूहलाई क्षेत्र अथवा शरीर भनिन्छ । यो समूहलाई राम्ररी जान्ने र परिचालन गर्ने तत्त्व सर्वान्तर्यामी श्रीगणेश नै हुनुहन्छ ।[८२] क्षेत्र र क्षेत्रज्ञको ज्ञान गरी सच्चिदानन्दघन परब्रह्ममा रमाउन चाहने साधकले भक्तिपूर्वक श्रीगणेशको उपासना गर्नुपर्दछ । इन्द्रियलाई वशमा तुल्याएर संसारका सबै प्राणीहरूको हित गर्दै अक्षय्य, अव्यय, सर्वव्यापक र कूटस्थ श्रीगणेशको उपासना गर्ने साधकलाई उहाँले संसारसागरबाट उद्धार गर्नुहुन्छ । अघि शुक, सनकादि र नारदजीजस्ता भक्तहरूले भक्तिद्वारा नै ओङ्काररूप परमात्मा श्रीगणेशलाई प्राप्त गरेका थिए । त्यसकारण आत्मकल्याण चाहने भक्तले भक्तिपूर्वक श्रीगणेशको उपासना गर्नुपर्दछ । यसरी उपासना गर्ने भक्त अन्त्यमा श्रीगणेशमा नै विलीन हुन्छ ।[८३]

उपदेशयोग नामक दसौं अध्यायमा भगवान् गणेशले राजा वरेण्यलाई दैवी, आसुरी र राक्षसी प्रकृतिका साथै सात्विक, राजस र तामस भक्तिका लक्षणहरू बताउनुभएको छ ।[८४] गुणत्रयकृतियोग नामक एघारौं

---

७९. भूतशुद्धिं विधायादौ प्राणानां स्थापनं तथा। आकृष्य चेतसो वृत्तिं ततो न्यासमुपक्रमेत् ॥
कृत्वान्तर्मातृकान्यासं बहिश्चाथ षडङ्गकम् । न्यासं च मूलमन्त्रस्य ततो ध्यात्वा जपेन्मनुम् ॥
स्थिरचित्तो जपेन्मन्त्रं यथा गुरुमुखोद्‌गतम् । जपं निवेद्य देवाय स्तुत्वा स्तोत्रैरनेकधा ॥
एवं मां य उपासीत स लभेन्मोक्षमव्ययम् । य उपासनया हीनो धिङ्‌नरो व्यर्थजन्मभाक् ॥ - पूर्ववत्, २/१४४/१४-१७ ।

८०. ये मां सम्यगुपासन्ते परं ब्रह्म प्रयान्ति ते । ध्यानाद्यैरुपचारैर्मां तथा पञ्चामृतादिभिः ॥ - पूर्ववत्, २/१४४/६ ।

८१. ततो राजा वरेण्यः स दिव्यचक्षुरवैक्षत। ईशितुः परमं रूपं गजास्यस्य महाद्भुतम् ॥
असङ्ख्यवक्त्रं ललितमसङ्ख्याङ्‌घ्रिकरं महत् । अनुलिप्तं सुगन्धेन दिव्यभूषाम्बरस्रजम् ॥
असङ्ख्यनयनं कोटिसूर्यरश्मिधृतायुधम् । तद्धर्माणि त्रयो लोका दृष्टास्तेन पृथग्विधाः॥ - पूर्ववत्, २/१४५/५-७ ।

८२. महाभूतानि तन्मात्राः पञ्चकर्मेन्द्रियाणि च । अहङ्कारो मनो बुद्धिः पञ्चज्ञानेन्द्रियाणि च ।
इच्छाऽव्यक्तं धृतिर्द्वेषौ सुखदुःखे तथैव च ॥ चेतनासहितश्चायं समूहः क्षेत्रमुच्यते ॥
क्षेत्रज्ञं त्वं विद्धि मां भूप ! सर्वान्तर्यामिणं विभुम् ॥ - पूर्ववत्, २/१४६/२१-२२ ।

८३. यो मां मूर्तिधरं भक्त्या मद्‌भक्तः परिसेवते । स मे मान्योऽनन्यभक्तिर्नियुज्य हृदयं मयि ॥
[illegible] स्ववशं कृत्वाऽखिलभूतहितार्थकृत् । ध्येयमक्षरमव्यक्तं सर्वगं कूटगं स्थिरम् ॥
[illegible] मामेव निर्दिष्टं भक्तो य उपासते । संसारसागरादस्मादुद्धरामि तमप्यहम् ॥
शुकाद्याः सनकाद्याश्च पुरा मुक्ता हि भक्तितः । भक्त्यैव मामनुप्राप्ता नारदाद्याश्चिरायुषः ॥
अतो भक्त्या मयि मनो विधेहि बुद्धिमेव च। भक्त्या यजस्व मां राजंस्ततो मामेव यास्यसि ॥ - पूर्ववत्, २/१४६/३-५, ९-१० ।

८४. पूर्ववत्, २/१४७/१-२, १८-१९ ।

अध्यायमा भगवान् गणेशले सात्विक, राजस र तामस तीन प्रकारका तप, तीन प्रकारका दान, तीन प्रकारका ज्ञान, तीन प्रकारका कर्म, तीन प्रकारका कर्ता र ॐ तत् सत् गरी तीन प्रकारका प्रवृत्तिहरूको वर्णन गर्नुभएको छ । ॐ तत् सत् प्रवृत्तिद्वारा श्रीगणेशको भजन गरी आत्मलाभ गर्नुपर्ने उपदेश प्रदान गर्नुभएको छ ।[८५] गणेश गीताका एघार अध्यायहरूमा श्रीमद्भगवद्गीताकै शैलीमा विषय निरूपण गरिएको छ। विषय गम्भीर भए तापनि भाषा सरल भएकाले यो गीता साधारण संस्कृतज्ञका लागि पनि उपयोगी र अध्ययनीय छ ।

## ख ) श्रीगणेशगीता र श्रीमद्भगवद्गीतामा विषयगत समानता

श्रीमद्भगवद्गीता महाभारतअन्तर्गत भीष्मपर्वको एक भाग हो भने श्रीगणेशगीता श्रीगणेशपुराणको क्रीडाखण्डको १३८ अध्यायदेखि १४८ अध्यायसम्मको एक भाग हो । श्रीमद्भगवद्गीताका १८ अध्यायहरूमा ७०० पद्य छन् भने श्रीगणेशगीताका ११ अध्यायहरूमा ४१४ पद्य छन् । श्रीमद्भगवद्गीताको उपदेश महाभारत युद्धको आरम्भमा कुरुक्षेत्रमा श्रीकृष्णले अर्जुनका निमित्त गर्नुभएको हो । श्रीमद्भगवद्गीताको अनुकरणमा सयौं गीताहरूको रचना भएको छ । तीमध्ये रामगीता, हंसगीता, गुरुगीता, अवधूतगीता, पाण्डवगीता, गणेशगीता आदि प्रसिद्ध छन् । ती गीताहरूमध्ये गणेशगीतालाई महत्त्वपूर्ण मानिन्छ । अन्य गीताहरूको विषयमा केही अन्तर हुनसक्छ तर गणेशगीता र श्रीमद्भगवद्गीताका विषयहरूमा समानता छ । विशेषतः दुबै गीताहरूमा कर्मयोग, साङ्ख्ययोग र भक्तियोगमा आधारित विषयहरूको प्रतिपादन गरिएको छ ।

गणेशगीतामा योगसाधन, प्राणायाम, तान्त्रिकपूजन, मानसिकपूजन, सगुणोपासना आदि विषयमा गम्भीर प्रकाश पारिएको छ । उक्त विषयका साथै विश्वरूपदर्शन र विभूतियोगका विषयमा पनि सङ्क्षेपमा वर्णन गरिएको छ । श्रीमद्भगवद्गीता र गणेशगीतामा शब्दगत भिन्नता भए पनि विषयगत अभेद रहेको छ। श्रीमद्भगवद्गीतामा श्रीकृष्णले अर्जुनलाई ज्ञानोपदेश गर्नुभएझैं गणेशगीतामा श्रीगणेशले राजा वरेण्यलाई ज्ञानोपदेश गर्नुभएको छ । उपदेश प्राप्त गर्ने अर्जुन र राजा वरेण्यको स्थितिमा भने पर्याप्त अन्तर देखिन्छ। श्रीमद्भगवद्गीताका अर्जुन मूढ अवस्थामा थिए भने गणेशगीताका वरेण्य मुमुक्षु स्थितिमा थिए ।

गणेशगीता र श्रीमद्भगवद्गीतामा विषयगत पर्याप्त समानता रहेको छ । कतिपय पद्यहरूमा अर्थमात्र नभई शब्दगत सादृश्य पनि रहेको छ । श्रीमद्भगवद्गीतामा स्वधर्मानुष्ठानको महिमा प्रकाशित गर्दै भनिएको छ – 'आफ्नो धर्म गुणरहित भए तापनि राम्ररी अनुष्ठान गरिएको परधर्मभन्दा उत्तम हुन्छ । आफ्नो धर्म पालन गर्दा मृत्यु भए पनि उत्तम हुन्छ तर परधर्म भने भयानक हुन्छ ।'[८६] यसै विषयलाई श्रीगणेशले गणेशगीतामा यसरी बताउनुभएको छ – 'स्वधर्म विगुण भए पनि अरूको साङ्गोपाङ्ग धर्मभन्दा उत्तम हुन्छ । आफ्नो धर्मको साधना गर्दागर्दै मृत्यु भए पनि त्यो मृत्यु परलोकमा कल्याणदायक बन्दछ । परन्तु परधर्म जुनसुकै अवस्थामा पनि भयानक हुन्छ।'[८७] भगवद्गीता दोस्रो अध्यायका १२, २०, २३, २४ श्लोकहरूमा आत्माको अविनाशिताको निरूपण गरिएझैं गणेशगीतामा पनि आत्मतत्त्वको अनिश्वरता प्रतिपादन गर्दै भनिएको छ – 'शस्त्रले आत्मालाई काट्न सक्दैन, आगोले पोल्न सक्दैन, पानीले भिजाउन सक्दैन र हावाले सुकाउन सक्दैन । यो शरीर मरणधर्मा भए पनि आत्मा अमर छ ।'[८८]

८५. पूर्ववत्, २/१४८/१, ७,१०,३१,३६ ।

८६. श्रेयान् स्वधर्मो विगुणः परधर्मात् स्वनुष्ठितात् । स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः ॥ – श्रीमद्भगवद्गीता, ३/३५ ।

८७. शस्तोऽगुणो निजो धर्मः साङ्गादन्यस्य धर्मतः । निजे तस्मिन् मृतिः श्रेयः परत्र भयदः परः ॥ – श्रीगणेशपुराण, २/३९/३५ ।

८८. अच्छेद्यं शस्त्रसङ्घातैरदाह्यमनलेन च अक्लेद्यं भूप! भुवनैरशोष्यं मारुतेन च । अवध्यं बध्यमानेऽपि शरीरेऽस्मिन् नराधिप ॥ – पूर्ववत्, २/१३८/३१-३२ ।

श्रीमद्भगवद्गीताको दोस्रो अध्यायका ५७-७२ श्लोकहरूमा स्थितप्रज्ञको लक्षण बताएझैं गणेशगीताको प्रथम अध्यायको ५३-६४ सम्मका श्लोकमा स्थिरबुद्धि पुरुषका लक्षण बताइएको छ । जसले मनका सम्पूर्ण कामनाहरूको परित्याग गर्दछ र आफ्नै आत्मामा रमाउँछ, त्यसलाई स्थिरबुद्धि भन्दछन् । सुखहरूमा तिर्सना नभएको र दु:खहरूबाट नआत्तिने, भय-क्रोध र रागदेखि मुक्त साधकलाई स्थिरबुद्धि भन्दछन् ।[९] भगवद्गीतामा योगीको दिन र रात संसारी मानिसको दिन-रातभन्दा फरक हुने कुरा बताइएको छ । यसैगरी गणेशगीतामा पनि योगी र सामान्य मानिसका दिन-रातको अवस्थालाई छुट्ट्याइएको छ ।[१०] स्थिरबुद्धि पुरुष ब्राह्मी स्थितिमा प्राप्त हुने कुरा श्रीमद्भगवद्गीतामा बताइएझैं गणेशगीतामा पनि बताइएको छ ।[११]

यी केवल दृष्टान्तका लागि प्रस्तुत पद्य हुन् । गणेशगीताका अनेक प्रसङ्गमा श्रीमद्भगवद्गीताको शब्दगत र विषयगत सादृश्य देखिन्छ । माथिको सादृश्य सन्दर्भलाई विचार गर्दा दुवै गीताको प्रतिपाद्य विषय एउटै रहेको प्रमाणित हुन्छ। उपासकले श्रद्धाअनुसार जुनसुकै गीताको अनुशीलन गरे पनि समानरूपमा फल प्राप्त हुन्छ अर्थात् समान रूपमा ब्राह्मी स्थिति प्राप्त हुन्छ ।

## २.६ स्वानन्दभुवन-सन्दर्भ

गणेशपुराणको क्रीडाखण्डमा मुद्गल मुनिले श्रीगणेशको स्वानन्दभुवनको वर्णन गरेका छन् । तदनुसार श्रीगणेश स्वानन्दभुवनको कामदायिनीपीठमा विराजमान हुनुहुन्छ । वास्तवमा यो स्वानन्दभुवन चिन्तामणिद्वीपको नै अर्को नाम हो ।[१२] स्वानन्दभुवनको अवस्थिति र विशेषताबारे भनिएको छ – 'श्रीगणेशको स्वानन्दभुवन पाँच हजार योजनको विस्तारमा फैलिएको छ । यस धामको स्वर्णमय भूतलबाट दिग्दिगन्त आलोकित गराउने प्रकाशप्रवाह प्रवाहित भइरहन्छ । इक्षुरससागरको बीचमा रहेको यो धाम पुण्यवान्हरूका लागि पनि दुर्लभ मानिएको छ । वेदाध्ययन, दान, व्रत, यज्ञ र जप-तपबाट यसलाई प्राप्त गर्न असम्भव छ । प्रबल भक्तिभावले ओतप्रोत भई श्रीगणेशको नित्य आराधना गर्ने भक्तले मात्र उहाँको कृपाबाट यसलाई प्राप्त गर्न सक्दछन् । भगवान् विघ्नराज त्यहाँ समष्टि र व्यष्टिरूपमा नित्य निवास गर्नुहुन्छ ।'[१३]

स्वानन्दभुवनमा विराजमान श्रीगणेशको ऐश्वर्य र महिमा खुलाउँदै भनिएको छ – 'अपरिमित शोभासम्पन्न र दु:ख-मोहनिर्मुक्त स्वानन्दधाम श्रीगणेशको कृपाबाट मात्र सुलभ हुन्छ । त्यसको उत्तर भागमा इक्षुसागर सुहाएको छ । त्यस धाममा सहस्रपत्रसम्पन्न सुन्दर कमललता रहेको छ । त्यसमा सहस्रदल कमल विकसित छ । त्यो कमल चन्द्रमाझैं देदीप्यमान छ । त्यस कमलको कर्णिकामा रत्नकाञ्चनद्वारा निर्मित एउटा दिव्य शय्या छ । त्यहाँ दिव्य वस्त्र र अलङ्कारले सुहाउनु भएका श्रीगणेश शयन गर्नुहुन्छ । सिद्धि र बुद्धिले उहाँका सामु रहेर चरणकमलको सेवा गर्दछन् ।

---

[९] [illegible]खिलान् कामान् यदा धीमांस्त्यजेत्प्रिय ।। स्वात्मनि स्वेन सन्तुष्टः स्थिरबुद्धिस्तदोच्यते ।।
[illegible] सर्वसौख्येषु सोद्विग्नो दुःखसङ्गमे । गतसाध्वसरुड्रागः स्थिरबुद्धिस्तदोच्यते ।। – पूर्ववत्, २/१३८/५३-५४ ।
[१०] [illegible] सर्वभूतानां तस्यां निद्राति नैव सः । न स्वपन्तीह ते यत्र सा रात्रिस्तस्य भूमिप ।। – पूर्ववत्, २/१३८/६५ ।
[११] [illegible] यदाविश भूप ! यो विजानाति दैवतः । तुर्यावस्थां प्राप्यापि शीलान्मुक्तिं स गच्छति ।। – पूर्ववत्, २/१३८/६९ ।
[१२] [illegible] कामदायिनीपीठे सोतिष्ठति विनायकः । – पूर्ववत्, २/५०/३१ ।
[१३] [illegible] पञ्चसहस्रयोजनानि महामते । रत्नकाञ्चनभूमौ स राजते भासयन् दिशः ।।
[illegible] दिव्योऽयमिक्षुसागरमध्यगः । न वेदैर्न च दानैश्च व्रतैर्यज्ञैर्जपैरपि ।।
[illegible] प्राप्यते नैव कर्हिचित् । विनायकस्य कृपया प्राप्यते नित्यभक्तितः ।।
[illegible] सदा तिष्ठति विघ्नराट् । – पूर्ववत्, २/५०/३२-३४ ।

तीन मूर्तिले सम्पन्न सामवेदले श्रीगणेशको गुणगान गर्दछन् । शास्त्रहरूले मूर्तिमान् भएर उहाँको स्तुति गर्दछन् । समस्त पुराणहरूले पनि उहाँका उत्तम गुणहरूको बयान गर्दछन् । दिव्य शय्यामा विराजमान, सुन्दर सूँढले सुहाउनुभएका श्रीगणेश त्यहाँ नित्य विराजमान हुनुहुन्छ । उहाँका अङ्ग–प्रत्यङ्ग अत्यन्त कोमल छन्, वर्ण रातो छ र आँखाहरू लाम्चिला छन् । उहाँ एकदन्तधारी हुनुहुन्छ । श्रीगणेशले आफ्नो श्रीविग्रहमा मुकुट, कुण्डल र कस्तूरीको तिलक धारण गर्नुहुन्छ । उहाँको कण्ठमा दिव्य माला सुहाएको छ। उहाँका स्वरूप, परिधान र आभूषण दिव्य एवं भव्य छन् । उहाँले आफ्नो श्रीविग्रहमा दिव्य चन्दनको लेपन गर्नुभएको छ । उहाँले मुक्ता, मणि र रत्नजडित हार धारण गर्नुभएको छ । उहाँ अनन्तकोटि सूर्यसमान तेजस्वी हुनुहुन्छ । उहाँको मस्तकमा मुकुटाकार अर्धचन्द्रमा शोभायमान छ । यस्तो दिव्य स्वरूपले सम्पन्न श्रीगणेशले गङ्गा नदीझैं आफ्नो स्मरण गर्ने भक्तका सबै प्रकारका पाप नाश गर्नुहुन्छ ।'[१४] त्यस दिव्य धाममा रहेको श्रीगणेशको पलङ्का दुबै भागमा सूर्यसमान प्रकाश भएका तेजोवती र ज्वालिनीनामक शक्तिहरू उभिएका हुन्छन् ।[१५] श्रीगणेशको स्वानन्दधाम शीत, जरा, थकान, पसिना, तन्द्रा, भोक, प्यास, दुःख आदिबाट मुक्त छ। पुण्यात्माहरू मात्र त्यहाँ निवास गर्दछन् ।[१६]

महाराष्ट्रका गणेशभक्त कवि विनायक महादेवको रचना 'गणेशप्रताप'मा निम्नानुसार गणेशलोकको वर्णन गरिएको छ – 'गणेशलोकको भूमि स्वर्णमय छ, त्यहाँ रहेका विष्णु–शिव आदि देवताका मन्दिर पनि स्वर्णमय छन् । त्यहाँका आवास भवन सुवर्ण एवं रत्नजडित छन् । गणेशलोकका प्रत्येक रूप कल्पवृक्षसमान छन् र प्रत्येक ढुंगा रत्नमय छन्। गणेशलोकमा निवास गर्ने गणेशभक्तहरूलाई गणेशदूत भनिन्छ । ती गणेशदूतहरू श्रीगणेशकै आकार–प्रकारका हुन्छन्। गणेशलोकमा जन्म, मृत्यु, सुख र दुःखको पीडा हुँदैन । गणेशका दूतहरू अत्यन्त तेजस्वी छन् । ऋद्धि र सिद्धिले गणेशलोकका गणेशदूतहरूको सेवा गर्दछन् । सामवेदले गणेशदूतहरूको गुणगान गर्दछन् । भगवान् श्रीगणेशको भक्तिमा लीन हुने मानिस गणेशलोकमा वास गर्दछन् । गणेशलोक वा स्वानन्दभुवनका अधिष्ठाता श्रीगणेश पूर्ण परब्रह्म परमात्मा हुनुहुन्छ ।[१७]

ॐ

१४. तस्यैव कृपया प्राप्यो दुःखमोहविवर्जितः । तदुत्तरे भाति परं इक्षुसागर एव तु ॥
सहस्रपत्रसंयुक्ता तन्मध्ये पद्मिनी शुभा । सहस्रपत्रं कमलं तस्यां भाति यथा शशी ॥
तत्कर्णिकागततल्पो रत्नकाञ्चननिर्मितः । दिव्याम्बरयुतः शेते नृप । तत्र विनायकः ॥
सिद्धिबुद्धी सदा तस्य पादसंवाहनं मुदा । कुरुतः परया भक्त्या सामवेदस्त्रिमूर्तिमान् ॥
गानं करोति शास्त्राणि मूर्तिमन्ति स्तुवन्ति तम् । पुराणानि च सर्वाणि वर्णयन्त्यस्य सद्गुणान् ॥
बालरूपधरस्तत्र शुण्डादण्डविराजितः । कोमलाङ्गोऽरुणनिभो विशालाक्षो विषाणवान् ॥
मुकुटी कुण्डली राजत्कस्तूरीतिलकः स्वराट् । दिव्यमाल्याम्बरधरो दिव्यगन्धानुलेपनः ॥
मुक्तामणिगणोपेतं सरत्नं दाम संदधत् । अनन्तकोटिसूर्याभश्चन्द्रार्धकृतशेखरः ॥
स्मरणात् पापहा सद्यः स्मृता गङ्गा यथा नृणाम् ॥ – पूर्ववत्, २/५०/५१–५९ ।

१५. तेजोवती ज्वालिनी च शक्ती पर्यङ्कपार्श्वयोः । सहस्रादित्यसङ्काशे तिष्ठतो नृप । सर्वदा ॥ – पूर्ववत्, २/५०/६० ।

१६. न शीतं न जरा तत्र क्लमः स्वेदोऽथ तन्द्रापि । क्षुधा तृष्णाऽथ दुःखं वा न कदाचन जायते ॥ – पूर्ववत्, २/५०/६१ ।

१७. क) श्रीरामलाल, 'गणेशलोक', कल्याण, पूर्ववत्, पृ. ४२६ ।
ख) मोहनखारकर, 'गणेशलोक', कल्याण, पूर्ववत्, पृ. ४२३ ।

## परिच्छेद - तीन

# श्रीगणपतितत्त्व, अवतरण एवं स्वरूपसौन्दर्य

## ३.१ श्रीगणपतितत्त्व

**अजं निर्विकल्पं निराकारमेकं निरालम्बमद्वैतमानन्दपूर्णम् ।**
**परं निर्गुणं निर्विशेषं निरीहं परब्रह्मरूपं गणेशं भजेम ।।**[१]

अनन्तकोटि ब्रह्माण्डका नायक, परात्पर, पूर्णतम, परब्रह्म, परमात्मालाई नै गणनाथ यद्वा विनायक भनिन्छ । सृष्टिको उत्पादन र परिपालनमा आसुरी शक्तिद्वारा प्रकट गरिने विघ्न–बाधाहरूको निवारणका लागि सृष्टिको प्रारम्भकालदेखि नै परमात्माले आफूलाई गणपतिका रूपमा प्रकट गराई ब्रह्मा आदि देवताहरूलाई सघाउँदै आउनुभएको छ । यसै विशेषताका कारण वैदिकवाङ्मय, पुराणवाङ्मय र तन्त्रवाङ्मयमा पनि श्रीगणपतितत्त्वको विवेचनका साथै श्रीगणपतिको अनुपम कल्याणकारिताको गुणगान गर्दै उहाँको आराधना एवं उपासनाका सोपान र सरणिहरूको विषयमा पर्याप्त चिन्तन गरिएको छ । यहाँ श्रुति–स्मृतिवन्दित ओङ्कारात्मा श्रीगणेशका विविध रूपको चर्चा गरिँदैछ ।

### क ) वाङ्मयवन्दित श्रीगणेश

वेदहरूमा श्रीगणेशलाई गणपति, प्रियपति र निधिपति भनी ऐश्वर्य र योगैश्वर्य सम्पन्न परमात्मा भनिएको छ।[२] उपनिषद्हरूमा **खं ब्रह्म** भनेर आकाशलाई ब्रह्मतत्त्व मानिएको छ ।[३] श्रीगणेश पनि आकाशरूप हुनुभएकाले ब्रह्मरूप हुनुहुन्छ भनिएको छ । अतः श्रीगणेश निष्कल, निरञ्जन, निर्गुण, निराकार, अनवद्य, अद्वैत, अज, अखण्ड एवं अभेदरूप परब्रह्म हुनुहुन्छ । वैखानस आगममा पनि आकाशलाई गणपति भनिएको पाइन्छ ।[४] तान्त्रिक विद्वान्हरूका दृष्टिमा मूलाधार शक्ति श्रीगणेशका रूपमा स्वीकृत छ ।[५] लिङ्गपुराणमा गणेश र शिवको तादात्म्य-सम्बन्ध देखाई शिवजीका विशेषता, उपाधि, नाम र लक्षणहरूको प्रयोग श्रीगणेशका लागि पनि गरिएको छ । शिव र गणेशको अभेदसिद्धिका लागि भगवान् शिवमा श्रीगणेशका विशेषता, उपाधि, नाम र लक्षणहरूको आरोप गरिएको छ । वायुपुराणमा भगवान् शिवलाई गजेन्द्रकर्ण, लम्बोदरजस्ता श्रीगणेशका नामले सम्बोधन गरिएको छ । ब्रह्मपुराणमा पनि श्रीगणेशका उपाधिहरूलाई शिवमा प्रयोग गरी दुवैमा पूर्ण अभेदको प्रतिपादन गरिएको छ । तैत्तिरीयब्राह्मणमा श्रीगणेशको वाहनलाई शिवजीको पनि वाहन मानिएको छ। सौरपुराणमा श्रीगणेशलाई साक्षात् शिवरूप सिद्ध गरिएको छ । ब्रह्मवैवर्त पुराणमा श्रीगणेश र श्रीविष्णुको एकरूपता प्रतिपादन गरिएको छ । स्वयं विष्णु नै कैलासमा गई बालक बनेर पार्वतीको पुत्रका रूपमा रहनु भएको कुरा त्यहाँ उल्लेख

---

१ श्रीगणेशपुराण, १/६३/३
२ शुक्लयजुर्वेद, २३/१९ ।
३ छान्दोग्योपनिषद्, ३/१४/१ ।
४ श्यामाकान्त द्विवेदी, 'गणेश की उत्पति, स्वरूप एवं सम्प्रदाय', कल्याण 'गणेश अङ्क', वर्ष ४८, अङ्क १, गीताप्रेस, गोरखपुर ।
५ पूर्ववत् ।

गरिएको छ ।[६] सबै आर्षवाङ्मयमा श्रद्धापूर्वक चर्चित श्रीगणेश वास्तवमा वाङ्मयमूर्ति हुनुहुन्छ ।

### ख ) तत्त्वसमूहका अधिपति श्रीगणेश

गणेशशब्दको तात्त्विक विश्लेषण गर्दा **गणशब्द** समूहको वाचक र **ईशशब्द** देवता आदि सबै तत्त्वको वाचक हुन आउँदछ । तसर्थ गणेश, गणपति, गणाधिप आदि शब्दले पनि सम्पूर्ण तत्त्वसमूहका अधिपतिका रूपमा श्रीगणेशलाई चिनाउँछन् । उपनिषद्मा भनिएको छ – हे गणपते ! तपाईंलाई नमस्कार गर्दछु, तपाईं नै एकमात्र कर्ता हुनुहुन्छ, तपाईं नै समस्त तत्त्वका पालक हुनुहुन्छ, तपाईं नै समस्त जगत्‌का संहारक हुनुहुन्छ । धेरै के भनौं तपाईं नै जगत्स्वरूप र परब्रह्मरूप हुनुहुन्छ ।[७]

### ग ) ओङ्काररूप श्रीगणेश

एकाक्षर यो ॐकार सम्पूर्ण भूत, भविष्य एवं वर्तमानरूप हो । त्रिकालरूप र कालातीत सबै तत्त्व ओङ्कार हो । त्यही ओङ्काररूप ब्रह्म श्रीगणेश हो ।[८] गणपति अथर्वशीर्षमा गणपतिको स्वरूपमा रहेको नररूप र गजरूप दुवैको सामञ्जस्य गर्दै **तत्पदार्थ-** परमात्मा र **त्वंपदार्थ-** अल्पज्ञ जीवको समन्वय गरी सबैलाई श्रीगणेशरूप बताइएको छ ।[९] समाधिबाट जसलाई योगीहरूले साक्षात्कार गर्दछन्, त्यो निरुपाधिक गज, तत्पदार्थमय श्रीगणेशको सर्वोत्कृष्ट स्वरूप हो भन्ने विषयमा पनि शास्त्रहरूमा प्रकाश पारिएको छ ।[१०] त्रिभुवनमा अर्थात् **भूः, भुवः, स्वः**, लोकहरूमा जुन विषय छन्, ती सबै ओङ्कारमय हुन् । वास्तवमा अतीत, वर्तमान र भविष्यत् सबै कुरा ओङ्कार हो। त्रिकालातीत जुन तत्त्व छ त्यो पनि ओङ्कार हो र ब्रह्मा, विष्णु एवं शिवजीको रूपमा रहेको श्रीगणेशतत्त्व पनि ओङ्कार नै हो ।[११] श्रीगणेशतत्त्वलाई अनुत्पन्न र अलौकिक आत्मतत्त्व मानिएको छ । त्यो अनादि, अजन्मा आत्मतत्त्व नै श्रीगणेशतत्त्व हो ।[१२] यसबाट श्रीगणेश अद्वय, वाक्तत्त्व, सत्‌तत्त्व, चित्‌तत्त्व र आनन्दतत्त्वका अधिष्ठान हुनुहुन्छ भन्ने सिद्ध हुन्छ ।

श्रीगणेशको भौतिकरूप विचित्र र अविश्वसनीय छ । साधकले परमात्मभावले श्रीगणेशको आराधना गरेपछि उहाँको कृपाबाट रहस्यका पर्दा खुल्दै जान्छन् । श्रीगणेशको आधिभौतिक स्वरूप जति विशाल छ, तदनुरूप उहाँका अङ्ग र वाहन पनि उत्तिकै विशाल छन् । आध्यात्मिक दृष्टिबाट हेर्दा श्रीगणेश सबैका आत्मा, इन्द्रियका स्वामी, सर्वरूप हुनाले उहाँको नाम सार्थक छ । आकाश सर्वाधार भएझैं श्रीगणेश पनि सर्वाधार हुनुहुन्छ । वास्तवमा आकाश अथवा शब्दतन्मात्रा नै श्रीगणेशका रूपमा रहेको छ । आकाशतत्त्वबाट सबै तत्त्व उत्पन्न हुन्छन् र अन्तमा त्यसमा नै विलीन हुन्छन् । आकाशमा रूपतन्मात्रा एवं अग्नितत्त्व, रसतन्मात्रा एवं जलतत्त्व, स्पर्शतन्मात्रा एवं वायुतत्त्व, गन्धतन्मात्रा एवं पृथिवीतत्त्व विश्वका उपादानका रूपमा निहित हुन्छन् । तसर्थ आकाश सर्वाधार हो र श्रीगणेशको रूप हो । ओङ्काररूप श्रीगणेशतत्त्वमा विश्वोपादानका समस्त पदार्थ

६. पूर्ववत् ।
७. नमस्ते गणपतये, त्वमेव केवलं कर्तासि, त्वमेव केवलं धर्तासि, त्वमेव केवलं हर्तासि, त्वमेव सर्वं खल्विदं ब्रह्मासि, गणेश अथर्वशीर्ष १ ।
८. गणेशोत्तरतापिन्युपनिषद् १ ।
९. त्वमेव प्रत्यक्षं तत्त्वमसि, गणेश अथर्वशीर्ष - ४ ।
१०. स्वामी करपात्री महाराज, गणपतितत्त्व, कल्याण, पूर्ववत्, पृ. २६ ।
११. त्वं ब्रह्मा, त्वं विष्णुः, त्वं रुद्रः, त्वं भूर्भुवः स्वरोम्, गणेश-अथर्वशीर्ष ६ ।
१२. त्वं वाङ्मयः, त्वं चिन्मयः, त्वमानन्द-मयस्त्वं ब्रह्ममयः, त्वं सच्चिदानन्दाऽद्वितीयोऽसि, गणेशाथर्वशीर्ष ४ ।

सूक्ष्मरूपमा अवस्थित हुन्छन् । श्रीगणेश नै समस्त ब्रह्माण्डका अधिष्ठाता हुनुहुन्छ ।[13]

चिद्‌गगनचन्द्रिकामा भनिएको छ - 'जसरी पूर्णिमाको चन्द्रमाले क्षीरसागरलाई तरङ्गित बनाउँदा तरङ्गहरूले गगनलाई स्पर्श गर्दछन् त्यसरी नै निस्तरङ्ग चिदाकाशमा प्रणवको नादतत्त्व फैलाएर बिन्दुतत्त्वका लहरलाई पनि फैलाइदिने ओङ्काररूप सर्वसाक्षी, सर्वद्रष्टा गजमुखले हाम्रा पाप एवं तापको शमन गरून् ।'[14] शब्दब्रह्मको मूर्तिरचना ओङ्कारबाट नै हुन्छ । ओङ्कारको प्रथम भाग उदर, मध्य शुण्डाकार भाग दण्ड, अर्धचन्द्र दन्त र बिन्दु मोदक हो । ओङ्कारको चरण अकार हो, विशाल उदर उकार हो र मस्तकको महामण्डल मकार हो । यी तीन अक्षरतत्त्वको समावेशबाट उत्पन्न हुने ओङ्कार ब्रह्माण्डको आदिबीज श्रीगणेशतत्त्व हो ।

## घ) स्वस्तिकरूप श्रीगणेश

व्यवसायीहरूद्वारा बहिखातामा लेखिने स्वस्तिक चिह्न ३ मा रहेका चार दण्ड चार भुजाका प्रतीक हुन् । वास्तवमा स्वस्तिकको अर्थ चतुर्भुज ओङ्कार नै हो । वामावर्त र दक्षिणावर्त स्वस्तिकका चारैतिर गणपतिको बीजमन्त्र गं रहेको हुन्छ । **स्वस्ति न इन्द्रो वृद्धश्रवाः स्वस्ति नः पूषा विश्ववेदा स्वस्ति नस्तार्क्ष्योऽअरिष्टनेमिः स्वस्तिनो बृहस्पतिर्दधातु** सामवेदको यस मन्त्रमा इन्द्र, पूषा, तार्क्ष्य र बृहस्पति यी चार नामको उल्लेख भएको छ र चार पटक स्वस्तिशब्दको प्रयोग पनि । यी चार देवता आकाशका चार ताराका रूपमा स्वस्तिकाकारमा विराजमान छन् । चार पटक स्वस्तिशब्दको प्रयोगबाट स्वस्तिक चिह्नको निर्माण भएको छ। उक्त चार देवतालाई पनि श्रीगणेशरूप नै मानिएको छ । भगवान् गणपति स्वस्तिक चिह्नका रूपमा पनि प्रसिद्ध हुनुहुन्छ । श्रीगणेशको आराधनाबाट सिद्धि, बुद्धि, क्षेम र लाभ प्राप्त हुने कुरा स्वस्तिक चिह्नका चार रेखाहरूले प्रमाणित गर्दछन् । वामावर्त र दक्षिणावर्त स्वस्तिकमा चारैतर्फ गणपतिको बीजमन्त्र गं विराजमान छ। **गम्** यो बीजमन्त्र **गणानान्त्वा गणपतिं हवामहे। कविं कवीनामुपमश्रवस्तम्।। ज्येष्ठराजं ब्रह्मणां ब्रह्मणस्पते आ न शृण्वन्नूतिभिः सीद सादनम् ।।** (ऋ. २/२३/१) यस ब्रह्मणस्पति मन्त्रको प्रथमाक्षर **ग** र अन्तिमाक्षर बिन्दुबाट निष्पन्न भएको छ ।[15]

## ङ) मातृका एवं मन्त्ररूप श्रीगणेश

ओङ्काररूप ब्रह्म नादतत्त्वभित्र रहेका वर्णहरूको व्यञ्जक भएर रहेको छ, जुन वर्णहरूलाई मातृका भनिन्छ। ५१ मातृकाहरूलाई लघुषोढान्यास अन्तर्गत शक्तिसहित श्रीगणेशको रूप मानिएको छ । जस्तै - **ऐं, ह्रीं, श्रीं, ॐ श्रीयुक्ताय विघ्नेशाय नमः शिरसि, ऐं, ह्रीं श्रीं अं ह्रीं युक्ताय विघ्नराजाय नमो मुखवृत्ते** यसरी शब्दब्रह्मात्मक श्रीगणेशरूप ओङ्कारको मातृकाहरूका साथ विस्तार गरिएको छ । यिनै मातृकाहरूको योगबाट तन्त्रग्रन्थहरूमा अनेक स्तोत्र-मन्त्रहरूको आविर्भाव भएको कुरा देखाइएको छ ।[16]

## च) चिन्मय नादरूप श्रीगणेश

गणपतिको वाच्यरूप अचिन्त्य र अप्रमेय ब्रह्म नै हो । योगीहरूले षट्‌चक्रहरूमा नादब्रह्मका रूपमा यस

---

[13] डा. श्यामाकान्त द्विवेदी, कल्याण, पूर्ववत्, पृ. १२० ।

[14] ओंकारं पौर्णमासीशशधर इव यः प्रस्फुरन्निस्तरङ्गं, चिद्व्योम स्फारनादं रुचिविसरलसद् बिन्दुवक्त्रोर्मिमालम् ।
नादः स्पन्दस्वरूपः प्रथयति सकलोङ्कारशुण्डः क्रियाद्गुः, दन्तास्योऽथ हठाद् वः शमयतु दुरितं शक्तिजन्मा गणेशः ॥
- स्वामीजी महाराज, पीताम्बरापीठ, गणेशतत्त्व, पूर्ववत्, पृ. ५३ ।

[15] दीनानाथ शर्मा, 'श्रीगणेशचिन्तन', कल्याण, पूर्ववत्, पृ. ८१ ।

[16] स्वामीजी महाराज, पीताम्बरापीठ, पूर्ववत्, पृ. ५३ ।

रूपको उपासना गर्दछन् । मानवशरीरमा रीढको हाडको मूलमा गुदाभन्दा दुई अङ्गुलमाथि मूलाधारचक्र रहेको हुन्छ । सम्पूर्ण जीवनीशक्तिको आधार पनि यही मूलाधारचक्र हो । यस चक्रको मध्यभागमा चतुष्कोणात्मक आधारबीज रहेको छ । त्यसमाथि भगवान् श्रीगणेश विराजमान हुनुहुन्छ । कुलदेवता श्रीगणेशको स्मरणमात्रले परा शक्ति, कुण्डलिनी प्रबुद्ध भएर आज्ञाचक्रमा प्रविष्ट हुन्छ । त्यसपछिका चक्रहरू पार गर्दै त्यो कुण्डलिनी सहस्रारचक्रमा गई परमशिवसँग एकाकार भएर रहन्छ । षट्चक्रहरूमा व्याप्त चिन्मय नादशक्ति नै महागणपति हुनुहुन्छ ।[१७] वैनायकयोगमा चिदानन्दलहरीको रूपमा षट्चक्रहरूमा महागणपतिको ध्यान गरिन्छ । सर्वप्रथम अनादि, अचिन्त्य, अप्रमेय, अनन्तरूप महागणपतिको चिन्मय स्वरूपबाट वैनायक धर्मको आविर्भाव भयो । श्रीगणपतिले आफ्नो उपाधिरूप उक्त धर्मबाट विष्णु, ब्रह्मा, इन्द्र आदि देवताहरूलाई अलङ्कृत गराउनुभयो । श्रीगणेशको दोस्रो वाचक ओङ्कार सगुण, साकार एवं श्री-समृद्धिको प्रदायक महामन्त्र हो, जसको ध्यानबाट मानिस विद्यानिधि र समृद्धिस्वामी बन्दछ ।[१८]

## छ ) मङ्गलमूर्ति श्रीगणेश

सनातन वैदिक हिन्दुधर्म र बौद्धधर्मका उपास्य देवताहरूमा भगवान् श्रीगणेशको असाधारण महत्त्व रहेको छ । कुनै पनि धार्मिक, सांस्कृतिक र माङ्गलिक कार्य श्रीगणेशपूजनविना प्रारम्भ गरिँदैन । केही मानिसहरू बुद्धिमा स्थित चिदात्मक रूप गणपतिको स्मरण गरेर सत्कर्मको शुभारम्भ गर्दछन्, केही मानिस प्रणव अथवा ओङ्कारको स्मरण गरी सत्कर्ममा प्रवृत्त हुन्छन् । केही गजानन अद्वयमूर्ति श्रीगणेशको स्मरण गर्दछन् र केही योगमय गणपतिको स्मरण गर्दछन्।[१९] यस्तो महत्त्व अरू कुनै पनि देवताको पाइँदैन । ओङ्कार मङ्गलमय र मङ्गलजनक भएकाले ओङ्काररूप गणपतिको प्रथमपूजा स्वाभाविक हुन आउँछ । श्रीगणेशलाई शिवजीका पुत्र मानेर पछिका देवता भनी शङ्का गर्नु हुँदैन, किनकि उहाँ त अनादि र अनन्त हुनुहुन्छ । विष्णुको अवतार कृष्णका रूपमा भएजस्तै उहाँको अवतार शिवपुत्रका रूपमा भएको हो । भक्तहरूले मङ्गल र सौभाग्य प्राप्तिका लागि मङ्गलमूर्ति श्रीगणेशलाई सिन्दूरार्पण गर्दछन् ।

## ज ) सगुण एवं निर्गुण ब्रह्मरूप श्रीगणेश

भगवान् श्रीगणेशको साकार रूप हुन्नथ्यो भने भक्तहरूका लागि कर्म र उपासनाविधि व्यर्थ हुने थिए । श्रीगणेशका लीला र विशेषताहरूको गुणानुवाद गर्ने माध्यम हुने थिएन । श्रीगणेश परमात्माको प्रकृति सुन्दरीसँग विलास गर्ने आधार हुने थिएन । साधकहरूले सगुण ब्रह्मको उपासना गरी भोग प्राप्त गर्न सक्ने थिएनन् । त्यसकारण ओङ्काररूप परमात्मा श्रीगणेशले आफूलाई साकार रूपमा परिणत गर्नुहुन्छ ।[२०] वास्तवमा श्रीगणेश नीरज, विशोक, परमार्थरूप, आदिमध्यान्तहीन, ब्रह्मतत्त्व हुनुहुन्छ ।[२१] श्रीगणेश परमज्ञेय, परमतत्त्व, श्रुतिमूल, सनातन, सर्वसाक्षी, सर्वव्यापी, मातृकाबीज, सर्वमङ्गलनिधान, मङ्गलमूर्ति, अनिर्वाच्य तत्त्व हुनुहुन्छ ।[२२] नीरूप,

---

१७. नारायणाश्रम स्वामी, 'गणपति और महागणपति', कल्याण, पूर्ववत्, पृ. ११७ ।
१८. पूर्ववत् ।
१९. स्वामी करपात्रीजी, पूर्ववत्, पृ. २८ ।
२०. श्रीगणेशपुराण, २/५३/३५ ।
२१. पूर्ववत्, १/५१/७२ ।
२२. पूर्ववत्, १/२०/३९-४० ।

निराकार, त्रिदेवरूप, पञ्चमहाभूतरूप, चराचररूप, त्रिकालज्ञ, इन्द्रियका अधिष्ठाता, कलाकाष्ठादिरूप, धृति कान्ति आदि गुणरूप, साङ्ख्यआदि दर्शनरूप, अष्टादश पुराणरूप, ब्राह्मणादि वर्णरूप, चौसठ्ठी कलारूप, देश-विदेश एवं पुण्यक्षेत्ररूप, स्वर्ग आदि लोकरूप, वन-वनस्पतिरूप, स्वेदज, उद्भिज, अण्डज एवं जरायुजरूप, भाव-भावनारूप, प्रमेय-अप्रमेय एवं ज्ञानगम्य र विश्वप्रपञ्चमा व्याप्त सर्वोपरि तत्त्व नै श्रीगणेशतत्त्व हो ।[२३] श्रीगणेश ओङ्कारवाच्य, श्रुतिनयन, गुह्याशय, परंव्योम, परंधाम, परमात्मा, परमपद, पूर्णात्मा, परानन्द, प्रमाणप्रत्ययातीत, अनन्तनामसम्पन्न, अनन्तरूप, अनन्तानन्तरूप हुनुहुन्छ ।[२४] श्रीगणेश पुराणमा श्रीगणेशलाई लीलामानुषविग्रह, लीलाकर र चराचरगुरु पनि भनिएकोछ ।[२५] जसका रोम-रोममा कोटि-कोटि ब्रह्माण्ड अटाउन सक्छन्, ती श्रीगणेश ब्रह्माण्डनायक हुनुहुन्छ ।[२६]

ब्रह्मरूप श्रीगणेश नै शिव र पार्वतीको तपबाट प्रसन्न भएर पार्वतीपुत्रका रूपमा प्रकट हुनुहुन्छ । ब्रह्मवैवर्तपुराणअनुसार पार्वतीको तपस्याबाट प्रसन्न भई गोलोकनिवासी श्रीकृष्ण परमात्मा गणपतिका रूपमा प्रकट हुनुभएको थियो ।[२७] भगवान् गणपतिको साकारस्वरूप मङ्गलमय छ । उहाँ एकदन्त र चतुर्बाहु हुनुहुन्छ। उहाँले आफ्ना चार हातमा पाश, अङ्कुश, दन्त र वरमुद्रा धारण गर्नुभएको छ । उहाँको ध्वजामा मूषकचिह्न रहेको छ । उहाँ रक्तवर्ण, लम्बोदर, शूर्पकर्ण, रक्तवसन र रक्तचन्दनार्चित हुनुहुन्छ । उहाँ राता पुष्पहरूद्वारा पूजित हुनुहुन्छ । आफ्ना भक्तहरूमाथि कृपा गर्न उहाँले आफूलाई साकाररूपमा अवतरण गराउनुहुन्छ । भक्तकामनापूरक, वरदायक, मङ्गलमूर्ति, ज्योतिर्मय, जगत्का कारण, अच्युत, प्रकृति एवं पुरुषभन्दा पनि पर विराजमान, सृष्टिको आदिमा आविर्भूत श्रीगणेशको तत्त्वविश्लेषण गरी श्रद्धापूर्वक उपासना गर्दा आधिभौतिक, आधिदैविक र आध्यात्मिक कल्याणप्राप्ति हुन्छ । उहाँको उपासनाबाट सबै प्रकारका सन्तापहरूको शमन हुन्छ । उहाँले निराकार एवं साकार दुवै रूपमा रही भक्तजनको कल्याण गर्नुहुन्छ । श्रुति, स्मृति, पुराण, आगम सबैले उहाँको महत्ता बताएका छन् ।[२८] उहाँका सुमुख, एकदन्त, कपिल, गजकर्णक, लम्बोदर, विकट, विघ्ननाशक, विनायक, धूम्रकेतु, गणाध्यक्ष, भालचन्द्र र गजानन यी बाह्र नाम भौतिक र पारमार्थिक अभ्युदय एवं निःश्रेयसका कारक बनेर रहेका छन् ।[२९]

### झ) निधिपति, प्रियपति र गणपतिरूप श्रीगणेश

गणेशपदघटक गणशब्दलाई पुराण आदि आर्षग्रन्थहरूमा प्रतिपादित सात प्रकारका वायुहरूको वाचक मानिएको कुरा ऋग्वेदमा व्यक्त भएको छ ।[३०] सत्त्व, रज र तमोगुणको संघात नै गण हो । ती गुणहरूका पति भएका कारण परमात्मालाई गणपति, गुणपति र गुणेश भनिएको छ । परमात्मा ज्ञान, आनन्द आदि आफ्ना दिव्य स्वगत गुणहरू र सत्त्व, रज एवं तमोगुणका अधिपति हुनुभएकाले 'गुणी' कहलाउनुहुन्छ।[३१] श्रीगणेशको आज्ञाबाट तमोगुण, रजोगुण र सत्त्वगुणका अधिपतिका रूपमा शिव, ब्रह्मा र विष्णु नियुक्त हुनुभयो र गुणहरूका स्वामी

२३. पूर्ववत्, १/२०/३८-४० ।
२४. पूर्ववत्, १/४५- गणेशसहस्रनाम ।
२५. पूर्ववत्, २/६३/४-५ ।
२६. पूर्ववत्, २/५४/५३-५६ ।
२७. ब्रह्मवैवर्तपुराण, गणपतिखण्ड, ८/८२-८४ ।
२८. गणपति अथर्वशीर्ष - ९ ।
२९. श्रीगणेशपुराण, १/९२ ।
३०. नियुसीद गणपते गणेषु - ऋग्वेद १०/११२/९ ।
३१. स विश्वकृद् विश्वविदात्मयोनिः स कालकालो गुणी सर्वविद् यः । प्रधानमन्त्रज्ञपतिर्गुणेशः संसारमोक्षस्थितिबन्धहेतुः ।। - श्वेताश्वतरोपनिषद् ६/१६ ।

गणेश गुणेश कहलाउनुभयो ।[३२]

पृथिवी, जल, तेज, वायु र आकाशरूप प्रपञ्चको समूह गण हो, त्यसका अधिपति हुनुभएकाले ॐकाररूप परमात्मालाई श्रीगणेश भनिन्छ । आदित्य, विश्वावसुदेखि रुद्रसम्मका गणदेवताहरूका स्वामी हुनुभएकाले पार्वतीपुत्रलाई गणाधिप भनिन्छ । प्रतिपक्षीहरूका विभिन्न गणलाई एक्लै परास्त गर्ने महान् सामर्थ्य भएका कारण श्रीगणेशलाई गणञ्जय भनिन्छ । यज्ञका अध्वर्यु, होता र आचार्यहरूको गणका संरक्षक हुनुभएकाले श्रीगणेशलाई गणप पनि भनिन्छ। सत्, चित्, आनन्दरूप तीन गणका अधिपति तत्त्वलाई गणपति भनिन्छ, सत्ता, ज्ञान र सुखका अधिपति हुनाले सच्चिदानन्दघन ब्रह्मतत्त्वलाई गणपति भनिन्छ । जाग्रत्, स्वप्न एवं सुषुप्तितत्त्वका अधिपति ब्रह्मतत्त्वलाई गणपति भनिन्छ । परा, पश्यन्ती र मध्यमाका द्रष्टा, तुर्यावस्थामा वर्तमान तत्त्व नै गणपति तत्त्व हो । पृथिवी, स्वर्ग र अन्तरिक्षगणका अधिपति हुनाले परमतत्त्वलाई गणपति भनिन्छ । ज्योतिष शास्त्रअनुसार देवता, मानव र राक्षसगणका अधिपति हुनाले परमतत्त्वलाई गणपति भनिन्छ । गणशब्द ३६ कोटि परिमित प्रमथगणको बोधक हो । प्रमथ गणका पति हुनाले श्रीगणेशलाई गणपति भनिन्छ । पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, चित्त, मन, बुद्धि र अहङ्कार यी गणका अधिपति हुनाले परमात्मालाई गणपति भनिन्छ । गणशब्द सङ्ख्याविशेषको वाचक पनि मानिएकोछ । गज – २७, रथ– २७, अश्व ८१, पदाति – १३५ गरी २७० को समुदायबाट बनेको गणका स्वामी श्रीगणेश हुनुहुन्छ । गणनामक दैत्यमाथि विजय प्राप्त गर्नुभएका कारण पनि उहाँलाई श्रीगणेश भनिन्छ । वर्ण, अर्थ, रस, मगण आदि छन्दोगणका अधिपति हुनाले परमात्मालाई गणपति भनिन्छ । श्रीगणेशपदमा रहेको ग ज्ञानको वाचक हो, **ण** निर्वाणको वाचक हो भने **ईश** स्वामीलाई बुझाउने अर्थको वाचक हो। सम्पूर्ण श्रीगणेशपदको शब्दार्थ ज्ञान एवं निर्वाणका स्वामी ब्रह्म, परमात्मा, परमतत्त्व र परमेश्वर जे भने पनि श्रीगणेश हुनुहुन्छ भन्ने नै हो ।[३३] आधारप्राण (आधारशक्ति) श्रीगणेशका आधारमा कूर्मप्राण, शेषप्राण, गन्धप्राण, रसप्राण, रूपप्राण, स्पर्शप्राण, शब्दप्राण आदि अनेक आधेय प्राण विकसित हुन्छन् । अतः अनेक प्राणगणका अधिपति भएकाले ओङ्कारतत्त्वलाई श्रीगणेश भनिन्छ ।[३४]

वेदान्तअनुसार चराचरको अधिपति अद्वैत ब्रह्मतत्त्व हो । अद्वैतमा एकोऽहं **बहु स्याम्**को द्वैतभावना उदय भएपछि सृष्टिमा अनेकरूपता आउँदा समष्टि र व्यष्टि स्वरूप तयार भए । समूह र समाजको निर्माण भयो । समाजका समन्वित रूप अनेक गणहरू तयार भए । ती सबै गणलाई समन्वित र अनुशासित तुल्याउन एउटा गणपतिको आवश्यकता भयो । जुन व्यक्तिमा एकता, अनुशासन, विघ्ननिवारण, मार्गदर्शन, मङ्गलप्रदान र वरप्रदानका शक्ति र सामर्थ्य छन्, जुन व्यक्तिमा गणहरूको नेतृत्व गर्ने विशिष्ट क्षमता विकसित छ, जो सबैको प्यारो छ र जोसँग अकूत धनराशि छ, त्योमात्र गणपति हुन सुहाउँछ भन्ने विचार गरी पार्वतीनन्दन श्रीगणेश सम्पूर्ण गुणहरूले सम्पन्न हुनुभएकाले उहाँलाई देवताहरूले गणपतिको पदमा अभिषिक्त गरेका हुन् । लोकव्यवहारमा पनि असल नेतामा उक्त गुणहरूको विकास आवश्यक हुन्छ । यसैले वैदिक मन्त्रमा – **गणानां त्वा गणपतिं हवामहे प्रियाणां त्वा प्रियपतिं हवामहे निधीनां त्वा निधिपतिं हवामहे वसो मम । आहमजानि गर्भधमा त्वमजासि गर्भधम् ।।**[३५] यस मन्त्रमा प्रयुक्त **गणानां पतिः – गणपतिः, प्रियाणां पतिः–**

---

३२. *श्रीगणेशपुराण, २/४०/९ ।*
३३. *करपात्रीजी, जनार्दन मिश्र, बलदेव उपाध्याय, प्रभुदत्त ब्रह्मचारी आदि विद्वान्हरूका कल्याण, गणेश अङ्क १ मा प्रकाशित निबन्धहरूबाट ।*
३४. *रङ्गाचार्य, विविध गणेश, कल्याण, गणेश अङ्क, पूर्ववत्, पृ. ५० ।*
३५. *शुक्लयजुर्वेद २३/१९ ।*

**प्रियपतिः** र **निधीनां पतिः** – **निधिपतिः** पदहरूले श्रीगणेश गणपति, प्रियपति र निधिपतिका रूपमा सर्वदा वन्दित हुनुहुन्छ भनिएको छ ।

### ञ) विशुद्ध मनस्तत्त्वरूप श्रीगणेश

आध्यात्मिक व्याख्याअनुसार श्रीगणेशतत्त्व भनेको द्वेष आदि रहित शुद्ध मन हो । मनलाई इन्द्रियको स्वामी मानिन्छ। मनरूप श्रीगणेशको उपासनाको महत्त्व स्वीकार गर्दै वेदमा भनिएको छ – **तन्मे मनः शिवसङ्कल्पमस्तु** अर्थात् 'मेरो मन कल्याणकारी चिन्तनद्वारा अनुप्राणित बनोस् ।' ब्रह्मविद्यारूपिणी माता पार्वती र ब्रह्मरूप शिवजीको प्राप्तिका लागि मनरूप श्रीगणेश शिवसङ्कल्पले सम्पन्न हुनु नितान्त आवश्यक छ। श्रीगणेशको जन्म चतुर्थी तिथिमा भएको तथ्य शास्त्रहरूमा वर्णन गरिएको छ । जाग्रत, स्वप्न, सुषुप्ति र तुरीय अवस्थाहरूमध्ये चौथो तुरीय अवस्था ज्ञानमय छ । बुद्धि एवं ज्ञान प्रदान गर्ने मन एवं बुद्धिका स्वामी श्रीगणपतिको चतुर्थी तिथिमा अवतरण हुनु स्वाभाविक देखिन्छ ।[३६]

### ट) सोपाधिक र निरुपाधिक तत्त्वमसिसंवेद्य श्रीगणेश

**तत्त्वमसि** आदि वाक्यले पनि गणपतिरूप ब्रह्मलाई बुझाउँछन् । नर र गजरूपको सामञ्जस्य गणपतिस्वरूपमा भएको छ। त्वम्‌पदार्थ नररूप हो भने **तत्**पदार्थ गजरूप हो । यी दुवैको समन्वय गणपतिरूप **असि** पदार्थले गर्दछ। शास्त्रहरूमा **नर**पदलाई प्रणवात्मक सोपाधिक ब्रह्म मानिएको छ – **नराज्जातानि तत्त्वानि नाराणीति विदुर्बुधाः।** गजशब्दको व्याख्या गर्दै शास्त्रहरूमा भनिएको छ – **समाधिना योगिनो यत्र गच्छन्ति स गः, यस्मात् बिम्बप्रतिबिम्बतया प्रणवात्मकं जगज्जायते स जः** अर्थात् समाधिद्वारा योगीहरू जहाँ जान्छन् त्यो **ग**तत्त्व हो र जसबाट बिम्ब–प्रतिबिम्बभावले प्रणवात्मक जगत् पैदा हुन्छ त्यो **ज**तत्त्व हो । सोपाधिक त्वंपदार्थबोध्य नररूप श्रीगणेशको पाउदेखि घाँटीसम्मको देह मानिएको छ । निरुपाधिक सर्वोत्तम तत्पदार्थमय गजरूप श्रीगणेशको घाँटीदेखि लिएर मस्तकपर्यन्तको देह मानिएको छ । यो गजतत्त्व निरुपाधिक हुनाले सर्वोत्तम छ। सम्पूर्ण पाउदेखि मस्तकसम्मको श्रीगणेशको देहलाई बुझाउने **असि**पदार्थ अखण्डैकरसमय छ।[३७]

### ठ) सर्वविघ्नविनाशक श्रीगणेश

**गणानां त्वा** इत्यादि मन्त्रद्वारा प्रतिपाद्य गणपतितत्त्वलाई सर्वविघ्नविनाशक मानिन्छ ।[३८] श्रीगणेशको आदिपूजन गर्नाले विघ्नविनाश हुन्छ । पुराणसाहित्यमा पनि यस तथ्यलाई आत्मसात् गरिएको छ । १८ पुराणहरूमा प्रथम ब्रह्मपुराण र अन्तिम ब्रह्माण्डपुराणमा पनि श्रीगणेशको वर्णन गरिएको छ । अन्य पुराणहरूमा निर्गुण एवं बुद्धितत्त्वभन्दा पर रहनु भएका श्रीगणेशतत्त्वको वर्णन एवं विश्लेषण गरिएको छ । उपपुराणहरूमा प्रथम श्रीगणेशपुराण र अन्तिम मुद्गलपुराणमा पनि श्रीगणेशतत्त्वको वर्णन गरिएको छ । यस प्रकार पुराणको प्रारम्भ र अन्तमा श्रीगणेशको स्मरण गर्ने परम्परा देखिनाले 'सम्पूर्ण कार्यहरूमा श्रीगणेशको स्मरण मङ्गलदायक हुन्छ' भन्ने भनाइ यथार्थ प्रमाणित हुन्छ । विभिन्न पुराणहरूमा वर्णन गरिएका ब्रह्मा, विष्णु, शिव, सूर्य, देवी आदि

---

३६ प. गोविन्ददास, 'श्रीगणपतिका स्वरूप एवं उसका रहस्य', कल्याण, पूर्ववत्, पृ. १०३ ।

३७ प. मध्वाचार्य शास्त्री, 'श्रीगणेशतत्त्व', कल्याण, पूर्ववत्, पृ. ७७ ।

३८ विघ्नविनाशिने शिवसुताय वरदमूर्तये नमः, – गणेश अथर्वशीर्ष – १० ।

देवताहरू पनि श्रीगणेशकै अंश हुनाले तिनको स्मरण पनि श्रीगणेशकै स्मरण हो ।[३९]

### ड) प्रतिष्ठाप्राणरूप श्रीगणेश

योगशास्त्रमा प्रतिष्ठाप्राणरूप गणपतिको निवास पदार्थहरूको केन्द्रमा रहन्छ भनिएको छ । मनुष्यहरूमा देहमध्यवर्ती, गुदाभन्दा दुई अङ्गुल माथि र शिश्नभागभन्दा दुई अङ्गुल तल श्रीगणेशको आवास मानिएको छ। पशुहरूको देहमध्य-हृदयमा श्रीगणेशको आवास छ । पक्षीहरूको देहमध्य-उदरको मध्यभागमा श्रीगणेशको आवास छ । वृक्षहरूको फेंदमा श्रीगणेशको आवास छ । पृथिवीको केन्द्रमा शेष, कूर्म आदि प्राणतत्त्वका रूपमा श्रीगणेश रहनुहुन्छ ।[४०]

### ढ) वैदिकवाङ्मयका आराध्य देवता श्रीगणेश

गणपतिलाई बुद्धिका अधिष्ठाता मानिएको छ । यसै कारण ब्रह्मणस्पतिमन्त्रमा गणपतिलाई कवि भनिएको छ । कविको अर्थ क्रान्तदर्शी र बुद्धिमान् भन्ने हुन्छ । बुद्धिका अधिष्ठाता श्री गणपति ब्रह्मणस्पति हुनुहुन्छ अर्थात् वेदका अधिपति हुनुहुन्छ । यसैले वैदिकवाङ्मयका साथै श्रीगणेशसहस्रनाममा पनि श्रीगणेशलाई उक्त नामहरूबाट सम्बोधन गरिएको पाइन्छ ।[४१] वेदमा श्रीगणेशलाई गणपतिका साथै ब्रह्मणस्पति एवं बृहस्पति पनि भनिन्छ । यसबाट देवगुरु बृहस्पति पनि श्रीगणेशका स्वरूप हुनुहुन्छ भन्ने प्रमाणित हुन्छ ।[४२]

### ण) वाङ्मयमूर्ति श्रीगणेश

वेद श्रीगणेशका मूर्ति हुन् । वेदको अक्षर श्रीगणेशको निर्दोष शरीर हो । स्मृतिहरू उहाँका अङ्ग-प्रत्यङ्ग हुन् । अर्थसौन्दर्य, लावण्य एवं शोभा हो । अठार पुराण मणिरत्न हुन् । प्रमेय रत्न हुन् । पदरचना कुन्दन हो । उत्तम पदहरूको लालित्य उहाँको रङ्गीन शरीर हो । साहित्यशास्त्र हाव, भाव र कटाक्ष हुन्। काव्य-नाटक क्षुद्रघण्टिका हुन् । तिनको अर्थ घण्टिकाको ध्वनि हो । व्यास आदि ऋषिहरूको बुद्धि मेखला हो । षड्दर्शन ६ भुजा हुन् । मनन, चिन्तन र सिद्धान्त शस्त्र हुन् । तर्कशास्त्र परशु हो । न्यायशास्त्र अङ्कुश हो । वेदान्तशास्त्र मोदक हो । भाँचिएको दाँत खण्डित गरिएको नास्तिक मत हो । वरदायक करकमल सांख्यहरूको सत्कार्यवाद हो । धर्मप्रतिष्ठा अभयकर हो। निर्मल विवेक सूँढ हो । उत्तम संवाद सेतो वर्णको दन्त हो । पूर्वमीमांसा र उत्तरमीमांसा दुई कान हुन् । तत्त्वार्थप्रकाशन प्रवाल हो । ज्ञानामृत मद हो । ज्ञानवान् मुनिहरू भ्रमर हुन्। द्वैत र अद्वैत कुम्भस्थल हुन् । ती दुवैको सामञ्जस्य मकरन्द हो । वेद र उपनिषद् मस्तकमा रहेका मुकुटपुष्प हुन् ।[४३]

### त) शिक्षाप्रद स्वरूपका स्वामी श्रीगणेश

श्रीगणपतिको वामन स्वरूपले मानिसलाई समाजसेवा, सरलता, लघुता एवं नम्रताजस्ता सद्गुणहरूको धारण गर्न शिक्षा प्रदान गर्दछ । त्यसले मानिसहरूलाई कहिल्यै पनि मनमा अहङ्कारको अङ्कुर उत्पन्न नगर्न

---

३९. स्वामी करपात्रीजी महाराज, पूर्ववत्, पृ. २८ ।
४०. रङ्गाचार्य, 'त्रिविध गणेश', कल्याण, पूर्ववत्, पृ. ५१ ।
४१. कविः कवीनामुपमो ब्रह्मण्यो ब्रह्मणस्पतिः । ज्येष्ठराजो निधिपतिर्निधिः प्रियपतिः प्रियः ।। गणेशपुराण, पूर्वार्ध, अध्याय ४६ ।
४२. गोविन्ददास, गणपतिका स्वरूप एवं रहस्य, कल्याण, पूर्ववत्, पृ. १०६ ।
४३. प्रो. जनार्दन मिश्र, 'श्री भगवान् गणपति एक दार्शनिक विश्लेषण', कल्याण, पूर्ववत्, पृ. १०५ ।

प्रेरित गर्दछ । उक्त सद्गुणहरूले सम्पन्न मानिस नै संसारमा निर्विघ्नतापूर्वक लक्ष्यप्राप्ति गर्ने काममा सफल हुन्छ ।[८४] गणपतिको मस्तक हात्तीको हुनुको अर्थ श्रीगणपति अत्यन्त उत्तम बुद्धिले सम्पन्न हुनुभएको प्रमाण हो। वास्तवमा मस्तक नै बुद्धिको प्रधान केन्द्र हो । हात्तीमा बुद्धि, धैर्य र गाम्भीर्यको प्रधानता हुन्छ । हात्तीले अरू पशुले झैं खाद्यपदार्थलाई पुच्छर हल्लाउँदै खाँदैन । त्यसले त धीर भई गम्भीरतापूर्वक निरीक्षण गरेर अभीष्ट पदार्थ ग्रहण गर्दछ। हात्तीका ठूला-ठूला कानले धेरै सुन्नु र गम्भीरतापूर्वक मनन गरेर काम गर्नु भन्ने अर्थबोध गराउँछन् ।[८५]

श्रीगणेशको मुखमण्डल हात्तीको आकारको भएकाले हात्तीले मन पराउने दूर्वाङ्कुर उहाँलाई मन पर्नु स्वाभाविक हो । दूबो नम्र र सरल हुने गर्दछ । दूर्वाङ्कुर समर्पण गरी भक्तले भगवान्सँग नम्रता र सरलताको कामना गर्नुपर्दछ ।[८६] दूर्वाको स्मरण गर्नासाथ तीन प्रकारका पाप विलीन हुन्छन् र भगवान् गजाननको पनि स्मरण हुन्छ ।[८७] दूर्वाङ्कुरविना गरिएको श्रीगणेशपूजा निष्फल हुन्छ । त्यसकारण श्रीगणेशका भक्तहरूले प्रातःकालमा २१ दूर्वाङ्कुर अथवा एक दूर्वाङ्कुर भक्तिपूर्वक श्रीगणेशलाई अर्पित गरी पूजन गर्नुपर्दछ । त्यस्तो पूजनबाट प्राप्त हुने पुण्यफलको तुलना यज्ञबाट प्राप्त हुने पुण्यफल, दानबाट प्राप्त हुने पुण्यफल, अनेकौं व्रतबाट प्राप्त हुने पुण्यफल, उग्र तपस्याबाट प्राप्त हुने पुण्यफल र कोटि कोटि जन्मका नियमको पालनबाट प्राप्त हुने पुण्यफलले पनि गर्न सक्दैनन् ।[८८]

### थ) २१ सङ्ख्या र सङ्ख्येयद्वारा आराध्य श्रीगणेश

श्रीगणेशलाई २१ सङ्ख्या अत्यन्त प्रिय छ । शास्त्रहरूमा श्रीगणेशलाई अर्पण गरिने वस्तुको सङ्ख्या २१ बताइएको छ । यहाँ दूर्वा, पुष्प, पत्र, वस्तु, व्रत आदि २१ सङ्ख्यामा आधारित महत्त्वपूर्ण विषयहरूको चर्चा गरिँदैछ। श्रीगणेशपुराणअन्तर्गत श्रीगणेशसहस्रनाममा दूर्वाङ्कुर अर्पण गर्दा प्रयोग गर्नुपर्ने नाममन्त्रका रूपमा २१ विशिष्ट नामहरूको परिगणना गरिएको छ– १. गणञ्जय, २. गणपति, ३. हेरम्ब, ४. धरणीधर, ५. महागणपति, ६. बुद्धिप्रिय, ७. क्षिप्रप्रसादन, ८. अमोघसिद्धि, ९. अमित, १०. मन्त्र, ११. चिन्तामणि, १२. निधि १३. सुमङ्गल, १४. बीज, १५. आशापूरक, १६. वरद, १७. कवि, १८. काश्यप, १९. नन्दन, २०. वाचासिद्ध र २१. ढुण्डिविनायक ।[८९]

सङ्कष्टचतुर्थीव्रतविधिमा पनि दूर्वार्पणको सन्दर्भमा छुट्टै २१ महत्त्वपूर्ण नामहरूको उल्लेख गरिएको छ– १. गणाधिप, २. उमापुत्र, ३. अघनाशन, ४. एकदन्त, ५. इभवक्त्र, ६. मूषकवाहन, ७. विनायक, ८. ईशपुत्र, ९. सर्वसिद्धिप्रद, १०. लम्बोदर, ११. वक्रतुण्ड, १२. मोदकप्रिय, १३. विघ्नविध्वंसकर्ता, १४. विश्ववन्द्य, १५. अमरेश, १६. गजकर्ण, १७. नागयज्ञोपवीती, १८. भालचन्द्र, १९. परशुधारी, २०. विघ्नाधिप र २१. विद्याप्रद ।[९०]

श्रीगणेशलाई पुष्पार्पण गर्ने सन्दर्भमा विभिन्न पूजापद्धतिहरूमा विशिष्ट २१ नामहरूको उल्लेख गरिएको

---

८४ पं. गोविन्ददास, 'श्रीगणपतिका स्वरूप एवं उसका रहस्य', कल्याण, पूर्ववत्, पृ. १०६ ।

८५ पूर्ववत् ।

८६ पूर्ववत् ।

८७ दूर्वेति स्मरणात् पाप त्रिविधं विलयं व्रजेत् । तत्स्मृतौ स्मर्यते यस्मात् सोऽपि देवो गजाननः ॥ – श्रीगणेशपुराण, १/६७/४१ ।

८८ विना दूर्वाङ्कुरैः पूजाफलं केनापि नाप्यते । तस्मादुषसि मद्भक्तैरेका वाप्येकविंशतिः ॥
भक्त्या समर्पिता दूर्वा ददाति यत् फलं महत् । न तत् क्रतुशतैर्दानैर्व्रतानुष्ठानसञ्चयैः ॥
तपोभिरुग्रैर्नियमैः कोटिजन्मार्जितैरपि । प्राप्यते मुनयो देवा यद् दूर्वाभिरवाप्यते ॥ – पूर्ववत्, १/६४/२१-२३ ।

८९ पूर्ववत्, १/४६/२०४-२०७ ।

९० पूर्ववत्, १/५१/३७-४० ।

पाइन्छ- १. सुमुख, २. गणाधिप, ३. कपिल, ४. गजकर्ण, ५. लम्बोदर, ६. विकट, ७. विघ्ननाशक, ८. विनायक, ९. धूम्रकेतु, १०. गणाध्यक्ष, ११. भालचन्द्र, १२. पत्नीहित, १३. उमापुत्र, १४. गजानन, १५. ईशपुत्र, १६. सर्वसिद्धिप्रद, १७. मूषकवाहन, १८. कुमारगुरु, १९. दीर्घशुण्ड, २०. अगस्तिपुत्र र २१. सङ्कटनाशन ।[५१]

श्रीगणेशलाई विभिन्न थरिका पत्रहरूको अर्पण गर्ने क्रममा २१ विशिष्ट नामहरूको उल्लेख गरिएको पाइन्छ - १. सुमुख, २. गणाधिप, ३. उमापुत्र, ४. गजानन, ५. लम्बोदर, ६. हरसूनु, ७. गजकर्ण, ८. वक्रतुण्ड, ९. गुहाग्रज, १०. एकदन्त, ११. विकट, १२. कपिल, १३. गजदन्त, १४. विघ्नराज, १५. वटु, १६. सुराग्रज, १७. भालचन्द्र, १८. हेरम्ब, १९. चतुर्भुज, २०. विनायक र २१. सर्वेश्वर ।[५२]

श्रीगणेशपुराणका विभिन्न सन्दर्भमा श्रीगणेशलाई २१ दूर्वा, २१ थरि पत्र, २१ थरि पुष्प, २१ मोदक, २१ थरि नैवेद्य, २१ वायन, २१ दक्षिण, २१ प्रदक्षिणा, २१ अर्घ्य, २१ थरि अन्न, २१ थरि दान, २१ ब्राह्मणको पूजा र २१ नामहरूको प्रयोग गरी श्रीगणेशको आराधना गर्नुपर्ने विधिको निर्देश गरिएको छ । पुराणहरूमा श्रीगणेशको आराधना गर्दा २१ दिवसीय विशिष्ट व्रतको पनि उल्लेख गरिएको पाइन्छ । शास्त्रहरूमा श्रावणशुक्ल चतुर्थीदेखि भाद्रकृष्ण दशमीसम्म गरिने २१ दिवसीय श्रीगणेशव्रतको अमोघ महिमा बताइएको छ । भविष्योत्तरपुराणमा श्रीगणेशको पूजासन्दर्भमा २१ अङ्कलाई महत्त्व दिएर प्रस्तुत गरिएको छ । यसबाट एक्काइस अङ्कको पवित्रता बोधका साथै श्रीगणेशलाई २१ को सङ्ख्या निकै प्रिय रहेछ भन्ने तथ्य पनि अवगत हुन्छ ।

ॐकाररूप परमात्मा श्रीगणेश २१ अङ्कद्वारा बोध्य हुनुहुन्छ भन्ने श्रीगणेशका भक्तहरूले श्रद्धावश उहाँलाई २१ अङ्कका देवता पनि भन्दछन् । ऐतरेय श्रुतिद्वारा स्वीकृत २१ तत्त्वहरूमध्ये अन्तिम अर्थात् २१ सौं तत्त्व आत्मा हो ।[५३] श्रीगणेशको यस रहस्यलाई उहाँको २१ अङ्गुलिविशिष्ट स्वरूपले पनि सङ्केत गर्दछ । द्विभुज श्रीगणेशका पाउका दश औंला, हातका दश औंला र सूँढसमेत गरी २१ औंला भएको तथ्य शास्त्रहरूमा प्रकाशित गरिएको छ ।[५४]

श्रीगणेश र २१ अङ्कको अन्तरङ्गसम्बन्ध रहेको विषयलाई श्रीगणेशका २१ विशिष्ट क्षेत्रहरूले पनि प्रमाणित गर्दछन्- १. भूस्वानन्द क्षेत्र (महाराष्ट्र), २. ओङ्कारगणपति क्षेत्र (प्रयाग), ३. ढुण्ढिराज क्षेत्र (काशी), ४. चिन्तामणि क्षेत्र (कलम्बपुर), ५. शमीविघ्नेश क्षेत्र (मध्यप्रदेश), ६. बल्लालविनायक क्षेत्र (महाराष्ट्र), ७. मङ्गलमूर्ति क्षेत्र (नर्मदातट), ८. भालचन्द्र श्रीगणेश क्षेत्र (गोदावरीतट), ९. विज्ञानगणेश क्षेत्र (गोदावरीतट), १०. सृष्टिविघ्नविनाशक क्षेत्र (पूना), ११. सिद्धाश्रम क्षेत्र (महाराष्ट्र), १२. मणिपूर क्षेत्र (राजनगाउँ), १३. विजय क्षेत्र (मद्रास), १४. कश्यपाश्रम क्षेत्र (अज्ञात), १५. त्रिपुरवन्दित क्षेत्र (अज्ञात), १६. लेह्याद्रि क्षेत्र (पूना), १७. लक्ष्यविनायक क्षेत्र (औरङ्गावाद), १८. प्रबाल क्षेत्र (महाराष्ट्र), १९. अमलाश्रम क्षेत्र (कर्नाटक), २०. राजसदन क्षेत्र (जालना), २१. श्वेतविघ्नेश क्षेत्र (दक्षिणभारत) ।[५५]

पौरस्त्य दर्शनशास्त्रमा २१ सांसारिक दुःखहरूको निरूपण गरिएको छ । मनसमेत ६ ज्ञानेन्द्रिय, प्रत्येक ज्ञानेन्द्रियका ग्राह्य ६ विषय र प्रत्येक ज्ञानेन्द्रियसँग सम्बद्ध भिन्न-भिन्न प्रकृतिका ६ प्रकारका बुद्धि गरी १८ दुःख

---

५१ दधिराम मरासिनी, कर्मकाण्डभास्कर, म.सं.वि.वि., २०५७, पृ. ३८८ ।

५२ पूर्ववत् ।

५३ एकविंशः पुमानात्मा चेत्याहुर्तैत्तरेयिणः - श्रीगणेशसहस्रनामको भास्कररायकृत भाष्य ।

५४ एकविंशत्यङ्गुलिपल्लवः - गणेशपुराण, पूर्वार्ध, अध्याय ४६ ।

५५ हेरम्बराज बालशास्त्री, 'इक्कीस प्रधान गणपतिक्षेत्र', कल्याण, पूर्ववत्, पृ. ४२४-४२५ ।

मानिएका छन् भने शरीर, सुखतत्त्व र दुःखतत्त्वलाई पनि दुःखरूप नै मानिएको छ । उक्त १८ प्रकारका दुःख र यी तीन प्रकारका दुःख गरी जम्मा २१ प्रकारका दुःख हुन आउँछन्।[७६] यी दुःखहरूबाट निवृत्त भई मोक्षरूप परमानन्दमा रमाउने उद्देश्यले उपासकहरू आफ्ना आराध्य २१ अङ्कका देवता श्रीगणेशलाई २१ नामपाठ, २१ क्षेत्रभ्रमण, २१ दिवसीय व्रत, २१ दूर्वाङ्कुर, २१ शमीपत्र, २१ मन्दारपुष्प, २१ विभिन्न पत्र, २१ विभिन्न पुष्प आदि समर्पणपूर्वक गरिएको आराधनाद्वारा २१ सौं तत्त्वका रूपमा रहेका आत्मरूप मानेर प्रसन्न तुल्याउँछन् ।

एक्काइस अङ्कद्वारा बोध्य देवता श्रीगणेशलाई प्रसन्न तुल्याई २१ प्रकारका दुःखहरूको ध्वंस गर्न र मोक्षरूप परमानन्द प्राप्त गर्न २१ वस्तुमात्र नभई २१ वस्तुयुग्म समर्पण गर्ने विधान पनि रहेको छ । विशेषतः युग्मार्पणमा दूर्वालाई ग्राह्यता दिइएको छ । शास्त्रहरूमा दूर्वाङ्कुर र जीवतत्त्वको धेरै विषयमा समानता देखाइएको छ । दूबोका जराहरू मर्दै गएपछि अर्कोतिरबाट पलाउँदै जान्छन् । फलस्वरूप दूबो जहिले पनि हराभरा देखिन्छ। त्यसैगरी संसारमा अनेक जीवहरू मर्दै गए पनि अनेक जीवहरूको नित्य उत्पत्ति भइरहनाले संसार सदा हराभरा नै रहेको हुन्छ । यस अर्थमा जीव र दूर्वाङ्कुरको स्वाभाविकरूपमा गुणसाम्य देखिन्छ । २१ प्रकारका सुख र दुःखका युग्मको प्रतीकका रूपमा २१ दूर्वायुग्म अर्पण गरी सुख-दुःखको द्वन्द्वबाट मुक्त भई मोक्षरूप परमानन्द प्राप्त गर्नु नै आराधनाको परम उद्देश्य हो ।[७७]

गजमुख देवता श्रीगणेश दूर्वाकार जीवहरूका नायक हुनुहुन्छ । गजानन श्रीगणेशका लागि जीवहरू प्रिय छन् र जीवहरूका प्रतीक दूर्वाङ्कुर पनि । वास्तवमा हात्तीले दूबो निकै मन पराउने हुँदा हात्तीको अनुहार लिनुभएका श्रीगणेशलाई दूबो साह्रै प्रिय लाग्दछ । दुःख र भयले परिपूर्ण २१ प्रकारका मुख्य नरकहरूबाट मुक्ति पाउन पनि साधकहरूले २१-२१ को सङ्ख्यामा दूर्वाङ्कुर, शमीपत्र, मन्दारपत्र, मोदक, जातिपुष्प आदि समर्पण गर्ने विधान रहेको छ ।

शास्त्रहरूमा २१ प्रमुख नरकहरूको निरूपण गरिएको छ – १. तामिस्र, २. अन्धतामिस्र, ३. रौरव, ४. महारौरव, ५. कुम्भीपाक, ६. कालसूत्र, ७. असिपत्रवन, ८. सूकरमुख, ९. अन्धकूप, १०. कृमिभोजन, ११. सन्दंश, १२. तप्तसूर्मि, १३. वज्रकण्टक, १४. शाल्मलि, १५. वैतरणी, १६. पूयोद, १७. प्राणरोध, १८. विशसन, १९. लालाभक्ष, २०. सारमेयादन र २१. अवीचिरयपान ।[७८] उक्त २१ प्रकारका नरकहरूको कष्ट निवारणका लागि २१ अङ्कका देवता श्रीगणेशलाई २१ दूर्वा, २१ पुष्प आदि विभिन्न वस्तु अर्पण गरी आराधना गर्नुपर्दछ ।

एक्काईस दूर्वाङ्कुर आदि श्रीगणेशका प्रिय पदार्थ समर्पण गरी २१ अङ्कका देवता श्रीगणेशको आराधनाद्वारा आफ्ना कुलका २१ पुस्ताको उद्धार गर्नु प्रत्येक आस्तिक मानिसको कर्तव्य हो । १. प्रपितामह, २. पितामह, ३. पिता, ४. आफू, ५. पुत्र, ६. पौत्र र ७. प्रपौत्र गरी ७ पुस्ता हुन्छन् । प्रपितामहभन्दा माथिका ७ पुस्ता र प्रपौत्रभन्दा तलका ७ पुस्ता गरी जम्मा २१ पुस्ता हुन्छ । २१ पुस्ताको कल्याणका लागि २१ दूर्वा आदि अर्पण गरेर श्रीगणेशको आराधना गर्ने परम्परा रहिआएको छ ।

### द) रहस्यबोधक र शिक्षाप्रद नाममन्त्रका स्वामी श्रीगणेश

भगवान् श्रीगणेशको नाम लम्बोदर प्रसिद्ध छ । उहाँको उदरभित्र समस्त विश्वप्रपञ्च अटाएको छ । उहाँ

७६ गौतम, न्यायदर्शनम्, ४/१, दुःखपरीक्षाप्रकरणम्, चौखम्बा संस्कृत सीरीज, वाराणसी, सन् १९७० ।

७७ रघुनिराम शास्त्री, 'अर्ला कालीविनायकौ', कल्याण, पूर्ववत्, पृ. १५२ ।

७८ श्रीमद्भागवत ५।२६।७ ।

भने कसैका उदरमा अटाउनु हुन्न । भनिएको छ - **तस्योदरात् समुत्पन्नं नाना विश्वं न संशयः** ।[५९] मानिसले आफ्नो पेटमा धेरै कुरा राख्नु पर्दछ, बाहिर प्रकाशित गर्नु हुँदैन र उचित समयमा मात्र उपयोग गर्नुपर्दछ भन्ने शिक्षा लम्बोदर श्रीगणेशको स्वरूपबाट प्राप्त हुन्छ ।[६०] **वक्रतुण्ड** श्रीगणेशको नाम हो । वक्रम् - आत्मरूपम्, तुण्डम् - मुखम् यस्य सः, यस व्युत्पत्तिअनुसार श्रीगणेशको स्वरूप वक्र अर्थात् मन एवं वचनद्वारा अगम्य छ भन्ने अर्थबोध हुन्छ । शास्त्रहरूमा मायानाशक श्रीगणेशलाई पनि वक्रतुण्ड भनिएको छ ।[६१] श्रीगणेशलाई **चतुर्भुज** पनि भनिन्छ । उहाँले देवता, मनुष्य, असुर एवं नाग यी चारैलाई स्थापित गर्नुहुन्छ । यसै गरी ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेदका पनि उहाँ संस्थापक हुनुहुन्छ । फेरि उहाँले भक्तहरूमाथि कृपा गर्न आफ्ना चार भुजाहरूमा पाश, अङ्कुश, वरमुद्रा र अभयमुद्रा धारण गर्नुहुन्छ । यी सबै कारणबाट पनि उहाँलाई चतुर्भुज भनिन्छ ।[६२]

भगवान् गणपतिको वाहन **मूषक** सर्वान्तर्यामी ईश्वरका रूपमा सबै प्राणीहरूका हृदयरूपी विलमा निवास गर्दछ। त्यो सबै जन्तुहरूका भोगहरूको भोक्ता हो । जसरी मूसाले सबै प्राणीहरूका भोग चोरेर पनि पाप र पुण्य प्राप्त गर्दैन त्यसरी नै मायाद्वारा लुकनुभएका मूषकरूप ईश्वर सबै प्राणीका हृदयमा रहनुभएको छ । घट-घटवासी ईश्वर श्रीगणेशका वाहन हुनुभएको हुँदा परब्रह्मरूप श्रीगणेशलाई **मूषकवाहन** भनिन्छ ।[६३] मूषकदमनको अर्थ दुष्ट र दुर्वृत्तिहरूको दमन हो । भगवान् श्रीगणेशको नाम **गजमुख** पनि हो । यस नाममा पनि रहस्य लुकेको छ । गजको अर्थ आठ हुन्छ । जसले आठै दिशातर्फ आफ्नो मुख लगाइरहन्छन् ती गजमुख हुन् । श्रीगणेश सर्वज्ञ हुनुभएकाले सर्वत्र दृष्टिपात गर्नुहुन्छ । जो श्रीगणेशझैं मूषकवाहन र गजमुख बन्न सक्छ त्यो सिद्धि र बुद्धिको स्वामी हुनसक्दछ ।[६४] पार्थिव घनप्राण गणपतिको वाहन मुसाको अर्थ भूपिण्ड हो ।[६५] मूसाको स्वभाव वस्तुविच्छेदक हुन्छ। संसारका कुतर्की मानिसहरूसँग मूसोलाई दाँज्न सकिन्छ । भगवान्ले मूसोलाई वाहन बनाएर कुतर्कलाई दबाउनुपर्दछ भन्ने शिक्षा दिनुभएको छ ।[६६] श्रीगणेशको वाहन मूसो विवेचन, विभाजन, भेदन, विस्तारण र विश्लेषणबुद्धिको सूचक हो। श्रीगणेशको शिरमा रहेको हात्ती संयोजन, समाहरण, समन्वयन, संश्लेषणबुद्धिको सूचक हो । ज्ञान र ज्ञानमूलक व्यवहारका लागि विभाजन एवं संयोजन गर्ने दुवै प्रकारको बुद्धि आवश्यक हुन्छ । त्यसैले गजवदन भगवान् श्रीगणेश मूषकवाहन हुनुहुन्छ ।[६७] **आखुस्ते पशुः** भनाइअनुसार मूसो लौकिक बुद्धिद्वारा सम्पन्न मोहावृत जीवको परिचायक हो । मूसाको चञ्चलता र भोगलोलुपता प्रसिद्ध छ । त्यो रातमा बाहिर आउँछ । रातलाई मोह र अज्ञानसँग तुलना गरिन्छ ।[६८]श्रीगणेशको आधारस्थल मूलाधार चक्र कामशक्तिको केन्द्र पनि हो । शक्ति र सिद्धि प्राप्त गर्न कामशक्तिरूप मुसामाथि नियन्त्रण आवश्यक हुन्छ । श्रीगणेशको वाहन मुसो कामभावना, कामवेग र कामातिचारको प्रतीक भएकाले त्यसलाई श्रीगणेशले वाहन तुल्याई आफ्नो नियन्त्रणमा राख्नुभएको छ ।[६९]

---

५९. *स्वामी करपात्रीजी, पूर्ववत्, पृ. २७ ।*
६०. *प. गोविन्ददास, पूर्ववत्, पृ. १०६ ।*
६१. *बालपाणि भास्कर, 'श्रीगणेश के रूपकी विशेषता तथा उपासना के कुछ विशेषांश', कल्याण, पूर्ववत्, पृ. १६७ ।*
६२. *पूर्ववत् ।*
६३. *पूर्ववत् ।*
६४. *हनुमानप्रसाद पोद्दार, 'श्रीगणेशतत्त्व', कल्याण, पूर्ववत्, पृ. ३५ ।*
६५. *अनिरुद्धाचार्य वेङ्कटाचार्य, 'श्रीगणेशमीमांसा', कल्याण, पूर्ववत्, पृ. ७४ ।*
६६. *प. गोविन्ददास, पूर्ववत्, पृ. १०६ ।*
६७. *बलदेव उपाध्याय, पूर्ववत् ।*
६८. *सर्वानन्द पाठक, 'भारतीय संस्कृति में गणेश' कल्याण, पूर्ववत्, पृ. १०३ ।*
६९. *श्रीसोम चैतन्य, 'मूषकवाहन' कल्याण, पूर्ववत्, पृ. ११२ ।*

वैदिक वाङ्मयमा भगवान् श्रीगणेशलाई **ज्येष्ठराज** भनिन्छ । ब्रह्मा आदि जेठा देवताहरूका पनि जेठा भई तिनीहरूका माझमा सुहाउने श्रीगणेशको ज्येष्ठराज नाम सार्थक छ ।[३०] श्रीगणेशको **एकदन्त** नाममा रहेको एकशब्दले मायालाई र दन्तशब्दले मायाका सञ्चालक मायिक ईश्वरलाई बुझाउँछ । श्रीगणेश माया र मायिकका पनि परमाधिष्ठान हुनुभएकाले उहाँलाई एकदन्त भनिन्छ । एकदन्त नामको विषयमा ब्रह्मवैवर्तमा भनिएको छ – श्रीगणेशसँग रिसाएका परशुरामले श्रीगणेशमाथि बञ्चरो प्रहार गरेका थिए । त्यसले श्रीगणेशको बायाँ दाँतलाई टुक्र्याइदियो । त्यसपछि श्रीगणेशको एउटामात्र दाँत बाँकी रहेकाले उहाँलाई एकदन्त भनिएको हो । एकदन्तमा रहेको एकशब्दले प्रधान भन्ने अर्थ बुझाउँछ भने दन्तशब्दले बललाई बुझाउँछ । बहुव्रीहिसमास गर्दा एकदन्त शब्दको अर्थ हुन्छ – सर्वोत्तम बलशाली पुरुष अथवा परमतत्त्व ।[३१] श्रीगणेशको वाचक **हेरम्ब**शब्दमा निहित हेपदले दीन भन्ने अर्थ र रम्बपदले पालक भन्ने अर्थबोध गराउँदछ । हेरम्बशब्दको अर्थ हुन्छ – दीन-दुःखीका पालक परमेश्वर ।[३२]

**शूर्पकर्ण** शब्दबाट सूपो अथवा नाङ्लोसमान विशाल कान भएका श्रीगणेशको बोध हुन्छ । जसरी सूपोले अन्नमा रहेका दूषित तत्त्वलाई छँटेर अन्नलाई शुद्ध तुल्याउँछ त्यसरी नै भगवान् श्रीगणेशले पनि भक्तका मन, बुद्धि, वचन र कर्ममा रहेका दोष र विघ्नहरूको निवारण गरी भक्तहरूको कल्याण गर्नुहुन्छ । **गजवक्त्र**को अर्थ हुन्छ – विष्णुको प्रसादरूप पुष्पलाई मस्तकमा धारण गर्ने गजेन्द्रवदन भगवान् गणपति । **गुहाग्रज** भगवान् श्रीगणेशको विशिष्ट नाम हो । गुहभन्दा पहिले कैलासमा प्रकट हुनुभएकाले श्रीगणेशलाई गुहाग्रज भनिन्छ । गुह जसका अग्रज हुनुहुन्छ भन्ने अर्थमा पनि गुहाग्रज शब्दको व्याख्या गर्न सकिन्छ । भगवान् श्रीगणेशको सर्वशक्तिसम्पन्न नाम **गजानन** हो । ऋग्बाट 'ग', यजुबाट 'ज', सामनबाट 'न' र अथर्वन्बाट 'न' लिएर **गजानन** शब्द बनेकाले श्रीगणेश वैदिक देवता हुनुहुन्छ । गजाननको गकारबाट गमन (लय), जकारबाट जन्म (उत्पत्ति) को सङ्केत गरिएको छ । यी दुवै अक्षर वेदमा गज नामबाट प्रसिद्ध छन् । यसैले भगवान् श्रीगणेशलाई गजानन भनिएको हो। श्रीगणेशको गजानननामले सम्पूर्ण जगत्को सृष्टि, पालन र लयको सूचना प्रदान गर्दछ ।

महर्षि दुर्वासाले भगवान् विष्णुबाट प्राप्त पारिजात पुष्प इन्द्रलाई दिएका थिए । ऐश्वर्यले मत्त भएका इन्द्रले त्यो पुष्प हात्तीको मस्तकमा राखिदिए । पछि गएर शिवजीले त्यही हात्तीको टाउको काटी श्रीगणेशको शरीरमा जोडिदिनुभयो । शनैश्चरको कुदृष्टिबाट टाउको काटिएका श्रीगणेशको शरीर दुईथरिका माताहरूबाट उत्पन्न अङ्गहरूद्वारा तयार भयो । एउटी माता पार्वती हुनुभयो भने अर्की माता हथिनी भइन् । यसबाट श्रीगणेशका **गजानन** र **द्वैमातुर** भन्ने दुई नाम संसारमा प्रसिद्ध भए ।[३३]

भगवान् श्रीकृष्ण र श्रीगणेश परमात्माका एउटै रूप हुन्। विष्णुले श्रीगणेशलाई प्रथम पूजाको अधिकार दिनुभएकाले सम्पूर्ण धार्मिक कार्यमा श्रीगणेशको प्रथम पूजा गर्ने विधान रहेको छ ।[३४] कृष्णरूप श्रीगणेश अथवा श्रीगणेशरूप कृष्ण ॐकाररूप एवं मङ्गलमूर्ति हुनुहुन्छ । जसरी प्रत्येक मन्त्रको उच्चारण गर्दा सर्वप्रथम ॐको उच्चारण गर्ने विधान छ त्यसरी नै प्रत्येक शुभकार्यमा ओङ्काररूप श्रीगणेशको स्मरण गर्नु अनिवार्य हुन आउँछ ।[३५]

---

३० देवीदत्त अवस्थी, 'गणपतिका वैदिक स्तवन', कल्याण, पूर्ववत्, पृ. १२० ।
३१ चन्द्रमौलि भास्कर, कल्याण, पूर्ववत्, पृ. १४७ ।
३२ नवीनचन्द्र पाठक, कल्याण, पूर्ववत्, पृ. १०३ ।
३३ पूर्ववत् ।
३४ डॉ भवानी शङ्कर पञ्चारिया, 'श्रीगणेश की भगवत्ता एवं महत्ता', कल्याण, पूर्ववत्, पृ. ११५ ।
३५ महामहोपाध्याय [illegible] शास्त्री, 'श्रीगणेश सर्वत्र प्रथमपूज्य क्यों', कल्याण, पूर्ववत्, पृ. ४८ ।

### ध ) अग्रपूज्य श्रीगणेश

ब्रह्माण्डमा उत्पन्न हुने साना–ठूला सबै कार्यहरूको सिद्धिका लागि प्रतिष्ठाप्राणरूप अथवा आधाररूप अथवा पृथिवीरूप श्रीगणेशको अवलम्बन आवश्यक हुन्छ भन्ने तथ्य महसुस गरी आर्य ऋषिहरूले कार्यारम्भमा श्रीगणेशको अग्रपूजालाई अपरिहार्य मानेका थिए । यस तथ्यलाई अनुमोदन गर्दै एउटा चिन्तक एवं कविले भनेका छन् – 'भगवान् शङ्करले त्रिपुरासुरमाथि विजय गर्न, भगवान् विष्णुले बलिको बन्धन गर्न, ब्रह्माजीले चौध भुवनको सृष्टि गर्न, शेषनागले पृथिवीलाई धारण गर्न, पार्वतीले महिषासुरको वध गर्न, सिद्धहरूले सिद्धि प्राप्त गर्न र कामदेवले विश्वविजय गर्न जसको सर्वप्रथम ध्यान र अर्चना गरेका थिए, ती श्रीगणेशले हाम्रो रक्षा गरून्।[७६]

### न ) विविध देवस्वरूप श्रीगणेश

शास्त्रहरूमा साकार श्रीगणेशको लीलावर्णन गर्ने क्रममा उहाँलाई श्रीकृष्णरूप, कालीरूप, हनुमद्रूप र रुद्ररूप पनि मानिएको छ। हनुमान् र रुद्रका रूपमा उहाँको चर्चा गर्दा मरुद्गणमध्ये एउटा मरुत् पनि उहाँलाई मानिएको छ ।[७७] निराकार ब्रह्मका पाँच साकार भेद विष्णु, शिव, सूर्य, शक्ति र श्रीगणेशका रूपमा रहेका छन् । यीमध्ये जसको आराधना गरे पनि पाँचवटै देवताको आराधना हुने कुरा शास्त्रहरूमा बताइएको छ ।[७८] शास्त्रहरूको भनाइअनुसार माया पनि ब्रह्मको शक्ति नै हो । शक्ति र शक्तिका स्वामीमा अभेद सम्बन्ध हुन्छ । अग्नि र त्यसको दाहकशक्तिमा पनि अभेदसम्बन्ध रहेको हुन्छ । श्रीगणेश मायाभन्दा पर रहनुहुँदा निर्गुण ब्रह्मका रूपमा रहनुहुन्छ भने मायासँग सम्बन्ध कायम गर्दा सगुण ब्रह्म भनिनुहुन्छ ।

### प ) दैवी सम्पत्तिका स्रोत श्रीगणेश

दैवी सम्पत्ति र आसुरी सम्पत्तिका गुणहरूका साथ आदिमानवको उत्पत्ति भएको हो । मानवसँग जन्मजात रूपमा रहेको आसुरी सम्पदाले दैवी सम्पदालाई जित्न नपाओस् यही मानव जीवनको लक्ष्य हो । यसै लक्ष्यलाई आत्मसात् गरेर ऋषिहरूले मन्त्रहरूको दर्शन गरे । ती ऋषिहरूले गणाधिराज गणपतिको आवाहन गर्दै भनेका थिए – **उत्तिष्ठ ब्रह्मणस्पते ! देवयन्तस्त्वे महे** । अर्थात् हे ज्ञानका स्वामी ब्रह्मणस्पति ! हामी ज्ञानको कामना गर्ने सबै साधकहरू तपाईंसँग प्रार्थना गर्दछौं – तपाई जागा हुनुहोस् ।[७९]

### फ ) सिद्धिरूप श्रीगणेश

श्रीगणेश सिद्धिरूप हुनुहुन्छ । पार्वतीलाई श्रद्धा र शङ्करलाई विश्वास मानिएको छ – **पार्वती शङ्करौ वन्दे श्रद्धाविश्वासरूपिणौ** । कुनै पनि कार्यको सिद्धिका लागि श्रद्धा र विश्वास आवश्यक हुन्छन् । तिनको अभावमा कार्यसिद्धि हुँदैन । यसैगरी श्रद्धारूप पार्वती र विश्वासरूप शिवजीबाट कार्यसिद्धिरूप श्रीगणेशको प्रादुर्भाव भएको हो ।[८०]

---

७६. *जेतुं यस्त्रिपुरं हरेण हरिणा व्याजाद् बलिं बध्नता, स्रष्टुं वारिभवोद्भवेन भुवनं शेषेण धर्तुं धराम् । पार्वत्या महिषासुरप्रमथने सिद्धाधिपैः सिद्धये ध्यातः पञ्चशरेण विश्वजितये पायात् स नागाननः ॥ - अनिरुद्धाचार्य वेङ्कटाचार्य, पूर्ववत्, पृ. ७५ ।*

७७. *पूर्ववत् ।*

७८. *एकः स पञ्चधा जातः क्रियया नामभिः किल । देवदत्तो यथा कश्चित् पुत्राद्याह्वाननामभिः ॥ आनन्दरामायण, ८/१-१०, चौखम्बा संस्कृत सीरिज, वाराणसी।*

७९. *देवीदत्त अवस्थी, कल्याण, पूर्ववत्, पृ. १२१ ।*

८०. *श्रीरामभव सिंह, 'गोस्वामी तुलसीदासद्वारा श्रीगणेशस्मरण', कल्याण, पूर्ववत्, ३८३-३८४ ।*

### ब) ध्येय परमात्मरूप श्रीगणेश

श्रीगणेशले पाश, अङ्कुश, मोदक र वरमुद्रा धारण गर्नुहुन्छ । पाशलाई मोह र तमोगुणको प्रतीक मानिन्छ। अङ्कुशलाई प्रवृत्ति र रजोगुणको परिचायक मानिन्छ । यसैगरी मोदकको अर्थ आनन्द हो र वरमुद्राको अर्थ सत्त्वगुण हो । श्रीगणेशका उपासकले तमोगुण, रजोगुण र सत्त्वगुणभन्दा माथि उठेर श्रीगणेशरूप परमात्माको उपासना गर्दा विघ्नविनाशका साथै सबै प्रकारका मङ्गल प्राप्त गर्दछन् ।[८१]

### भ) मङ्गलमय परिवारका स्वामी श्रीगणेश

श्रीगणेशका पिता शिवजी हुनुहुन्छ । शिवको अर्थ हो कल्याण । श्रीगणेशको नाम हो विघ्ननाशक । शिवत्व प्राप्तिपछि साधकका विघ्नबाधा नष्ट हुन्छन् र बुद्धि, ऋद्धि, सिद्धि, क्षेम एवं लाभको प्राप्ति हुन्छ । ऋद्धि, सिद्धि र बुद्धि श्रीगणेशका पत्नी हुन् भने क्षेम र लाभ पुत्र हुन् । साधनाक्षेत्रमा शिवत्व प्राप्त गरेपछि विघ्ननाश गर्ने क्षमता प्राप्त हुन्छ। त्यसपछि ऋद्धि, सिद्धि एवं बुद्धि साधकका वशमा आउँछन् । जबसम्म साधकले श्रीगणेशका विश्वात्मिका र मोहिका शक्ति ऋद्धि, सिद्धि एवं बुद्धिलाई वशमा ल्याउँदैन, तबसम्म त्यसले क्षेम र लाभ प्राप्त गर्न सक्दैन ।[८२]

### म) ओङ्काररूप गजमस्तकधारी श्रीगणेश

श्रीगणेशको मुख गजाकार छ, श्रीगणेशको शिरच्छेदनका कारण बताउने कथाहरू ब्रह्मवैवर्त, शिवपुराण आदिमा रहेका छन् । ब्रह्मवैवर्तपुराणमा शनिको वक्रदृष्टि पर्नाले श्रीगणेशको टाउको काटिएको कुरा बताइएको छ भने कतै शिवजीले आफैं शिर काट्नुभएको प्रसङ्ग पनि उल्लेख गरिएको पाइन्छ । पार्वतीले आफ्नो रक्षाका लागि मानवमूर्ति निर्माण गरी प्राणप्रतिष्ठा गरेपछि बालक श्रीगणेश द्वारपालका रूपमा रहनुभयो । शिव पार्वतीको कक्षमा जानुहुँदा पार्वतीका छोरा द्वारपालले बाटो रोकेपछि शिवजीले शिर काटिदिनुभयो । पार्वतीबाट यथार्थ तथ्य थाहा पाएपछि शिवजीले बालकको टाउकाको ठाउँमा हात्तीको टाउको जोडिदिनुभयो । त्यस दिनदेखि बालक श्रीगणेश गजाननका रूपमा परिणत हुनुभएको थियो ।

वास्तवमा उक्त कथा एउटा रूपक हो । पार्वतीले आत्मरक्षाका लागि मन्त्रका नामबाट शब्दसमूहलाई चयन गर्नुभयो । शिवजीले शब्दसमूहको परीक्षा गर्दा त्यो शब्दसमूह शक्तिहीन भएको ठान्नुभयो । उहाँले पार्वतीद्वारा कल्पना गरिएका शब्दसमूहलाई निष्प्राण बनाएर हात्तीको स्वरूप भएको ओङ्कार जोडिदिनुभयो। ओङ्कार जोडिएपछि पार्वतीद्वारा कल्पना गरिएको शब्दसमूह मन्त्रका रूपमा परिणत भयो । त्यो मन्त्रमा जोडिएको ओङ्कार नै श्रीगणेश हो ।[८३]

### य) महागणपतिका रूपमा श्रीगणेश

श्रीगणेश आनन्दमय ब्रह्म, अद्वितीय, सच्चिदानन्दघन र विज्ञानात्मा हुनुहुन्छ । पञ्चतत्त्वात्मक जगत्को उद्गमस्रोत हुनुहुन्छ । ध्वनितत्त्वका परा, पश्यन्ती, मध्यमा र वैखरीमा श्रीगणेशतत्त्वको विस्तार भएको छ ।

---

८१ [illegible] भास्कर, पूर्ववत्, पृ. १४८ ।
८२ डा. [illegible] द्विवेदी, पूर्ववत्, पृ. १२८ ।
८३ गोविन्द शास्त्री, 'गणेशरूप की मानिक व्याख्या', कल्याण, पूर्ववत्, पृ. १५३ ।

त्रिगुण, त्रिकाल, त्रिदेह, स्थूल, सूक्ष्म र कारणभन्दा पर रहनुभएका श्रीगणेश मूलाधार हुनुहुन्छ। श्रीगणेश ज्ञान, क्रिया र शक्तिका परमाश्रय एवं योगिध्येय परब्रह्म हुनुहुन्छ।[८४] श्रीगणेशका अनेक रूपहरूमध्ये महागणपति यद्वा महागणेश एउटा विशिष्ट रूप हो । महागणपतिमा सावित्रीसहित ब्रह्मा, पार्वतीसहित शिव र लक्ष्मीसहित विष्णुको समाहार हुने हुँदा सामान्य गणपतिभन्दा फरक देखाउन महत्शब्दको प्रयोग गरिएको छ । यसैले द्वादशभुज महागणपतिको मूर्तिमा सपत्नीक त्रिदेवका आयुधहरू रहेका हुन्छन् ।[८५]

### र ) सदा वन्दनीय र सर्ववन्दनीय श्रीगणेश

प्रथमपूज्य देवता श्रीगणेशको स्वरूप अव्यक्त, अचिन्त्य र अपार छ । उहाँ देवपूज्य, निरुपम र मङ्गलमूर्ति हुनुहुन्छ। उहाँको सूँढ सिद्धिप्रदायक छ भने मुख शिशु हात्तीको झैं लावण्यमय छ । उहाँ सदा प्रणम्य हुनुहुन्छ ।[८६]

### ल ) अध्यात्ममूर्ति श्रीगणेश

श्रीगणेशकी माता पार्वती हुनुहुन्छ । पार्वतीको अर्थ हो - तीन पर्वकी स्वामिनी शक्ति । ती पर्व हुन् - इच्छाशक्ति, ज्ञानशक्ति र क्रियाशक्ति । ती शक्तिहरूको उदयपछि विघ्नबाधाको शमन हुन्छ । पार्वतीद्वारा श्रीगणेश जन्मको रहस्य पनि यही हो । श्रीगणेशका दाजु स्कन्द हुन् । श्रीगणेश अभौतिक हुन् भने स्कन्द शिवजीको भौतिक वीर्यबाट उत्पन्न भएका हुन् । त्यसकारण स्कन्द र श्रीगणेशको प्रतिस्पर्धिता हुँदा श्रीगणेश विजयी र स्कन्द पराजित भए । यसबाट आध्यात्मिक भावका सामु भौतिक भाव पराजित हुन्छ भन्ने कुरा प्रमाणित हुन्छ ।[८७]

### व ) परमतत्त्वरूप श्रीगणेश

तत् गणेश हो, सत् गणेश हो, परमतत्त्व गणेश हो र ब्रह्मतत्त्व गणेश हो - **ॐ तद् गणेशः, ॐ सद् गणेशः, ॐ परं गणेशः, ॐ ब्रह्म गणेशः** ।[८८]

## ३.२ श्रीगणेशको अवतरण

ओङ्काररूप श्रीगणेशका लीलावतारको चरित्र विभिन्न पुराण र शास्त्रहरूमा विभिन्न रूपमा वर्णन गरिएको पाइन्छ । भगवान् लीलाविहारी श्रीगणेश सर्वसमर्थ हुनुहुन्छ । कल्पभेदले उहाँका अनेक अवतार भएका छन् र चरित्र पनि अनन्त छन्। सिद्धिसदन श्रीगणेश साक्षात् प्रणवरूप देवता हुनुहुन्छ । भिन्न भिन्न समयमा जगत्को मङ्गलका लागि उहाँको मङ्गलमय आविर्भाव हुने गर्दछ । उहाँका लीला र कर्म अद्भुत एवं अलौकिक हुन्छन् । करुणामूर्ति श्रीगणेशले अवतार लिएर अधर्म, अनीति, अनाचार, पाप एवं तापको नाश गरी साधुहरूको रक्षा र सद्धर्मको स्थापना एवं संरक्षण पनि गर्नुहुन्छ।

यद्यपि भगवान् एउटै हुनुहुन्छ तापनि उहाँले आफ्ना भक्तहरूको रक्षा गर्न, अधर्मको नाश गर्न, धर्मको रक्षा गर्न र भक्तहरूमा आइलाग्ने विघ्न र सङ्कट हरण गर्न अनेक अवतार लिनुहुन्छ । ती अवतारहरूमा भिन्दाभिन्दै विशिष्ट शक्ति र क्रिया दृष्टिगोचर हुन्छन् । विशिष्ट शक्तिसम्पन्न देवताहरूको उपासनाबाट साधकहरूमा विशिष्ट शक्ति जागृत हुन्छ र

---

८४. रामकिशोर गोस्वामी, 'जनगण के गणपति', कल्याण, पूर्ववत्, पृ. ५७ ।
८५. एस. लक्ष्मीनरसिंह शास्त्री, 'शङ्कराचार्य की परम्परा में भगवान् श्रीगणेश', कल्याण, पूर्ववत्, पृ. ६२ ।
८६. नमो नमः सुरवरपूजिताङ्घ्रये, नमो नमो निरुपममङ्गलात्मने ।
नमो नमो विपुलकर्मैकसिद्धये, नमो नमः करिकलभाननाय ते ।। - गणेशपुराण १/४६/२२० ।
८७. श्यामाकान्त द्विवेदी, पूर्ववत्, पृ. १२८ ।
८८. गणेशोत्तरतापिन्युपनिषद् २/१ ।

विशिष्ट कर्म सम्पन्न हुन्छन् ।[८९] सदाशिवले आफ्नी शक्तिसँग एकाकार भएर सृष्टिको प्रवर्तन गर्नुहुन्छ ।[९०] प्रकृति माया हुन् भने महेश्वर मायापति हुनुहुन्छ । उहाँहरू दुवैका अङ्गभूत कार्यकारणसमुदायबाट सम्पूर्ण संसार व्याप्त छ । प्रकृति र पुरुषको संयोगबाट सृष्टि भएझैं भगवान् शिव र भगवती पार्वतीबाट ॐकाररूप परमात्माको साकार श्रीगणेशका रूपमा आविर्भाव भयो ।

बुद्धिविधाता गणपतिको आविर्भाव, विग्रह र लीला अलौकिक आनन्ददायक र मङ्गलदायक छन् । यद्यपि पुराण र उपपुराणहरूमा श्रीगणेशको आविर्भावमा आधारित आख्यानहरू छन् । तर शिवपुराण, ब्रह्मवैवर्तपुराण, स्कन्दपुराण, पद्मपुराण, मत्स्यपुराण, लिङ्गपुराण र ब्रह्माण्डपुराणमा श्रीगणेशको आविर्भावसँग सम्बद्ध अनेक प्रसङ्ग रहेका छन् । श्रीगणेशपुराण र मुद्गलपुराण श्रीगणेशको सम्पूर्ण लीलामा आधारित कथानक भएकाले तिनमा श्रीगणेशको अवतरणबारे व्यापक वर्णन गरिएको पाइन्छ । उक्त पुराणहरूका आविर्भावसम्बन्धी कथाहरूको सारसङ्क्षेप प्रस्तुत गरिँदैछ ।

## क ) श्रीगणेशपुराण

श्रीगणेशपुराणमा श्रीगणेशका लीला र उपासनाविधि वर्णनका साथै निम्नअनुसारका अवतारहरूको विषयमा प्रकाश पारिएको छ ।

### १. महोत्कटावतार

सत्ययुगमा परब्रह्म श्रीगणेश परमात्मालाई पुत्रका रूपमा पैदा गर्न चाहने अदितिले कश्यपसँग भावपूर्ण निवेदन गरिन् । कश्यपले तिनीलाई श्रीगणेशको आराधना गर्ने मन्त्र र विधिसमेत बताए । अदितिले तपस्या गरिन् । श्रीगणेशले प्रसन्न भई दर्शन दिएर 'म तपाईंको पुत्रका रूपमा पैदा हुनेछु' भन्ने वर दिनुभयो । अदिति खुसी हुँदै घर फर्किन्। केही समयपछि तिनले गर्भधारण गरिन्। नौ महिना पूरा भएपछि मङ्गलमय मुहूर्तमा उनले अलौकिक परमतत्त्वलाई पुत्रका रूपमा प्राप्त गरिन् । ती बालक दशबाहु र बलवान् थिए। तिनका कानमा कुण्डल, निधारमा कस्तूरीतिलक र मस्तकमा मुकुट सुहाएका थिए । तिनका वरिपरि सिद्धि र बुद्धि उभिएका थिए । तिनको घाँटीमा रत्नको माला र छातीमा चिन्तामणि देदीप्यमान थिए । तिनको अधरोष्ठ बाह्रमासे फूलझैं रातो थियो । सुन्दर मुकुटको संयोगले ललाटमा सौन्दर्य थपिएको थियो । सुगाको झैं सुन्दर नासिका र रमणीय आँखीभौंका कारण सुहाएको निधार, दिव्यवस्त्र, उज्ज्वल दन्तपङ्क्ति एवं अपूर्व देहकान्तिद्वारा तिनले अन्धकारलाई निर्मूल गरेका थिए । सुन्दर परिधानले सुहाएका ती बालकको अलौकिक सौन्दर्य देखेर अदिति मुग्ध भइन्, वातावरण प्रकाशमान भयो, धर्तीमा आनन्द फैलियो र प्रकृति प्रसन्न भइन् । कश्यप ऋषिको आनन्दको सीमा थिएन । जातकर्म संस्कार भयो र नामकरण संस्कारका दिन विद्वान् ब्राह्मणहरूले बालकको शरीरको संरचनालाई हेरी महोत्कट भनी नामकरण गरे ।[९१]

---

८९. अभिनव विद्यालंकार, 'वरदाता गणेश', कल्याण, पूर्ववत्, पृ. १७ ।

९०. मायां तु प्रकृतिं विद्यान्मायिनं तु महेश्वरम् । तस्यावयवभूतैस्तु व्याप्तं सर्वमिदं जगत् ।। – श्वेताश्वतरोपनिषद् ४/१० ।

९१. ततो बहुतिथे कालेऽदितिः सा गर्भमादधे। तेजोऽतिववृधे तस्या दिने दिने यथा शशी।।
सम्पूर्णे नवमे मासे सुषुवे पुत्रमुत्तमम्। ब्रह्मवाक्यादभूत् ख्यातो नाम्ना कश्यपनन्दनः।।
दशभुजो बहुबलः कर्णकुण्डलमण्डितः। कस्तूरीतिलकभ्राजो मुकुटभ्राजिमस्तकः।।
सिद्धिबुद्धियुतः कण्ठे रत्नमालाविभूषितः। चिन्तामणिलसद्वक्षा जपापुष्पारुणाधरः।।
उन्नसो भ्रुकुटीचारुलभाटो दन्तदीप्तिमान्। देहकान्त्या हततमा दिव्याम्बरयुतः शुभः।।
महोत्कटेति नामास्य चक्रे एकादशे पिता। बालोऽपि ववृधे शीघ्रं शुक्लपक्षे यथा शशी।।
सर्वेभ्य उत्कटो यस्मात् महोत्कट इति स्मृतः।। – श्रीगणेशपुराण, २/६/२१-२५, ४३-४४ ।

## २. गुणेश अथवा मयूरेश अवतार

त्रेतायुगमा गण्डकीक्षेत्रका राजा चक्रपाणि र तिनकी रानी उग्राबाट उत्पन्न बालक सिन्धु अजेय पराक्रमी वीर दानवका रूपमा लोकमा प्रसिद्ध भयो । त्यसको अत्याचारबाट देवता, ऋषि-मुनि र मनुष्यहरू अत्यन्त दु:खित भए । त्यसले कैलास, वैकुण्ठ, स्वर्ग, पृथिवी र पातालमा आधिपत्य कायम गऱ्यो । त्यसबेला देवताहरू कुन देवताको आराधना गरी कष्टबाट मुक्ति पाउने भनी प्रश्न गरिरहेका थिए। बृहस्पतिले भने - 'परम प्रभु विनायकको आराधना गरौं । उहाँले नै सबै विघ्न निराकरण गर्नुहुनेछ। माघ मासको कृष्णपक्ष लागिसकेको छ । यस पक्षको मङ्गलवारसहितको चतुर्थी तिथि विघ्नेश्वर श्रीगणेशका लागि अत्यन्त प्यारो तिथि मानिएको छ । तसर्थ तपाईंहरूले सिंहवाहन, दशभुज विनायकको पूजा र प्रार्थना गर्नुपर्दछ ।' बृहस्पतिको आज्ञाअनुसार सबै देवता र ऋषिहरूले गण्डकीतीरमा गई मण्डप बनाएर सङ्कष्टीव्रत आरम्भ गरी श्रीगणेशको प्रार्थना गरे ।[१२]

देवताहरूको प्रार्थनाबाट प्रसन्न हुनुभएका विनायकले प्रकट भएर भन्नुभयो - 'म तपाईंहरूको व्रतबाट प्रसन्न छु । मैले छिट्टै मयूरेश्वर अथवा गुणेश्वरका रूपमा अवतार लिएर तपाईंहरूको इच्छा पूर्ण गर्नेछु ।' यसरी आफ्ना कुरा राखेर भगवान् श्रीगणेश अन्तर्धान हुनुभयो । त्यतिबेला भगवान् शिव सिन्धुको अत्याचारका कारण पार्वतीका साथ त्रिसन्ध्याक्षेत्रमा विराजमान हुनुहुन्थ्यो। उहाँ पनि सङ्कटमोचनका लागि तपस्यामा लाग्नुभयो । एक दिन पार्वतीले भन्नुभयो - 'हे भगवन् ! हजुर सबै देवताका देवता हुनुहुन्छ भने हजुरद्वारा आराधना गरिने कुन तत्त्व हुनसक्छ ?' शिवजीले भन्नुभयो - 'हे कल्याणी ! अनन्त ब्रह्माण्डलाई आफ्ना रोम रोममा धारण गर्ने परम प्रभु श्रीगणेशलाई गुणेश पनि भनिन्छ। म उहाँको आराधना गरिरहेको छु ।' यो सुनेर पार्वतीले पनि श्रीगणेश प्रभुको दर्शन गर्ने उत्सुकताले श्रीगणेशको दर्शन पाउन आफ्ना पतिसँग निवेदन गर्नुभयो । शिवले भन्नुभयो - 'हे पार्वती ! निष्ठापूर्वक आराधना र तपस्या नगरीकन श्रीगणेशको दर्शन पाउन सकिंदैन । म तिमीलाई श्रीगणेशको एकाक्षर मन्त्र दिन्छु । तिमीले मन्त्रजप गर्दै बाह्र वर्षसम्म तपस्या गर । त्यसपछि उहाँको दर्शन पाउनेछौ ।' शिवजीको आज्ञानुसार पार्वतीले लेखनाद्रिमा गई बाह्र वर्ष तपस्या गर्नुभयो । प्रसन्न हुनुभएका श्रीगणेशले दर्शन दिएर वर माग्न भन्नुभयो ।[१३] त्यसपछि पार्वतीले हात जोडेर भन्नुभयो - 'हे प्रभु ! हजुर मेरा पुत्र भएर प्रकट हुनुहोस्। त्यसबेला मैले हजुरको सेवा र आराधना गर्ने अवसर पाउने छु ।' पार्वतीको प्रार्थना सुनेर श्रीगणेश तथास्तु भन्दै अन्तर्धान हुनुभयो । कालान्तरमा भाद्र शुक्ल चतुर्थी तिथि आइपुग्यो । त्यस तिथिमा सोमबार, स्वातिनक्षत्र र सिंह लग्नको अपूर्व संयोग भयो । भगवती पार्वतीले श्रीगणेशको आराधना गर्नुभयो । उहाँले प्रार्थना गरिरहनुभएको बेलामा उहाँका सामु परमतेजस्वी, असंख्य आँखा, असंख्य मुख, असंख्य कान, असंख्य नाक, असंख्य हात र असंख्य शिरले सुहाउनुभएका महामहिम सच्चिदानन्दघन

---

१२. मायातीताय भक्तानां कामपूराय ते नमः । सोमसूर्याग्निनेत्राय नमो विश्वम्भराय ते ॥ - पूर्ववत्, २/७८/२६ ।

१३. तदैवाऽभवद् दृष्टा बालं वीक्ष्य पुरोगतम् । असङ्ख्यवक्त्रनयनमसङ्ख्याङ्घ्रिशिरोरुहम् ॥
असङ्ख्यमुकुटं सूर्यचन्द्राग्निलोचनं विभुम् । मुक्तामणिमयीं मालां बिभ्रतं दीप्तिमत्परम् ॥
ददर्श पार्वती रूपं पवित्रं परमाद्भुतम् । - पूर्ववत्, २/८१/१-१८ ।

श्रीगणेश पुत्रका रूपमा प्रकट हुनुभयो ।[१४]

यस प्रकार श्रीगणेशको अवतरण भएपछि त्यहाँ सर्वत्र आनन्द छायो । एघारौं दिनका दिन ऋषिमुनिहरूले यी बालक समस्त विघ्नहरूका नाशक एवं प्रथमपूजायोग्य हुनेछन् भनी बालकको नाम श्रीगणेश राखे । पछि गएर यिनले मयूरलाई वाहनका रूपमा स्वीकार गर्नेछन् भनी मयूरेश्वर नाम पनि राखे। यसरी भगवान् श्रीगणेश गुणेश्वर र मयूरेश्वरका रूपमा संसारमा प्रसिद्ध हुनुभयो ।

## ३. गजाननावतार

ब्रह्माजीले दिएका वरदानका कारण सिन्दूरनामक दैत्यको उग्र प्रताप फैलिंदा देवताहरू भयभीत भए। ती सबैले समवेतस्वरमा भगवान् श्रीगणेशको प्रार्थना गरे । यसरी देवताहरूको स्तुति र तपस्याबाट प्रसन्न हुनुभएका श्रीगणेशले दर्शन दिएर भन्नुभयो – 'हे देवता एवं मुनिगण ! मैले द्वापरयुगमा गजानन अवतार लिएर सिन्दूर दैत्यको वध गर्नेछु । तपाईंहरू निश्चिन्त हुनुहोस् । म शिवधाममा गजाननका नामबाट प्रकट हुनेछु।' देवताहरूले वरदान प्राप्त गरेपछि द्वापरयुगमा कैलासकी स्वामिनी पार्वतीले पनि गर्भधारण गर्नुभयो। भगवान् शिव त्रिसन्ध्याक्षेत्र छाडी कैलासमा गएर समाधिमा लीन हुनुभयो । पार्वतीले गर्भधारण गरेको नौ महिना पूरा भएपछि उहाँकै तेजबाट आनन्ददायक परमतत्त्व प्रकट भयो ।[१५] बालकको जन्मपछि नामकरण संस्कारका दिन उहाँको नाम गजानन राखियो । श्रीगजानन भगवान् श्रीगणेश मूषकवाहनका नामबाट पनि प्रसिद्ध हुनुभयो । यसरी पार्वतीका कोखबाट पैदा हुनुभएका बालक गजानन राजा वरेण्य र रानी पुष्पिकाका पुत्रका रूपमा पनि प्रसिद्ध हुनुभयो ।

## ४. धूम्रकेतु अवतार

श्रीगणेशपुराणको उत्तरार्द्धको १४९ औं अध्यायमा धूम्रकेतु, धूम्रवर्ण अथवा शूर्पकर्णका रूपमा श्रीगणेशको भावी अवतार हुने कुरा सङ्केत गरिएको छ । तदनुसार कलियुगमा पाप बढेपछि दुःख पाएका देवताहरूले भगवान् श्रीगणेशको स्तुति गर्नेछन् । देवताहरूको प्रार्थनाबाट प्रसन्न भएर भगवान् श्रीगणेश पनि कलिको अन्त्यमा दुष्ट प्राणीहरूको विनाश, सज्जनहरूको रक्षा र धर्मको स्थापनाका लागि धूम्रकेतुको रूपमा प्रकट हुनुहुनेछ। उहाँले गुफामा लुकेर रहेका सदाचारी मानिसहरूलाई जम्मा गरी धर्मको प्रवर्त्तन गराउनुहुनेछ। त्यसपछि संसारमा सत्ययुगको आरम्भ हुनेछ ।[१६]

---

१४. यावद् वदति सैवं तु ददर्श पुरतस्तु तम् । षड्भुजश्चन्द्रसुभगं लोचनत्रयभूषितम् ॥
हुतासकुसुमवदनं स्थूलवक्षसमीश्वरम् । ध्वजाङ्कुशोर्ध्वरेखाब्जचिह्नित पादपङ्कजम् ॥
कोटिस्फटिकसङ्काशं कोटिचन्द्रप्रभं विभुम् । हेमताराविभान् केशान् दधतं बालरूपिणम् ॥
कुर्वन्तं प्रथमं शब्दं कम्पयन्तं वसुन्धराम् ॥ – पूर्ववत्, २/८१/३२–३५ ।

१५. ततस्तु नवमे मासि पूर्णे साऽसूत बालकम् । चारुचन्द्राननं पद्मशोभाजितपदं शुभम् ॥
किरीटकेयूरधरं कोटिसूर्यसमप्रभम् । प्रवालाधरशोभाढ्यं चतुर्बाहुविराजितम् ॥
मुक्ताहारधरं चारुकङ्कणैरुपशोभितम् । परशुं कमलं मालां मोदकांश्च करैर्दधत् ॥
ध्वजाङ्कुशाब्जाखिलसत्पादपद्मसमन्वितम् । किङ्किणीजालविलसच्चारुगुल्फयुतं शुभम् ॥
भालचन्द्रं कोटिचन्द्रनिभं वह्निसमप्रभम् । एवं दृष्ट्वा स्वरूपं सा चकम्पे हर्षनिर्भरा ॥ – पूर्ववत्, २/१३०/१–५ ।

१६. एवं पापे प्रवृद्धे तु धर्मो विश्वार्थमात्रकः। भविष्यन्ति तदा देवा उपवासपरायणाः ॥
स्वधास्वाहावषट्कारैर्वर्जिता भयविह्वलाः। यास्यन्ति शरणं देवं गजाननमनामयम् ॥
स्तुतिं नानाविधां तस्य करिष्यन्ति नतिं बहु । प्रार्थयिष्यन्ति देवेशं सर्वविघ्नविनाशनम् ॥
एवं सर्वं विचार्याऽसावाविर्भावं करिष्यति। गजाननः शूर्पकर्णो धूम्रवर्णोऽपि नामतः ॥
नीलाश्वं समारुह्य खड्गहस्तो रुषा ज्वलन् । कल्पयिष्यति सेनां स नानारूपां निजेच्छया ॥
शस्त्राणि च महास्त्राणि कल्पयिष्यत्ययत्नतः। वधिष्यति महाम्लेच्छान् सेनया स्वेन तेजसा॥ – पूर्ववत्, २/१४९/३३–३८ ।

## ख ) पद्मपुराण

पार्वतीसँग विवाह संस्कार सम्पन्न भएपछि शिव-पार्वती रमणीय उद्यानहरूमा विहार गर्दै हुनुहुन्थ्यो । एक पटक पार्वतीले शृङ्गार गर्ने क्रममा आफ्नो शरीरमा सुगन्धित तेल र अङ्गराग लगाउनुभयो । त्यसको मयल भुइँमा खस्यो । त्यसलाई खेलाउँदा हात्तीको मुखाकृति भएको पुरुषमूर्ति तयार भयो । गङ्गामा प्रवाहित गर्दा गङ्गाको प्रवाहबाट त्यो मूर्ति जीवन्त पुरुषका रूपमा प्रकट भयो । देवताहरूले त्यसलाई गाङ्गेय भने । गजवदन बालकलाई ब्रह्माजीले गणाधिपत्य प्रदान गर्नुभयो र ती बालक श्रीगणेश देवताका रूपमा प्रसिद्ध भए ।

## ग ) मत्स्यपुराण

मत्स्यपुराणमा श्रीगणेशको आविर्भावसँग सम्बद्ध आख्यान रहेको छ । पार्वतीले अङ्गलेपबाट एउटा गजाकार खेलौना तयार गर्नुभयो । पछि त्यसलाई गङ्गाजलले अभिषेक गर्दा त्यो सजीव भयो । त्यसलाई पार्वती र गङ्गा दुवैले पुत्रका रूपमा स्वीकार गरे । ती बालक पछि गएर श्रीगणेशका नामबाट प्रख्यात भए ।

## घ ) लिङ्गपुराण

शिव र ब्रह्माजीबाट वरदान पाएका कारण विजयी बनेका दैत्यहरूसँग डराएका देवताहरूले एक दिन विजयप्राप्ति र दैत्यहरूका कार्यमा विघ्नबाधाको उत्पत्तिका लागि भगवान् शङ्करसँग प्रार्थना गरे । प्रसन्न हुनुभएका सदाशिवले 'वर माग' भन्नुभयो । तिनीहरूले 'देवद्रोही दैत्यहरूको कर्ममा विघ्न उपस्थित होस्' भनी वर मागे । शिवजीले 'तथास्तु' भन्नुभयो । केही समयपछि पार्वतीका सामु परब्रह्ममय दिव्य तेज बालकका रूपमा प्रकट भयो । बालकको स्वरूप विचित्र थियो । ती बालकको मुख हात्तीको थियो । तिनले एउटा हातमा त्रिशूल र अर्को हातमा पाश धारण गरेका थिए । तिनलाई देखेर देवताहरू प्रसन्न भए । गजमुख बालक पनि आनन्दपूर्वक आफ्ना माता-पिता शिव-पार्वतीका सामु नृत्य गर्न लागे । पार्वतीले बालकलाई वस्त्राभूषण पहिराई माया गर्नुभयो । शिवजीले आफ्ना प्यारा पुत्रको जातकर्म आदि संस्कार सम्पन्न गर्नुभयो । त्यसपछि काखमा राखेर शिवजीले बालकलाई भन्नुभयो - हे बाबु ! तिम्रो अवतार दैत्यहरूको नाश र देव, ब्राह्मण एवं ब्रह्मवादीहरूको उपकारका लागि भएको छ। पृथिवीमा दक्षिणाहीन यज्ञ गर्ने मानिसका कर्ममा तिमीले विघ्न पैदा गर्नेछौ, अनुचित ढङ्गले अध्ययन, अध्यापन र व्याख्यान गर्ने दोषी विद्वान्हरूको प्राणहरण गर्नेछौ, वर्णाश्रमधर्मबाट च्युत भएका नर-नारी र मानवताहीन मानिसहरूको प्राणहरण गर्नेछौ । उचित समयमा उचित विधिले तिम्रो पूजा गर्ने भक्तलाई आफूसमान बनाउनेछौ । तिमीले लोकमा प्रथम पूजित भएर सबैको रक्षा गर्नेछौ । विघ्नहरूका स्वामी भएका कारण सबै धर्म र सबै जातिका मानिसले तिम्रो प्रथम पूजा गर्नेछन् । तिम्रो पूजा नगरी वैदिक एवं तान्त्रिक धार्मिक कार्यको अनुष्ठान गर्दा विघ्न पैदा हुनेछ र मङ्गल पनि अमङ्गलमा परिणत हुनेछ । यसरी आफ्ना पिता शिवजीबाट वरदान पाउनु भएका श्रीगणेश तदनुसार आचरण गरी लोकमा विघ्ननायकका रूपमा प्रसिद्ध हुनुभयो।

## ङ ) ब्रह्मवैवर्तपुराण

पार्वतीको कोखबाट श्रीकृष्णरूप परमतत्त्वको श्रीगणेशका रूपमा आविर्भाव भयो। पार्वतीको पुत्रकामना-परिपूर्तिका लागि भगवान् शङ्करले एक दिन उहाँलाई पुण्यक व्रत गर्न उपदेश दिंदै मनुपत्नी शतरूपाले पनि पुण्यक व्रत गरी पुत्र प्राप्त गरेको प्रसङ्ग सुनाउनुभयो । आफ्ना पति शिवजीबाट पुण्यक व्रतको महिमा सुनेपछि व्रतको विधिसमेत प्राप्त गरेर पार्वतीले गरेको पुण्यक व्रतको प्रभावबाट पार्वतीपुत्रका रूपमा श्रीगणेश प्रकट

स्तुति गरे। पार्वतीले भन्नुभयो - 'यदि टाउको काटिएको मेरो पुत्र बाँच्दछ र तपाईंहरूको बीचमा पूजनीय भएर रहन पाउँछ भने मेरो प्रलयलीला रोकिनेछ ।' देवताहरूले पार्वतीको भनाइ शिवजीसमक्ष सुनाए । शिवजीले भन्नुभयो - 'हामी उत्तर दिशातर्फ लागौं, त्यहाँ जुन जीव फेला पर्दछ त्यसको टाउको काटेर श्रीगणेशको शिरमा जोडिदिनुपर्दछ।' देवताहरू उत्तरतर्फ लागे । त्यहाँ एउटा एकदन्त हात्ती भेटियो । देवताहरूले त्यसको शिर काटेर ल्याई श्रीगणेशको शरीरमा जोडिदिए । त्यसपछि शिवजीले बालकमा आफ्नो पूर्ण तेज सङ्क्रमण गराउनुभयो र श्रीगणेश सुन्दर गजानन बालकका रूपमा सुहाउनुभयो ।[११]

आफ्ना पुत्रको सुन्दर स्वरूप देखेर पार्वती प्रसन्न हुनुभयो र कैलासमा ठूलो आनन्दोत्सव भयो । पार्वतीले बालकलाई अबदेखि तिमी सर्वपूज्य र प्रथमपूज्य हुनेछौ भन्ने वरदान दिंदै भन्नुभयो - 'बाबु ! तिम्रो मुखमा सिँदूर देखिएको छ । जसले तिमीलाई सिँदूर अर्पेर पूजा गर्दछ त्यसले सबै प्रकारका सिद्धि प्राप्त गर्नेछ ।' त्यसबेला शिवजीले भन्नुभयो - 'हे पुत्र ! तिमी भाद्र मासको कृष्णपक्षको चतुर्थी तिथिमा पार्वतीको सुन्दर चित्तबाट रात्रिको प्रथम प्रहरमा पैदा भएका थियौ । जुन भक्तले यस तिथिमा व्रत गर्दछन्, तिनले चिताएका कुरा पाउनेछन् ।' यसरी गृहरक्षक बालक पार्वतीपुत्र श्रीगणेशका नामबाट प्रख्यात हुनुभयो ।

## ब्रह्मपुराण

ब्रह्मपुराणमा श्रीगणेशको उत्पत्तिसन्दर्भ र महिमाबोधक अनेक प्रसङ्ग रहेका छन् । देवताहरूद्वारा प्रार्थना गरिएको पार्वतीले मनमा विघ्ननायक देवता मेरा पुत्र भएर पैदा होऊन् भन्ने चिन्तन गर्नासाथ श्रीगणेश पैदा हुनुभयो र संसारमा आनन्द छायो । बालक अवस्थामा आफू तृप्त हुँदाहुँदै पनि आमा पार्वतीका स्तन चुसिरहने र आफ्ना दाजु कार्तिकेयलाई स्तनपानको अवसर नदिने श्रीगणेशको ईर्ष्याभाव बुझेर शङ्करले भन्नुभएको थियो- 'हे विघ्नराज! तिमीले धेरै दूध पिउँछौ त्यस कारण तिमी लम्बोदरका नामबाट प्रसिद्ध हुनेछौ । अब तिमीले आफ्नो नृत्यकला देखाऊ' । पिताको आज्ञा पाएपछि बालभावले नाचेर श्रीगणेशले देवता, ऋषिमुनि सबैलाई आनन्दित तुल्याउनुभयो। श्रीगणेशको नृत्य देखी प्रसन्न हुनुभएका शिवजीले उहाँलाई गणनायकको पदमा अभिषिक्त गर्नुभयो । त्यसबेला देवताहरूले पनि श्रीगणेशको प्रार्थना गर्दै भनेका थिए - 'हे देव ! धर्म, अर्थ, काम र मोक्षको सिद्धिका लागि प्रथम पूजनीय देवताका रूपमा हामीले हजुरलाई नमस्कार गर्दछौं' ।

## मुद्गलपुराण

मुद्गलपुराणमा परब्रह्मरूप श्रीगणेशका आठ मुख्य अवतारहरूको निर्वचन गरिएको छ । अवतारवर्णनको सन्दर्भमा भनिएको छ - 'भगवान् श्रीगणेशका अनन्त अवतार छन्, तिनको वर्णन गर्नु सम्भव छैन । उहाँका मुख्य अवतारहरूमा ब्रह्मधारक आठ अवतारहरूको ठूलो महिमा छ ।' मुद्गलपुराणमा बताएअनुसार ती आठ मुख्य अवतारहरूको सङ्क्षिप्त परिचय प्रस्तुत गरिंदैछ ।

**वक्रतुण्डावतार** - देहब्रह्मको धारक वक्रतुण्डावतारमा श्रीगणेशले मत्सरासुरलाई मार्नुभएको थियो । त्यस अवतारमा उहाँको वाहन सिंह थियो । **एकदन्तावतार** - श्रीगणेशको दोस्रो एकदन्तावतार देहिब्रह्मको धारक मानिएको छ । यस अवतारमा श्रीगणेशले मदासुरनामक दैत्यको वध गर्नुभएको थियो । यस अवतारमा उहाँ मूषकवाहन हुनुहुन्थ्यो । **महोदरावतार**- श्रीगणेशको तेस्रो महोदरावतारलाई ज्ञानब्रह्मको प्रकाशक मानिएको

: सुन्दराङ्गो गजवक्त्रः सुरक्तकः । प्रसन्नवदनश्चेति सुपुत्रो ललिताकृतिः ।। - पूर्ववत्, १७/५७ ।

हुनुहुँदा देवता, ऋषि र मनुष्य प्रसन्न भए । सबैले आशीर्वाद र उपहार टक्र्याए । ब्रह्माजीले प्रथमपूजा हुने आशीर्वाद प्रदान गरे। बालकको दर्शन गर्न आएका शनिको क्रूर दृष्टिबाट बालक श्रीगणेशको शिर छिन्न भयो । श्रीनारायणले हात्तीको टाउको ल्याएर जोडेपछि श्रीगणेश गजानन बन्नुभयो ।

यस पुराणमा श्रीविष्णु र शिवजीमा तादात्म्य-सम्बन्ध रहेको विषयमा प्रकाश पारिएको छ । भगवान् विष्णुले शिवजीलाई भन्नुभयो- 'हे शिवजी ! पार्वतीबाट तपाईंलाई एउटा विघ्ननाशक पुत्र पैदा हुनेछ ।' त्यसपछि स्वयं विष्णु बालक बनेर कैलास जानुभयो र पार्वतीको शय्यामा बालकका रूपमा शयन गर्नुभयो । पार्वतीले ती बालकलाई पुत्र मान्नुभयो । ती पुत्र नै संसारमा श्रीगणेशका नामबाट विख्यात भए ।

## च) शिवपुराण

भगवान् शङ्कर र पार्वतीको माधुर्यमय दाम्पत्य जीवन चलिरहेको थियो । एक दिन पार्वती नुहाउन लाग्नुभएको समयमा सहसा शङ्करको प्रवेश हुँदा लजाउनुभयो । केही समयपछि उहाँले मनमा विचार गर्नुभयो - 'मेरो कोठाको ढोकामा कुनै गण द्वारपालको रूपमा रहेको भए आज मैले लजाउनु पर्ने थिएन । अब द्वारपालका रूपमा कुनै गणलाई राख्नुपर्छ ।' यसरी विचार गरेर पार्वतीले आफ्नो मयलबाट सर्वलक्षणसम्पन्न चेतन पुरुषको निर्माण गर्नुभयो ।[४३]

त्यस बालकलाई उहाँले भन्नुभयो - 'तिमी मेरा छोरा हौ । तिमी समान प्यारो अरू कुनै छैन ।' यो कुरा सुनेर बालकले भने - 'आमा ! हजुरका प्रत्येक आज्ञाको पालन गर्नेछु । अहिले के गरूँ आज्ञा गर्नुहोस् ।' पार्वतीले भन्नुभयो - 'बाबु ! तिमी मेरा द्वारपाल बन । मेरो आज्ञाविना कसैलाई पनि अन्तःपुरमा प्रवेश गर्नबाट रोकिदेऊ ।' त्यसपछि पार्वती बालकलाई दण्ड प्रदान गरी द्वारमा खटाएर आफ्ना सखीहरूका साथ स्नान गर्न जानुभयो । त्यस बेला गणेशनामक बालकको उत्पत्तिसन्दर्भबाट अपरिचित हुनुभएका शङ्कर पार्वतीको अन्तःपुरभित्र प्रवेश गर्न भनी आउनुभयो । उहाँ भित्र जान लाग्नु हुँदा द्वारपालरूप श्रीगणेशले रोकिदिनुभयो । शिवजीले बारबार संझाउँदा पनि श्रीगणेश आफ्नो नियममा अटल हुनुहुन्थ्यो । रिसाएका शिवजीले बालकलाई द्वारबाट हटाउन गणहरूलाई खटाउनुभयो, तर श्रीगणेशले ओजपूर्वक खरो जबाफ दिएर वीरता देखाई शिवगणलाई परास्त गर्नुभयो । शिवगणका साथमा भीषण युद्ध हुँदा शिवगण परास्त भए । ब्रह्मा र विष्णुसमेत शिवजीको सहयोगका निमित्त आउनुभयो । युद्धमा आएका सबै देवताहरू श्रीगणेशबाट परास्त भए । त्यसबेला देवताहरू भन्दै थिए - 'कहाँ जाने ? के गर्ने ? यस बालकले आफ्नो शस्त्र घुमाउँदा हामी विमूढ भएका छौं' ।[४४]

त्यसपछि ती सबैले भगवान् शिवजीसँग आत्मरक्षाका लागि आतुरभावले प्रार्थना गरे । प्रार्थना सुनेपछि स्वयं शिव, विष्णु आदि देवताहरूलाई लिएर युद्ध गर्न जानुभयो । सर्वप्रथम श्रीहरि र श्रीगणेशको प्रचण्ड सङ्ग्राम भयो । अनि शिव र श्रीगणेशको बीचमा डरलाग्दो युद्ध भयो । शिवजीले बालकमाथि त्रिशूल प्रहार गर्न लाग्दा महाशक्ति पार्वतीले आफ्ना बालक श्रीगणेशको सुरक्षाका लागि अपरिमित शक्ति प्रदान गर्नुभयो । शिवजीले प्रहार गर्नुभएको त्रिशूल लक्ष्यमा नपुगी भुईंमा खस्यो । उहाँको पिनाक धनु पनि असहाय भयो । यसरी युद्ध गर्दै जाँदा अन्तमा शिवजीले त्रिशूल प्रहार गरेर श्रीगणेशको टाउको काटिदिनुभयो । बालक श्रीगणेशको यो दशा देखेर रिसाएकी पार्वतीले आफ्ना शक्तिहरूलाई प्रलय मच्चाउन आज्ञा दिनुभयो । चारैतिर हाहाकार मच्चियो । देवताहरूले पार्वतीको

४३ विचार्येति च सा देवी वपुषो मलसम्भवम् । पुरुषं निर्ममौ सा तु सर्वलक्षणसंयुतम् ॥ - शि.पु. रु.सं. कु.खं. १३/२० ।

४४ किं कर्तव्यं क्व गन्तव्यं न ज्ञायन्ते दिशो दश । परिघं भ्रामयत्येष सव्यापसव्यमेव च ॥ - पूर्ववत् १५/५३ ।

छ । यस अवतारमा श्रीगणेशले मोहासुरको विनाश गर्नुभएको थियो र आफू पूर्ववत् मूषकवाहनका रूपमा प्रसिद्ध हुनुहुन्थ्यो । **गजाननावतार** - श्रीगणेशको चौथो अवतारलाई गजाननावतार भनिन्छ । यो अवतार सांख्यदर्शनका योगीहरूको उपकारक अवतारका रूपमा प्रसिद्ध छ । यस अवतारमा श्रीगणेशले मूषकवाहनका रूपमा रहेर लोभासुरको विनाश गर्नुभएको थियो । **लम्बोदरावतार** – भगवान् श्रीगणेशको पाँचौं अवतार शक्तिब्रह्मको धारक लम्बोदरावतारको रूपमा प्रसिद्ध छ । यस अवतारमा भगवान्‌ले क्रोधासुरमाथि विजय प्राप्त गर्नुभएको थियो । यस अवतारमा पनि उहाँ मूषकवाहन नै हुनुहुन्थ्यो । **विकटावतार** - श्रीगणेशको छैठौं अवतारलाई विकटावतार भनिन्छ । यो अवतार सौरब्रह्मको धारक, कामासुरको नाशक र मयूरवाहनका रूपमा प्रसिद्ध छ । **विघ्नराजावतार** - श्रीगणेशको सातौं अवतार विघ्नराजावतार हो । यो अवतार ममतासुरको विनाशक, विष्णु-ब्रह्मको धारक र शेषवाहनका रूपमा प्रसिद्ध छ । **धूम्रवर्णावतार** - श्रीगणेशको आठौं अवतार धूम्रवर्णावतार मानिएको छ । यस अवतारमा श्रीगणेशले अभिमानासुरमाथि विजय प्राप्त गर्नुभएको थियो । उहाँ यस अवतारमा शिवब्रह्मका धारक र मूषकवाहन हुनुहुन्थ्यो ।[१००]

यसरी मङ्गलमूर्ति आदिदेव परब्रह्म परमेश्वर श्रीगणेश गणपतिका प्रादुर्भावसम्बन्धी इतिवृत्तको सङ्क्षेपमा सङ्केत गरिएको छ । श्रीगणेशका विभिन्न अवतार र उत्पत्तिसन्दर्भलाई लिएर संशयापन्न मनःस्थितिमा पुगेका व्यासलाई एक दिन ब्रह्माजीले भन्नुभएको थियो - 'हे व्यास ! अनन्त शक्तिका स्वामी श्रीगणेशका नाना अवतार र लीलाका विषयमा संशय गर्नु उपर्युक्त हुँदैन । उहाँ आफै इच्छावश अनेक माता-पिताका पुत्र बनेर अवतरित हुनसक्नुहुन्छ । कल्पभेदले पनि उहाँका अवतार र लीलामा अन्तर देखिन सक्छ । कहीँ उहाँ शिवजीका मुखबाट, कहीँ शिवजीका क्रोधबाट पनि उत्पन्न हुनुभएका प्रसङ्ग छन् । कहीँ गौरीको तेजबाट, कहीं गौरीको गर्भबाट, कहीं गौरीको मयलबाट पनि श्रीगणेशको आविर्भाव भएका सन्दर्भहरू पाइन्छन् । कहीँ द्विमुख मुख श्रीगणेश, कहीँ द्विभज श्रीगणेश, कहीँ पञ्चमुख, कहीँ षड्मुख, कहीँ चतुर्भुज, यस्तै यहाँका अनेक स्वरूपगत भेदहरू देखिन्छन् । यी स्वरूपभेद र अवतार भेदलाई दृष्टिगत गरी सन्देह र आश्चर्य मान्नुहुँदैन । श्रीगणेश सर्वशक्तिमान् देवता हुनुभएकाले उहाँले जे पनि गर्न सक्नु हुन्छ ।[१०१]

यी अवतारहरूमा गरिएका कर्म र लीलाहरूको अध्ययन, अनुशीलन, मनन र चिन्तनबाट मङ्गल प्राप्त हुन्छ । यी अवतारहरूको पौराणिक महत्त्व आफ्नै ठाउँमा छ, त्योभन्दा पनि तिनमा व्यक्त भएको आध्यात्मिक पक्ष ज्यादै उच्चकोटिको छ । श्रीगणपति सर्वव्यापक परमात्मा हुनुहुन्छ र सबैका हृदयमा नित्य विराजमान हुनुहुन्छ । प्राक्तन संस्कार र सङ्गतिका कारण मानिसहरूका हृदयमा समय-समयमा प्रकट हुने आसुरी वृत्तिबाट जोगिन श्रीगणेशको उपासना नै सर्वोत्तम उपाय हो । आसुरी वृत्तिको दमन र दैवी वृत्तिको उदय एवं संवर्द्धनका लागि निर्गुण निराकार एवं ओङ्काररूप परमात्मा श्रीगणेशले सगुण एवं साकार रूपमा प्रकट भएर संसारको

---

१०० वक्रतुण्डावतारश्च देहानां ब्रह्मधारकः । मत्सरासुरहन्ता स सिंहवाहनगः स्मृतः ।
एकदन्तावतारो वै देहिनां ब्रह्मधारकः । मदासुरस्य हन्ता स आखुवाहनगः स्मृतः ॥
महोदर इति ख्यातो ज्ञानब्रह्मप्रकाशकः । मोहासुरस्य शत्रुर्वै आखुवाहनगः स्मृतः ॥
गजाननः स विज्ञेयः सांख्येभ्यः सिद्धिदायकः । लोभासुरप्रहर्ता वै आखुगश्च प्रकीर्तितः ॥
लम्बोदरावतारो वै क्रोधासुरनिबर्हणः । शक्तिब्रह्माखुगः सद् यत् तस्य धारक उच्यते ॥
विकटोनाम विख्यातः कामासुरविदाहकः । मयूरवाहनश्चायं सौरब्रह्मधरः स्मृतः ॥
विघ्नराजावतारश्च शेषवाहन उच्यते । ममतासुरहन्ता स विष्णुब्रह्मेतिवाचकः ॥
धूम्रवर्णावतारश्चाभिमानासुरनाशकः । आखुवाहन एवासौ शिवात्मा तु स उच्यते ॥ - मुद्गलपुराण, पृ. ३३५, कल्याण, गणेश विशेषाङ्कबाट उद्धृत ।

१०१ श्रीगणेशपुराण, २/१३९/८-९ ।

कल्याण गर्नुभएको छ । निर्गुणरूप अथवा सगुणरूप भगवान् श्रीगणेशको आश्रय नै मानवजन्मको सफलताका लागि कल्याणकारी उपाय हो ।

## ३.३ श्रीगणेशको स्वरूप-सौन्दर्य

प्रथम पूजनीय देवता श्रीगणेशको स्वरूप अचिन्त्य, अव्यक्त र अपार छ । उहाँको रूप परम आराध्य, असामान्य र योगिध्येय छ । उहाँ वेदवन्दित, मङ्गलात्मा, बुद्धिविधाता, सिद्धिसाधक परमेश्वर हुनुहुन्छ । उहाँको मुखमण्डल शिशुसमान सौम्य र सुन्दर छ । उहाँ सबैद्वारा सबै कालमा वन्दनीय हुनुहुन्छ । उहाँका अनेक स्वरूप शास्त्रहरूमा वर्णन गरिएका छन् । प्राप्त सामग्रीको आधारमा उहाँको स्वरूप-सौन्दर्यका विषयमा विचार प्रस्तुत गरिँदैछ ।

### क ) ध्येय स्वरूप

श्रीगणेश एकदन्त र चतुर्भुज हुनुहुन्छ । उहाँका चार हातहरूमा पाश, अङ्कुश, अभय र वरदमुद्रा शोभायमान छन् । उहाँ मूषकध्वज र मूषकवाहन पनि हुनुहुन्छ । उहाँ लम्बोदर, रक्तवस्त्र र शूर्पकर्ण पनि हुनुहुन्छ। रक्तचन्दन र रक्तपुष्पद्वारा पूजित श्रीगणनायकले भक्तहरूमाथि करुणादृष्टिको वृष्टि गर्नुहुन्छ । श्रीगणेश-अथर्वशीर्षअनुसार उहाँ संसारका हेतु र नित्यस्वरूप हुनुहुन्छ । सृष्टिभन्दा पहिले प्रकट हुनुभएका श्रीगणेश प्रकृति र पुरुषभन्दा पनि पर हुनुहुन्छ। योगीहरूले मात्र उहाँको स्वरूप-साक्षात्कार गर्न सक्दछन् । पद्मपुराणमा भगवान् वेदव्यासले श्रीगणेशको स्वरूप-सौन्दर्यको सुन्दर चित्रण गर्नुभएको छ – 'म विशालकाय, गालिएको सुनझैं स्वर्णिम प्रकाशले सम्पन्न लम्बोदर, विशालनयन र एकदन्त श्रीगणेशलाई प्रणाम गर्दछु । जसले मुञ्जको मेखला, कृष्ण मृगचर्म र सर्परूप यज्ञोपवीत धारण गर्नुभएको छ, जसका मस्तकमा बालचन्द्र शोभायमान छन्, ती गणनाथलाई प्रणाम गर्दछु । आफ्नो देहलाई अनेक रत्नहरूले सजाउनु हुने, अद्भुत मालाद्वारा शोभायमान र इच्छानुसार स्वरूप धारण गर्नुहुने श्रीगणनाथलाई प्रणाम गर्दछु । गजानन, सर्वदेवशिरोमणि, सुन्दरकर्णद्वारा शोभायमान र पाश एवं अङ्कुश धारण गर्नुहुने श्रीगणेशलाई प्रणाम गर्दछु ।'

**एकदन्तं महाकायं तप्तकाञ्चनसन्निभम् । लम्बोदरं विशालाक्षं वन्देऽहं गणनायकम् ।।**
**मुञ्जकृष्णाजिनधरं नागयज्ञोपवीतिनम् । बालेन्दुकलिकामौलिं वन्देऽहं गणनायकम् ।।**
**चित्ररत्नविचित्राङ्गं चित्रमालाविभूषणम् । कामरूपधरं देवं वन्देऽहं गणनायकम् ।।**
**गजवक्त्रं सुरश्रेष्ठं चारुकर्णविभूषितम् । पाशाङ्कुशधरं देवं वन्देऽहं गणनायकम् ।।**[१०२]

श्रीतत्त्वनिधि, मन्त्रमहोदधि, मन्त्ररत्नाकर, रूपमण्डन, शिल्परत्न, मन्त्रमहार्णव, अंशुमद्भेदागम, उत्तरकामिकागम, सुप्रभेदागम आदि अनेक ग्रन्थहरूमा भगवान् श्रीगणेशका विभिन्न किसिमका रूपहरूको वर्णन गरिएको छ । ती ती ग्रन्थहरूमा प्रतिपादन गरिएअनुसार भगवान् श्रीगणेश द्विभुज, चतुर्भुज, षड्भुज, अष्टभुज र षोडशभुज पनि हुनुहुन्छ। उहाँको शरीरमा रातो वर्णको कान्ति छाएको हुन्छ । शरदकालको चन्द्रमाझैं गोरो वर्णका देवताका रूपमा पनि उहाँको वर्णन गरिएको छ । उहाँ कतै स्वर्णपिङ्गल वर्णका, कतै रातो वर्णका, कतै सेतो वर्णका हुनुहुन्छ । उहाँ कतै सिंहवाहन, कतै मयूरवाहन, कतै अश्ववाहन र कतै मूषकवाहनका रूपमा पनि वर्णित हुनुहुन्छ।

---

१०२ पद्मपुराण, सृष्टिखण्ड, ६६/२-३, ८-७ ।

## ख ) सर्वाङ्गसुन्दर स्वरूप

श्रीगणेशपुराणमा ब्रह्माजीले श्रीगणेशको सर्वाङ्गसुन्दर स्वरूपको ध्यान गर्दै भन्नुभएको छ – मोतीरत्नजडित मुकुटद्वारा शोभायमान, रक्तचन्दनले चर्चित, मस्तकमा सिन्दूरधारण गरी सुहाउनुभएका श्रीगणेशको कण्ठमा माला चम्किएको छ । उहाँले शेषनागलाई यज्ञोपवीतका रूपमा धारण गर्नुभएको छ । उहाँले आफ्नो हातमा बहुमूल्य रत्नहरूबाट बनेको बाजुबन्द धारण गर्नुभएको छ । उहाँका औंलाहरूमा मरकतमणिबाट तयार गरिएका औंठीहरू सुहाएका छन् । उहाँको गम्भीर नाभिलाई चारैतिरबाट सर्पहरूले घेरिरहेका छन् । श्रीगणेशको कम्मरमा रत्नजडित काञ्ची सुहाएको छ । श्रीगणेशका राता वस्त्रहरूमा सुवर्णका तारहरू जडान गरिएका छन् । उहाँको निधारमा चन्द्रमा चम्किरहेको छ । उहाँको दन्तपङ्क्ति उज्ज्वल छ र हातहरू वरद आदि मुद्राहरूबाट अलङ्कृत छन् ।

**मुकुटेन विराजन्तं मुक्तारत्नयुजा शुभम् । रक्तचन्दनलिप्ताङ्गं सिन्दूरारुणमस्तकम् ।।**
**मुक्तादामलसत्कण्ठं सर्पयज्ञोपवीतिनम् । अनर्घ्यरत्नघटितबाहुभूषणभूषितम् ।।**
**स्फुरन्मरकतभ्राजदङ्गुलीयकशोभितम् । महाहिवेष्टितबृहन्नाभिशोभिमहोदरम् ।।**
**विचित्ररत्नखचितकटिसूत्रविराजितम् । सुवर्णसूत्रविलसद्रक्तवस्त्रसमावृतम् ।।**
**भालचन्द्रं लसद्दन्तशोभाराजत्करं परम् ।**[१०३]

स्वरूपबाट रूपको अभिव्यक्ति हुन्छ । रूपको अभिव्यक्तिका सम्बन्धमा पुराणहरूमा अनेक कथा पाइन्छन्। सबै कथाहरूले निष्कर्षरूपमा भगवान् श्रीगणेशको मुख हात्तीको मुखजस्तै हुनाले उहाँलाई गजानन, गजमुख, गजास्य, गजवदन आदि शब्द प्रयोग गरिएको कुरा व्यक्त गर्दछन् । श्रीगणेशको सम्पूर्ण शरीर मनुष्याकार छ तर मुख भने गजाकार छ । यही नै श्रीगणेशको विशेषता बनेर रहेको छ । श्रीगणेशपुराण उपासनाखण्डमा महाप्रलय भएपछि संसार नष्ट हुँदा सूक्ष्मरूपमा रहनुभएका दयालु श्रीगणेश प्रकट हुनुभएको देखेर ब्रह्मा, विष्णु र शङ्करले स्तुति गर्नुभएको वर्णन रहेको छ। त्यस बेला दयालु श्रीगणेशले तीनै देवताहरूका समक्ष आफ्नो सुन्दर स्वरूप प्रकट गर्नुभएको थियो । त्यो स्वरूपसौन्दर्य यसप्रकार वर्णित छ – 'त्यसपछि अत्यन्त दयालु, सम्पूर्ण रहस्यका ज्ञाता, त्रिलोकीका स्वामी श्रीगणेशले ब्रह्मा, विष्णु र शङ्करलाई आफ्नो सुन्दर स्वरूप देखाउनुभयो । श्रीगणेशका चरणकमलहरूका नङहरूबाट प्रकट भएका कान्तिमय रश्मिजालले कमलकेसरको शोभालाई परास्त गरेका थिए । श्रीगणेशको शरीरमा सुहाएका राता वस्त्रहरूको कान्तिबाट सन्ध्याकालिक सूर्यबिम्बको शोभा पनि परास्त भएको थियो । श्रीगणेशको कटिसूत्रको कान्तिले सुमेरुशिखरको सुषमा मन्द भएको थियो । उहाँका चारै हातमा खड्ग, खेट, धनु र शक्ति सुहाएका थिए । उहाँको नासिका अत्यन्त सुन्दर थियो । उहाँको मुखकमलको आभाले पूर्णिमा तिथिमा उदाउने चन्द्रमाको कान्तिलाई निस्तेज तुल्याएको थियो । कमलझैं सुन्दर श्रीगणेशका नयनहरू निरन्तर विकसित थिए । कोटि–कोटि सूर्यको कान्तिलाई परास्त गर्ने ज्योतिर्मय मुकुटको चहक चारैतिर फैलिएको थियो । असङ्ख्य ताराहरूद्वारा सम्पन्न आकाश पनि श्रीगणेशको उत्तरीयबाट प्रकट हुने कान्तिको समानता गर्न असमर्थ थियो । श्रीगणेशको एकदन्तको शोभाका सामु भगवान् वराहका दाह्रा निस्तेज थिए । श्रीगणेशको विशाल सूँढ देखेर ऐरावत आदि दिग्गजहरू सन्त्रस्त थिए ।'

---

१०३ श्रीगणेशपुराण, १/१४/२१-२६ ।

**दर्शयामास तान् रूपं मनोनयननन्दनम् । पादाङ्गुलीनखश्रीभिर्जितरक्ताब्जकेसरम् ।।**
**रक्ताम्बरप्रभावात् तु जितसन्ध्यार्कमण्डलम् । कटिसूत्रप्रभाजालैर्जितहेमाद्रिशेखरम् ।।**
**खड्गखेटधनु:शक्तिशोभि चारुचतुर्भुजम् । सुनासं पूर्णिमाचन्द्रजितकान्तिमुखाम्बुजम् ।।**
**अहर्निशं प्रभायुक्तं पद्मचारुसुलोचनम् । अनेकसूर्यशोभाजिन्मुकुटभ्राजिमस्तकम् ।।**
**नानाताराङ्कितव्योमकान्तिजिदुत्तरीयकम् । वराहदंष्ट्राशोभाजिदेकदन्तविराजितम् ।।**
**ऐरावतादिदिक्पालभयकारि सुपुष्करम् ।।**[१०४]

## ग ) ज्योतिर्मय स्वरूप

श्रीगणेशको रूपसौन्दर्यको मूल्याङ्कन गर्न असाधारण प्रतिभा भएको मानिसमात्र समर्थ हुन्छ । राजा वरेण्यले श्रीगणेशको रूपसौन्दर्य साक्षात्कार गरेका थिए । उनले श्रीगणेशगीतामा भनेका छन् – हे प्रभु ! हजुर अनादि एवं अनन्त हुनुहुन्छ । सम्पूर्ण लोकहरूको रचना गर्ने प्रथम कारण हुनुहुन्छ। हजुर अनन्त भुजा र अनन्त शिरले शोभायमान हुनुहुन्छ । हजुर बलिरहेको अग्निझैं ज्योतिर्मय हुनुहुन्छ । हजुर अप्रमेय र पुरातन हुनुहुन्छ । हजुरले किरीट र कुण्डल धारण गर्नुभएको छ । हजुरको रूपदर्शन सबैका लागि सहज-सुलभ छैन । हजुर आनन्दका कोष हुनुहुन्छ र हजुर विशाल छातीले सुहाउनुभएको छ । म यस्तो स्वरूपसौन्दर्यले सम्पन्न हजुरको दर्शन गरिरहेको छु ।

**अनाद्यनन्तं लोकादिमनन्तभुजशीर्षकम् । प्रदीप्तानलसङ्काशमप्रमेयं पुरातनम् ।।**
**किरीटकुण्डलधरं दुर्निरीक्ष्यं मुदावहम् । एतादृशं निरीक्षे त्वां विशालवक्षसं प्रभुम् ।।**[१०५]

## घ ) आह्लादक स्वरूप

श्रीगणेशपुराणमा सिन्दूरधारी र कमल सुषमाले अनुप्राणित श्रीगणेशको इन्द्रसमक्ष आविर्भाव हुँदा देखिएको आह्लादक स्वरूपको वर्णन गर्दै भनिएको छ – कमलझैं सुन्दर नयनले सुहाउनुभएका, विशाल सूँढको टुप्पामा सुन्दर कमलकलिका धारण गर्नुहुने, आफ्नो सुन्दर कण्ठमा कमलको माला लगाउनुभएका सिन्दूररञ्जित र सकल देवताका पूञ्जीभूत स्वरूप श्रीगणेश आह्लादक बनेर इन्द्रका सामु प्रकट हुनुभयो ।

**य: पुष्कराक्ष: पृथुपुष्करोऽपि बृहत्कर: पुष्करशालिमाल: ।**
**आविर्बभूवाखिलदेवमूर्ति: सिन्दूरशाली पुरतो मघोन: ।।**[१०६]

## ङ ) सिन्दूराभ स्वरूप

श्रीगणेशका भक्त भुशुण्डीले रुचाएको लीलामय श्रीगणेशको सुन्दरस्वरूपको वर्णन गर्दै भनिएको छ – दिव्य परिधानले सुहाउनुभएका, दशभुज, मोतीको मालाद्वारा अलङ्कृत, वरिपरि सिद्धि र बुद्धि लिएर रहनुभएका, कानमा कुण्डल धारण गर्नुहुने, लामो सूँढ लर्काएर उभिनुभएका, लामा लामा कानले सुहाउनुभएका, शरीरभरि छरिएको सिन्दूरको रातो कान्तिले कान्तिमय देखिनुहुने, नाभिमा सर्पराज शेषनागलाई लपेटेर रहनुभएका, पाउमा

---

१०४. पूर्ववत्, २/१२/३३-३८ ।
१०५. पूर्ववत्, २/१४५/११-१२ ।
१०६. पूर्ववत्, १/३४५ ।

रहेको नूपुरको मधुरनादले शब्दायमान, मस्तकमा विशाल मुकुट धारण गर्नुहुने, दशथरि आयुधद्वारा अलङ्कृत दशभुजा धारण गर्नुहुने, एउटा दाँतले सुहाउनुभएका, निधारमा चन्द्रमा धारण गर्नुहुने, पाउमा एवं कण्ठमा रहेका साना-साना घण्टीका ध्वनिले दिगन्तलाई ध्वनित गर्नुहुने, मयूरमा सवार हुनुभएका र सम्पूर्ण देवताहरूद्वारा वन्दित श्रीगणेश शोभायमान हुनुहुन्छ ।

**दिव्याम्बरो दशभुजो मुक्तामालाविभूषितः। सिद्धिबुद्धियुतः कर्णकुण्डलाभ्यां विराजितः।।**
**शुण्डादण्डमुखो लम्बकर्णः सिन्दूरमण्डितः। अहिशोभिमहानाभिः क्वणच्चरणनूपुरः।।**
**महामुकुटशोभाढ्यो दशायुधलसत्करः। एकदन्तो भालचन्द्रः क्षुद्रघण्टाविराजितः।।**[१०७]

## च ) स्वानन्दधाममा देदीप्यमान स्वरूप

आफ्नो विशिष्ट धाम स्वानन्दभुवनमा सुन्दर बालक बनेर आफ्नो स्वरूपसौन्दर्यको नयनाभिराम र हृदयाभिराम सुषमा फैलाउन हुने श्रीगणेशको चित्रण यसरी गरिएको छ - सुकोमल अङ्गले सुहाउनुभएका, बालारुण कान्तिले देदीप्यमान, बालक सुहाउँदो सानो सूँढ धारण गर्नुहुने, ठूला-ठूला आँखाले हेर्नुहुने, एकदन्तधारी, अत्यन्त चम्किला र राम्रा वस्त्र लगाउनुभएका, आफ्नो बाजूबन्धमा केयूर, कानमा कुण्डल र निधारमा कस्तूरीको तिलक धारण गनुहुने स्वप्रकाशद्वारा प्रकाशमान, दिव्य गन्धको लेपन गरेर चारैतिर मोहक वास्ना फैलाउनु हुने, मोती र मणिले सज्जिएको रत्नमय माला धारण गर्नुहुने, अनन्तकोटि सूर्यका तेजले धप्प बल्नुभएका, शिरमा बालचन्द्रमा धारण गर्नुहुने र भगवती गङ्गाले झैं आफूलाई स्मरण गर्ने भक्तहरूका सम्पूर्ण पापराशि पखाल्नु हुने भगवान् बालगणेश स्वानन्दभुवनमा विराजमान हुनुहुन्छ ।

**बालरूपधरस्तत्र शुण्डादण्डविराजितः । कोमलाङ्गोऽरुणनिभो विशालाक्षो विषाणवान् ।।**
**मुकुटी कुण्डली राजत्कस्तूरीतिलकः स्वराट् । दिव्यमाल्याम्बरधरो दिव्यगन्धानुलेपनः ।।**
**मुक्तामणिगणोपेतं सरत्नं दाम संदधत् । अनन्तकोटिसूर्योजाश्चन्द्रार्धकृतशेखरः।।**
**स्मरणात् पापहा सद्यः स्मृता गङ्गा यथा नृणाम् ।।**[१०८]

## छ ) दिव्य नर्तकस्वरूप

मयूरेशावतार श्रीगणेश बाह्रौं महिनामा लाग्नुहुँदा पार्वतीले काखमा लिएर खेलाउनुभयो । त्यसबेला पार्वतीका मनमा बालगणेशको नृत्य हेर्ने इच्छा अङ्कुरित भयो । माता पार्वतीसमेत पिता शिव र बालमित्रहरूको नृत्य हेर्ने इच्छा थाहा पाएर पार्वतीनन्दन बालगणेश थैया थैया गर्दै नृत्य गर्न लाग्नुभयो । बालगणेशका नृत्यको थैया-थैया एवं थेयी-थेयी शब्द सुनेर भगवान् शिवजी नाच्न लाग्नुभयो । सदाशिवलाई नाचिरहनुभएको देखेर भगवान् नारायण नाच्नुभयो । त्यसपछि इन्द्र आदि देवता आएर नाच्न लागे । ती देवताहरूका साथ सचेतन र अचेतन सबै नाच्न थाले । श्रीगणेशकै गतिमा स्वयम् पृथिवी पनि नाच्न थालिन् । अर्कोतर्फ मुनिपत्नी र देवपत्नीहरू पनि भगवती पार्वतीसँग नृत्य गरिरहेका थिए । नूपुरको ध्वनि, घुँघरुको नाद र सबैका चरणाघातका शब्दले दिशा-विदिशा, आकाश एवं पर्वत सबै नादमय बनेका थिए । त्यसबेला बालगणेशको नृत्य र नृत्यजन्य ध्वनिका कारण पृथिवी, शेष, कूर्म, सूर्य-चन्द्र र ताराहरू पनि कम्पायमान भए ।

१०७ तुरुङ्द्र २।१३।२०-२३ ।
१०८ तुरुङ्द्र २।२०।१३-१९ ।

**बालकानां हरस्याऽथ ज्ञात्वा वाञ्छां शिशुस्तदा । थेयीथेयीति शब्देन ननर्त गिरिजासुतः ।।
श्रुत्वा तदीयं तं शब्दं हरो नर्तितुमागतः । शिवं नृत्यन्तमालोक्य ननर्त श्रीवरोऽपि च ।।
तत इन्द्रादयो देवास्तत्र नर्तितुमागताः । स यथा नर्तते बालस्तेऽपि नृत्यन्ति तादृशम् ।।
दर्शयन्ति तथा भावं स यथा दर्शत्यपि । मनुष्याः पशवो वृक्षा यक्षराक्षसपन्नगाः ।।
मुनयो मानवो भूपा भुवनानि चतुर्दश । एकविंशतिस्वर्गस्थाः सचेतनमचेतनम् ।।
बालप्रभावान्ननृते बालच्छन्देन भूतलम् । मुनिपत्न्यो देवपत्न्यो ननृतुर्गिरिकन्यया ।।
नूपुराणां सिञ्जितेन क्षुद्रघण्टारवेण च । पादाघातस्य शब्देन दिशो विदिश एव च ।।
गगनं पर्वता आसन् नादयुक्तास्तदा मुने । चकम्पे धरणी शेषो रविश्चन्द्रश्च तारकाः ।।**[१०९]

### ज) विराट् स्वरूप

बालगणेशले नरान्तकसँग युद्ध गर्दा त्यसलाई विराट् रूपको चरम सौन्दर्य देखाउनुभएको थियो । उहाँले वीरताको चरमोत्कर्षमा पुगेर विराट् रूप देखाउनु हुँदा उहाँको मस्तक आकाशभन्दा पनि माथि पुगेको देखिन्थ्यो। उहाँका पाउले पाताल ढाकियो र कान आठै दिशामा फैलिए । सम्पूर्ण वृक्षपङ्क्तिमा उहाँका रोमावली बन्न पुगे । उहाँको एउटा रोमाञ्चमा कोटि-कोटि ब्रह्माण्डहरू चक्कर काटिरहेका थिए । सम्पूर्ण सागरहरू वीर श्रीगणेशका पसिनाको रूपमा टल्किरहेका थिए । श्रीगणेशको नङका टुप्पामा ३३ कोटि देवताहरू अटाएका थिए । श्रीगणेशका पेटको एउटा कुनामा चौध भुवन अडिएका देखिन्थे ।

**विनायकं विराड्रूपं गगनोर्ध्वगमस्तकम् । पातालव्याप्तचरणं दिक्छ्रोत्रं वृक्षरोमकम् ।।
भ्रमद्ब्रह्माण्डरोमाञ्चपयोधिश्रमबिन्दुकम्। नखाग्रे यस्य देवानां भान्ति त्रिंशत्त्रिकोटयः।।
उदरे भान्त्येकदेशे भुवनानि चतुर्दश। ततो विनायको दैत्यं मर्दयामास तत्क्षणात् ।।**[११०]

अनेक प्राचीन ग्रन्थहरूमा श्रीगणेशका विभिन्न रूपहरूको ध्यान गर्ने पद्धतिको वर्णन पाइन्छ । ती ग्रन्थहरूमा झैं श्रीगणेशपुराणमा पनि विश्वप्रपञ्चमा व्याप्त भएर रहनुहुने श्रीगणेशको ध्यान र स्तुति गरिएको छ । त्यसको एउटा पद्यको भाव यसप्रकार छ - प्रकृतिरूप, महत्तत्त्वरूप, पृथिवीरूप, जलरूप, दिक्पालरूप, सद्रूप, असद्रूप, जगत्का कारण, विश्वरूप र विश्वव्यापक श्रीगणेशको हामी वन्दना गर्दछौं ।

**प्रधानस्वरूपं महत्तत्त्वरूपं धरावारिरूपं दिगीशादिरूपम् ।
असत्सत्स्वरूपं जगद्धेतुभूतं सदा विश्वरूपं गणेशं नताः स्मः ।।**[१११]

## ३.४ स्वरूप-सौन्दर्यका साधकतत्त्व

आराध्य देवता श्रीगणेश निराकार एवं साकार दुवै दृष्टिबाट सुन्दर हुनुहुन्छ । निराकार सौन्दर्यको अनुभूति योगीहरूमात्र गर्न सक्दछन्। साकारसौन्दर्यको अनुभूति साकार श्रीगणेशको उपासना गर्ने भक्तहरूको हृदयको विषय बन्दछ। यहाँ साकार श्रीगणेशका सौन्दर्य साधकतत्त्वहरूमध्ये केही तत्त्वहरूको सामान्य परिचय प्रस्तुत गरिँदैछ ।

१०९. पूर्ववत्, २/९०/६-१० ।
११०. पूर्ववत्, २/६३/३१-३३ ।
१११. पूर्ववत्, १/१३/१३ ।

## क ) अङ्ग-प्रत्यङ्ग, अलङ्कार, माला र यज्ञोपवीत

भगवान् श्रीगणेशका अङ्ग-प्रत्यङ्ग तथा अलङ्कार सबैमा उहाँकि ज्योतिर्मय स्वरूपको आभा तरङ्गित हुने गर्दछ । श्रीगणेशले सूर्य, चन्द्रमा, पवन, लक्ष्मी, सरस्वती र सावित्रीबाट अलङ्कार तथा आभूषण प्राप्त गर्नुभएको छ । उहाँका आभूषणहरू प्राय: स्वर्णिम रङ्गका छन् । स्वर्णाभूषणको स्वर्णिम कान्ति फैलिनाले उहाँ उदयकालका सूर्यसमान आकर्षक आभाले देदीप्यमान हुनुहुन्छ। स्तवकवचमालानामक ग्रन्थमा विघ्ननाशक श्रीगणेशका चरणरजको महिमा बताउँदै भनिएको छ - इन्द्रको मस्तकमा रहेको मन्दारपुष्पको मकरन्दकणिकासँग एकाकार भई रङ्गीन बन्न पुगेका भगवान् श्रीगणेशका चरणरज समस्त विघ्ननाश गर्न समर्थ छन् ।[११२]

श्रीगणेशको नाभिलाई सर्पहरूले वेष्टन गरेका प्रसङ्ग पुराणहरूमा छरिएका छन् । उहाँको वक्षस्थलमा नागयज्ञोपवीत सुहाएको छ । श्रीगणेशका कण्ठमा मणिजडित माला र पुष्पमाला रहने कुरा श्रीगणेशपुराणका विभिन्न प्रसङ्गमा वर्णन गरिएको छ । एकदन्तधारी श्रीगणेश पुरुष र प्रकृतिको एकताको प्रतीक एकदन्त शब्दबाट ज्यादै प्रसिद्ध हुनुहुन्छ । उहाँले मोती र रत्नबाट निर्मित सुन्दर मुकुट धारण गर्नुहुन्छ - **मुकुटेन विराजन्तं मुक्तारत्नयुजा शुभम्** ।[११३]

श्रीगणेशपरक प्रसिद्ध पद्यमा श्रीगणेशका अन्य विशेषताका साथै उहाँको मदधाराप्लुत, भ्रमरसेवित, गण्डस्थलको सुन्दर वर्णन गरिएको छ ।[११४]

## ख ) आयुध र मोदक

भगवान् श्रीगणेश विघ्ननाशक हुनुहुन्छ । उहाँका असङ्ख्य आयुधहरू छन् । उहाँले ती आयुधहरूको प्रयोग विघ्ननाशका लागि गर्नुहुन्छ । उहाँका दश आयुध मुख्य मानिएका छन् - वज्र, शक्ति, दण्ड, खड्ग, पाश, अङ्कुश, गदा, त्रिशूल, पद्म र चक्र। शिवजीले त्रिपुरासुरलाई पराजित गर्न श्रीगणेशको आराधना गरी प्रसन्न तुल्याउनुभयो। प्रसन्नात्मा श्रीगणेश शिवजीसामु प्रकट हुनुहुँदा पञ्चमुख, दशबाहु र दश आयुधले सुहाउनुभएको वर्णन गरिएको छ ।[११५] श्रीगणेशका हातहरूमा दश आयुधका साथै ध्वज, बाण, धनुष, कमण्डलु, इक्षुदण्ड, दन्त, मुद्गर आदि आयुध र पात्रहरू पनि शोभायमान हुन्छन् । उहाँ अनेक श्रीविग्रहबाट सम्पन्न हुनुहुन्छ । श्रीगणेशका सबै प्रकारका श्रीविग्रहमा अङ्कुश भने रहेकै हुन्छ ।

तरुणगणपतिको एउटा ध्यानपद्यमा पाश, अङ्कुश, अपूप, कपित्थ, जम्बू, दन्त, इक्षुदण्ड धारण गर्नुहुने श्रीगणेशको स्वरूप चित्रण गरिएको छ ।[११६] यसै गरी त्यहाँ अभयमुद्रा, वरदमुद्रा, पाश, दन्त, अक्षमाला, सृणि, परशु, मुद्गर, मोदक र फल धारण गर्नुहुने सिंहास्य, सिंहवाहन हेरम्बगणपतिको ध्यान गरिएको छ ।[११७] मोदकलाई

---

११२ देवेन्द्रमौलिमन्दारमकरन्दकणारुणा: । विघ्नान् हरन्तु हेरम्बचरणाम्बुजरेणव: ॥
रामलाल, 'श्रीगणेशजी के परिधान, आभूषण, आयुध, परिवार, पार्षद् और वाहन आदि', कल्याण, पूर्ववत्, पृ. १७५ ।

११३ श्रीगणेशपुराण, १/१४/२१ ।

११४ खर्वं स्थूलतनुं गजेन्द्रवदनं लम्बोदरं सुन्दरं प्रस्यन्दन्मधुगन्धलुब्धमधुपव्यालोलगण्डस्थलम् ।
दन्ताघातविदारितारिरुधिरैः सिन्दूरशोभाकरं वन्दे शैलसुतासुतं गणपतिं सिद्धिप्रदं कामदम् ॥
- रामलाल, 'श्रीगणेशजी के परिधान, आभूषण, आयुध, परिवार, पार्षद् और वाहन आदि', कल्याण, पूर्ववत्, पृ. १८१ ।

११५ पञ्चवक्त्रो दशभुजो ललाटेन्दुः शशिप्रभः । मुण्डमाली सर्पभूषो मुकुटाङ्गदभूषणः ॥
अग्न्यर्कशशिनो भाभिस्तिरस्कुर्वन् दशायुधः । तद्भासा धर्षितो देवोऽपश्यत्पुरं पुरःस्थितम् ॥ - श्रीगणेशपुराण, १/४४/२६-२७ ।

११६ पाशाङ्कुशापूपकपित्थजम्बूस्वदन्तशालीक्षुमपि स्वहस्तैः । धत्ते सदा यस्तरुणारुणाभः पायात् स युष्मांस्तरुणो गणेशः ॥ - रामलाल, 'श्रीगणेशजी के परिधान, आभूषण, आयुध, परिवार, पार्षद् और वाहन आदि', कल्याण, पूर्ववत्, पृ. १७७ ।

११७ अभयवरदहस्तः पाशदन्ताक्षमालासृणिपरशु दधानो मुद्गरं मोदकञ्च । फलमधिगतसिंहः पञ्चमातङ्गवक्त्रो गणपतिरतिगौरः पातु हेरम्बनामा ॥ - पूर्ववत् ।

महाबुद्धिको परिचायक मानिएको छ र श्रीगणेश मोदकप्रिय मानिनुहुन्छ । उहाँले आफ्नो हातमा नित्य मोदकपात्र धारण गर्नुहुन्छ । हिमालयद्वारा पार्वतीलाई श्रीगणेशध्यानविधिको उपदेश दिने क्रममा मोदकधारी ध्येय श्रीगणेशको वर्णन गरिएको छ ।[११८]

पद्मपुराणको सृष्टिखण्डमा मोदकको निर्माण अमृतबाट भएको भनिएको छ । कुनै समयमा देवताहरूले भगवती पार्वतीलाई अमृतबाट बनेको मोदक समर्पण गरेका थिए । स्कन्द र श्रीगणेश दुवै त्यो मोदक प्राप्त गर्न लालायित भए । पार्वतीले भन्नुभयो – 'बाबु हो ! यस मोदकलाई सुँघ्नाले मात्र अमरत्व प्राप्ति हुन्छ । सुँघ्ने साधक ज्ञान–विज्ञानको ज्ञाता सर्वज्ञ बन्दछ । तिमी दुई भाइमा जुन धर्माचरणमा श्रेष्ठता प्राप्त गरी मेरो समीपमा आउनेछ त्यसलाई नै मैले यो मोदक दिनेछु ।' परिणामस्वरूप पृथिवी परिक्रमा गर्ने सन्दर्भमा माता–पिताको पूजा गरी सात पटक परिक्रमा गरेका कारण श्रीगणेश धर्माचरणमा प्रथम भई सर्वप्रथम माता–पिताका सामु आउनुभएकाले पार्वतीले उहाँलाई नै मोदक प्रदान गर्दै भन्नुभयो – 'म देवनिर्मित मोदक श्रीहेरम्ब अर्थात् श्रीगणेशलाई प्रदान गर्दछु ।'[११९] उक्त पौराणिक प्रसङ्गबाट श्रीगणेशको मोदकप्रियता प्रमाणित हुन्छ ।

## ग ) वाहन, आसन र छत्र

शास्त्र र पुराणहरूमा सिंह, मयूर, मूषक र अश्व (घोडा)लाई श्रीगणेशका वाहन बताइएको छ । वाहन र भुजाहरूको विषयमा श्रीगणेशपुराणमा यसरी वर्णन गरिएको छ – 'सत्ययुगमा श्रीगणेश सिंहवाहन, दशभुज, तेजोमय, विशालकाय, वरदायक र विनायक नामबाट प्रसिद्ध हुनुहुन्छ । त्रेतायुगमा – उहाँ मयूरवाहन, षड्भुज, गौरवर्ण र मयूरेश्वरका नामबाट विख्यात हुनुहुन्छ । द्वापरयुगमा रक्तवर्ण, मूषकवाहन, चतुर्भुज, देव–मानववन्दित र गजानन नामबाट प्रसिद्ध हुनुहुन्छ । कलियुगमा धूम्रवर्ण, अश्ववाहन, द्विभुज र धूम्रकेतुका नामबाट प्रसिद्ध हुनुहुन्छ ।'[१२०]

उक्त शास्त्रीय प्रमाण हुँदाहुँदै पनि श्रीगणेश मूषकवाहनका रूपमा संसारमा चिनिनुहुन्छ । उहाँलाई पृथिवीले वाहनका रूपमा मूसो प्रदान गरेकी थिइन् ।[१२१] श्रीगणेशपुराणअनुसार सौभरि ऋषिको सराप पर्नाले क्रौञ्च नामक गन्धर्व मूसो बनेको थियो । भगवान् श्रीगणेशले त्यसलाई वाहनका रूपमा स्वीकार गर्नुभयो ।[१२२]

श्रीगणेशको स्वरूप मानवीय सामान्य बुद्धिद्वारा गम्य छैन । उहाँको स्वरूप र वैभवको महिमालाई उहाँकै करुणाबाट मात्र जान्न सकिन्छ । सिद्धि–बुद्धिद्वारा सेवित, समस्त अलङ्कार एवं आयुधद्वारा अलङ्कृत, सिन्दूरकान्ति र मङ्गलमूर्ति श्रीगणेशको अलौकिक सौन्दर्यको आस्वाद पुण्यवान् साधकहरूले मात्र पाउँछन् । गणाधीश्वर वा गणराजराजेश्वरलाई साक्षात् जननी जगदम्बिका पार्वतीले पूजाको अवसरमा स्वर्णसिंहासन प्रदान गर्नुभएको थियो।[१२३]

---

११८. एकदन्तं शूर्पकर्णं गजवक्त्रं चतुर्भुजम् । पाशाङ्कुशधरं देवं मोदकान् बिभ्रतं करैः ॥ – श्रीगणेशपुराण, १/४१/२१ ।

११९. अतो ददामि हेरम्बे मोदकं देवनिर्मितम् – पद्मपुराण, सृ.खं. ६७/१९ ।

१२०. सिंहारूढो दशभुजः कृते नाम्ना विनायकः । तेजोरूपी महाकायः सर्वेषां वरदो वशी ॥
त्रेतायुगे बर्हिरूढः षड्भुजोऽप्यर्जुनच्छविः । मयूरेश्वरनाम्ना च विख्यातो भुवनत्रये ॥
द्वापरे रक्तवर्णोऽसावाखुरूढश्चतुर्भुजः । गजानन इति ख्यातः पूजितः सुरमानवैः ॥
कलौ तु धूम्रवर्णोऽसावश्वारूढो द्विहस्तवान् । धूम्रकेतुरिति ख्यातो म्लेच्छानीकविनाशकृत् ॥ – श्रीगणेशपुराण, २/१/१८–२१ ।

१२१. वसुन्धरा ददौ तस्मै वाहनाय च मूषकम् । – ब्रह्मवैवर्तपुराण, गणपतिखण्ड १३/१२ ।

१२२. श्रीगणेशपुराण, २/१३५ ।

१२३. स्वर्णं सिंहासनं दिव्यं नानारत्नसमन्वितम् । समर्पितं मया देव ! तत्र त्वं समुपाविश ॥ – पूर्ववत्, १/४९/२५ ।

यसै गरी देवराज इन्द्रले श्रीगणेशलाई महिमामय रत्नसिंहासन समर्पण गरेका थिए ।[१२४] पुष्पदन्तले सिंहासनासीन श्रीगणपतिको हृदयाभिराम सौन्दर्य साक्षात्कार गर्दै भनेका छन् - 'अमूल्य अलङ्कार, रत्न, वस्त्रद्वारा अलङ्कृत, ज्ञानका स्वामी गजानन सिंहासनमा राज हुनुहुँदा अत्यन्त सुषमासुन्दर देखिनुहुन्छ । आफ्नो मुहारबाट मन्द मुस्कानका सेता किरण छर्नुहुँदा उदयाचलबाट उदाउँदै गरेका सूर्यबिम्बसमान अरुणाभ देखिनुहुन्छ । उहाँको बायाँ भागमा रहेकी सिद्धि र दायाँ भागमा रहेकी बुद्धिले चमर डुलाएर निरन्तर सेवा गरिरहेका हुन्छन् ।[१२५] श्रीगणेशको दिव्यसिंहासनको शोभा दिव्य रत्नछत्रले बढाउँछ । त्यो रत्नछत्र उहाँलाई वरुणले प्रदान गरेका थिए ।[१२६]

वस्तुतः श्रीगणेशको वेषभूषा, अलङ्कार, पार्षद, आयुध र वाहन दिव्य सौन्दर्यले जगमगाइरहेका हुन्छन् । यी सबैको चिन्तनबाट साधक परममङ्गलको भाजन बन्ने कुरामा कुनै सन्देह छैन ।

### घ ) पार्षद

रूपमण्डननामक ग्रन्थमा श्रीगणेशका पार्षद अथवा प्रतीहारहरूको विवरण दिइएको छ । तिनले श्रीगणेशमन्दिर वा श्रीगणेशधाममा रहेर द्वारपालको काम गर्दछन् । एउटा-एउटा द्वारमा दुई-दुई प्रतीहार रहने व्यवस्था छ । तिनका नाम यस प्रकार छन् - अविघ्न, विघ्नराज, सुवक्त्र, बलवान्, गजकर्ण, गोकर्ण, सुसौम्य र शुभदायक । श्रीगणेशमन्दिरमा उहाँका श्रीविग्रहको बायाँभागमा गणकर्ण, दायाँ भागमा सिद्धि, उत्तरमा गौरी, पूर्वमा बुद्धि, दक्षिण-पूर्वमा बालचन्द्र, दक्षिणमा सरस्वती, पश्चिममा कुबेर र पछाडि धूम्रकका प्रतिमाहरूको स्थापना गर्नुपर्ने कुरा बताइएको छ ।[१२७]

### ङ ) परिवार

श्रीगणेश ओङ्काररूप हुनु भए तापनि लोकको कल्याणका लागि अवतरित हुनुहुँदा माता पार्वती र पिता शङ्करका पुत्रका रूपमा लीला गर्नुहुन्छ । उहाँको साकार लीलाका अवसरमा पत्नी, सिद्धि एवं बुद्धि र पुत्र क्षेम एवं लाभ भएको तथ्य श्रीगणेशपुराणलगायतका वाङ्मयमा व्यक्त भएको छ ।

श्रीगणेशपुराणअनुसार एक दिन ब्रह्माजीले श्रीगणेशको आराधना गर्नुभयो । आराधनाको अवसरमा त्यहाँ दुइटी सुन्दर कन्या उपस्थित भए । ती कन्याहरूका आँखा आकर्षक र मुख प्रसन्न थिए । अनेकथरि रत्नले सजिएका र दिव्यगन्धले सम्पन्न ती युवतिहरूले आकर्षक वस्त्र धारण गरेका थिए । तिनका सुन्दर कण्ठहरूमा दिव्य माला सुहाएका थिए । ब्रह्माजीले दक्षिणाको रूपमा ती दुई कन्या श्रीगणेशलाई अर्पित गरी कपूरले आरती गरेर पुष्पाञ्जलि टक्र्याउनुभयो । एक हजार नाम जपेर स्तुति एवं प्रदक्षिणा गरी प्रणाम गर्दै भन्नुभयो- 'हे श्रीगणेश! तपाई दीन-दुःखीहरूका कल्याणकारी हुनुभएकाले मेरो पनि कल्याण गर्नुहोस् ।' यसरी ब्रह्माजीद्वारा पूजित र प्रार्थित श्रीगणेश प्रसन्न भएर उहाँद्वारा टक्र्याइएका कन्याहरू सिद्धि र बुद्धिलाई पत्नीका रूपमा स्वीकार गरी

१२४ *रत्नसिंहासनं शक्रः । - ब्रह्मवैवर्तपुराण, गणपतिखण्ड १३/८ ।*

१२५ *अनर्घ्यालङ्कारैररुणवसनैर्भूषिततनुः करीन्द्रास्यः सिंहासनमुपगतो भाति बुधराट् ।*
*स्मितास्यात्तन्मध्येऽप्युदितरविबिम्बोपमरुचिः स्थिता सिद्धिर्वामे मतिरितरगा चामरकरा ॥*
*- रामलाल, 'श्रीगणेशजी के परिधान, आभूषण, आयुध, परिवार, पार्षद् और वाहन आदि', कल्याण, पूर्ववत्, पृ. १९० ।*

१२६ *रत्नछत्रञ्च वरुणः - ब्र.वै.पु. गणपतिखण्ड, १३/९ ।*

१२७ *वामाङ्गे गजकर्णन्तु सिद्धिं कुर्यात्तु दक्षिणे । पूर्वदेशे तथा द्वौ च धूम्रको बालचन्द्रमाः ॥*
*उत्तरे तु सदा गौरी याम्ये चैव सरस्वती । पश्चिमे यक्षराजश्च बुद्धिः पूर्वे व्यवस्थिता ॥*
*- रामलाल, 'श्रीगणेशजी के परिधान, आभूषण, आयुध, परिवार, पार्षद् और वाहन आदि', कल्याण, पूर्ववत्, पृ. १८८ ।*

अन्तर्धान हुनुभयो ।[१२८]

श्रीगणेशपुराणमा अनिर्वाच्य रूपका हुनुभए तापनि लीला गर्न मुनिका सामु आउनुभएका करोडौं सूर्यभन्दा पनि तेजिला, सिद्धि र बुद्धिका स्वामी श्रीगणेशले गृत्समद ऋषिलाई दर्शन दिनुभएको विषय वर्णन गरिएको छ ।[१२९] शिवपुराणमा श्रीगणेशकी सिद्धिनामक पत्नीबाट क्षेमनामक पुत्र र बुद्धिनामक पत्नीबाट लाभनामक पुत्र पैदा भएको विषयमा प्रकाश पारिएको छ ।[१३०] जसका माता पिता पार्वती एवं शङ्कर हुनुहुन्छ, पत्नीहरू सिद्धि एवं बुद्धि छन्, पुत्रहरू क्षेम एवं लाभ छन् त्यस्ता विघ्नहर्ता गजानन प्रभुको पारिवारिक सौन्दर्यको संस्मरण निश्चय नै कल्याणकारी हुन्छ । श्रीगणेशको प्रसन्नताका लागि उहाँको परिवार यद्वा पत्नी र पुत्रहरूको चिन्तन गर्नु पनि मङ्गलमय हुने गर्दछ। श्रीगणेश सिद्धि र बुद्धिका पति हुनुहुन्छ । शास्त्रहरूमा कहीं कहीं उहाँलाई ऋद्धि र पुष्टिका पति पनि मानिएको छ । उहाँको दायाँ भागमा बुद्धि र बायाँ भागमा सिद्धिको उपस्थिति हुने कुरा बताइएको छ । जसले श्रीगणेशको उपासना गर्दछन्, ती साधक सिद्धि र बुद्धिद्वारा सम्पन्न हुन्छन् । बुद्धिलाई विश्वात्मिका ब्रह्ममयी शक्ति मानिएको छ भने सिद्धिलाई मोहमयी शक्ति मानिएको छ । यी दुवैका साथ श्रीगणेशले अखण्डरूपमा मङ्गललीलाको सम्पादन गर्नुहुन्छ । शिवपुराणअनुसार पूजा र परिक्रमाबाट प्रसन्न हुनुभएका शिव-पार्वतीले विश्वरूप प्रजापतिका दुई पुत्री सिद्धि र बुद्धिका साथ श्रीगणेशको विवाह गराइदिनुभएको थियो । श्रीगणेशका क्षेम र लाभ नामक दुई पुत्र मानिएका छन्। सिद्धि र बुद्धि हुने साधकले क्षेम र लाभ प्राप्त गर्नु स्वाभाविक नै हो।

ॐ

१२८. पूजार्थं देवदेवस्य गणेशस्य प्रसादतः । दक्षिणावसरे द्वे तु कन्यके समुपस्थिते ॥
चारुप्रसन्नवदनैः सुविराजिते । अनेकरत्नखचितनानालङ्कारशोभिते ॥
दिव्यगन्धयुते दिव्यवस्त्रमालाविभूषिते । ते तस्मै दक्षिणार्थं स कल्पयामास पद्मभूः ॥
रम्भागर्भेण नीराज्य दिव्यं पुष्पाञ्जलिं ददौ । सहस्रनामभिः स्तुत्वा प्रदक्षिणमथाकरोत् ॥
नमस्य प्रार्थयामास दीनानां शङ्करो भव । एवं सम्पूजितस्तेन ब्रह्मणा परमेष्ठिना ॥
ततः प्रसन्नो भगवान् विघ्नहर्ता गजाननः । सिद्धिबुद्धी गृहीत्वा ते ह्यन्तर्धानमगाद् विभुः ॥ - श्रीगणेशपुराण, १/१८/३४-३९ ।

१२९. सिद्धिबुद्धियुतः श्रीमान् कोटिसूर्याधिकद्युतिः। अनिर्वाच्यस्वरूपोऽपि लीलयाऽऽसीत् पुरो मुनेः॥ - पूर्ववत्, १/४१/१३ ।

१३०. सिद्धेर्गणेशपत्न्यास्तु क्षेमनामाऽभवत् सुतः । बुद्धेर्लाभाभिधः पुत्र आसीत् परमशोभनः ॥ - शिवपुराण, रुद्रसंहिता, कुमारखण्ड, २०/८ ।

## परिच्छेद – चार

# श्रीगणपति-उपासनाका विविध प्रसङ्ग

हिन्दुजातिको उपासनाविज्ञानले इतिहासको विकास, समाजको आवश्यकता र परिस्थितिअनुसार बाह्यरूपमा आफूलाई परिवर्तन गर्दै ल्याएको छ । तर त्यसको मूल तत्त्व समन्वयात्मक शैलीमा देवप्रतिमाको उपासनामा सुरक्षित रहेको छ । देवोपासनामा व्यक्ति र समाजको रुचि, संस्कार, क्षेत्रविशेषको परम्परा र समयको आवश्यकताअनुसार परब्रह्मको कुनै एक साकार रूपलाई प्रधानता प्रदान गरिन्छ । तदनुसार नेपालमा शिव र बुद्धलाई, बङ्गालमा शक्तिलाई, उत्तरभारतमा राम र कृष्णलाई, महाराष्ट्र-कर्णाटक आदि दक्षिण भारतका प्रान्तहरूमा श्रीगणेश र स्कन्दलाई प्रधानता दिई उपासना गर्ने गरेको पाइन्छ ।

## ४.१ श्रीगणेशपुराणमा गणपति-उपासना

लोककल्याण र विश्वशान्तिका लागि लीलावरण गर्नुहुने ओङ्काररूप मङ्गलमूर्ति श्रीगणेश देवता असुर एवं मानव सबैका पूजा र उपास्य हुनुहुन्छ । भक्तहरूका लागि रुचिअनुसार श्रीगणेश, सदाशिव, नारायण, सूर्यनारायण एवं शक्तिमध्ये कुनै एक देवता उपास्य हुन सक्नुहुन्छ । सबै देवताको समान महत्त्व छ । तर, देवताका पनि देवता आदिपूज्य श्रीगणेशको भने आफ्नो छुट्टै विशेषता छ । त्यसैले श्रीगणेशपुराणमा भनिएको छ – ओङ्कार रूप श्रीगणेशका भक्तहरू हरि, हर, सूर्य र शक्तिलाई छाडेर देवताका पनि देवता र प्रथमपूज्य देवता श्रीगणेशको अर्चना उपासना गर्दछन् ।[१]

श्रीगणेशपुराणमा निराकार एवं साकार श्रीगणेशको मान्त्रिक उपासनाको विषयमा राम्ररी प्रकाश पारिएको छ । आगमहरूमा रहेका श्रीगणेशका सात करोड मन्त्रहरूमध्ये षडक्षर मन्त्र '**वक्रतुण्डाय हुम्**' र एकाक्षर मन्त्री '**गम्**' लाई सर्वश्रेष्ठ मन्त्रका रूपमा स्वीकार गरिएको छ ।[२] सबै प्रकारका कल्याणको चाहना गर्नेहरूले श्रीगणेशको उपासना गर्नुपर्ने कुरा बताइएको छ ।[३] उपासकहरूले जुन देवताको जसरी उपासना गरे पनि त्यो उपासना श्रीगणेशकै उपासनामा रूपान्तरित हुन्छ । श्रीगणेशले त्यस्ता उपासकलाई तिनले उपासना गरेकै रूप लिएर दर्शन दिनुहुन्छ भन्ने श्रीगणेशपुराणको निष्कर्ष रहेको छ ।[४]

श्रीगणेश वास्तवमा निराकार ब्रह्म हुनुहुन्छ । उहाँले भक्तहरूमाथि कृपा गरेर साकार रूप ग्रहण गर्नुहुन्छ । यदि उहाँले साकार रूपमा अवतार लिनुहुन्नथ्यो भने शास्त्रमा बताइएका उपासनाविधि व्यर्थ हुने थिए र आराधनाका औपचारिक कर्म अर्थहीन हुने थिए, श्रीगणेशको गुणगरिमाले भक्तको हृदयमा स्थान पाउने थिएन, पुरुष रूपमा विराजमान श्रीगणेशको प्रकृतिसँग विलास सम्भव हुने थिएन, भक्तहरूले भगवान् श्रीगणेशको साकार दर्शन पाउने थिएनन् र उहाँबाट स्वर्ग आदिको वरदान पाउने सम्भावना पनि रहने थिएन । उक्त सबै समस्यालाई हृदयङ्गम गरी ओङ्काररूप श्रीगणेशले साकार रूप लिनुहुन्छ र उपासकहरूलाई आराधना र उपासनाका फल प्रदान गर्नुहुन्छ ।[५]

---

१. *त्यक्त्वा हरिं हरं चाम्बा तेजोयुक्तं परं रविम् । सर्वैः सम्पूज्यते देवदेव आदौ गजाननः ॥* – श्रीगणेशपुराण २/३३/२२ ।

२. *सप्तकोटिमहामन्त्रा गणेशस्यागमे स्थिताः । षडक्षरैकाक्षरयोः तेषु श्रैष्ठ्यं हि विद्यते ॥* – पूर्ववत्, १/१०/३-४ ।

३. *उपासका गणेशस्य सर्वे लोकाश्चराचराः । अत एव गणेशाद्धि परं किञ्चिन्न विद्यते ॥* – पूर्ववत्, १/१२/११ ।

४. *येन येन हि रूपेण जनो मां पर्युपासते । तथा तथा दर्शयामि तस्मै रूपं सुभक्तितः ॥* – पूर्ववत्, २/१४६/४० ।

५. *निराकृतेश्चेद् यदि साकृतिः स्यादुपासनाकर्मविधिः वृथा स्यात् । गुणप्रपञ्चः प्रकृतेर्विलासो जनस्य भोगश्च तदा कथं स्युः ॥* – पूर्ववत्, २/५२/२५ ।

पृथिवीको धूलो, आकाशका तारा र वर्षाका धाराको गणना गरी संख्या जान्न सकिएला, तर साकार स्वरूप अथवा निराकारस्वरूप अपरिमित शक्तिसम्पन्न श्रीगणेशका गुणहरूको गणना गर्न हजारौं वर्ष लगाउँदा पनि ब्रह्माजी र शेषनाग पनि समर्थ हुँदैनन् । यस्ता श्रीगणेशको आराधना र उपासना गर्नु नै मानवहरूका लागि कल्याणकारी सर्वोत्तम उपाय हो ।[६]

श्रीगणेशका भक्त सज्जनहरूको सङ्गति प्राप्त भएमा तिनीहरूबाट आशीर्वाद र कृपा प्राप्त गर्न सकिन्छ । आशीर्वाद र कृपा प्राप्त भएमा उपासना आदि उत्तम कर्ममा प्रवृत्ति हुन्छ र सच्चिदानन्दस्वरूप श्रीगणेशको सम्झना पनि भइरहन्छ । निरन्तर श्रीगणेशको सम्झना गरिरहँदा चित्तशुद्धि हुन्छ । चित्तशुद्धि भएपछि श्रीगणेशको कृपा प्राप्त हुन्छ । श्रीगणेशको कृपाबाट साधनरूप ज्ञान प्राप्त हुन्छ र त्यसबाट साध्यरूप मुक्ति सुलभ हुन्छ ।[७]

श्रीगणेशपुराणमा उपासनाका अनेक विधिहरूका साथै तत्सम्बन्धी अनेक आख्यान पनि रहेका छन् । मन्त्रजपपूर्वक तपस्या, सहस्रनामपाठ, स्तुतिपाठ, षोडशोपचार, पञ्चोपचार एवं मानसोपचारद्वारा पूजन, मूर्तिप्रतिष्ठा गरी पूजन एवं मन्त्रजाप र श्रीगणेशतीर्थमा स्नानका साथै श्रीगणेशको प्यारो तिथि चतुर्थीमा गरिने र चतुर्थीमा आरम्भ गरी महिनौं अथवा वर्षौंसम्म गरिने पार्थिवपूजन, संकष्टचतुर्थीव्रत, वरदचतुर्थीव्रत, भौमचतुर्थीव्रत, सिद्धिविनायकव्रतजस्ता उपासनाका आधारभूत उत्तम समय, सामग्री, साधना र समर्पणका विषयमा श्रीगणेशपुराणमा व्यापक रूपमा चर्चा गरिएको छ । श्रीगणेशको सामान्य र विशेष उपासनाका सबै पक्ष समेटिएकाले श्रीगणेशपुराणको प्रथम भागलाई उपासनाखण्ड भनी नामकरण गरिएको पाइन्छ ।

माथि उल्लेख गरिएका जुनसुकै व्रतविधि अंगालेर उपासना गर्दा पनि उपासकको हृदयबिन्दुमा भक्तितत्त्व हुनैपर्ने कुरा बताइएको छ । वास्तवमा सर्वज्ञ, सर्वदर्शी, सर्वव्यापी र सर्वान्तर्यामी श्रीगणेश भक्तिबाट मात्र प्रसन्न हुनुहुन्छ । भक्त-उपासकद्वारा भक्तिपूर्वक अर्पण गरिएका पत्र, पुष्प, कन्दमूल, फल र जलले पनि प्रसन्न हुनुहुने श्रीगणेशले भक्तका निमित्त सामान्य विषयमात्र नभई आफूलाई पनि सुम्पिदिनुहुन्छ ।[८]

श्रीगणेशको मन्त्रजप गर्दै उपासना गर्दा भूतशुद्धि, प्राणस्थापन, अन्तर्न्यास, बहिर्न्यास, षडङ्गन्यास, मन्त्रन्यास, ध्यान, निश्चित संख्यामा मन्त्रजप, जपनिवेदन, स्तुति, प्रार्थना र प्रणाम गर्नुपर्ने विधि बताएर श्रीगणेशपुराणले साधनाको क्रमनिर्देश गरेको छ ।[९] श्रीगणेशको पूजा गर्दा आवश्यक हुने ध्यान, आवाहन, आसन आदि षोडशोपचारको क्रम पनि त्यहाँ बताइएको छ ।[१०] श्रीगणेशको पूजनमा दूर्वा, मन्दार एवं शमीपत्रको उपयोग अत्यन्त फलदायक हुने कुरा विभिन्न कथाहरूको माध्यमबाट स्पष्ट गरिएको छ । उक्त सबै प्रकारका उपासनाका सरणि अंगालेर उपासना गर्नाले विघ्नहर्ता श्रीगणेशले विघ्नव्यूहको निवारण गर्नुका साथै ऐहिक भुक्ति पारलौकिक स्वर्गादि सुखसन्तति र पारमार्थिक मुक्तिसमेत प्रदान गर्नुहुने तथ्य ती-ती उपासनाका विधिहरूको वर्णन गर्ने सन्दर्भमा प्रकट गरिएको छ । आपादमस्तक श्रीगणेशका श्रीविग्रहको ध्यान गरी षोडशोपचार वा मानसोपचारद्वारा पूजा गरेर पुरश्चरणविधिबाट श्रीगणेशको मन्त्रजप गर्दा उहाँको साक्षात् दर्शन सुलभ हुने कुरा श्रीगणेशपुराणमा निरूपण गरिएको छ ।[११]

यसरी आराधना गर्ने उपासकमा तीव्र भक्तिभाव हुनुपर्ने कुरा बताएर राजा भीमको दृष्टान्त प्रस्तुत गरिएको छ । उनी भोजन, शयन, यात्रा, संवाद र श्वासप्रश्वासका अवसरहरूमा पनि एकचित्त भई श्रीगणेशको तीव्र ध्यान गरिरहन्थे । तिनले जल, स्थल, आकाश, ग्रह-नक्षत्र, सूर्य, चन्द्र, स्वर्ग, देवता, मानिस, पशु, पक्षी, वृक्ष-लता, वनस्पति, औषधि, भोज्य, पेय

६. धरारजः कोऽपि मिमीत नाके, तारागणं वारिमुचाञ्च धाराः । नालं गुणानां गणनां हि कर्तुम्, शेषो विधाता तव वर्षपूगैः ॥ – पूर्ववत्, २/५३/३४ ।

७. सत्सङ्गतिश्चेत् सदनुग्रहः स्यात् सत्कर्मनिष्ठा सदनुस्मृतिश्च। चित्तस्य शुद्धिर्महतो कृपा च ज्ञानं विमुक्तिश्च न दुर्लभा स्यात् ॥ – पूर्ववत्, २/५३/३६ ।

८. सर्वज्ञः सर्वदर्शी च सर्वगः सर्वचित्तवित् । भक्त्यैव तुष्यते देवो भावो हि तोषकारणम् ॥
भक्त्याहृतं पलाशं च जलं पुष्पं मनोहरम् । तेनैव परितुष्टोऽसावात्मानञ्च प्रयच्छति ॥ – पूर्ववत्, २/२५/२८–२९ ।

९. पूर्ववत् ।

१०. पूर्ववत् ।

११. पूर्ववत्, १/११ अध्याय ।

आदि सबै किसिमका पदार्थमा श्रीगणेशको दर्शन गरेका थिए । बाटोमा भेटिने प्रत्येक प्राणीलाई श्रीगणेशरूप मानी प्रणाम गर्दथे । यस्तो तन्मयताका कारण तिनले श्रीगणेशको दर्शन प्राप्त गरेका थिए ।[१२] उपासकहरूले श्रीगणेशको प्रसन्नताका लागि गरिने दान, हवन, जप, तप, भक्ति र स्वाध्यायलाई श्रीगणेशको सम्पत्ति जानी उहाँलाई नै अर्पण गर्दा ती उपासकहरूका कार्य सिद्ध हुने कुरा श्रीगणेशपुराणमा बताइएको छ ।[१३] भगवान् श्रीगणेशले श्रीगणेशगीतामा भन्नुभएको छ – ध्यान आदि उपचार, पञ्चामृत स्नान, वस्त्र, अलङ्कार, सुगन्ध, धूप, दीप, नैवेद्य, फल, ताम्बूल, दक्षिणा आदि समर्पण गरी जसले मेरो पूजा गर्दछ त्यसले चिताएको कुरा म परिपूर्ण गराउँछु । जुन उपासकहरूले निष्कामभावले मेरो आराधना गर्दछन् तिनीहरूले परब्रह्मस्वरूप मलाई प्राप्त गर्दछन् ।[१४]

महर्षि कश्यपले मानव, देवता, दैत्य, यक्ष, किन्नर, गन्धर्व, चारण, सिद्ध, गुह्यक, पशु, पक्षी, पृथिवी, पर्वत, वृक्ष आदि असंख्य सचेतन, अचेतन आफ्ना सन्ततिलाई पात्रताअनुरूप दीक्षामन्त्र प्रदान गरेका थिए । ती सबैले एकान्तमा गई मन्त्रसिद्धि गरे । उपासनामा लीन ती सबै श्रीगणेशप्रति भक्तिभावले ओतप्रोत थिए र बस्दा, खाँदा, शयन गर्दा र जाग्दा पनि श्रीगणेशको ध्यानमा रमाइरहेका थिए । तिनीहरूको उपासनाबाट प्रसन्न भई श्रीगणेशले तिनीहरूले ध्यान गरेको स्वरूप लिएर प्रत्येकलाई दर्शन दिनुभयो । कहीँ बालरूपमा, कहीँ तरुणरूपमा, कहीँ अष्टादशबाहु, कहीँ द्वादशबाहु, कहीँ दशबाहु, कहीँ षड्बाहु, कहीँ चतुर्बाहु, कहीँ द्विबाहु आदि रूप लिई श्रीगणेशले आफ्ना भक्तहरूलाई दर्शन दिएर कृतार्थ गराउनुभयो ।

श्रीगणेश कहीँ सिंहवाहन, कहीँ मयूरवाहन, कहीँ अश्ववाहन र कहीँ मूषकवाहन हुनुहुन्थ्यो । यसरी श्रीगणेशको दर्शन एवं वरसमेत प्राप्त गरेका ती सबै कश्यप ऋषिका सन्तानहरूले हर्षले गद्गद भई आफ्नो जाति र वर्गअनुसार श्रीगणेशमूर्ति बनाई स्थापना गरी अर्चना गरेका थिए । मूर्ति स्थापनाको क्रममा देवताहरूले सुमुखमूर्ति, मुनिहरूले एकदन्तमूर्ति, गन्धर्व एवं किन्नरहरूले कपिलमूर्ति, गुह्यक, चारण एवं सिद्धहरूले गजकर्णमूर्ति, मानिसहरूले लम्बोदरमूर्ति, वन्य प्राणीहरूले विकटमूर्ति, पर्वत एवं वृक्षहरूले विघ्ननाशकमूर्ति, पक्षीहरूले विनायकमूर्ति, सर्पहरूले धूम्रकेतुमूर्ति, जलाशयहरूले गणाध्यक्षमूर्ति, कृमि, कीट, वनस्पति एवं औषधिहरूले भालचन्द्रमूर्ति र अन्य प्राणीहरूले गजाननमूर्ति स्थापना गरी अर्चना गरेका थिए ।[१५]

देवताहरूलगायत सम्पूर्ण प्राणीहरूसम्मका आराधकहरूद्वारा स्थापित सुमुख आदि मूर्तिहरूका सुमुख, एकदन्त, कपिल, गजकर्ण, लम्बोदर, विकट, विघ्ननाशक, विनायक, धूम्रकेतु, गणाध्यक्ष, भालचन्द्र र गजानन यी बाह्र नाम सिद्धमन्त्र झैं पवित्र र प्रभावकारी मानिएका छन् । यी बाह्र नामको पाठ र श्रवण दुवै मङ्गलकारी मानिएका छन् । विद्या आरम्भ गर्दा, विवाह गर्दा कुनै ठाउँमा प्रवेश गर्दा, कुनै ठाउँबाट बहिर्गमन गर्दा, संग्राम गर्दा र सङ्कट पर्दा उक्त बाह्र नामहरूको श्रवण र पाठ गर्नाले सफलता हस्तगत हुन्छ र विघ्नहरूको निवारण हुन्छ भनिएको छ ।[१६]

---

१२ तत्रार्थब्रह्मात्र विभुं सर्वदा तं विनायकम्। उपवासपरो नित्यं तन्मन्त्रमवलोकयन् ॥
भोजने शयने याने श्रवणे वसनेऽपि च। तमेव चिन्तयन् नित्यमनन्यमनसा नृपः ॥
जले स्थले नभोमार्गे स्वर्गे देवे तरौ द्रुमे। भक्त्ये पैवं नृपोऽपश्यद् विनायकमनुत्तमम् ॥
स यं पश्यति तं नौति कृताञ्जलिपुटस्तदा । – पूर्ववत्, १/२७/१३-१६ ।

१३ दानं होमो जपो भक्तिस्तपः स्वाध्याय एव च।
यद् यत् करोति तत् सर्वं स मे मयि निवेदितम् ॥ – पूर्ववत्, २/१४४/२१ ।

१४ ते मां सम्यगुपासन्ते परं ब्रह्म प्रयान्ति ते । ध्यानाद्यैरुपचारैर्मां तथा पञ्चामृतादिभिः ॥
स्नानवस्त्रादिकोपचारैर्मां तथा पञ्चामृतादिभिः। भक्त्यैकचेतसा चैव तस्येष्टं पूरयाम्यहम् ॥ – पूर्ववत्, २/१४४/६० ।

१५ पूर्ववत्, १/९२ ।

१६ सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः । लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः॥
धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः । द्वादशैतानि नामानि यः पठेत् शृणुयादपि ॥
विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा । सङ्ग्रामे सङ्कटे चैव विघ्नस्तस्य न जायते ॥ – पूर्ववत्, १/९२/४३-४५।

श्रीगणेशपुराणको समग्र उपासनाखण्ड श्रीगणेशको उपासनामा केन्द्रित छ । ब्रह्मा, विष्णु, शिव, पार्वती, स्कन्द, इन्द्र, चन्द्रमा, मङ्गल, शेषनाग, परशुराम, महर्षि कश्यप, कामदेव, राजा कीर्तवीर्य, राजा चन्द्राङ्गद, राजा नल, राजा शूरसेन आदि भक्तहरूद्वारा उपासित सङ्कष्टनाशक, सर्वविघ्नविनाशक, मङ्गलदायक र मङ्गलमूर्ति श्रीगणेशको उपासनाका सोपान र सरणिहरूको दिग्दर्शन गराइएको छ । पार्थिव पूजाविधि, सङ्कष्टीव्रतविधि र सामान्य श्रीगणेशपूजन विधिहरूको निरूपणका साथै श्रीगणेशको पूजा-आराधनाबाट आधिभौतिक, आधिदैविक र आध्यात्मिक दुःख निवृत्ति हुनुका साथै विघ्नबाधा, सङ्कट, वेदना र आधि-व्याधिसमेतको समूल उच्छेदन हुने तथ्यलाई विभिन्न कथाहरूको माध्यमबाट प्रस्तुत गरिएको छ। श्रीगणेशपुराणमा निरूपित मन्त्रसमूह, न्यास, कवच र सहस्रनामद्वारा श्रीगणेशको आराधना-उपासना गर्दा तत्काल फल प्राप्त हुने कुरा अनेकौं भक्तहरूको अकल्पनीय अनुभूति र ऋषिमुनिहरूका प्रामाणिक वाग्विभूतिले प्रमाणित गर्दछन् ।

## ४.२ वैदिकवाङ्मयमा श्रीगणेशको उपासना

गणेशका उपासकहरूका निमित्त एकाक्षर ओङ्कारको उपासना नाम-स्वरूप उपासना हो । यहाँ श्रीगणेशपदबाट शिव एवं पार्वतीका पुत्र श्रीगणेशको उपासना भन्ने अर्थ लिइँदैन । पार्वतीका पुत्र गजानन परब्रह्मका अवतार हुनुहुन्छ ।

निराकार र निर्गुण हुनु भए पनि परमात्मा श्रीगणेशले आफूलाई ब्रह्मा, विष्णु र शिवका रूपमा विभक्त गर्नुभयो । ती देवताहरूको माध्यमबाट सृष्टि, पालन र संहारको व्यवस्था मिलाउनुभयो । यसरी व्यवस्था मिलाउँदा उहाँले साधक र ती ठूला देवताहरूका निमित्त ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेदका चार मन्त्रवाक्यलाई संयोजन गरी तयार गरिएको मन्त्रराज प्रदान गर्नुभयो । त्यस मन्त्रराजमा चार पाउ र छ विभाग छन् – **रायस्पोषस्य दाता** (ऋग्वेद), **निधिदातान्नदो मतः** (यजुर्वेद), **रक्षोहणो बलगहनः** (सामवेद), **वक्रतुण्डाय हुम्** (अथर्ववेद) । उक्त एकीकृत मन्त्रका छ विभाग र विभागका पनि छुट्टाछुट्टै फल रहेका छन् । **रायस्पोषस्य दाता** यो प्रथम विभाग हो । यस मन्त्रको जपानुष्ठान गर्ने साधकले पृथिवीमा विशिष्ट स्वामित्व प्राप्त गर्दछ । दोस्रो विभागमा पर्ने **निधिदाता** मन्त्रद्वारा उपासना गर्ने साधक दिक्पति र धनपति बन्दछ। तेस्रो पद **अन्नदः**को जपानुष्ठानद्वारा श्रीगणेशको उपासना गर्ने साधक देवाधिपति र स्वर्गपति बन्दछ । चौथो पद **रक्षोहणः** द्वारा उपासना गर्ने साधकले देवाधिपत्य र ब्रह्माधिपत्य प्राप्त गर्दछ । पाँचौ पद **बलगहनः** मन्त्रद्वारा उपासना गर्ने साधकले विष्णुलोकमा आधिपत्य कायम गर्दछ । **वक्रतुण्डाय हुम्** यस मन्त्रद्वारा उपासना गर्ने साधकले ब्रह्मस्वरूप निरञ्जन व्योमपदको ज्ञान गरी अमृततत्त्व र सत्यलोकाधिपत्य प्रात गर्दछ । यो मन्त्रोपासना निर्गुण परब्रह्मरूप श्रीगणेशको उपासना हो ।[१७]

जसले निर्गुण उपासना गर्न सक्दैनन् तिनले सगुण विधिबाट सगुणोपासना गर्नुपर्दछ । सगुणोपासकले पनि त्यही फल पाउँछन् जुन फल निर्गुणोपासकले पाउँछन् । उपासना गर्ने विधिमा भने अन्तर रहेको हुन्छ । परमात्मा श्रीगणेशले भक्तहरूको उपकारका लागि आफूलाई सगुण रूपमा अवतरित गराउनुहुन्छ । उत्तम भक्तले उहाँको मूल स्वरूप जानेर अवतरित स्वरूपको उपासना गर्दछन् । सगुण स्वरूपको निष्ठापूर्वक उपासना गर्ने साधकहरूमा मुद्गल, गृत्समद, वरेण्य आदि उत्तम मानिएका छन् ।

भगवान् श्रीगणेशको सगुणोपासनाका अनेक भेद र अनेक विधि रहेका छन् । युगभेद र आगमभेदका कारण भगवान्का स्वरूप र वाहनहरूमा पनि अन्तर रहेको हुन्छ । दुई भुजादेखि अठार भुजासम्मका भगवान्का मूर्तिहरूको निर्माण गर्ने विधान रहेको छ । एक मुखदेखि लिएर दश मुखसम्मका श्रीगणेशहरूको उपासना गरिन्छ । भक्तहरूले मूषकवाहन श्रीगणेशका साथै सिंहवाहन, मयूरवाहन र अश्ववाहन श्रीगणेशको पनि उपासना गर्दछन् । वस्तुविशेषको

१७. पं. दामोदर प्रसाद पाठक, *'सच्चिदानन्द गणेश की निर्गुण-सगुण उपासना'*, कल्याण, पूर्ववत्, पृ. १८ ।

अर्पणका दृष्टिबाट श्रीगणेशका नाम पनि फरक फरक छन् । शमीपत्र समर्पण गरेर आराधना गरिने श्रीगणेशलाई शमीगणेश भनिएझैं हरिद्रागणेश, दूर्वागणेश र गोमयगणेश आदि नामहरू पनि रहेका छन् । काम्यकर्ममा व्यक्त हुने कामनाअनुसार पनि श्रीगणेशको उपासना गरिने हुँदा ती ती फलअनुसार श्रीगणेशका सन्तानगणेश, विद्यागणेश आदि अनेकौं नाम रहेका छन् ।[१८]

विभिन्न फलप्राप्तिका दृष्टिबाट गरिने श्रीगणेशका सकाम व्रतहरू पनि छन् । तिनमा वरदचतुर्थीव्रत, एकविंशतिदिवसीय व्रत, गणपतिव्रत, श्रीगणेशपार्थिवपूजनव्रत, श्रीगणेशचतुर्थीव्रत, तिलाचतुर्थीव्रत, सङ्कष्टहरचतुर्थीव्रत, वैनायिकी-चतुर्थीव्रत आदि प्रमुख छन् । यस अतिरिक्त विशिष्ट कामना र सम्प्रदायअनुसार पनि अनेक व्रताचार रहेका छन् । उपासनाभन्दा कर्ममा अधिक विश्वास गर्ने कर्मनिष्ठहरूले शास्त्रीय विधिबाट श्रीगणेशभद्र, गणपतिभद्रक आदि निर्माण गरेर तिनमा श्रीगणेशयन्त्र स्थापना गरी हविष्यान्नको हवन गर्दछन् । कतिपय उपासकहरूले वाक्सिद्धि, कामनापूर्ति, विद्याप्राप्ति, यशोलाभ, पापनाश आदि फलका लागि व्रतानुष्ठान गर्दछन् । तिनले एकाक्षर मन्त्र र अनेकाक्षर सिद्ध मन्त्रहरूको पनि जप गर्दछन् । सिद्धमन्त्रहरूको जपसिद्धिका लागि हवन, तर्पण, मार्जन, ब्राह्मणभोजन आदिको विधान रहेको छ ।

## ४.३ तन्त्रवाङ्मयमा श्रीगणेशको उपासना

श्रीतत्त्वनिधि, श्रीविद्यार्णवतन्त्र, मेरुतन्त्र आदि अनेकौं तन्त्रशास्त्रका विशिष्ट ग्रन्थहरूमा विधिपूर्वक श्रीगणेशको उपासनाको दिग्दर्शन गराइएको पाइन्छ । श्रीगणेशको आराधनालाई पहिलो प्राथमिकता दिएर तन्त्रहरूले प्रस्तुत गरेका छन्। यहाँ विद्यार्णवतन्त्र र सुमेरुतन्त्रमा प्रस्तुत श्रीगणेश आराधनाविधिका सम्बन्धमा सङ्क्षिप्त चर्चा गरिँदैछ ।

### अ ) विद्यार्णवतन्त्र

श्रीविद्यार्णव तन्त्रमा वर्णित सबै आम्नायमा प्रमुख मानिएका पन्ध्र श्रीगणेश यसप्रकार छन् - १. महागणपति, २. विरिगणपति, ३. लक्ष्मीगणेश, ४. त्रिवर्ण शक्तिगणेश, ५. चतुर्वर्ण शक्तिगणेश, ६. शक्तिगणेश, ७. क्षिप्रप्रसादन-विनायक, ८. हेरम्बविनायक, ९. सुब्रह्मण्यविनायक, १०. महागणेश, ११. त्रैलोक्यमोहन गणपति, १२. भोगगणेश, १३. हरिद्रागणेश, १४. वक्रतुण्डगणेश र १५. उच्छिष्टगणेश ।

श्रीविद्यार्णवतन्त्रमा प्रत्येक श्रीगणेशको आराधनाका लागि विनियोग, न्यास, ध्यान, पूजा, मन्त्र, जपविधि, हवन, तर्पण, मार्जन, फलविशेषका लागि वस्तुविशेषको हवनको निर्देशनका साथै फलश्रुतिसमेत उल्लेख गरिएको छ । गुरुमुखबाट दीक्षा लिएर उपासना गर्दामात्र सफलता प्राप्त हुने हुँदा विस्तृत विवरण प्रस्तुत नगरी उक्त श्रीगणेशहरूका ध्यान र मन्त्रमात्र प्रस्तुत गरिँदैछ ।

#### क ) महागणपति

**ध्यान**

रातो वर्णको स्वरूपमा सुहाउनुभएका, रातो अङ्गराग र राता वस्त्र धारण गर्नुहुने, राता पुष्पद्वारा पूजित, लम्बोदर, मुकुटमा चन्द्रमा धारण गर्नुहुने, त्रिनयन, साना-साना हात-पाउ भएको, सानो स्वरूपमा विराजमान, सूँढको टुप्पामा विमिरो धारण गर्नुहुने, आफ्ना चारभुजामा पाश, अङ्कुश, एकदन्त र वरदमुद्रा धारण गर्नुहुने, शेषनागलाई अलङ्कारका रूपमा ग्रहण गर्नुहुने, कमलासनमा विराजमान भगवान् विघ्नराज तपाईंहरूका लागि ऐश्वर्यदाता बन्नुहुनेछ ।

---

१८ दुर्गेन्द्र, पृ. १७ ।

**रक्तो रक्ताङ्गरागांशुककुसुमयुतस्तुन्दिलश्चन्द्रमौलि-**
**र्नेत्रैर्युक्तस्त्रिभिर्वामनकरचरणो बीजपूरात्तनासः ।**
**हस्ताग्रक्लृप्तपाशांकुशरदवरदो नागवक्त्रोऽहिभूषो**
**देवः पद्मासनो वो भवतु नतसुरो भूतये विघ्नराजः ।।**

मन्त्र - गः अथवा गं ।

ख ) विरिञ्चिगणेश

ध्यान

सिन्दूरको कान्तिले सुहाउनुभएका, हात्तीको जस्तो मुखमण्डल धारण गर्नुहुने, हातहरूमा पाश, अङ्कुश र मधुले परिपूर्ण पात्र लिनुहुने, शिरमा अर्धचन्द्रमा धारण गर्नुहुने, एउटा हातमा कमल लिएकी र अर्को हातले कामकेन्द्रमा स्पर्श गरिरहेकी पुष्टिनामक अर्धाङ्गिनीद्वारा आलिङ्गित, आफ्नो सूँढको टुप्पामा धनले परिपूर्ण पात्र धारण गर्नुहुने र एउटा हातद्वारा पुष्टिको कामकेन्द्रमा स्पर्श गर्नुहुने भगवान् विरिञ्चिगणेशको ध्यान गर्दछु ।

**सिन्दूराभमिभाननं त्रिनयनं हस्तेषु पाशाङ्कुशौ**
**बिभ्राणं मधुमत्कपालमनिशं सार्धेन्दुमौलिं भजे ।**
**पुष्ट्याश्लिष्टतनुं ध्वजाग्रकरया पद्मोल्लसद्धस्तया**
**तद्योन्याहितपाणिमात्तवसुमत्पात्रोल्लसत्पुष्करम् ।।**

मन्त्र - ह्रीं विरिविरि गणपति वरवरद सर्वलोकं मे वशमानय स्वाहा ।

ग ) लक्ष्मीगणेश

ध्यान

कमलको आसनमा विराजमान, सुवर्णमय कान्तिले सम्पन्न, करकमलहरूमा शङ्ख, चक्र, दन्त एवं अभयमुद्रा धारण गर्नुहुने, सूँढको टुप्पामा स्वर्णकलश लिनुहुने, त्रिनयन, बायाँ भागमा विराजमान भई हातमा कमल लिएकी, सुवर्णकान्तिद्वारा सुहाएकी, भगवती लक्ष्मीद्वारा दायाँहातबाट आलिङ्गित, गणहरूका परिपालक, भक्तहरूलाई महालक्ष्मी प्रदान गर्नुहुने भगवान् श्रीलक्ष्मीगणेशले तपाईंहरूलाई लक्ष्मी प्रदान गर्नुहुनेछ ।

**हेमाभः पीतवस्त्रः करतलकमलैः सन्दधच्चक्रशङ्खौ**
**दन्ताभीती च नासाधृतकनकघटः पद्मसंस्थस्त्रिनेत्रः ।**
**वामाङ्गाविष्टलक्ष्म्या विधृतकमलया प्रोल्लसद्दक्षदोष्णा**
**श्लिष्टः सौवर्णकान्त्या गणप इह महाश्रीकरो वः श्रियेऽस्तु ।।**

मन्त्र - श्रीं गं महागणपतये वरवरद सर्वजनं मे वशमानय स्वाहा ।

घ ) त्रिवर्ण शक्तिगणेश

ध्यान

गजराजको जस्तो मुखमण्डल धारण गर्नुहुने, चमरको आकारका र चञ्चल कानहरूद्वारा शोभायमान,

स्वर्णकान्तिसम्पन्न, आफ्ना चारभुजाहरूमा पाश, अङ्कुश, दन्त र बिमिरो धारण गर्नुहुने, सूँढको टुप्पामा मोदक लिनुहुने भगवान् त्रिवर्ण शक्तिगणेशको ध्यान गर्दछु ।

**गजेन्द्रवदनं साक्षाच्चलत्कर्णसुचामरम् । हेमवर्णं चतुर्बाहुं पाशाङ्कुशधरं विभुम् ।।**
**स्वदन्तं दक्षिणे हस्ते बीजापूरं च वामके । पुष्करे मोदकाँश्चैव धारयन्तं स्मराम्यहम् ।।**

मन्त्र – ह्रीं ग्रीं ह्रीं ।

ङ) चतुर्वर्ण शक्तिगणेश

ध्यान

स्वर्णकान्तिले चंकिनुभएका, दिव्यवस्त्र धारण गर्नुहुने, विशाल शरीरले सुहाउनुभएका, लम्बोदर, सुन्दर, चारबाहुद्वारा अत्यन्त आकर्षक देखिनुहुने, त्रिनयन, आफ्ना हातहरूमा पाश, अक्षमाला, दन्त र अङ्कुश धारण गर्नुहुने, सूँढको टुप्पामा मोदक लिनुहुने, स्वर्णालङ्कारद्वारा अलङ्कृत, मध्याह्नकालिक सूर्यको आभासमान आभा भएकी शक्तिका साथ विराजमान, त्रिलोकीका एकमात्र आधार, विश्वका वन्दनीय देवता, विघ्नका स्वामी र चतुर्वर्ण श्रीशक्तिगणेशको चिन्तन गर्दछु ।

**हेमाभं दिव्यवस्त्रं बृहदुदरतनुं चारुबाहुं त्रिनेत्रं**
**दोर्भिः पाशाक्षसूत्रे निजरदनसृणी मोदकं पुष्करेण ।**
**बिभ्राणं हेमभूषं तरुणतरणिरुक्चारुशक्त्या समेतं**
**विघ्नेशं विश्ववन्द्यं त्रिभुवनशरणं चिन्तये श्रीगणेशम् ।।**

मन्त्र – ॐ ह्रीं ग्रीं ह्रीं ।

च) शक्तिगणेश

ध्यान

मोती एवं चन्द्रमासमान उज्ज्वल कान्तिले सुहाउनुभएका, मस्तकमा अर्धचन्द्र धारण गर्नुहुने, त्रिनयन, अतिसुन्दर स्वरूपले देदीप्यमान, कमलजस्ता कमनीय करहरूमा कमल, अङ्कुश र विशाल रत्नपात्र धारण गर्नुहुने, काखमा रहेर आफ्नो कामकेन्द्रमा हातले स्पर्श गरिरहेकी प्रियतमाको कामकेन्द्रमा आफ्नो हात राख्नुहुने मणिमय मुकुटले सुहाउनुभएका गजानन श्रीशक्तिगणेशको ध्यान गर्दछु ।

**मुक्ताचन्द्रोत्थदीप्तिं शशिशकलधरं भालनेत्रं मनोज्ञं**
**हस्ताम्भोजैर्दधानं सरसिरुहसृणी रत्नपात्रं विशालम् ।**
**स्वीयक्रोडस्थिताया ध्वजनिहितलसच्चारुपाणेः प्रियाया**
**योनौ विन्यस्तहस्तं मणिगणमुकुटं संश्रयेन्नागवक्त्रम् ।।**

मन्त्र – ह्रीं गं ह्रीं महागणपतये स्वाहा ।

छ ) क्षिप्रप्रसादनविनायक

ध्यान

आफ्ना हातहरूमा पाश, अङ्कुश, कल्पलता र दन्त धारण गर्नुहुने, सूँढको टुप्पामा बिमिरो लिनुहुने, रातो आभाद्वारा सुहाउनुभएका, त्रिनयन, तरुणचन्द्रमालाई मस्तकमा धारण गर्नुहुने र हारझैं उज्ज्वल श्रीक्षिप्रप्रसादनविनायकले तपाईंहरूको रक्षा गर्नुहुनेछ ।

**पाशाङ्कुशौ कल्पलतां विषाणं दधत्स्वशुण्डाहितवीजपूरः ।**
**रक्तस्त्रिनेत्रस्तरुणेन्दुमौलिर्हारोज्ज्वलो हस्तिमुखोऽवतान्नः ।।**

**मन्त्र** - गं क्षिप्रप्रसादनाय नमः ।

ज ) हेरम्बविनायक

ध्यान

मोती, विद्युत्, बादल, अमृत र चन्द्रका जस्ता शोभाले सम्पन्न पाँच गजमुखद्वारा सुहाउनुभएका, मुकुटका रूपमा चन्द्रमालाई धारण गर्नुहुने, सिंहमा सवार हुनुभएका, आफ्ना हातहरूमा त्रिशूल, अङ्कुश, अक्षमाला, मुद्‌गर, पुरुषकपाल, परशु, मोदक, स्वदन्त, अभयमुद्रा र वरमुद्रा धारण गर्नुहुने, दशबाहु र सूर्यसमान तेजस्वी भगवान् हेरम्बविनायकको ध्यान गर्नुपर्दछ ।

**मुक्ताविद्युत्पयोदामृतघुसृणनिभैः पञ्चभिर्नागवक्त्रै-**
**र्हेरम्बो भावनीयः शशधरमुकुटो दृप्तसिंहाधिरूढः ।**
**हस्तैर्बिभ्रत् त्रिशूलाङ्कुशकजपवटीमुद्‌गरान् पुंस्कपालं**
**टङ्काङ्को मोदकं स्याद्रदलसदभयं दानमर्कौघदीप्तिः ।।**

**मन्त्र** - ॐ गूं नमः ।

झ ) सुब्रह्मण्यविनायक

ध्यान

रातो रङ्गको देहकान्तिद्वारा शोभायमान, चन्द्रमाझैं सुन्दर मुहारका कारण सबैका लागि अत्यन्त प्यारा, हातहरूमा कमल, अभयमुद्रा, शत्रुनाशक शक्ति र कल्याणमय कुक्कुट धारण गर्नुहुने, रातो रङ्गमा रङ्गिएका वस्त्र र मालाद्वारा मनोमोहक देखिनुहुने, अलङ्कारद्वारा अलङ्कृत, भक्तका पापपुञ्जलाई ध्वंस गर्नुहुने र मङ्गलदायक सुब्रह्मण्यविनायकले तपाईंहरूको रक्षा गर्नुहुनेछ ।

**पायाद्वोऽरुणविग्रहः शशिमुखः सम्यग् दधानो भुजैः**
**पद्मं भीतिहरं रिपुक्षयकरीं शक्तिं शुभं कुक्कुटम् ।**
**रक्तालेपनवस्त्रदामरुचिरो नानाविभूषान्वितः**
**सुब्रह्मण्यगणाधिपः शुभकरो भक्ताघविध्वंसकः ।।**

**मन्त्र** - ॐ वचत् भुवे नमः ।

ञ) महागणेश

ध्यान

इक्षुरसोद सागरमा नवरत्नमय र मङ्गलमय द्वीपमा त्यस सागरका तरङ्गहरूले फैलाएका जलद्वारा प्रक्षालित, शीतल एवं निर्मल, सागरदलका कणिकाहरूको सम्पर्कका कारण शीतल र सुगन्धित पवनद्वारा सेवित, कल्पवृक्षको ताँतीबाट सुहाएको भूभागले सम्पन्न, अनेकौं फूलहरूले परिपूर्ण, अनेकौं फलहरूले भरिभराउ, अनेक पक्षीहरूको कलरवले गुञ्जायमान, अप्सराहरूद्वारा सेवित, उदीयमान सूर्यसमान दर्शनीय, चन्द्रमाको कोमल ज्योतिले परिपूर्ण, कल्पवृक्षका पुष्पहरूमा रही मधुपान गर्ने भ्रमरहरूको मृदुनिनादद्वारा निनादित, पद्मरागमणिसमूहद्वारा तयार गरिएको र रक्तिमा रञ्जित भुइँ भएको पवित्र स्थानमा ६ वटै ऋतुहरूद्वारा सेवित र पुष्पसमूहले भरिभराउ पारिजात कल्पतरुको चिन्तन गर्नुपर्दछ । पारिजातको फेंदमा नवरत्नमण्डित सिंहासनको ध्यान गर्नुपर्दछ । सिंहासनको बीच भूमिमा षट्कोण लिपिमा निबद्ध कमलको बीचमा त्रिकोणको भावना गरी त्यहाँ विराजमान रत्नमय अलङ्कारद्वारा अलङ्कृत एकदन्त गजाननको ध्यान गर्नुपर्दछ । आफ्ना हातहरूमा चक्र, कमल, बाण, ताँदोसहित ऊखुबाट बनेको धनु, रक्तकमल, गदा, धान्यगुच्छ, एकदन्त, बिमिरो र कलश धारण गर्नुहुने, विकसित कमल हातमा धारण गरेकी अर्धाङ्गिनीद्वारा आलिङ्गित, बाह्रमासे फूलझैं रातो वर्णका, त्रिनेत्र, अर्धचन्द्रधारी महागणपतिको ध्यान गर्नुपर्दछ । सूँढको टुप्पामा रहेको मणिमय कलशको मुखबाट धारावृष्टिसमान, मणि-मोती र मुँगाको बारबार वर्षा गराउनुहुने, आफ्ना गण्डस्थलमा मदधारा पान गर्न ओइरिएका भ्रमरहरूलाई ताडीपत्रको आकारका कान हल्लाएर धपाउनुहुने, देवता र दानवद्वारा वन्दनीय, रत्नमयमुकुट धारण गर्नुहुने, लम्बोदर, नाना अलङ्कारद्वारा अलङ्कृत, भगवान् महागणपतिको वन्दना गर्दछु ।

**ऐक्षवे जलधौ द्वीपे नवरत्नमये शुभे । तत्तरङ्गोल्लसत्तोयैर्धौते शीततलेऽमले ।।**
**तत्तोयकणसम्पृक्तगन्धवाहनिषेविते । कल्पपादपसंशोभिभूभागसमलङ्कृते ।।**
**नानाकुसुमसङ्कीर्णे नानापक्षिविराजिते । अनेकफलसङ्कीर्णे सेविते चाप्सरोगणैः ।।**
**उद्यद्बालातपोद्योतिचन्द्रज्योत्स्नासमाकुले । विलसत्पद्मरागौघकुट्टिमारुणभूतले ।।**
**कल्पपादपपुष्पस्थषट्पदस्वनमञ्जुले । पारिजातं कल्पतरुं तस्य मध्ये विचिन्तयेत् ।।**
**युगपदृतुषट्केन सेवितं पुष्पशोभितम् । नवरत्नमयं तस्याधस्तात् सिंहासनं स्मरेत् ।।**
**तन्मध्ये लिपिपद्मं च षडरं तस्य मध्यतः । कर्णिकायां त्रिकोणं च तत्संस्थं च महागणम्।।**
**नानारत्नविभूषाढ्यमेकदन्तं गजाननम् ।**
**चक्राब्जत्रिशिखान् गुणेक्षवधनू रक्तोत्पलं सद्गदां**
**व्रीह्यग्रान्वितबीजपूररदनं कुम्भं करैर्बिभ्रतम् ।**
**पद्मोद्यत्करया निजप्रमदया श्लिष्टं जपासन्निभं**
**सार्धेन्दुं प्रभजे महागणपतिं नेत्रत्रयोद्भासितम् ।।**
**पुष्करोद्धृतरत्नौघमयकुम्भमुखस्रुतान् । मणिमुक्ताप्रवालादीन् वर्षन्तं धारया मुहुः ।।**
**सर्वतः साधकस्याग्रे स्वदानजललोलुपाम् । षट्पदालीं कर्णतालैर्वारयन्तं मुहुर्मुहुः ।।**
**अमरासुरसंसेव्यं सद्रत्नमुकुटोज्ज्वलम् । उरूदरं गजमुखं नानाभरणभूषितम् ।।**

मन्त्र - ॐ श्रीं ह्रीं क्लीं ग्लौं गं गणपतये वरवरद सर्वजनं मे वशमानय स्वाहा ।

ट ) त्रैलोक्यमोहन गणपति

ध्यान

रातो कान्तिद्वारा सुहाउनुभएका, शिरमा चन्द्रमा धारण गर्नुहुने, हातहरूमा अङ्कुश, धनु, दन्त र वरमुद्रा धारण गर्नुहुने, त्रिनयन, गजानन, रातो अङ्गराग लेपन गरी सुहाउनुभएका, बिमिरोसहित विशाल सूँढ र विशाल उदर धारण गर्नुहुने, मदद्वारा भिजेका गण्डस्थलले शोभायमान, शेषनागद्वारा अलङ्कृत, विघ्नका स्वामी भगवान् त्रैलोक्यमोहन गणपतिले तपाईंहरूको भलो गर्नुहुनेछ ।

**रक्ताभः शशिमौलिरङ्कुशगुणौ दन्तं वरं धारयन्**
**हस्ताब्जैर्द्विरदाननस्त्रिनयनो रक्ताङ्गरागावृतः ।**
**बीजापूरबृहत्करोरुजठरो दानार्द्रगण्डस्थलो**
**विघ्नेशः फणिभूषणो गणपतिर्भूयाद्भवद्भूतये ।।**

**मन्त्र** - वक्रतुण्डैकदंष्ट्राय क्लीं ह्रीं श्रीं गं गणपति वरवरद सर्वजनं मे वशमानय स्वाहा ।

ठ ) भोगगणेश

ध्यान

बाह्रमासे फूलझैं रातो कान्तिले सुहाउनुभएका, त्रिनयन, चन्द्रमालाई मुकुटका रूपमा धारण गर्नुहुने, पदार्थहरूको भोगमा चञ्चलता देखाउनुहुने, गजानन, हातमा धनु, अङ्कुश, वरमुद्रा र उँखु धारण गर्नुहुने, आफ्नो सूँढको टुप्पाले आफ्नी अर्धाङ्गिनीको कामगृहमा स्पर्श गर्नुहुने, हातमा कमल लिएकी कामगृहमा स्पर्श गर्ने श्यामासुन्दरीद्वारा आलिङ्गित, देवदेव श्रीभोगगणेशको ध्यान गर्नुपर्दछ ।

**बन्धूकाभं त्रिनेत्रं शशधरमुकुटं भोगलोलं गणेशं**
**नागास्यं धारयन्तं गुणसृणिवरदानिक्षुदण्डं कराग्रैः ।**
**शुण्डासंस्पृष्टयोषामदनगृहममुं श्यामलाङ्ग्या तयापि**
**श्लिष्टं लिङ्गस्पृशा तं विधृतकमलया भावयेद्देववन्द्यम् ।।**

**मन्त्र** - ॐ ह्रीं गं ह्रीं वशमानय स्वाहा ।

ड ) हरिद्रागणेश

ध्यान

इक्षुरसोदसागरको मणिमय सिंहासनमा विराजमान, पहेंलो कान्तिले सुहाउनुभएका, पहेंला अलङ्कार-वस्त्र र मालाद्वारा अलङ्कृत, आफ्ना हातहरूमा परशु, वरमुद्रा, अङ्कुश, क्रोधमुद्रा र अभयमुद्रा धारण गर्नुहुने, त्रिनयन, विघ्नरूपमा पनि प्रकट हुनुहुने, गजानन श्रीहरिद्रागणेशको ध्यान गर्नुपर्दछ ।

**स्थाने पूर्वसमीरिते मणिमये सिंहासने संस्थितं**
**पीतं पीतविभूषणाम्बरलसन्माल्यादिसंशोभितम् ।**
**विघ्नं दन्तिमुखं त्रिनेत्रलसितं हस्तैर्वहन्तं भजेत्**
**पाशं सत्परशुं वरं सृणियुतं क्रोधाख्यमुद्राभये ।।**

**मन्त्र** - ॐ हूं गं ग्लौं हरिद्रागणपतये वरवरद सर्वजनहृदयं स्तम्भय स्तम्भय स्वाहा ।

ढ ) वक्रतुण्डगणेश

ध्यान

चारैतिर फैलिएको रातो कान्तिले परिपूर्ण मणिसमूहसमान सुन्दर कान्तिले सुहाउनुभएका, करकमलहरूमा पाश, अङ्कुश, अभयमुद्रा र वरमुद्रा धारण गर्नुहुने, त्रिनयन, रातो माला र रातो वस्त्र धारण गर्नुहुने, विकसित कमलको आसनमा विराजमान, वक्रतुण्डगणेशको निरन्तर स्मरण गर्नुपर्दछ ।

**रम्योद्भिन्नारुणतरमणिव्रातसंशोभिकान्तिं**
**संबिभ्राणं करकिसलयैः पाशमप्यङ्कुशाह्वम् ।**
**साभीतीष्टं त्रिनयनयुतं रक्तमाल्यांशुकाढ्य-**
**मम्भोजोद्यत्पुटगतममुं संस्मरेद् वक्रतुण्डम् ।।**

**मन्त्र –** वक्रतुण्डाय हूम् ।

ण ) उच्छिष्टगणेश

ध्यान

आफ्ना हातहरूमा बाण, धनु, ताँदो र अङ्कुश धारण गर्नुहुने, रातो कमलमा विराजमान, अम्बरहीन (निर्वस्त्र) अर्धाङ्गिनीका साथ कामकेलिमा प्रवृत्त हुनुभएका श्री उच्छिष्टगणेशको चरणकमलमा शरण पर्दछु।

**शरचापगुणाङ्कुशान् स्वहस्तैर्दधतं रक्तसरोरुहे निषण्णम् ।**
**विगताम्बरजायया प्रवृत्तं सुरते सन्ततमाश्रये गणेशम् ।।**

**मन्त्र –** हस्तिपिशाचिलिखे स्वाहा ।[१९]

## आ ) मन्त्रमहोदधि अनुसार श्रीगणेशको उपासना

मन्त्रमहोदधिमा सद्यःफलदायक केही श्रीगणेशका मन्त्र र पुरश्चरणविधिको वर्णन गरिएको छ । अभीष्ट सिद्धि प्राप्त गर्न चाहने सद्गृहस्थले सद्गुरुबाट दीक्षा प्राप्त गरी ती मन्त्रहरूको सिद्धि गरेपछि विविध काम्यप्रयोग गर्न सक्दछन् । विघ्ननिवारण, दरिद्रतानाश, समृद्धिप्राप्ति, धनप्राप्ति, पदप्राप्ति, शक्तिप्राप्ति, शत्रुनाश र भगवान् श्रीगणेशमा प्रीतिजस्ता उद्देश्य लिएर विधिपूर्वक साधना गरेमा सिद्धि प्राप्त हुन्छ । त्यस्ता केही श्रीगणेशका मन्त्रहरूको पुरश्चरणविधि सङ्क्षेपमा प्रस्तुत गरिँदैछ ।

### क ) षडक्षर वक्रतुण्ड श्रीगणेशमन्त्रको साधना

वक्रतुण्ड श्रीगणेशमन्त्रको साधनाबाट दरिद्रता निवारण र धन-समृद्धिको प्राप्ति हुन्छ । उहाँको मूलमन्त्र 'वक्रतुण्डाय हुम्' हो ।

**विनियोगः –** ॐ अस्य श्रीगणेशमन्त्रस्य भार्गव ऋषिः, अनुष्टुप् छन्दः, विघ्नेशो देवता, वं बीजम्, यं शक्तिर्ममाभीष्टसिद्धये जपे विनियोगः ।

**षडङ्गन्यासः –** ॐ वं नमः, अङ्गुष्ठाभ्यां नमः । ॐ क्रं नमः, तर्जनीभ्यां नमः । ॐ तुं नमः, मध्यमाभ्यां नमः । ॐ डां नमः, अनामिकाभ्यां नमः । ॐ यं नमः, कनिष्ठिकाभ्यां नमः । ॐ हुं नमः, करतलपृष्ठाभ्यां नमः ।

---

१९. श्रीविद्यारण्य यति, विद्यार्णवतन्त्र, भाग २, ३२ औं श्वास, प्राच्य प्रकाशन, वाराणसी, सन् १९८९ ।

**हृदयादिन्यासः** - ॐ वं नमः, हृदयाय नमः । ॐ क्रं नमः, शिरसे स्वाहा । ॐ तुं नमः, शिखायै वषट् । ॐ डां नमः, कवचाय हुम् । ॐ यं नमः, नेत्रत्रयाय वौषट् । ॐ हुं नमः, अस्त्राय फट् ।

**सर्वाङ्गन्यासः** - ॐ वं नमः, भ्रूमध्ये । ॐ क्रं नमः, कण्ठे । ॐ तुं नमः, हृदये । ॐ डां नमः, नाभौ । ॐ यं नमः, लिङ्गे । ॐ हुं नमः, पादयोः । ॐ वक्रतुण्डाय हुम्, सर्वाङ्गे ।

ध्यान - **उद्यद्दिनेश्वररुचिं निजहस्तपद्मैः पाशांकुशाभयवरान्दधतं गजास्यम् ।**
**रक्ताम्बरं सकलदुःखहरं गणेशं ध्याये प्रसन्नमखिलाभरणाभिरामम् ।।**

**अर्थ** - बायाँ हातहरूमा पाश र अभयमुद्रा, दायाँ हातहरूमा वरमुद्रा एवं अङ्कुश धारण गर्नुहुने, उदाइरहेका सूर्यसमान कान्तिले सुहाउनुभएका, हात्तीको मुखमण्डल धारण गर्नुहुने, आराधकहरूका सबै किसिमका दुःखनिवारण गर्नुहुने, समस्त अलङ्कारद्वारा अलङ्कृत, रक्तकान्ति र प्रसन्न मुद्रामा सुहाउनुभएका श्रीवक्रतुण्ड श्रीगणेशको ध्यान गर्दछु ।

**पीठपूजा** - ध्यान गरी पूर्वादि दिशाहरूमा **ॐ तीव्रायै नमः, ॐ चालिन्यै नमः, ॐ नन्दायै नमः, ॐ भोगदायै नमः, ॐ कामरूपिण्यै नमः, ॐ उग्रायै नमः, ॐ तेजोवत्यै नमः, ॐ सत्यायै नमः** यी मन्त्रहरूद्वारा पीठशक्तिको पूजा गरेपछि **'गं सर्वशक्तिकमलासनाय नमः'** मन्त्रद्वारा आसन अर्पण गरी मूलमन्त्रबाट श्रीगणेशमूर्तिको कल्पना गरेर पाद्य, अर्घ्य आदि उपचारबाट पूजा गरी तल लेखिएबमोजिम आवरणपूजा गर्नुपर्दछ ।

**प्रथम आवरण पूजा** - ॐ गां हृदयाय नमः - आग्नेये, ॐ गीं शिरसे स्वाहा - नैर्ऋत्ये, ॐ गूं शिखायै वषट् - वायव्ये, ॐ गैं कवचाय हुम् - ऐशान्ये, ॐ गौं नेत्रत्रयाय वौषट् - अग्रे, ॐ गः अस्त्राय फट् - यी मन्त्रहरूद्वारा षडङ्ग पूजा गरी अञ्जलिमा फूल लिएर मूलमन्त्र जप गर्दै

**अभीष्टसिद्धिं मे देहि शरणागतवत्सले । भक्त्या समर्पये तुभ्यं प्रथमावरणार्चनम् ।।**

यो पद्य पढी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**द्वितीय आवरण पूजा** - ॐ विद्यायै नमः - पूर्वे, ॐ विधात्र्यै नमः - आग्नेये, ॐ भोगदायै नमः - दक्षिणे, ॐ विघ्नघातिन्यै नमः - नैर्ऋत्ये, ॐ निधिप्रदीपायै नमः - पश्चिमे, ॐ पापघ्न्यै नमः - वायव्ये, ॐ पुण्यायै नमः - सौम्ये, ॐ शशिप्रभायै नमः - ऐशान्ये - यसरी आठ दिशामा आठ शक्तिको पूजा गरी पुष्प लिएर मूलमन्त्र उच्चारण गर्दै -

**अभीष्टसिद्धिं मे देहि शरणागतवत्सले । भक्त्या समर्पये तुभ्यं द्वितीयावरणार्चनम् ।।**

भन्दै पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**तृतीय आवरण पूजा** - अष्टदलका अग्रभागमा क्रमशः - ॐ वक्रतुण्डाय नमः, ॐ एकदंष्ट्राय नमः, ॐ महोदराय नमः, ॐ गजास्याय नमः, ॐ लम्बोदराय नमः, ॐ विकटाय नमः, ॐ विघ्नराजाय नमः, ॐ धूम्रवर्णाय नमः - यी मन्त्रहरूबाट वक्रतुण्ड आदि श्रीगणेशहरूको पूजा गरी पुष्प लिएर मूलमन्त्र उच्चारण गर्दै -

**अभीष्टसिद्धिं मे देहि शरणागतवत्सले । भक्त्या समर्पये तुभ्यं तृतीयावरणार्चनम् ।।**

यो पद्य पढी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**चतुर्थ आवरण पूजा** - ॐ इन्द्राय नमः - पूर्वे, ॐ अग्नये नमः - आग्नेये, ॐ यमाय नमः - दक्षिणे,

ॐ निर्ऋतये नमः - नैर्ऋत्ये, ॐ वरुणाय नमः - पश्चिमे, ॐ वायवे नमः वायव्ये, ॐ सोमाय नमः - उत्तरे, ॐ ईशानाय नमः - ऐशान्ये, ॐ ब्रह्मणे नमः - आकाशे, ॐ अनन्ताय नमः - पाताले- यी मन्त्रहरूद्वारा पूर्वादि १० दिशामा इन्द्र आदि दिक्पालहरूको पूजा गरी पुष्प हातमा लिएर मूलमन्त्र उच्चारण गर्दै -

**अभीष्टसिद्धिं मे देहि शरणागतवत्सले । भक्त्या समर्पये तुभ्यं चतुर्थावरणार्चनम् ।।**

यो पद्य पढी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**पञ्चम आवरण पूजा** - ॐ वज्राय नमः, ॐ शक्तये नमः, ॐ दण्डाय नमः, ॐ खड्गाय नमः, ॐ पाशाय नमः, ॐ अङ्कुशाय नमः, ॐ गदायै नमः, ॐ त्रिशूलाय नमः, ॐ चक्राय नमः, ॐ पद्माय नमः - यी मन्त्रहरूद्वारा इन्द्र आदि देवताहरूको समीपमा आयुधपूजन गरी हातमा फूल लिएर मूलमन्त्र उच्चारण गर्दै -

**अभीष्टसिद्धिं मे देहि शरणागतवत्सले । भक्त्या समर्पये तुभ्यं पञ्चमावरणार्चनम् ।।**

भन्दै पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

यसरी दैनिक पूजा गर्दै - **वक्रतुण्डाय हुम्** मूलमन्त्रको ६ लाख सङ्ख्यामा जप गर्नुपर्दछ । सङ्ख्या पूरा भएपछि अष्टद्रव्यद्वारा दशांश हवन, तर्पण, मार्जन र ब्राह्मण भोजन गराएपछि पुरश्चरण पूर्ण हुन्छ र मन्त्र पनि सिद्ध हुन्छ । सिद्ध मन्त्रबाट विविध उद्देश्यपूर्तिका लागि काम्यप्रयोग गर्न सकिन्छ ।

काम्यप्रयोग -

१) मन्त्र सिद्ध भएपछि साधकले एकाग्र भई १२ हजार मूलमन्त्र जप गरेमा दरिद्रताको निवारण हुन्छ ।

२) कृष्णपक्षको चतुर्थीदेखि शुक्लपक्षको चतुर्थीसम्म प्रतिदिन १० हजार जप र १० आहुति हवन गरेमा ६ महिनाभित्र दरिद्रताको निवारण हुन्छ ।

३) मूलमन्त्रबाट प्रतिदिन घ्यू र चरु मिलाई हवन गर्नाले मानिस धनी र समृद्ध बन्दछ ।

४) प्रतिदिन मूलमन्त्रद्वारा ४४४ सङ्ख्यामा तर्पण गर्नाले साधकले चाहेका सम्पूर्ण मनोरथ परिपूर्ण हुन्छन्।

## ख) उच्छिष्ट गणपतिमन्त्रको साधना

आर्थिक अनुकूलता र भौतिक समृद्धि प्राप्त गर्न '**हस्तिपिशाचिलिखे स्वाहा**' यो नौ अक्षरको उच्छिष्ट मन्त्रलाई अचूक उपाय मानिएको छ । यो मन्त्र एक लाख जप गरेपछि सिद्ध हुन्छ ।

**विनियोगः** - ॐ अस्योच्छिष्टगणपतिमन्त्रस्य कङ्कोल ऋषिः, विराट् छन्दः, उच्छिष्टगणपतिर्देवता, सर्वाभीष्टसिद्धये जपे विनियोगः ।

**पञ्चाङ्गन्यास** - ॐ हस्ति हृदयाय नमः, ॐ पिशाचि शिरसे स्वाहा । ॐ लिखे शिखायै वषट् । ॐ स्वाहा कवचाय हुम् । ॐ हस्ति पिशाचि लिखे स्वाहा अस्त्राय फट् ।

ध्यान - **चतुर्भुजं रक्ततनुं त्रिनेत्रं पाशांकुशौ मोदकपात्रदन्तौ ।**
**करैर्दधानं सरसीरुहस्थमुन्मत्तमुच्छिष्टगणेशमीडे।।**

चतुर्भुज, रक्तवर्ण, त्रिनयन, दायाँ हातहरूमा अङ्कुश एवं मोदकपात्र र बायाँ हातहरूमा पाश एवं दन्त धारण गर्नुहुने, उन्मत्त भगवान् उच्छिष्ट गणपतिको ध्यान गर्दछु ।

**पीठपूजा** – वक्रतुण्ड गणपतिको साधनामा बताएको विधिअनुसार तीव्रा आदि पीठशक्तिको पूजा गरी मूलमन्त्रले इष्टदेवताको मूर्ति कल्पना गरी मानसपूजन गर्नुपर्दछ ।

**प्रथम आवरण पूजा** – ॐ हस्ति हृदयाय नमः, ॐ पिशाचि शिरसे स्वाहा, ॐ लिखे शिखायै वषट्, ॐ स्वाहा कवचाय हुम्, ॐ हस्तिपिशाचिलिखे नेत्रत्रयाय वौषट्, ॐ हस्तिपिशाचिलिखे स्वाहा अस्त्राय फट् – इत्यादि रूपमा पूर्ववत् प्रथम आवरणको पूजा गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**द्वितीय आवरण पूजा** – ॐ ब्राह्म्यै नमः, ॐ माहेश्वर्यै नमः, ॐ कौमार्यै नमः, ॐ वैष्णव्यै नमः, ॐ वाराह्यै नमः, ॐ इन्द्राण्यै नमः, ॐ चामुण्डायै नमः, ॐ महालक्ष्म्यै नमः, यी मन्त्रहरूद्वारा क्रमशः पूर्वादि दिशामा मातृकापूजा गर्नुपर्दछ ।

**तृतीय आवरण पूजा** – अष्टदलका अग्रभागमा क्रमशः – ॐ वक्रतुण्डाय नमः, ॐ एकदंष्ट्राय नमः, ॐ महोदराय नमः, ॐ गजास्याय नमः, ॐ लम्बोदराय नमः, ॐ विकटाय नमः, ॐ विघ्नराजाय नमः, ॐ धूम्रवर्णाय नमः – यी मन्त्रहरूबाट अष्टदलका पूर्व आदि १० दिशाहरूमा क्रमशः वक्रतुण्ड आदिको पूजा गर्नुपर्दछ ।

**चतुर्थ आवरण पूजा** – ॐ इन्द्राय नमः – पूर्वे, ॐ अग्नये नमः – आग्नेये, ॐ यमाय नमः – दक्षिणे, ॐ निऋतये नमः – नैर्ऋत्ये, ॐ वरुणाय नमः – पश्चिमे, ॐ वायवे नमः वायव्ये, ॐ सोमाय नमः – उत्तरे, ॐ ईशानाय नमः – ऐशान्ये, ॐ ब्रह्मणे नमः – आकाशे, ॐ अनन्ताय नमः – पाताले- यी मन्त्रहरूद्वारा क्रमशः इन्द्र आदि दिक्पालहरूको पूजा गर्नुपर्दछ ।

**पञ्चम आवरण पूजा** – इन्द्रादि देवताको समीपमा – ॐ वज्राय नमः, ॐ शक्तये नमः, ॐ दण्डाय नमः, ॐ खड्गाय नमः, ॐ पाशाय नमः, ॐ अङ्कुशाय नमः, ॐ गदायै नमः, ॐ त्रिशूलाय नमः, ॐ चक्राय नमः, ॐ पद्माय नमः – यी मन्त्रहरूद्वारा पूर्ववत् आयुधहरूको पूजा गर्नुपर्दछ ।

यसरी पूजा गरी मूलमन्त्रको दैनिक जप गर्दै एक लाख सङ्ख्या पुगेपछि दश हजार आहुति दिएर हवन, एक हजार तर्पण, एक सय मार्जन गरी दश ब्राह्मणलाई भोजन गराउनु पर्दछ । मन्त्र सिद्ध गरेपछि विविध काम्यप्रयोग गर्न सकिन्छ ।

**काम्यप्रयोग** –

१) रक्तचन्दन अथवा सेतो आँकबाट औंठाबराबरको श्रीगणेशको प्रतिमा बनाएर विधिवत् प्राणप्रतिष्ठा गरी मधुद्वारा स्नान गराउनु पर्दछ । कृष्णपक्षको चतुर्दशीदेखि शुक्लपक्षको चतुर्दशीसम्म दिनदिनै भगवान् श्रीगणेशलाई गुड र खीर टक्र्याई एकान्तमा जूठो मुख लिएर निर्वस्त्र भई म आफैं श्रीगणेश हुँ भन्ने भावना गरेर मूलमन्त्रको जप गर्दै घ्यू-तिलद्वारा एक हजार आहुति दिनुपर्दछ । यसरी प्रयोग गर्दा राज्य प्राप्त गर्न सकिन्छ ।

२) कुमालेको माटोद्वारा श्रीगणेशको प्रतिमा बनाएर पूजन गरी उक्त विधिबाट मन्त्रजप गर्दा मनोरथ सिद्धि हुन्छ । यसैगरी गुडको प्रतिमा बनाएर श्रीगणेशको आराधना गर्दा सौभाग्य प्राप्त हुन्छ । नीमको प्रतिमा बनाएर पूजन गर्दा शत्रुको नाश हुन्छ । घ्यू, मह, चिनी र लावा मिलाएर उक्त मन्त्र जप्दै हवन गर्नाले सम्पूर्ण संसार आफ्नो वशमा हुन्छ । जूठो मुख लिएर बिस्तरामा शयन गर्दै जप गर्दा शत्रुलाई वशीभूत तुल्याउन सकिन्छ । द्यूत, विवाद एवं युद्धमा उक्त विधिबाट सिद्ध गरिएको उच्छिष्ट गणपतिको

मन्त्र जप गर्नाले विजय प्राप्त हुन्छ । साधकले रातो लुगा लगाएर पान चपाउँदै उच्छिष्ट गणपतिमन्त्रको जप गर्नुपर्दछ अथवा भगवान् श्रीगणेशलाई चढाएका लड्डु चपाउँदै जप गर्नुपर्दछ । उच्छिष्टगणपति मन्त्रका साधकहरूले भगवान् श्रीगणेशलाई फल, पान अथवा मांसद्वारा बलि अर्पण गर्नुपर्दछ । बलि दिने मन्त्र यस प्रकार छ – गं हं क्लौं ग्लौं उच्छिष्ट श्रीगणेशाय महायक्षायायं बलिः । उच्छिष्टगणपतिका अरू मन्त्रहरू पनि छन् । उक्त 'हस्तिपिशाचिलिखे स्वाहा' नवार्ण मन्त्रमा ॐ लगाउँदा '**ॐ हस्तिपिशाचिलिखे स्वाहा**' दशाक्षर मन्त्र बन्दछ । त्यसै नवार्ण मन्त्रमा गं लगाउँदा '**गं हस्तिपिशाचिलिखे स्वाहा**' अर्को दशाक्षर मन्त्र तयार हुन्छ । यी तीनवटै मन्त्रको साधनाविधि एउटै रहेको छ । साधकले इच्छाअनुसार गुरुबाट मन्त्रदीक्षा लिई जुनसुकै मन्त्रको जप गर्दा पनि समान फल प्राप्त हुन्छ । उच्छिष्टगणेशका अन्य मन्त्रहरूका साधनाविधि छन् । आकरग्रन्थबाट तिनको विषयबोध सजिलो हुनेछ ।

**ग) शक्तिविनायक मन्त्रसाधनाविधि**

आर्थिक समुन्नति, धनधान्यवृद्धि, पृथिवी, भवन, कीर्ति, सम्मान, वाहन आदि भौतिक सुख र शक्ति-सामर्थ्य प्राप्त गर्न साधकहरूले भगवान् शक्तिविनायकको मन्त्र **ॐ ह्रीं ग्रीं ह्रीं** को साधना गर्नुपर्दछ ।

**विनियोगः** – ॐ अस्य शक्तिगणाधिपमन्त्रस्य भार्गव ऋषिः, विराट् छन्दः, शक्तिगणाधिपो देवता ह्रीं शक्तिग्रीं बीजं ममाभीष्टसिद्धये जपे विनियोगः ।

**ऋष्यादिन्यासः** – ॐ भार्गवाय ऋषये नमः –शिरसि । ॐ विराट् छन्दसे नमः – मुखे । ॐ शक्तिगणाधिपदेवतायै नमः – हृदये । ॐ ग्रीं बीजाय नमः – गुह्ये । ॐ ह्रीं शक्तये नमः – पादयोः।

**षडङ्गन्यासः** – ॐ ग्रां हृदयाय नमः । ॐ ग्रीं शिरसे स्वाहा । ॐ ग्रूं शिखायै वषट् । ॐ ग्रैं कवचाय हुम्। ॐ ग्रौं नेत्रत्रयाय वौषट् । ॐ ग्रः अस्त्राय फट् ।

**ध्यान** – **विषाणाङ्कुशावक्षसूत्रं च पाशं दधानं करैर्मोदकं पुष्करेण ।**
**स्वपत्न्यायुतं हेमभूषाभराढ्यं गणेशं समुद्यद्दिनेशाभमीडे ।।**

दायाँ हातहरूमा अङ्कुश एवं अक्षसूत्र तथा बायाँ हातहरूमा दन्त एवं पाश धारण गर्नुहुने, सुँढको टुप्पामा मोदक धारण गर्नुहुने, आफ्नी पत्नीका साथ शोभायमान, सुवर्णका आभूषणद्वारा अलङ्कृत र उदीयमान सूर्यसमान आभाले सुहाउनुभएका भगवान् शक्तिविनायकको म वन्दना गर्दछु।

यसरी ध्यान गरेर माथि बताएबमोजिम पीठपूजा एवं आवरण पूजा गरी चार लाखको सङ्ख्यामा शक्तिविनायक मन्त्रको जप गरेपछि यो मन्त्र सिद्ध हुन्छ । जपपछि हवन, तर्पण, मार्जन र ब्राह्मणभोजनको क्रम रहेको छ ।

**पीठपूजा** – वक्रतुण्ड श्रीगणेशको मन्त्रसाधना विधिअनुसार पीठमा तीव्रा, चालिनी, नन्दा, भोगदा, कामरूपिणी, उग्रा, तेजोवती र सत्या यी पीठशक्तिको पूजा गर्नुपर्दछ ।

**प्रथम आवरण पूजा** – ॐ ग्रां हृदयाय नमः, ॐ ग्रीं शिरसे स्वाहा, ॐ ग्रूं शिखायै वषट्, ॐ ग्रैं कवचाय हुम्, ॐ ग्रौं नेत्रत्रयाय वौषट्, ॐ ग्रः अस्त्राय फट् – यी मन्त्रहरूद्वारा षडङ्गपूजा पूर्ववत् पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**द्वितीय आवरण पूजा** – अष्टदलका अग्रभागमा क्रमशः – ॐ वक्रतुण्डाय नमः, ॐ एकदंष्ट्राय नमः, ॐ

महोदराय नमः, ॐ गजास्याय नमः, ॐ लम्बोदराय नमः, ॐ विकटाय नमः, ॐ विघ्नराजाय नमः, ॐ धूम्रवर्णाय नमः - यी मन्त्रहरूद्वारा पूजा गरी पूर्ववत् पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**तृतीय आवरण पूजा** - अष्टदलका दलहरूमा ॐ ब्राह्म्यै नमः, ॐ माहेश्वर्यै नमः, ॐ कौमार्यै नमः, ॐ वैष्णव्यै नमः, ॐ वाराह्यै नमः, ॐ इन्द्राण्यै नमः, ॐ चामुण्डायै नमः, ॐ लक्ष्म्यै नमः, यी मन्त्रहरूबाट मातृकापूजन गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**चतुर्थ आवरण पूजा** - ॐ इन्द्राय नमः - पूर्वे, ॐ अग्नये नमः - आग्नेये, ॐ यमाय नमः - दक्षिणे, ॐ निरृतये नमः - नैर्ऋत्ये, ॐ वरुणाय नमः - पश्चिमे, ॐ वायवे नमः वायव्ये, ॐ सोमाय नमः - उत्तरे, ॐ ईशानाय नमः - ऐशान्ये, ॐ ब्रह्मणे नमः - आकाशे, ॐ अनन्ताय नमः - पाताले- यी मन्त्रहरूद्वारा पूर्वादि दिशामा इन्द्र आदि दिक्पालहरूको पूजा गरी पूर्ववत् पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**पञ्चम आवरण पूजा** - इन्द्रादि देवताको समीपमा - ॐ वज्राय नमः, ॐ शक्तये नमः, ॐ दण्डाय नमः, ॐ खड्गाय नमः, ॐ पाशाय नमः, ॐ अङ्कुशाय नमः, ॐ गदायै नमः, ॐ त्रिशूलाय नमः, ॐ चक्राय नमः, ॐ पद्माय नमः - यी मन्त्रहरूद्वारा आयुधपूजन गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

यस रीतिबाट चार लाख जप सम्पन्न गरी मन्त्र सिद्ध गरेपछि मधुसहित मालपुवाद्वारा चालीस हजार आहुति दिनुपर्दछ । चार हजार तर्पण, चार सय मार्जन र चालीस ब्राह्मणहरूलाई भोजन गराएपछि पुरश्चरण सम्पन्न हुन्छ ।

**काम्यप्रयोग** -

१) उक्त मन्त्र जप गर्दै घ्यूसहित अन्नको आहुति दिनाले साधक एक वर्षभित्र अन्नवान् बन्दछ । उक्त मन्त्रद्वारा पायसको होम गर्नाले लक्ष्मीप्राप्ति हुन्छ र उखुका टुक्रा हवन गर्नाले राजलक्ष्मी प्राप्त हुन्छ। केरा र नरिवलको हवन गर्नाले वशीकरण शक्ति प्राप्त हुन्छ । घ्यूको हवन गर्नाले धन प्राप्त हुन्छ । मधु र लवण मिसाएर हवन गर्दा कुनै पनि स्त्रीलाई वशमा ल्याउन सकिन्छ । मालपुवाको हवन गर्नाले राजा र राजकीय पुरुष एवं नारी वशवर्ती बन्दछन् ।

**घ) लक्ष्मीविनायक मन्त्र साधनाविधि**

सम्पूर्ण कामनासिद्धि र समृद्धिप्राप्तिका लागि '**ॐ श्रीं गं सौम्याय गणपतये वरवरद सर्वजनं मे वशमानय स्वाहा**' मन्त्र अचूक उपाय मानिएको छ । पाँच लाख सङ्ख्यामा जप गरेपछि यो मन्त्र सिद्ध हुन्छ। यस मन्त्रको साधना गर्दा रातको समयमा मात्र गर्नुपर्दछ र पाँच लाखको सङ्ख्या २४ दिनमा पुऱ्याउनु पर्दछ ।

**विनियोगः** - ॐ अस्य लक्ष्मीविनायकमन्त्रस्य अन्तर्यामी ऋषिः, गायत्री छन्दः, लक्ष्मीविनायको देवता, श्रीं बीजं स्वाहा शक्तिर्ममाभीष्टसिद्धये जपे विनियोगः ।

**न्यासः** - ॐ अन्तर्यामी ऋषये नमः - शिरसि । ॐ श्रीं बीजाय नमः - गुह्ये । ॐ गायत्री छन्दसे नमः - मुखे । ॐ स्वाहा शक्तये नमः - पादयोः । ॐ लक्ष्मीवनायक देवतायै नमः - हृदि ।

**षडङ्गन्यासः** - श्रीं गां हृदयाय नमः । श्रीं गीं शिरसे स्वाहा । श्रीं गूं शिखायै वषट् । श्रीं गैं कवचाय हुम् । श्रीं गौं नेत्रत्रयाय वौषट् । श्रीं गः अस्त्राय फट् ।

ध्यान - **दन्ताभये चक्रदरौ दधानं कराग्रगस्वर्णघटं त्रिनेत्रम् ।**
**धृताब्जयालिङ्गितमब्धिपुत्र्या लक्ष्मीगणेशं कनकाभमीडे ।।**

दायाँ हातहरूमा दन्त एवं शङ्ख तथा बायाँ हातहरूमा अभय एवं चक्र धारण गर्नुहुने, सूँढको टुप्पामा सुवर्णकलश लिनुहुने, हातमा कमल लिएकी भगवती लक्ष्मीद्वारा आलिङ्गित त्रिनयन र सुवर्णकान्ति भगवान् लक्ष्मीगणेशको वन्दना गर्दछु ।

**पीठपूजा -** यसरी ध्यान गरी पूर्वोक्त पीठपूजा विधिअनुसार तीव्रा आदि शक्तिहरूको पूजा गरेपछि आवरणपूजा गर्नुपर्दछ ।

**प्रथम आवरण पूजा -** ॐ गां हृदयाय नमः, ॐ गीं शिरसे स्वाहा, ॐ गूं शिखायै वषट्, ॐ गैं कवचाय हुम्, ॐ गौं नेत्रत्रयाय वौषट्, ॐ गः अस्त्राय फट् - यी मन्त्रहरूद्वारा षडङ्ग पूजा गर्नुपर्दछ ।

**द्वितीय आवरण पूजा -** ॐ बलाकायै नमः, ॐ विमलायै नमः, ॐ कमलायै नमः, ॐ वनमालिकायै नमः, ॐ विभीषिकायै नमः, ॐ मालिन्यै नमः, ॐ शाङ्कर्यै नमः, ॐ वसुबालिकायै नमः, यी मन्त्रद्वारा मन्त्रशक्तिहरूको पूजा गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**तृतीय आवरण पूजा -** अष्टदलको बायाँतर्फ - ॐ पद्मनिधये नमः र दायाँतर्फ ॐ शङ्खनिधये नमः भनी निधिहरूको पूजा गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**चतुर्थ आवरण पूजा -** पूर्वादिक्रमले इन्द्रादि दिक्पालहरूको पूजा गर्नुपर्दछ । ॐ इन्द्राय नमः - पूर्वे, ॐ अग्नये नमः - आग्नेये, ॐ यमाय नमः - दक्षिणे, ॐ निर्ऋतये नमः - नैर्ऋत्ये, ॐ वरुणाय नमः- पश्चिमे, ॐ वायवे नमः वायव्ये, ॐ सोमाय नमः - उत्तरे, ॐ ईशानाय नमः - ऐशान्ये, ॐ ब्रह्मणे नमः - आकाशे, ॐ अनन्ताय नमः - पाताले - यी मन्त्रहरूद्वारा पूर्वादि दिशामा इन्द्र आदि दिक्पालहरूको पूजा गरी पूर्ववत् पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**पञ्चम आवरण पूजा -** इन्द्रादि देवताको समीपमा - ॐ वज्राय नमः, ॐ शक्तये नमः, ॐ दण्डाय नमः, ॐ खड्गाय नमः, ॐ पाशाय नमः, ॐ अङ्कुशाय नमः, ॐ गदायै नमः, ॐ त्रिशूलाय नमः, ॐ चक्राय नमः, ॐ पद्माय नमः - यी मन्त्रहरूद्वारा आयुधपूजन गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

यस प्रकार आवरण पूजा गरी चार लाख मन्त्र जपेपछि बेलका समिधाहरूद्वारा दशांश हवन, तर्पण, मार्जन एवं ब्राह्मणभोजन आदि सम्पन्न गरेपछि पुरश्चरण पूरा हुन्छ र मन्त्र पनि सिद्ध हुन्छ । त्यसपछि सिद्धमन्त्रबाट अनेक काम्यप्रयोग गर्न सकिन्छ ।

**काम्यप्रयोग -**

१) हृदयपर्यन्त जलमा उभिएर सूर्यमण्डलमा इष्टदेवको ध्यान गर्दै लक्ष्मीविनायक मन्त्रको तीन लाख जप गरेपछि धनको वृद्धि हुन्छ ।

२) बेलको फेदमा बसेर उक्त मन्त्रको तीन लाख जप गर्नाले पनि धन-समृद्धिको वृद्धि हुन्छ ।

३) अशोकको समिधाद्वारा प्रज्वलित अग्निमा घृताक्त चामलको हवनबाट विश्वलाई वशवर्ती बनाउन सकिन्छ ।

४) खयरको समिधाद्वारा प्रज्वलित अग्निमा आँकको समिधाको हवन गर्नाले राजा वशवर्ती हुन्छन् ।

५) खयरको समिधाद्वारा प्रज्वलित अग्निमा खीरको आहुति गर्नाले लक्ष्मी प्रसन्न हुन्छिन् ।

### ङ) त्रैलोक्यमोहनगणपति-मन्त्रसाधनाविधि

सम्मोहनसिद्धि प्रदान गर्ने त्रैलोक्यमोहन गणपतिमन्त्र यस प्रकार रहेको छ - **वक्रतुण्डैकदंष्ट्राय**

**क्लीं ह्रीं श्रीं गं गणपते वरवरद सर्वजनं मे वशमानय स्वाहा** । आफ्ना सामु श्रीगणेशको मूर्ति राखेर पाँच लाखको सङ्ख्यामा जप गर्नाले यो मन्त्र सिद्ध हुन्छ । मन्त्र जप गर्ने समयमा पूर्णब्रह्मचर्यमा रहनु पर्दछ। यो मन्त्र सिद्ध गर्ने साधकको व्यक्तित्वमा चमत्कार थपिन्छ । यस्ता साधकको दर्शन गर्नासाथ सबै मानिसहरू वशीभूत हुन्छन् ।

**विनियोग:** - ॐ अस्य त्रैलोक्यमोहनगणेशमन्त्रस्य गणकऋषि: त्रैलोक्यमोहनकरो गणेशो देवता ममाभीष्टसिद्धये जपे विनियोग: ।

**षडङ्गन्यास:** - वक्रतुण्डैकदंष्ट्राय क्लीं ह्रीं श्रीं गं हृदयाय नम: । गणपते शिरसे स्वाहा । वरवरद शिखायै वषट् । सर्वजनं कवचाय हुम् । मे वशमानय नेत्रत्रयाय वौषट् । स्वाहा अस्त्राय फट् ।

**ध्यान** - **गदाबीजपूरे धनु: शूलचक्रे सरोजोत्पले पाशधान्याग्रदन्तान् ।**
**करै: सन्दधानं स्वशुण्डाग्रराजन्मणीकुम्भमङ्काधिरूढं स्वपत्न्या ।।**
**सरोजन्मना भूषणानां भरेणोज्ज्वलद्धस्ततन्व्या समालिङ्गिताङ्गम् ।**
**करीन्द्राननं चन्द्रचूडं त्रिनेत्रं जगन्मोहनं रक्तकान्तिं भजेत्तम् ।।**

दायाँ हातहरूमा गदा, बीजपूर, शूल, चक्र एवं पद्म र बायाँ हातहरूमा धनु, कमल, पाश, धान्यमञ्जरी एवं दन्त धारण गर्नुहुने, सूँढको टुप्पामा सुन्दर मणिकलश धारण गर्नुहुने, त्रिनयन, कमल एवं आभूषणद्वारा सुहाएका करकमलले सम्पन्न भई काखमा बसेकी आफ्नी पत्नीद्वारा आलिङ्गित, गजानन, चन्द्रभाल र रक्तकान्ति जगन्मोहन श्रीगणेशको ध्यान गर्दछु ।

**पीठपूजा** - अङ्गन्यास ध्यान आदि पूर्वोक्त रीतिबाट सम्पन्न गरेपछि त्रैलोक्यमोहनगणेशको मानसोपचारले पूजा गरी अर्घ्यस्थापन गर्नुपर्दछ । ॐ सर्वशक्तिकमलासनाय नम: भनी आसन पूजा गरी तीव्रा आदि पीठदेवताहरूको पूजा गरेर इष्टदेव त्रैलोक्यमोहनको मूर्ति कल्पना गरी ध्यान, आवाहन, पुष्पाञ्जलि समर्पण गर्नुपर्दछ । अष्टदलमा शक्तिहरूको पूजन गर्नुपर्दछ ।

**प्रथम आवरण पूजा** - आग्नेय आदि कोणहरूमा 'ॐ वक्रतुण्डैकदंष्ट्राय क्लीं ह्रीं श्रीं गं हृदयाय नम:' इत्यादि षडङ्गन्यासमा बताइएका मन्त्रहरूद्वारा अङ्गपूजा गरी पुष्पाञ्जलि दिनुपर्दछ ।

**द्वितीय आवरण पूजा** - अष्टदलका दलहरूमा ॐ वामायै नम:, ॐ ज्येष्ठायै नम:, ॐ रौद्र्यै नम:, ॐ कलकाल्यै नम:, ॐ कलविकरिण्यै नम:, ॐ बलप्रमथन्यै नम:, ॐ सर्वभूतदमन्यै नम:, ॐ मनोन्मन्यै नम: - यी मन्त्रहरूबाट शक्तिहरूको पूजा गरी पुष्पाञ्जलि दिनुपर्दछ ।

**तृतीय आवरण पूजा** - द्वितीय आवरणमा शक्तिपूजन गरेपछि पूर्वादि दिशामा ॐ प्रमदाय नम:, ॐ सुमुखाय नम:, ॐ दुर्मुखाय नम:, ॐ विघ्नविनाशकाय नम: - यी मन्त्रहरूद्वारा प्रमोद आदिको पूजा गरी अष्टदलको अग्रभागमा ॐ ब्राह्म्यै नम:, ॐ माहेश्वर्यै नम:, ॐ कौमार्यै नम:, ॐ वैष्णव्यै नम:, ॐ वाराह्यै नम:, ॐ इन्द्राण्यै नम:, ॐ चामुण्डायै नम:, ॐ महालक्ष्म्यै नम: - यी मन्त्रद्वारा मातृकापूजन गरी पुष्पाञ्जलि दिनुपर्दछ ।

**चतुर्थ आवरण पूजा** - ॐ इन्द्राय नम: - पूर्वे, ॐ अग्नये नम: - आग्नेये, ॐ यमाय नम: - दक्षिणे, ॐ निऋतये नम: - नैर्ऋत्ये, ॐ वरुणाय नम: - पश्चिमे, ॐ वायवे नम: वायव्ये, ॐ सोमाय नम:- उत्तरे, ॐ ईशानाय नम: - ऐशान्ये, ॐ ब्रह्मणे नम: - आकाशे, ॐ अनन्ताय नम: - पाताले- यी

मन्त्रहरूद्वारा पूर्वादि दिशामा इन्द्र आदि दिक्पालहरूको पूजा गरी पूर्ववत् पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ।

**पञ्चम आवरण पूजा -** इन्द्रादि देवताको समीपमा - ॐ वज्राय नमः, ॐ शक्तये नमः, ॐ दण्डाय नमः, ॐ खड्गाय नमः, ॐ पाशाय नमः, ॐ अङ्कुशाय नमः, ॐ गदायै नमः, ॐ त्रिशूलाय नमः, ॐ चक्राय नमः, ॐ पद्माय नमः - यी मन्त्रहरूद्वारा आयुधपूजन गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

यसरी नित्य अर्चना गर्दै चार लाख जप पूरा गरेपछि अष्टद्रव्यद्वारा दशांश हवन, तर्पण, मार्जन एवं ब्राह्मण भोजनका कार्य सम्पन्न गर्नुपर्दछ । त्यसपछि मन्त्र सिद्ध हुन्छ र काम्यप्रयोग गर्न सकिन्छ।

काम्यप्रयोग -

१) उक्त मूलमन्त्रको जप गर्दै कमलद्वारा आहुति दिनाले राजालाई वशवर्ती बनाउन सकिन्छ भने कुमुदद्वारा आहुति दिनाले मन्त्रीलाई वशमा तुल्याउन सकिन्छ । पीपलको समिधाद्वारा आहुति दिनाले ब्राह्मणलाई, डुम्रीको समिधाद्वारा आहुति दिनाले क्षत्रियहरूलाई, पाकरीको समिधाद्वारा आहुति दिनाले वैश्यहरूलाई र वटवृक्षको समिधाद्वारा आहुति दिनाले शूद्रहरूलाई वशवर्ती तुल्याउन सकिन्छ । मधुको आहुति दिनाले सुवर्ण प्राप्ति हुन्छ भने गाईको दूधद्वारा आहुति दिनाले गोसम्पत्ति प्राप्त हुन्छ । दही मिसिएको चरुको हवन गर्नाले समृद्धि प्राप्त हुन्छ । घृताहुतिद्वारा अन्न एवं लक्ष्मीको वृद्धि हुन्छ भने वेतको आहुति दिनाले वृष्टि र सुकाल हुन्छ ।

च) हरिद्रागणपतिमन्त्र साधनाविधि

गृहस्थ जीवनलाई सुखी, सम्पन्न र निरापद तुल्याउन पौरुष, वीरता, वीर्यस्तम्भन र पूर्ण सम्भोगसुख प्राप्त गर्नुका साथै नपुंसकता हटाउन हरिद्रागणेशको '**ॐ हुं गं ग्लौं हरिद्रागणपतये वरवरद सर्वजनहृदयं स्तम्भय स्तम्भय स्वाहा**' । यस मन्त्रको साधना गर्नुपर्दछ ।

**विनियोगः -** ॐ अस्य श्रीहरिद्रागणनायकमन्त्रस्य मदनऋषिः, अनुष्टुप् छन्दः, हरिद्रागणनायको देवता ममाभीष्टसिद्धये जपे विनियोगः ।

**षडङ्गन्यासः -** ॐ हुं गं ग्लौं हृदयाय नमः । हरिद्रागणपतये शिरसे स्वाहा । वरवरद शिखायै वषट् । सर्वजनहृदयं कवचाय हुम् । स्तम्भय स्तम्भय नेत्रत्रयाय वौषट् । स्वाहा अस्त्राय फट् ।

ध्यान - **पाशांकुशौ मोदकमेकदन्तं करैर्दधानं कनकासनस्थम् ।**
**हारिद्रखण्डप्रतिमं त्रिनेत्रं पीतांशुकं रात्रिगणेशमीडे ।।**

दायाँ हातहरूमा अंकुश एवं लड्डु र बायाँ हातहरूमा पाश एवं दन्त धारण गर्नुहुने, सुवर्णको सिंहासनमा विराजमान, बेसारजस्तो पहेंलो आभाले सुहाउनुभएका, त्रिनेत्रसम्पन्न र पहेंला वस्त्र धारण गर्नुहुने हरिद्रागणपतिको ध्यान गर्दछु ।

**पीठपूजन -** अर्घ्य स्थापन गरी अष्टदल कमलमा तीव्रा आदि पूर्वोक्त शक्तिहरूको पूजन गर्नुपर्दछ । फेरि मूल मन्त्रले हरिद्रागणपतिको मूर्तिको कल्पना गरेर मानसपूजा गरी क्रमअनुसार आवरण पूजा गर्नुपर्दछ।

**प्रथम आवरण पूजा - वक्रतुण्डैकदंष्ट्राय क्लीं ह्रीं श्रीं गं हृदयाय नमः** यसरूपमा अङ्गन्यासोक्त सरणिबाट अङ्गपूजा गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**द्वितीय आवरण पूजा -** अष्टदल कमलका दलहरूमा ॐ वामायै नमः, ॐ ज्येष्ठायै नमः, ॐ रौद्रै नमः, ॐ कलकाल्यै नमः, ॐ कलविकरिण्यै नमः, ॐ बलप्रमथन्यै नमः, ॐ सर्वभूतदमन्यै नमः, ॐ

मनोन्मन्यै नमः - यी मन्त्रहरूबाट शक्तिहरूको पूजा गरी पुष्पाञ्जलि दिनुपर्दछ ।

**तृतीय आवरण पूजा -** अष्टदल कमलका दलहरूमा ॐ प्रमोदाय नमः, ॐ सुमुखाय नमः, ॐ दुर्मुखाय नमः, ॐ विघ्ननाशकाय नमः - यी मन्त्रहरूद्वारा प्रमोद आदिको पूजा गरेपछि दलहरूको अग्रभागमा ॐ ब्राह्मी नमः, ॐ माहेश्वर्यै नमः, ॐ कौमार्यै नमः, ॐ वैष्णव्यै नमः, ॐ वाराह्यै नमः, ॐ इन्द्राण्यै नमः, ॐ चामुण्डायै नमः, ॐ महालक्ष्म्यै नमः, यी मन्त्रहरूद्वारा मातृकापूजन गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**चतुर्थ आवरण पूजा -** ॐ इन्द्राय नमः - पूर्वे, ॐ अग्नये नमः - आग्नेये, ॐ यमाय नमः - दक्षिणे, ॐ निर्ऋतये नमः - नैर्ऋत्ये, ॐ वरुणाय नमः - पश्चिमे, ॐ वायवे नमः वायव्ये, ॐ सोमाय नमः - उत्तरे, ॐ ईशानाय नमः - ऐशान्ये, ॐ ब्रह्मणे नमः - आकाशे, ॐ अनन्ताय नमः - पाताले - यी मन्त्रहरूद्वारा पूर्वादि दिशामा इन्द्र आदि दिक्पालहरूको पूजा गरी पूर्ववत् पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

**पञ्चम आवरण पूजा -** इन्द्रादि देवताको समीपमा - ॐ वज्राय नमः, ॐ शक्तये नमः, ॐ दण्डाय नमः, ॐ खड्गाय नमः, ॐ पाशाय नमः, ॐ अङ्कुशाय नमः, ॐ गदायै नमः, ॐ त्रिशूलाय नमः, ॐ चक्राय नमः, ॐ पद्माय नमः - यी मन्त्रहरूद्वारा आयुधपूजन गरी पुष्पाञ्जलि अर्पण गर्नुपर्दछ ।

यसरी आवरण पूजा गरी मन्त्र जप आरम्भ गर्नुपर्दछ । चार लाख जप पूरा भएपछि बेसार मिश्रित चामलद्वारा दशांश हवन गरी तर्पण, मार्जन एवं ब्राह्मणभोजन गराएपछि मन्त्र सिद्ध हुन्छ र काम्यप्रयोग गर्न सकिन्छ ।

पीठपूजा - यस मन्त्रको चार लाख सङ्ख्यामा जपी पुरश्चरण पूर्ण गर्नुपर्दछ । बेसार मिसिएको चामलद्वारा दशांश होम सम्पन्न गरी ब्राह्मणभोजन गराउनु पर्दछ । प्रत्येक दिन पुरश्चरण आरम्भ गर्नुभन्दा पहिले पीठपूजा, मातृका पूजन र दिक्पालको पूजन गर्नुपर्दछ । यस प्रकार पुरश्चरण गर्दा सिद्ध हुने मन्त्रले सम्पूर्ण मनोवाञ्छित वस्तु प्रदान गर्दछ ।

काम्यप्रयोग -

१) शुक्लपक्षको चतुर्थी तिथिका दिन कन्याद्वारा पिसिएको बेसार शरीरभरि लेपन गरेर तीर्थ आदिका पवित्र जलले स्नान गरी श्रीगणेशको पूजा गर्नुपर्दछ । पूजा गरेपछि तर्पण दिएर भगवान् श्रीगणेशका सामु उक्त मन्त्रको एक हजार आठ सङ्ख्यामा जप सम्पन्न गर्नुपर्दछ । घ्यू एवं मालपुवाले सय आहुति दिएर ब्रह्मचारीहरूलाई भोजन गराउनु पर्दछ । कुमारी एवं गुरुलाई सन्तुष्ट तुल्याएपछि साधकले मनोवाञ्छित फल प्राप्त गर्दछ ।

२) लाजाद्वारा आहुति दिनाले वरले सुन्दर पत्नी प्राप्त गर्दछन् र कन्याले अनुरूप वर प्राप्त गर्दछिन् ।

३) बन्ध्या नारीले ऋतुस्नान गरेपछि श्रीगणेशजीको पूजा गरेर चार तोला गहुँतमा बोचो र बेसार पिसेर मिसाउनु पर्दछ । एक हजार सङ्ख्यामा मूलमन्त्रले उक्त गहुँत अभिमन्त्रित गर्नुपर्दछ । त्यसपछि कन्या एवं बटुहरूलाई श्रीगणेशको प्रसाद लड्डु खुवाउनु पर्दछ । कर्ताले आफै अभिमन्त्रित गोमूत्रपान गर्नुपर्दछ । यसो गरेपछि उत्तम, गुणी पुत्र प्राप्त हुन्छ ।

४) उक्त मन्त्रको जपोपासनाबाट शत्रुस्तम्भन र वाणीस्तम्भन हुन्छ । जल, अग्नि, चोर, सिंह एवं अस्त्रको

प्रकोप निवारण गर्न सकिन्छ ।[२०]

यसैगरी तन्त्रहरूमा अनेक विनायक र श्रीगणेशहरूको उपासनाविधि रहेको छ । केही स्थानहरूमा श्रीगणेशको द्वारयात्रा गर्ने परम्परा पनि रहिआएको छ । कहीं मन्त्रकल्प गर्ने परम्परा पनि देखिन्छ । श्रीगणेशगायत्री, श्रीगणेशकवच, श्रीगणेशाष्टोत्तरशतनाम, श्रीगणेशसहस्रनामको आधारमा उपासना गरी मनोरथसिद्धि गर्न चाहने उपासकहरूको ठूलो सङ्ख्या रहेको छ ।

श्रीगणेशको श्रीविग्रह दिव्य र विलक्षण छ । श्रीगणेशपूजा स्थूलात्मक, बुद्धिगम्य र अनुभवसिद्ध पनि हुन्छ । तर जुन प्रतीकात्मक श्रीगणेशपूजन गरिन्छ, त्यसलाई निर्गुण ब्रह्मको उपासना भन्नुपर्दछ । श्रीगणेशरूपमा उपास्य देवतामा सत्त्वगुणको प्रधानता रहेको हुन्छ । उहाँको कृपाबाट सत्त्वगुणको उदय हुँदा कर्तृत्वको अभिमान नष्ट हुन्छ । त्यस अवस्थामा विघ्न-बाधाको लोपमात्र होइन, अत्यन्ताभाव नै हुन्छ ।

गणेशपूजनका निर्गुण, सगुण, वैदिक, तान्त्रिक आदि अनेक विधि-विधान रहे पनि श्रीगणेशपूजन एउटा साकार, परिमित, परिच्छिन्न शक्तिको प्रतीक नभएर निर्गुण परब्रह्मको उपासनाको प्रतीक हो । वास्तवमा सगुण हुँदा सत्त्वगुणका धनी र निर्गुण हुँदा निराकार, निरञ्जन, परब्रह्मरूप श्रीगणेश उपासक भक्तहरूका लागि कल्पवृक्षसमान हुनुहुन्छ । सगुणोपासनामा श्रीगणेशका युगानुसारका स्वरूपहरूको ध्यानका विधि रहेका छन् । सत्ययुगमा – सिंहवाहन, दशबाहु, तेजोमय, कश्यपनन्दन महोत्कटको ध्यान र उपासना गर्नुपर्दछ । त्रेतायुगमा – मयूरवाहन, षड्बाहु, शशिवर्ण, शिवपुत्र मयूरेशको ध्यान र उपासना गर्नुपर्दछ । द्वापरयुगमा – मूषकवाहन, चतुर्भुज, रक्तवर्ण, वरेण्यपुत्र श्रीगणेशको ध्यान र उपासना गर्नुपर्दछ । कलियुगमा- अश्ववाहन, धूम्रवर्ण, द्विबाहु श्रीगणेशको ध्यान र उपासना गर्नुपर्दछ ।[२१]

मेरुतन्त्र एवं श्रीविद्यार्णव तन्त्र आदि तन्त्रशास्त्रका विशिष्ट ग्रन्थहरूको शैलीमा बृहत्पुरश्चर्यार्णवमा विभिन्न आम्नायका गणपतिहरूको मन्त्रोपासना विधिको निरूपण गरिएको छ । वैदिककालदेखि नै श्रीगणेशको आराधना सनातनसमाजमा प्रचलित रहेको छ । विभिन्न किसिमका गायत्री र श्रीगणेशपरक मन्त्रहरूबाट श्रीगणेशको उपासना अनादिसिद्ध भएको तथ्य प्रमाणित हुन्छ । शिवपुराण, स्कन्दपुराण, ब्रह्मवैवर्तपुराण, लिङ्गपुराण आदि पौराणिक ग्रन्थहरूमा श्रीगणेशपरक कथा, श्रीगणेशतत्त्वको चिन्तन र श्रीगणेशपूजापद्धति पाइन्छन् । श्रीगणेशको नामबाट प्रचलित श्रीगणेशपुराणमा विस्तृतरूपमा श्रीगणेशतत्त्वको निर्वचन गरिएको छ । तन्त्रवाङ्मयमा व्यापकरूपमा श्रीगणेशको उपासनाका विविध पक्षहरू प्रकाशित गरिएका छन् । गणपति जनगणका देवता हुनुभएकाले उहाँको जनसमूहमा अपरिमित सम्मान छ । श्रीगणेश विघ्नराज र विघ्ननाशक हुनुका साथै सिद्धि एवं बुद्धिका दाता हुनुभएकाले उहाँ सनातनसमाजका मात्र देवता नभई जैनसम्प्रदाय र बौद्धसम्प्रदायका पनि आराध्य हुनुहुन्छ ।

## इ) वैनायक सम्प्रदाय

सनातन मतावलम्बीहरूमा मुख्यतया पाँच सम्प्रदाय छन् – शैव, वैष्णव, शाक्त, सौर र वैनायक । जुन सम्प्रदायले क्रमशः- शिव, विष्णु, शक्ति, सूर्य र श्रीगणेशको आराधना गर्दछन् । वैनायकसम्प्रदायका उपासकहरूले भगवान् श्रीगणेशलाई परब्रह्मका रूपमा मान्दछन् । उक्त सम्प्रदायका ६ भेद रहेका छन् - १) महागणपति सम्प्रदाय, २) हरिद्रागणपति सम्प्रदाय, ३) उच्छिष्टगणपति सम्प्रदाय, ४) नवनीतगणपति सम्प्रदाय, ५) स्वर्णगणपति

---

२०. महीधर, मन्त्रमहोदधि, द्वितीयतरङ्ग, वाराणसी : प्राच्य प्रकाशन, ई. १९८१, पृ. ४८-७६ ।

२१. ध्यायेत् सिंहगतं विनायकममुं दिग्बाहुमाद्ये युगे त्रेतायान्तु मयूरवाहनममुं षड्बाहुकं सिद्धिदम् ।
द्वापरे तु गजाननं युगभुजं रक्ताङ्गरागं विभुं तुर्ये तु द्विभुजं सिताङ्गरुचिरं सर्वार्थदं सर्वदा ।। – श्रीगणेशपुराण, २/८५/१८ ।

सम्प्रदाय, ६) सन्तानगणपति सम्प्रदाय ।

श्रीमत्कृष्णानन्दवागीशद्वारा रचित तन्त्रसार ग्रन्थको चतुर्थ परिच्छेदमा वैनायक सम्प्रदायद्वारा आराध्य श्रीगणेशको स्वरूप र तत्त्वबारे भनिएको छ – महापुरुषहरूले जसलाई आदि अक्षर ॐ भन्दछन्, श्रुतिका वचनहरूले जसको नित्य स्तुति गर्दछन्, देवताहरू जसका चरणकमलमा प्रणत हुन्छन् र अर्धचन्द्रमा जसको शिरमा गहना बनेर सुहाउँछन्, म ती भगवान् गजाननको भजन-कीर्तन गर्दछु ।[२२]

तन्त्रसारको द्वितीय परिच्छेदमा विभिन्न वैनायकसम्प्रदायका उपास्यहरू क्रमशः – महागणपति, हरिद्रागणपति, उच्छिष्टगणपति, हेरम्बगणपति, स्वर्णगणपति र सन्तानगणपतिको आराधना विधिका विषयमा विस्तृतरूपमा प्रकाश पारिएको छ । स्वर्णगणपति-सम्प्रदाय एवं सन्तानगणपति-सम्प्रदायका पूजापद्धति र वैदिक पूजापद्धतिमा अन्तर नभएकाले यहाँ बाँकी चार सम्प्रदायमा प्रचलित पूजाविधिको विषयमा सङ्क्षेपमा उल्लेख गरिन्छ ।

## क) महागणपति सम्प्रदायको आराधनाविधि

### १) दशभुज गणपतिको ध्यान

महागणपतिलाई दशभुज र रक्तवर्ण मानिनुका साथै चतुर्भुज र गौरवर्ण पनि मानिएको छ । दशभुज महागणपतिको ध्यानमा भनिएको छ – उत्तम गजराजको जस्तो मुखमण्डलद्वारा शोभायमान, शिरमा अर्धचन्द्रमा धारण गर्नुहुने, अरुणकान्तिद्वारा शोभायमान, त्रिनयन, श्रीमहागणपति हातमा कमल लिएकी आफ्नी प्रियतमाद्वारा आलिङ्गित हुनुहुन्छ । उहाँले आफ्ना भुजाहरूमा दाडिम, गदा, धनु, त्रिशूल, चक्र, पद्म, पाश, उत्पल, धान्यगुच्छ, स्वदन्त र रत्नकलश धारण गर्नुभएको छ । यस्ता महागणपतिको म ध्यान गर्दछु –

**हस्तीन्द्राननमिन्दुचूडमरुणच्छायं त्रिनेत्रं रसा-**
**दाश्लिष्टं प्रियया सपद्मकरया स्वाङ्कस्थया सन्ततम् ।**
**बीजापूरगदाधनुस्त्रिशिखयुक्चक्राब्जपाशोत्पल-**
**ब्रीह्यग्रस्वविषाणरत्नकलशान् हस्तैर्वहन्तं भजे ।।**[२३]

उक्त ध्यानानुकूल २८ अक्षरको मन्त्र यस प्रकार रहेको छ –

**ॐ श्रीं ह्रीं क्लीं ग्लौं गं गणपतये वर वरद सर्वजनं मे वशमानय स्वाहा ।**

## ख) हेरम्बगणपति सम्प्रदायको आराधनाविधि

तन्त्रसारमा हेरम्बगणपतिका दुईथरि ध्यान र मन्त्रको विधान गरिएको छ –

अ) पञ्चहस्तिमुख दशभुज र सिंहवाहन ।   आ) चतुर्भुज हेरम्ब ।

### अ) पञ्चहस्तिमुख हेरम्बगणपतिको ध्यान

पञ्चहस्तिमुख हेरम्बगणपतिको निम्नाङ्कित ध्यानपद्यको आशय यसप्रकार रहेको छ– पाँच गजमुखले सम्पन्न, चार दिशामा काञ्चन, नील, श्वेत र कुङ्कुम वर्णका ४ गजमुख र

२२. *ओङ्कारमाद्यं प्रवदन्ति सन्तो वाचः श्रुतीनामपि यं गृणन्ति ।*
*गजाननं देवगणानताङ्घ्रिं भजेऽहमर्धेन्दुकृतावतंसम् ॥ – रासमोहन चक्रवर्ती, 'गाणपत्यसम्प्रदाय', कल्याण, पूर्ववत्, ४६० ।*

२३. *पूर्ववत् ।*

ऊर्ध्व भागमा एक मुक्ता वर्ण गजमुखले सुहाउनुभएका, त्रिनयन, सिंहवाहन, चन्द्रमौलि, सूर्यसमान कान्तिले जाज्वल्यमान, बलगर्वित, आफ्ना दश भुजाहरूमा वरमुद्रा, अभयमुद्रा, मोदक, दन्त, टङ्क, शिर, अक्षमाला, मुद्गर, अङ्कुश र त्रिशूल धारण गर्नुहुने हेरम्ब गणपतिको ध्यान गर्दछु ।

**मुक्ताकाञ्चननीलकुन्दघुसृणच्छायैस्त्रिनेत्रान्वितै-**
**र्नागास्यैर्हरिवाहनं शशिधरं हेरम्बमर्कप्रभम् ।**
**दृप्तं दानमभीतिमोदकरदान् टङ्कं शिरोऽक्षात्मिकाम्**
**मालां मुद्गरमङ्कुशं त्रिशिखिकं दोर्भिर्दधानं भजे ।।**[२४]

उक्त ध्यानसम्मत हेरम्बगणपतिको चतुरक्षर मन्त्र - **ॐ गूं नमः ।**

आ) चतुर्भुज हेरम्बगणपतिको ध्यान

चतुर्भुज हेरम्बगणपतिको निम्नाङ्कित ध्यानपद्यको आशय यसप्रकार रहेको छ - आफ्ना चार भुजाहरूमा क्रमशः पाश, अङ्कुश, कल्पलता र हस्तिदन्त धारण गर्नुहुने, सूँढको टुप्पामा दाडिमको फल राखेर सुहाउनुभएका, रातो वर्णको अङ्गकान्तिले सम्पन्न, त्रिनयन, शिरमा तरुण चन्द्रमा धारण गर्नुहुने र कण्ठमा सेतो हार लगाउनुभएका भगवान् हेरम्बले तपाईंहरू सबैको रक्षा गर्नुहुनेछ ।

**पाशाङ्कुशौ कल्पलतां विषाणं दधत् सुशुण्डाहितबीजपूरः ।**
**रक्तस्त्रिनेत्रस्तरुणेन्दुमौलिर्हारोज्ज्वलो हस्तिमुखोऽवताद् वः ।।**[२५]

ध्यानानुकूल मन्त्र - **गं क्षिप्रप्रसादनाय नमः ।**

ग) हरिद्रागणपति सम्प्रदायको आराधनाविधि

हरिद्रागणपतिको निम्नाङ्कित ध्यानपद्यको भाव यसप्रकार रहेको छ - शरीरमा पहेंलो रङ्गको कान्तिले सुहाउनुभएका, चतुर्भुज, पहेंला वस्त्र धारण गर्नुहुने, सर्वव्यापक, पाश, अङ्कुश, मोदक र गजदन्त धारण गर्नुहुने हरिद्रागणपतिलाई प्रणाम गर्दछु ।

**हरिद्राभं चतुर्बाहुं हारिद्रवसनं विभुम् ।**
**पाशाङ्कुशधरं देवं मोदकं दन्तमेव च ।।**[२६]

एकाक्षर मन्त्र - ग्लम् ।

घ) उच्छिष्टगणपति सम्प्रदायको आराधनाविधि

उच्छिष्टगणपतिको निम्नाङ्कित ध्यानपद्यको आशय यसप्रकार छ - रातो वर्णको कान्तिले सुहाउनुभएका, सबै प्रकारका अलङ्कारद्वारा अलङ्कृत, राता वस्त्र धारण गर्नुहुने, त्रिनयन, रातो

२४. पूर्ववत् ।
२५. पूर्ववत् ।
२६. पूर्ववत् ।

कमलमाथि विराजमान, चतुर्भुज, विशालकाय, द्विगजदन्त धारण गर्नुहुने, मुस्कानको कान्तिले सुहाउनुभएका, दायाँ माथिल्लो हातमा वरमुद्रा र तल्लो हातमा एकदन्त लिएर रहनुभएका, बायाँ माथिल्लो हातमा पाश र तल्लो हातमा अंकुश धारण गर्नुहुने, जटाजुटले बेरिनुभएका, मस्तकमा अर्धचन्द्र धारण गर्नुहुने, उच्छिष्टगणपतिको ध्यान गर्दछु ।

**रक्तमूर्तिं गणेशञ्च सर्वाभरणभूषितम् । रक्तवस्त्रं त्रिनेत्रञ्च रक्तपद्मासने स्थितम् ।।**
**चतुर्भुजं महाकायं द्विदन्तं सस्मिताननम् । इष्टञ्च दक्षिणे हस्ते दन्तञ्च तदधःकरे ।**
**ललाटं चन्द्ररेखाढ्यं सर्वालङ्कारभूषितम् । पाशाङ्कुशौ च हस्ताभ्यां जटामण्डलवेष्टितम् ।।**[२७]

मन्त्र – **ॐ हस्तिपिशाचिलिखे स्वाहा ।**

## ई ) अजपागायत्री एवं गणेशगायत्री

कुण्डलिनीबाट उत्पन्न प्राणरूप गायत्री हकाररूप ध्वनिका साथ बहिर्गमन गर्ने र सकाररूप ध्वनिका साथ अन्तःप्रवेश गर्ने हुँदा '**हंसः हंसः**' यस रूपको अजपा गायत्री मन्त्र निष्पन्न हुन्छ । विना प्रयास जपिने अजपाको स्मरणबाट साधकका समस्त विघ्न निरस्त हुन्छन् । अजपाका देवतालाई हंस भनिन्छ र ती क्रमशः श्रीगणेश, ब्रह्मा, हरि, शिव, जीव र परमात्मा हुन् । शरीरमा रहेका चक्रहरूमध्ये मूलाधार चक्रमा हंसरूप श्रीगणेशको ध्यान गर्नुपर्ने कुरा बताइएको छ ।[२८]

यसैगरी स्वाधिष्ठान चक्रमा ब्रह्मा, मणिपूर चक्रमा विष्णु, अनाहत चक्रमा शिव, विशुद्ध चक्रमा जीवात्मा, आज्ञा चक्रमा गुरु र सहस्रार चक्रमा परमात्माको ध्यान गर्नुपर्दछ । चक्रमा देवताहरूको ध्यान गर्दा तत्तद्देवताका शक्तिहरू क्रमशः श्रीगणेशकी सिद्धि, ब्रह्माकी सरस्वती, विष्णुकी लक्ष्मी, शिवकी पार्वती, जीवकी अविद्या, गुरुकी ज्ञानशक्ति र परमात्माकी मोक्षबीजात्मिका विद्याको पनि ध्यान गर्नुपर्ने निर्देश गरिएको छ ।[२९] निरन्तर अजपा जप जारिरहने हुँदा प्रत्येक साधकले प्रातःकालमा अजपा जपसङ्ख्यामध्ये ६०० श्रीगणेश, ६००० ब्रह्मा, ६००० विष्णु, ६००० शिव, १००० जीवात्मा, १००० गुरु र १००० परमात्मालाई अर्पण गर्नुपर्ने तथ्य बताइएको छ ।[३०] श्रीगणेशमन्त्र साधना गर्दा शीघ्र सिद्धि प्रदान गर्ने क्षेत्रको निरूपण गर्ने क्रममा नर्मदा नदीको तटवर्ती मायूरक्षेत्रलाई सिद्धिदायक क्षेत्र बताइएको छ ।[३१]

गणेश अथर्वशीर्षमा श्रीगणेशपूजा र **ॐ गं गणपतये नमः** मन्त्रको जप गर्ने विधान गरिएको छ । श्रीगणेशको उपासना गर्ने भक्तहरूका लागि उपनिषद्हरूमा श्रीगणेशका अनेक गायत्रीहरू पाइन्छन् ।[३२]

---

२७. पूर्ववत् ।
२८. हेरम्बन्तु यदा मध्ये ऐशान्यामच्युतं भजेत् । आग्नेय्यां पद्मवक्त्रन्तु नैर्ऋत्यां जगदम्बिकाम् ।।
वायव्यां द्युमणिञ्चैव यजेन्मन्त्री ह्यतन्द्रितः । – बृहत्पुरश्चर्यार्णव, दोस्रो भा., पृ. ८७ ।
२९. व सप्तदलयुक्ते सम्यगाधारपद्मे तरुणमतयामात् कारणस्य त्रिनेत्रम् ।
अभयवरदहस्तं चारुपाशाङ्कुशोद्यत् कनकरुचिसमन्वं चिन्तयेदादिदेवम् ।। – पूर्ववत्, पृ. २०८ ।
३०. शक्तिः सिद्धिर्गणेशस्य ब्रह्मणश्च सरस्वती । लक्ष्मीर्नारायणस्यापि पार्वती च पिनाकिनः ।।
अविद्या चैव जीवस्य गुरोर्ज्ञानं परात्परम् । मोक्षबीजात्मिका विद्या शक्तिश्च परमात्मनः ।। – पूर्ववत्, पृ. २००९ ।
३१. षट्शतानि गणेशाय ब्रह्मणे षट्सहस्रकम् । विष्णवे षट्सहस्रञ्च षट्सहस्रं पिनाकिने ।।
सहस्रमात्मने चैव गुरवे च सहस्रकम् । परात्मने सहस्रञ्च यथाविधि समुत्सृजेत् ।। – पूर्ववत्, पृ. २००३ ।
३२. महागणपतिक्षेत्रं मायूरं नर्मदातटे । महाश्मशानं मायूरं गणेशमनुसिद्धिदम् ।। – मेरुतन्त्र, खेमराज श्रीकृष्णदास वेंकटेश्वर मुद्रणालय, मुम्बई, वि.सं. १९६५, श्लो. ६/२४९।

अ) **एकदन्ताय विद्महे वक्रतुण्डाय धीमहि तन्नो दन्ती प्रचोदयात् ।** (गणेश-अथर्वशीर्ष)

आ) **तत्पुरुषाय विद्महे वक्रतुण्डाय धीमहि तन्नो दन्ती प्रचोदयात् ।** (नारायणोपनिषद्)

इ) **तत्कराटाय विद्महे हस्तिमुखाय धीमहि तन्नो दन्ती प्रचोदयात् ।** (मैत्रायणीसंहिता)

ई) **लम्बोदराय विद्महे महोदराय धीमहि तन्नो दन्ती प्रचोदयात् ।** (अग्निपुराण)

उ) **महोत्कटाय विद्महे वक्रतुण्डाय धीमहि तन्नो दन्ती प्रचोदयात् ।** (अग्निपुराण)

वैदिकवाङ्मयमा गणपतिका रूपमा श्रीगणेश, तत्पुरुष, वक्रतुण्ड र दन्ती शब्दको उल्लेख गरी श्रीगणेशगायत्रीहरू पाइएकाले भगवान् श्रीगणेश पञ्चदेवतामध्ये प्रथमपूज्य र अनादिसिद्ध देवता हुनुहुन्छ, यसमा कुनै सन्देह छैन ।

### उ) पञ्चदेवोपासनामा श्रीगणेश

सूर्य, श्रीगणेश, देवी, शिव र नारायणलाई पञ्चदैवत भनिएको छ । सबै कर्ममा यिनको पूजा गर्नुपर्दछ । आकाशका स्वामी विष्णु, अग्निकी स्वामिनी देवी, वायुका स्वामी सूर्य, पृथिवीका स्वामी शिवजी र जलका स्वामी श्रीगणेश हुनुहुन्छ ।[३३] विधाताले सर्वप्रथम जलको सृष्टि गरे र तिनले जलमा नै संसारको बीजतत्त्व प्रतिष्ठित गराएको कुरा मनुले भनेका छन् ।[३४]

सृष्टिकार्यमा सर्वप्रथम जल रचिएकाले र श्रीगणेश जलाधिप हुनुभएकाले श्रीगणेशको प्रथम पूजा गर्ने विधान रहेको छ । गणपति अथर्वशीर्ष र **गणानान्त्वा०** आदि मन्त्रहरूमा श्रीगणेशलाई सर्वदेवमय मानिएकाले श्रीगणेशको पूजन गर्दा सबै देवताको पूजन हुने कुरा शास्त्रमा बताइएको छ । श्रीगणेशको पूजा गर्ने उपासक सबै दोष, सबै विघ्न र सबै पापबाट मुक्त हुन्छन् भनिएको छ ।[३५]

कपिलतन्त्रमा विष्णु, शक्ति, सूर्य, शिव र श्रीगणेशलाई विभिन्न तत्त्वका अधिष्ठाता मानिएको छ । तदनुसार आकाशका स्वामी विष्णु, अग्निका स्वामी शक्ति, वायुका स्वामी सूर्य, पृथिवीका स्वामी शिवजी र जीवन एवं जलका स्वामी श्रीगणेशलाई मानिएको छ ।

गणेश, शिव, विष्णु, देवी र सूर्य यी पाँच देवताका छुट्टाछुट्टै पाञ्चायन रहेका छन् । श्रीगणेश पाञ्चायनमा देवताको स्थापना क्रम निर्देश गर्ने सन्दर्भमा बृहत्पुरश्चर्यार्णवमा भनिएको छ – मध्यभागमा श्रीगणेश, ऐशान्यमा विष्णु, आग्नेयमा शिव, नैर्ऋत्यमा देवी र वायव्यमा सूर्यको स्थापना गर्नुपर्दछ ।[३६]

## ४.४ आवेशपीडित मानिसहरूका लागि गणपतिकल्प

आफ्ना दुष्कर्म, दुष्प्रवृत्ति, दुर्वासना र ग्रहचक्रको प्रभावका कारण मानिसहरूमा विघ्नराज श्रीगणेशको आवेश प्रकट हुन्छ । त्यसबाट मानिसले अनेक शारीरिक र मानसिक पीडा व्यहोर्नु पर्दछ । श्रीगणेशको आवेश हुँदा नराम्रा सपना देखिन्छन्, मनमा भ्रान्ति पैदा हुन्छ, सानो कुराले पनि अत्याउँछ, मनमा भय र आशङ्का भइरहन्छन्, प्रारम्भ गरेका कार्य अधूरा हुन्छन्, हरेक कार्यमा हानिमात्र भइरहन्छ, आफूले चिताएको कुनै काम पनि पूर्ण हुँदैन, वादविवादमा पराजय हुन्छ,

---

३३. *आदित्यं गणनाथञ्च देवीं रुद्रञ्च केशवम् । पञ्चदैवतमित्युक्तं सर्वकर्मसु पूजयेत् ।।*
*आकाशस्याधिपो विष्णुरग्नेश्चैव महेश्वरी । वायोः सूर्यः क्षितेरीशो जीवनस्य गणाधिपः ।।* – भजनानन्द सरस्वती, 'पञ्चदेवोपासना में श्रीगणेश', कल्याण, पूर्ववत्, पृ. ४५।

३४. *आप एव ससर्जादौ तासु बीजमवासृजत् ।* – मनुस्मृति १/८ ।

३५. *त्वं ब्रह्मा त्वं विष्णुस्त्वं रुद्रस्त्वमिन्द्रस्त्वमग्निस्त्वं वायुस्त्वं सूर्यस्त्वं चन्द्रमास्त्वं ब्रह्म भूर्भुवः स्वरोम्।* – गणेशाथर्वशीर्ष ११ ।

३६. श्रीचक्रपलित भास्कर, पूर्ववत्, पृ. १५७ ।

शत्रु लाग्छन्, आफन्तले तिरस्कार गर्दछन् र अत्यधिक निराशाका कारण जीवननै व्यर्थ लाग्दछ । मानिस विद्यार्थी भएमा विद्यामा असफलता हात लाग्दछ, व्यापारी भएमा व्यापारमा घाटा लाग्छ, कृषक भएमा कृषिमा नोक्सानी हुन्छ, कर्मचारी भएमा कार्यालयीय कार्यमा विघ्नका कारण पदोन्नति आदिमा अवरोध हुन्छ, राजनीतिज्ञ भएमा त्यसको राजनीति सफल हुँदैन, कुमार भएमा अधम कन्यासँग विवाह हुन्छ र कुमारी भएमा अधम पुरुषसँग विवाह हुन्छ । विघ्नराज रिसाउनुहुँदा कुनै पनि कार्य सफल हुँदैनन् र मानिसले चरम निराशामा डुबेर जीवनयापन गर्नुपर्दछ ।

यसैले श्रीगणेशलाई प्रसन्न तुल्याई आवेशबाट मुक्ति पाउन महर्षि याज्ञवल्क्यले याज्ञवल्क्यस्मृतिमा गणपतिकल्पको विधान गरेका छन् । तदनुसार साधकले पवित्र भई उत्तम आचार्यको सान्निध्यमा रहेर गणपतिकल्पमा बताइएको विधिअनुसार श्रीगणेशको आराधना गर्नुपर्दछ । गणपतिकल्पअनुसार पूजाका लागि निर्माण गरिएका मण्डपका चारै दिशामा तामाका चार वटा कलश स्थापना गर्नुपर्दछ । ती कलशहरूमा अश्वशाला, गजशाला, गौशाला, जलाशय र नदी–सङ्गमबाट ल्याइएको पवित्र माटो, गोरोचन, चन्दन, गुग्गुल आदि द्रव्यनिक्षेप गर्नुपर्दछ । विधिपूर्वक कलशहरूको पूजा गरी चार कलशका जलले कर्ताले अभिषेक लिनुपर्दछ । पूजनका साथै हवन पनि गर्नुपर्दछ । उक्त मण्डपमा गणपतिपूजनका साथै गौरी र शङ्करको पनि छुट्टाछुट्टै पूजा गर्नुपर्दछ । यसरी अभिषेक, पूजन, हवन र दानजस्ता कार्य सम्पन्न गरेपछि साधक आवेशबाट मुक्त हुन्छ र त्यसमाथि श्रीगणेशको कृपा पनि हुन्छ ।[३७]

## ४.५ सर्वसाधारणका लागि श्रीगणेशपूजाविधि

प्रत्येक अभीष्ट कार्यमा उत्पन्न हुने विघ्न–बाधाहरू हटाई मङ्गलप्राप्त गर्न श्रीगणेशको आराधना फलदायक हुन्छ । हाम्रो देशमा श्रीगणेशपूजनको परम्परागत प्रसिद्धि छ । उहाँ पाँच देवताहरूमध्ये प्रमुख देवता हुनुहुन्छ । 'जसले सिद्धिसाधक मङ्गलमूर्ति श्रीगणेशको आराधना गर्दछ त्यसको कार्यमा विघ्न हुँदैन' भनिएको पाइन्छ ।[३८] श्रीगणेशको आराधनाबाट उपासकले सिद्धिका साथै जाग्रत जगत्लाई वशीभूत तुल्याउने शक्ति पनि प्राप्त गर्दछ ।

वैदिकविधि र तान्त्रिकविधिबाट अपरिचित तर श्रीगणेशमा असीमित भक्ति गर्ने सामान्य भक्तहरूले भक्तिपूर्वक पहेंलो माटो मुछेर डल्लो पारी त्यसमा मौली र रचना अर्पण गरेपछि श्रीगणेश प्रतिमा तयार हुन्छ । उहाँलाई नैवेद्यका रूपमा लड्डू चढाएपछि उहाँको आराधना हुन्छ । त्यसपछि जुनसुकै श्रीगणेशपरक स्तुतिपद्यको उच्चारण गरी प्रार्थना गर्दा पूजा सम्पन्न हुन्छ । भावभक्ति हुने भक्तका लागि श्रीगणेशपूजा अत्यन्त सरल रहेको छ ।[३९]

गणपतिपूजनमा सबै वर्गको समान अधिकार छ । यज्ञोपवीत धारण गर्ने सज्जनहरूले वैदिक एवं पौराणिक मन्त्रहरूको प्रयोग गरी आराधना गर्नुपर्दछ । यज्ञोपवीत धारण नगर्ने सज्जनहरूले पौराणिक वा तान्त्रिक मन्त्रहरूको प्रयोग गरी आराधना गर्न सक्नुहुन्छ । गणपतिपूजनका लागि सर्वोत्तम समय पूर्वाह्न मानिएको छ । तर अन्य समयमा पनि गर्न सकिन्छ । भगवान् श्रीगणेशको षोडश उपचारद्वारा पूजन गर्नुपर्दछ । षोडश उपचार यी हुन् – आवाहन, आसन, पाद्य, अर्घ्य, आचमनीय, स्नान, वस्त्र, यज्ञोपवीत, गन्ध, पुष्प (दूर्वाङ्कुर माला आदि), धूप, दीप, नैवेद्य, ताम्बूल, आरार्तिक, प्रदक्षिणा र पुष्पाञ्जलि । भगवान् श्रीगणेशको पूजनमा प्रचलित श्रीगणेशपूजाविधिको प्रयोग गर्न सकिन्छ । श्रीगणेशलाई दूर्वाङ्कुर, मन्दारपुष्प र शमीपत्र अर्पण गर्नुपर्दछ । पूजान्तमा विशेष अर्घ्यको समर्पण गरी प्रार्थना गर्नुपर्दछ ।[४०]

---

३७. याज्ञवल्क्य, याज्ञवल्क्यस्मृति, आचाराध्याय, गणपतिकल्प, तृतीय संस्करण, (मुम्बई : निर्णयसागर प्रेस) सन् १९२६, २७१-२१४ पृष्ठ ।

३८. वीतराग ब्रह्मनिष्ठ सन्त, कल्याण, पूर्ववत्, पृ. ५६ ।

३९. महाविघ्नात् प्रमुच्यते, – गणेशाथर्वशीर्ष १३ ।

४०. श्रीगणेशपुराण, १/६१ ।

## ४.६ चतुर्थी तिथिमा श्रीगणेशको आराधना

भगवान् श्रीगणेशको दैनिकरूपमा सामान्य पूजनको महत्त्व छँदैछ । पाञ्चायनका प्रमुख देवताका रूपमा पनि आराधना गर्नुपर्ने कुरा माथि बताइसकिएको छ । विशेषपूजन प्रत्येक महिनाको चतुर्थी तिथिमा गर्नुपर्दछ । श्रीगणेशलाई चतुर्थी तिथि अत्यन्त प्यारो छ ।[४१] कल्पभेदअनुसार कुनै कल्पमा श्रीगणेशको उत्पत्ति भाद्र महिनाको शुक्लचतुर्थीमा भएकाले भाद्र शुक्ल चतुर्थीलाई श्रीगणेशको जन्मतिथि मानिएको छ । त्यसैगरी कुनै कल्पमा भाद्र महिनाको कृष्णचतुर्थी तिथिमा श्रीगणेशको अवतरण भएकाले त्यसलाई पनि श्रीगणेशको जन्मतिथि मानिएको छ । कुनै पुराणमा माघ महिनाको शुक्ल चतुर्थीलाई श्रीगणेशको जन्मतिथि मानिएको छ । कल्पभेदले अवतरण सन्दर्भमा मास र पक्षको भेद देखिए तापनि श्रीगणेशका निमित्त चतुर्थी तिथि अत्यन्त प्रिय भएको तथ्य मुद्गल पुराणमा विस्तारपूर्वक बताइएको छ । त्यहाँ कृष्ण पक्ष र शुक्ल पक्षका चतुर्थी तिथिलाई भगवान् श्रीगणेशले वरदान दिनुभएको समेत वर्णन गरिएको छ ।[४२]

प्रत्येक महिनाका शुक्ल एवं कृष्ण चतुर्थीमा श्रीगणेशको पूजनपछि ब्राह्मणभोजन सम्पन्न गरी कर्ताले पनि प्रसाद ग्रहण गर्नुपर्दछ । श्रावणमा पूजन गर्दा लड्डु, भदौमा दही, आश्विनमा निराहार, कार्तिकमा दूध, मार्गशीर्षमा जल, पौषमा गोमूत्र, माघमा सेतो तिल, फागुनमा चिनी, चैत्रमा पञ्चगव्य, वैशाखमा कमलगट्टा, ज्येष्ठमा गाईको घिउ र असारमा मह ग्रहण गर्नुपर्दछ ।

चतुर्थीमा श्रीगणेशको आराधना गर्नाले समस्त कामना परिपूर्ण हुन्छन् । चतुर्थी व्रतको प्रभावले धन-धान्य एवं आरोग्यको प्राप्ति हुन्छ, आपत्ति विलीन हुन्छन् र परमार्थको सिद्धि हुन्छ । त्यसकारण सम्भव भएमा प्रत्येक मासका दुवै पक्षका चतुर्थी तिथिमा भगवान् श्रीगणेशको पूजा गर्नुपर्दछ । सम्भव नभएमा भाद्रकृष्ण चतुर्थी (बहुला), कार्तिक कृष्ण चतुर्थी (करका) र माघ कृष्ण चतुर्थी (तिलका)मा श्रीगणेशको पूजा गर्दा वर्ष दिनसम्म गरेका चतुर्थी व्रतको फल प्राप्त हुने कुरा बताइएको छ । श्रीगणेशपुराणअनुसार भाद्रशुक्ल चतुर्थीका दिन श्रीगणेशको अवतरण भएकाले त्यसलाई वरदा चतुर्थी मानिएको छ । त्यसदिन श्रीगणेशपूजनको महिमा अतुलनीय छ ।

### वर्षभरका चतुर्थी व्रतको महिमा

१) चैत्रमासको चतुर्थी तिथिमा वासुदेवरूप श्रीगणेशको पूजा गरी सुवर्णदान गर्नाले विष्णुलोक प्राप्ति हुन्छ ।

२) वैशाखमासका चतुर्थी तिथिहरूमा सङ्कर्षणरूप श्रीगणेशको पूजा गरी शङ्खदान गर्नाले सङ्कर्षणलोकको प्राप्ति हुन्छ।

३) ज्येष्ठमासका चतुर्थीहरूमा प्रद्युम्नरूप श्रीगणेशको पूजा गरी फलफूल दान गर्नाले स्वर्गलोक प्राप्ति हुन्छ ।

४) आषाढमासका चतुर्थीहरूमा अनिरुद्धरूप श्रीगणेशको पूजन गरी संन्यासीहरूलाई लौकाको तुम्बा दान गर्नाले मनोवाञ्छित फलप्राप्ति हुन्छ ।

५) श्रावणमासका चतुर्थीहरूमा चन्द्रोदयपछि श्रीगणेशको आराधना गर्नाले समस्त कामनापूर्तिको साथै श्रीगणेशधामको प्राप्ति हुन्छ । श्रावणशुक्ल चतुर्थीमा गरिने दूर्वागणपतिव्रतको छुट्टै महिमा रहेको छ । यस तिथिमा श्रीगणेशको स्वर्णप्रतिमा बनाई प्रतिष्ठा गरेर स्वर्णदूर्वार्पणद्वारा पूजा गरिन्छ । यस प्रकार तीन वर्ष अथवा पाँच वर्षसम्म पूजा गर्नाले उपासकका मनोरथ सिद्ध हुन्छन् ।

---

४१. 'चतुर्थीपूजनप्रीतः' - पूर्ववत्, १/४६ सहस्रनामप्रकरण ।

४२. श्रीगणेशप्रिय चतुर्थी व्रत माहात्म्य एवं व्रतविधि, कल्याण, पूर्ववत्, पृ. ४८८-४९५ ।

६) भाद्रकृष्ण चतुर्थीमा बहुला (गाई) समेत श्रीगणेशको पूजा गर्नुपर्दछ । यो व्रत पाँच वर्ष, दश वर्ष अथवा सोह्र वर्षसम्म गर्ने विधान छ । उद्यापनमा दूध दिने गाईको दान गर्नुपर्दछ । यसो गर्नाले सम्पूर्ण भोग र सुखको प्राप्ति हुन्छ । भाद्र शुक्ल चतुर्थीको मध्याह्नमा सिद्धविनायकको पूजा गर्नुपर्दछ । भगवान् श्रीगणेश यसै दिन मध्याह्नमा प्रकट हुनुभएकाले यस तिथिमा गरिने पूजाको अपूर्व महिमा छ ।

७) भाद्रकृष्ण चतुर्थीमा श्रीगणेशको पूजा गर्दा एक्काइस नामहरूलाई चतुर्थ्यन्त बनाएर नमः पद जोडी शमीपत्र आदि विभिन्न एक्काइसथरिका पत्रहरू अर्पण गर्नुपर्दछ । ती एक्काइस नाम र पत्रहरू यस प्रकार छन् - १) **सुमुख** - मालतीपत्र, २) **गणाधीश** - भृङ्गिराजपत्र, ३) **उमापुत्र** - बिल्वपत्र, ४) **गजमुख** - श्वेतदूर्वाङ्कुर, ५) **लम्बोदर** - बदरीपत्र, ६) **हरसूनु** - धत्तूरपत्र, ७) **शूर्पकर्ण**- तुलसीपत्र, ८) **वक्रतुण्ड**- शमीपत्र, ९) **गुहाग्रज**- अपामार्गपत्र, १०) **एकदन्त** - बृहतीपत्र, ११) **हेरम्ब** - अश्वत्थपत्र, १२) **चतुर्होता** - जातीपत्र, १३) **सर्वेश्वर**- अगस्त्यपत्र, १४) **विकट** - करवीरपत्र अथवा कर्णिकारपत्र , १५) **हेमतुण्ड** - कदलीपत्र, १६) **विनायक** - अर्कपत्र, १७) **कपिल** - अर्जुनपत्र, १८) **वटु** - दाडिमीपत्र, १९) **भालचन्द्र** - मरुपत्र, २०) **सुराग्रज** - देवदारुपत्र, २१) **सिद्धिविनायक**- केतकीपत्र। यसरी पाँच वर्षसम्म श्रीगणेशपूजन गर्नाले लौकिक र पारमार्थिक सुख प्राप्ति हुन्छ।

८) आश्विनशुक्ल चतुर्थीमा पुरुषसूक्तका मन्त्रहरूद्वारा कपर्दीशविनायकको आराधना गर्नाले इच्छित फलको प्राप्ति हुन्छ ।

९) कार्तिक कृष्ण चतुर्थीमा करका चतुर्थी व्रतको विधान गरिएको छ । यो व्रत विशेषरूपमा नारीहरूद्वारा गरिन्छ । यस व्रतको उद्यापन बाह्र अथवा सोह्र वर्षमा गर्नुपर्ने विधि रहेको छ । नारीहरूका निमित्त सौभाग्यप्राप्तिको सन्दर्भमा यो बराबर फलदायक अन्य व्रत रहेको छैन ।

१०) मार्गशीर्ष चतुर्थी तिथिमा कृच्छ्रचतुर्थीव्रतको विधान गरिएको छ । यो व्रत चतुर्थीबाट आरम्भ गरी एक वर्षसम्म प्रत्येक चतुर्थीमा व्रतोपवास र गजानन भगवान्‌को पूजन गर्नाले साधकको कामना परिपूर्ण हुन्छ । चार वर्षसम्म यो व्रत गर्ने साधकले विष्णुसायुज्य प्राप्त गर्दछ ।

११) पौषमासका चतुर्थीहरूमा भक्तिपूर्वक विघ्नेश्वर भगवान्‌को पूजन गर्नाले आराधकले समस्त समृद्धि प्राप्त गर्दछ ।

१२) माघकृष्ण चतुर्थीमा सङ्कष्टीव्रतको विधान गरिएको छ । चन्द्रोदयपछि श्रीगणेशको माटाको मूर्ति बनाएर षोडशोपचारले पूजा गर्नुपर्दछ । परमकल्याणकारी उक्त व्रतको प्रभावले व्रत गर्ने उपासक धन-धान्यसम्पन्न बन्दछ । माघमासदेखि आरम्भ गरी प्रत्येक मासमा यो व्रत गर्नाले कहिल्यै पनि कष्ट र पीडा व्यहोर्नु पर्दैन । माघमासको शुक्ल पक्षको चतुर्थीमा भक्तिपूर्वक श्रीगणेशको पूजा गर्नाले साधकका लौकिक र पारमार्थिक मनोरथ पूर्ण हुन्छन् ।

१३) फाल्गुनमासका चतुर्थीहरूमा ढुण्ढिराजव्रतको विधान गरिएको छ । यस तिथिमा भगवान् ढुण्ढिराजको विधिपूर्वक पूजन गर्नाले सम्पत्ति वृद्धि हुन्छ । मत्स्यपुराणमा फाल्गुन शुक्ल चतुर्थीलाई मनोरथचतुर्थी भनिएको छ । यसमा विधिपूर्वक श्रीगणेशको आराधना गर्ने साधकले समस्त मनोरथहरू पूर्ण हुने फल प्राप्त गर्दछ ।

१४) जुनसुकै महिनामा चतुर्थी तिथि र रविवार अथवा मङ्गलवारको संयोग भएमा त्यसलाई विशेष फलदायक मानिएको छ । यस्तो तिथिलाई अङ्गारक चतुर्थी भन्दछन् । यस दिन श्रीगणेशको आराधना गर्नाले सम्पूर्ण अभीष्ट फलको प्राप्ति हुन्छ । अङ्गारकचतुर्थीको विषयमा श्रीगणेशपुराणमा विशेष प्रकाश पारिएको छ ।[४३]

---

४३. पूर्वोक्त ।

## ४.७ विभिन्न प्रतीकहरूमा श्रीगणेशको पूजा

मङ्गलाकर्षण र लक्ष्मीप्राप्तिका लागि बेसारको श्रीगणेशमूर्ति तयार गरी पूजा गर्ने विधान रहेको छ । लक्ष्मीप्राप्तिका लागि सम्भव भएसम्म सुवर्णप्रतिमा नभए बेसारको प्रतिमा तयार गरी श्रीगणेशपूजन गर्ने विधि नारदपुराणमा बताइएको छ। गोबरमा लक्ष्मीको बास मानिएकाले लक्ष्मीप्राप्तिका लागि गोबरको श्रीगणेशविग्रह अर्थात् गोमयगणेश तयार गरी पूजा गर्ने विधि रहेको छ । श्रीगणेशको विशेष कृपा प्राप्तिका लागि पुष्यनक्षत्र र रविवारको योग भएका दिन मन्त्रजप गर्दै आँकको जरो उखेलेर ल्याई त्यसबाट बूढी औँला बराबरको श्रीगणेशको मूर्ति बनाएर त्यसलाई पञ्चामृतले अभिषेक गरेपछि प्राणप्रतिष्ठा गरी पूजा गर्ने विधि अग्निपुराणमा बताइएको छ । रविवार र पुष्यनक्षत्रको योग नजुरेमा पुष्य नक्षत्रका दिनमात्र पनि उक्त विधिले पूजा गर्न सकिन्छ । घरलाई मङ्गलमय तुल्याउन गृहस्थले काठको श्रीगणेशको प्रतिमा तयार गरी घरको बाहिरी ढोकाको माथिल्लो भागमा स्थापना गर्नुपर्दछ । यसबाट घर मङ्गलमय बन्दछ । भनिएको छ – **प्रभावात् तन्मूर्त्या भवति सदनं मङ्गलकरम्** ।[७४]

## ४.८ श्रीगणेशपूजनका अनेक रूप र अनेक रङ्ग

वैदिकवाङ्मयका **गणानान्त्वा०** आदि श्रीगणेशपरक मन्त्रहरूमा पूजाको उल्लेख भएकाले वैदिककालदेखि नै श्रीगणेश पूजाको प्रचलन रहेको तथ्य प्रमाणित हुन्छ । मानवले अन्य सबै कारण हुँदाहुँदै पनि कार्य निष्पत्ति नहुँदा त्यस कार्यको प्रतिबन्धक अदृष्टको अनुमान गर्दछ । त्यस बेला विघ्नबाधा निराकरण गर्न विघ्नेश्वर श्रीगणेशको शरणमा प्राप्त हुन्छ । त्यहाँ त्यसले चित्तलाई एकाग्र गराएर भगवान् श्रीगणेशको नामस्मरण गरी विघ्नबाधाबाट मुक्त हुन प्रार्थना गर्दछ। प्रार्थनामा भगवान्को नामस्मरणलाई महत्त्व दिइएको छ । नामस्मरणका साथै पूजाक्रमको पनि प्रवर्तन गरेर ऋषिमुनिहरूले मानवलाई विघ्ननिर्मुक्त हुने उपायको प्रतिपादन गरेका छन् । यस क्रममा वैदिक, पौराणिक र तान्त्रिक विधिहरू रहेका छन्। साधकले रुचि र योग्यताअनुसार उक्त विधिहरूमध्ये कुनै एक विधिको अवलम्बन गरी श्रीगणेशको आराधना गर्ने परम्परा रहिआएको छ ।

श्रीगणेशको अङ्गपूजा र प्रधानपूजा गरी दुई किसिमले पूजा गर्ने प्रचलन छ । अङ्गपूजन विघ्नहरणका लागि गरिन्छ भने प्रधानपूजन मनोरथसिद्धिका लागि गरिन्छ । उपासनाक्रममा उपासकले जुन देवताको उपासना गर्दछ ती देवतालाई सर्वोपरि पूर्णब्रह्म परमात्मा मानेर उपासना गर्नुपर्दछ । त्यसबाट मनोरथसिद्ध हुन्छ । श्रीगणेशका उपासकले श्रीगणेशलाई पूर्ण परमब्रह्म, स्वेच्छापूर्वक अवतार लिनुहुने, सर्वशक्तिसम्पन्न र सगुण एवं निर्गुण देवता मानेर उपासना गर्दा पूर्ण फल प्राप्त गर्दछ । वरदाता श्रीगणेश, विघ्नहर्ता श्रीगणेश, सिद्धि-बुद्धिदाता श्रीगणेश, अनुग्रहमूर्ति श्रीगणेश, सुखशान्तिदाता श्रीगणेश, मङ्गलमूर्ति श्रीगणेश, दारिद्र्यहर्ता श्रीगणेश, लक्ष्मीदाता श्रीगणेश आदि फलअनुसारका श्रीगणेशका भिन्न-भिन्न मूर्तिहरूको उपासना गर्दा साधकले चिताएको फल प्राप्त गर्ने कुरामा कुनै पनि सन्देह छैन ।

फलभेदअनुसार श्रीगणेशका मूर्तिहरूको ध्यान गर्ने स्वरूपमा पनि अन्तर रहेको पाइन्छ । मन्त्रसाधकले स्तम्भनका लागि पहेँलो कान्ति भएका श्रीगणेश, वशीकरणका लागि रातो कान्ति भएका श्रीगणेश, मारणका लागि कालो कान्ति भएका श्रीगणेश, उच्चाटनका लागि धूम्रवर्णका श्रीगणेश, आकर्षण र कान्तिप्राप्तिका लागि रातो वर्ण भएका श्रीगणेश, धनप्राप्तिका लागि हरियो कान्ति भएका श्रीगणेश र मोक्षका लागि उज्ज्वल सेतो कान्ति भएका श्रीगणेशको ध्यान गर्नुपर्ने विधि पनि शास्त्रहरूमा बताइएको छ ।[७५]

---

७४ [illegible] भास्कर, पूर्ववत्, पृ. १३७ ।

७५ पीतं स्मरेत् स्तम्भनकार्य एवं वश्याय मन्त्री ह्यरुणं स्मरेत् तं कृष्णं स्मरेत् मारणकर्मणीशमुच्चाटने धूम्रनिभं स्मरेत् तत् ।
[illegible] च कुर्वं स्मरेद् बलार्थं किल पुष्टिकार्ये स्मरेद् धनार्थी हरितवर्णमेतं मुक्तौ च शुक्लं मनुवित् स्मरेत् तम् ॥ – रामानुजाचार्य, 'विविध गणेश', कल्याण, पृ. ५२।

## ४.९ गणपति आराधनाको विशेषता

समस्त देवताहरूमा श्रीगणेशको असाधारण महिमा छ । कुनै पनि धार्मिक एवं माङ्गलिक कार्य श्रीगणेशपूजा विना सफल हुँदैन । कुनै पनि देवताको पूजन र उत्सवहरूका आरम्भमा महागणपतिको स्मरण र पूजन अनिवार्य मानिएको छ। यस्तो महत्त्व कुनै देवताको छैन । वास्तवमा श्रीगणेशपूजनको अर्थ साकार, परिच्छिन्न र परिमित शक्तिको पूजन नभई निर्गुण ब्रह्मको उपासना हो । उहाँ आफ्ना उपासकहरूका लागि कल्पवृक्षतुल्य र परमानन्दजनक हुनुहुन्छ । श्रीगणेश पार्वती शङ्करलाई आनन्दप्रदान गर्ने उत्तम नन्दन हुनुहुन्छ । उहाँ प्रथमपूज्य, स्वस्तिकरूप र प्रणवरूप पनि हुनुहुन्छ । उहाँका सबै प्रकारका सिद्धि प्रदान गर्ने र सङ्कट नाश गर्ने बाह्र नाम प्रसिद्ध छन् ।[४६]

मोदकप्रिय श्रीगणेश विद्या, बुद्धि, सिद्धि र ज्ञानका दाता हुनुहुन्छ । उहाँले आफ्ना उपासक भक्तहरूलाई विद्या र अविद्या दुवै तत्त्वबाट निर्मुक्त गरी आत्मतत्त्वको बोध गराएर संसारसागरबाट मुक्त गराउनुहुन्छ । भगवान् श्रीगणेश सदाशिवसमान भावभक्तिबाट छिटो प्रसन्न हुनुहुने आशुतोष देवता पनि हुनुहुन्छ । तसर्थ जुनसुकै सरणिबाट आराधना-उपासना गरे पनि उहाँले छिटो प्रसन्न भई फलप्रदान गर्नुहुन्छ । विघ्नव्यूहको निवारण र शीघ्रफल प्राप्ति गराउनु उहाँको विशेषता हो ।

## ४.१० प्राचीनकालमा श्रीगणेशको मन्दिरनिर्माण, मूर्तिस्थापना र आराधना

अनादिकालदेखि नै विघ्नविनाश, विपत्तिनाश, सम्पत्तिप्राप्ति र श्रीगणेशको कृपा प्राप्तिका लागि भक्तहरूद्वारा श्रीगणेशमन्दिर वा श्रीगणेशस्थानहरूमा श्रीगणेशको पूजा गर्दिआएको छ । श्रीगणेशको प्रतिमा सौन्दर्यको पर्याय मानिन्छ। श्रीगणेशप्रतिमाको पूजनलाई विघ्न-भयनाशक मानिएको छ ।[४७]

श्रीगणेश विश्वरूप देवता हुनुभए तापनि उहाँको प्रतिमामा रूपको उपलब्धि हुन्छ । श्रीगणेशपुराणअनुसार एकपटक उहाँले आफ्नो सौन्दर्यसम्पन्न, नयनाभिराम र हृदयाभिराम रूप ब्रह्मा, विष्णु र शङ्करलाई दर्शन गराउनुभएको थियो । यसैगरी उहाँले एक पटक ब्रह्माजीलाई मात्र पनि सर्वाङ्गसुन्दर स्वरूपमा दर्शन दिएर कृतकृत्य तुल्याउनु भएको थियो । भगवान् विष्णुले श्रीगणेशको अर्चनापछि मधुकैटभ दैत्यमाथि विजय प्राप्त गर्नुभयो । त्यसपछि उहाँले श्रीगणेशको मन्दिरनिर्माण गरेर कृष्णागण्डकीमा पाइने कालो रङ्गका शिलाहरूद्वारा निर्मित सिद्धिविनायकको प्रतिमा स्थापना गर्नुभएको थियो ।[४८]

भगवान् वामनले कश्यप ऋषिबाट उपदेश प्राप्त गरी श्रीगणेशको मन्त्राराधना गरेपछि श्रीगणेशको दर्शन पाउनुभयो। उहाँको कृपाबाट दैत्यराज बलिमाथि विजय प्राप्त गर्नुभयो । विजयको खुसियालीमा उहाँले काश्मीर देशमा पाइने शिलाको प्रयोग गरी सुन्दर प्रतिमा निर्माण गराई आफूले बनाएको मन्दिरमा प्रतिष्ठा गराउनुभयो ।[४९]

भगवान् शङ्करले श्रीगणेशसहस्रनामद्वारा श्रीगणेशको आराधना गरी त्रिपुरासुरमाथि विजय प्राप्त गर्नुभएपछि काश्मीर देशका पाषाणहरूको उपयोग गरी श्रीगणेशको सुन्दर प्रतिमा तयार गराउनुभयो । त्यसपछि श्रीगणेशपुरनामक स्थानमा श्रीगणेशको मन्दिर बनाई उक्त प्रतिमाको प्रतिष्ठासमेत गर्नुभएको विषय श्रीगणेशपुराणमा वर्णन गरिएको छ ।[५०] भगवान् शङ्करले नै श्रीगणेशको कृपाबाट प्राप्त भएको चिन्तामणि श्रीगणेशको मूर्ति स्थापित गर्नुभएको विषय श्रीगणेशपुराणमा प्रस्तुत गरिएको छ ।[५१]

---

४६. *सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः । लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः ॥*
*धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः । – श्रीगणेशपुराण, १/१२/३६-३७ ।*

४७. *गणेशं पूजयेद् यस्तु विघ्नस्तस्य न जायते ।* – पद्मपुराण, सृष्टिखण्ड, ५१/६६ ।

४८. *श्रीगणेशपुराण, १/१८/२०-२३ ।*

४९. पूर्ववत्, २/३१/२१-२३ ।

५०. पूर्ववत्, १/३९/२-३ ।

५१. पूर्ववत्, १/४५/१९ ।

देवराज इन्द्रले गौतम ऋषिको सरापबाट मुक्त हुन श्रीगणेशको आराधना गरेका थिए । आराधनापछि श्रीगणेशको दर्शन प्राप्त गरी इन्द्र सरापबाट मुक्त भए । त्यसपछि तिनले चिन्तामणिपुरनामक तीर्थमा सुवर्णमय श्रीगणेशमन्दिर तयार गरी त्यसमा श्रीगणेशको दिव्य र सर्वाङ्गसुन्दर प्रतिमा स्थापना गरेका थिए ।[५२] गणेशपुराणमा गृत्समद ऋषिले श्रीगणेशमूर्ति र मन्दिर तयार गराई विधिवत् प्रतिष्ठापछि श्रीगणेशको आराधना गरेको विषयमा पनि प्रकाश पारिएको छ ।[५३]

यसरी पौराणिक कालमा विभिन्न देवता र ऋषिमुनिहरूले श्रीगणेशको भक्तिले ओतप्रोत भई प्रतिमा एवं मन्दिर तयार गरेर प्रतिष्ठा गरी आराधना गरेको विषयमा विभिन्न पुराणहरूमा वर्णन गरिएको छ । पुराणहरूमा बताइएअनुसारको परम्परा आज पनि नेपाल, भारतलगायत विभिन्न देशमा प्रचलित छ ।

## ४.११ प्रतिमा-निर्माणविधि

भगवान् श्रीगणेशका प्रतिमाहरू विभिन्न संस्थागत मन्दिरहरूमा पुरुषाकार र त्योभन्दा पनि विशाल पाइन्छन् तापनि घर-घरमा स्थापना गरिने ती प्रतिमाहरू बाह्र अङ्गुल परिमाणका हुनुपर्दछ भन्ने कुरा मत्स्यपुराणमा बताइएको छ ।[५४]

गणेशमूर्तिमा दश प्रकारका आयुधहरू क्रमशः वज्र, शक्ति, दण्ड, खड्ग, पात्र, अङ्कुश, गदा, त्रिशूल, पद्म र चक्र रहने कुरा कामिकागममा बताइएको छ ।[५५] श्रीगणेशका स्थानक, आसीन र नृत्यमुद्राका प्रतिमा पाइन्छन् । श्रीगणेशका स्थानकप्रतिमा त्रिभङ्ग र समभङ्ग हुन्छन् । श्रीगणेशका मूर्तिहरू चतुर्भुज, षड्भुज, अष्टभुज, दशभुज, षोडशभुज र अष्टादशभुजसमेत प्राप्त हुन्छन् । प्रायः चतुर्भुजमूर्ति दृष्टिपथमा आउँछन् ।

विष्णुधर्मोत्तर पुराणमा भनिएअनुसार गजवदन र चतुर्भुज श्रीगणेशमूर्ति तयार गर्नुपर्दछ । मूर्तिका दायाँ हातहरूमा शूल र अक्षमाला, बायाँ हातहरूमा परशु र मोदकपात्रको संयोजन गर्नुपर्दछ । श्रीगणेशको बायाँ दाँत बनाउनुहुँदैन ।[५६] शिल्परत्न, रूपमण्डन आदि ग्रन्थहरूमा श्रीगणेशमूर्ति निर्माणको विषयमा राम्ररी वर्णन गरिएको छ । श्रीगणेशको प्रतिमा निर्माण, प्रतिष्ठा र पूजन सनातन सिद्धिदायक र मङ्गलविधायक पनि छ । श्रीगणेशको मूर्तिप्रतिष्ठा चैत्र, वैशाख, जेष्ठ, माघ र फागुन महिनाका शुक्लपक्षमा गर्नुपर्दछ ।[५७] मङ्गलवारबाहेक अरू वारहरू प्रतिष्ठाका लागि ग्राह्य मानिएका छन् । तिथिहरूमा रिक्ता तिथिलाई छाडेर अरू तिथि लिइएका छन् । नक्षत्रहरूमा अश्विनी, रोहिणी, मृगशिरा, पुष्य, उत्तराफाल्गुनी, हस्ता, स्वाती, अनुराधा, ज्येष्ठा, मूल, पूर्वाषाढा, उत्तराषाढा, श्रवण, पूर्वाभाद्रपद, उत्तराभाद्रपद र रेवतीनक्षत्र उत्तम मानिएका छन्।

## ४.१२ मन्दिर-निर्माणविधि

गणेश आदि देवताका मन्दिर घरको ऐशान्य कोणमा बनाउनुपर्दछ । देवताको मुख भने पश्चिमतिर फर्केको हुनुपर्छ भन्ने कुरा नारदपुराणमा बताइएको छ । श्रीगणेशमन्दिरमा श्रीगणेशका पार्श्ववर्ती अर्थात् सेवक निम्नानुसार रहेका हुन्छन् – श्रीगणेश, गालव, गार्ग्य, मङ्गल र सुधाकर । रूपमण्डनमा निम्नानुसार श्रीगणेशका द्वारपालहरूको नामावली दिइएको छ– अविघ्न र विघ्नराज, सुवक्त्र र बलवान्, गजकर्ण र गोकर्ण, सुसौम्य र शुभदायक । श्रीगणेशमन्दिरमा श्रीगणेशविग्रहको

५२ पूर्ववत्, १/३३/३०-३८ ।
५३ पूर्ववत्, १/३३/३६-४५ ।
५४ अङ्गुष्ठपर्वादारभ्य वितस्तिं यावदेव तु ।
गृहेषु प्रतिमा कार्या नाधिका शस्यते बुधैः ॥ – कृष्णदत्त भारद्वाज, 'श्रीगणपति भगवान् का स्वरूप और उनकी आराधना, कल्याण, पूर्ववत्, पृ. १० ।
५५ वज्रं शक्तिं च दण्डं च खड्गं पात्रं तथाङ्कुशम् । गदा त्रिशूलं पद्मं च चक्रं चेति दशायुधम्॥ – रामलाल, 'श्रीगणेश के परिधान, आयुध.....', कल्याण, पूर्ववत्, पृ. १८२।
५६ विनायकस्तु कर्तव्यो गजवक्त्रश्चतुर्भुजः । शूलकं चाक्षमालां च तस्य दक्षिणहस्तयोः ॥
पात्रं मोदकपूर्णं तु परशुश्चैव वामतः । दन्तश्चास्य न कर्तव्यो वामो रिपुनिषूदन ॥ – पूर्ववत् ।
५७ चैत्रे वा फाल्गुने वापि ज्येष्ठे वा माधवे तथा । माघे वा सर्वदेवानां प्रतिष्ठा शुभदा सिते ॥ – कृष्णदत्त भारद्वाज, कल्याण, पूर्ववत्, पृ. १२ ।

बायाँतर्फ गजकर्ण, दायाँतर्फ सिद्धि, उत्तरतर्फ गौरी, पूर्वतर्फ बुद्धि, दक्षिण-पूर्वतर्फ बालचन्द्रमा, दक्षिणमा सरस्वती, पश्चिममा कुबेर र पछाडि धूम्रकको स्थापना गर्नुपर्ने कुरा बताइएको छ ।[५८]

गणेशका द्वारपालहरू वामनाकारका बनाई मन्दिरमा राख्नुपर्दछ । ती द्वारपालहरूलाई स्वभावले सौम्य र कठोर अनुहारका देखाउनु पर्दछ । तिनका दुवै हात तर्जनीमुद्रा र दण्डले अलङ्कृत गराउनुपर्दछ । पूर्वद्वारमा रहेका अविघ्न र विघ्नराजका हातहरूमा परशु र पद्म, दक्षिणद्वारमा वर्तमान सुवक्त्र र बलवान्का हातहरूमा खड्ग र खेटक, पश्चिमद्वारमा रहेका गजकर्ण र गोकर्णका हातहरूमा धनु र बाण, उत्तरद्वारमा वर्तमान सुसौम्य र शुभदायकका हातहरूमा पद्म र अङ्कुश चित्राङ्कन गर्नुपर्दछ ।[५९]

गणेशको आराधनाका लागि मूर्ति र मन्दिरको निर्माण सम्बन्धमा शास्त्रहरूमा विस्तृत रूपमा प्रकाश पारिएको छ । पौराणिक कालदेखि वर्तमान कालसम्म शास्त्रहरूकै निर्देशका आधारमा मूर्तिनिर्माण, मन्दिरनिर्माण, मूर्तिप्रतिष्ठा र मूर्तिपूजनको परम्परा रहिआएको छ । नेपालमा श्रीगणेशका आराधकहरूको विपुल संख्या रहेकाले मेचीदेखि महाकालीसम्म र विशेष गरेर काठमाडौं उपत्यकामा श्रीगणेशको आराधना अत्यधिक मात्रामा हुने गरेको तथ्य कसैबाट छिपेको छैन । श्रीगणेशमन्दिर, श्रीगणेशमूर्ति र श्रीगणेशोपासनाका दृष्टिबाट काठमाडौं उपत्यकाको गौरवपूर्ण स्थान रहेको तथ्य स्मरणीय छ ।

ॐ

५८. वामाङ्गे गजकर्णन्तु सिद्धिं कुर्यात्तु दक्षिणे । पुष्पकर्णं तथा द्वौ च धूम्रको बालचन्द्रमाः ॥
उत्तरे तु सदा गौरी याम्ये चैव सरस्वती । पश्चिमे यक्षराजस्तु बुद्धिः पूर्वे व्यवस्थिता ॥ - रामलाल, 'श्रीगणेशके परिधान....', कल्याण, पूर्ववत्, पृ. १८० ।

५९. सर्वे च वामनाकाराः सौम्याश्च पश्याननाः । तर्जनी परशुः पद्ममविघ्नो विघ्नराजकः ॥
तर्जनी खड्गखेटन्तु दण्डहस्तः सुवक्त्रकः । तर्जनी दण्डापसव्ये दक्षिणे बलवान् भवेत् ॥
तर्जनी बाणचापं च दण्डश्च गजकर्णकः । तर्जनी दण्डापसव्ये गोकर्णः पश्चिमे स्थितः ॥
तर्जनी पद्माङ्कुशश्च दण्डहस्तः सुसौम्यकः । तर्जनी दण्डापसव्ये चैव शुभदायकः ॥
पूर्वद्वारादिके सर्वे प्राच्यादिष्वपि संस्थिताः । - पूर्ववत्, पृ. १८२ ।

## परिच्छेद - पाँच

# शास्त्र र शास्त्रीय सिद्धान्तमा श्रीगणेश

श्रुति, स्मृति, पुराण, इतिहास, तन्त्र-आगम, विविध मत र सिद्धान्तहरूमा श्रीगणेशको कतै विस्तृत र कतै सङ्क्षिप्त चर्चा गरिएको पाइन्छ । ती ग्रन्थहरूमा श्रीगणेशतत्त्वको विश्लेषणका साथै श्रीगणेशलीलाहरूको प्रकाशन गरिएको छ । यस परिच्छेदमा ती सबै वाङ्मयमा रहेका श्रीगणेशपरक विषयवस्तुको सारसङ्क्षेप प्रस्तुत गरिँदैछ ।

## ५.१ वैदिकवाङ्मय

वेद विश्वको आदिवाङ्मय हो । वेदहरूमा गणपतिको निरूपण ब्रह्मणस्पति, ज्येष्ठराज आदि नामबाट भएको छ। सर्वमङ्गलविधाता गणपति ब्रह्मणस्पतिका रूपमा सकल ज्ञानका निधि भएर विराजमान हुनुहुन्छ । उहाँ सर्वश्रेष्ठ देवताका रूपमा पूजित हुनुहुन्छ र समस्त वाङ्मयका अधिष्ठाता कवि पनि हुनुहुन्छ । ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, ऐतरेयब्राह्मण, श्रीगणेशाथर्वशीर्ष, गणपत्युपनिषद् आदि वैदिक ग्रन्थहरूमा ब्रह्मणस्पति भगवान् श्रीगणेशको विस्तृत चर्चा भएको छ । ऋग्वेदमा श्रीगणेशलाई गणपति र ब्रह्मणस्पतिका रूपमा चित्रण गरिएको छ । वेदज्ञानका पालक परब्रह्म परमेश्वर हुन् । ती गणहरूमा प्रमुख छन् । ती गणहरूका स्वामी हुन् । कविहरूमा श्रेष्ठ कवि हुन् । एतावता, ती परम यशस्वी एवं कीर्तनीय पनि छन् र प्रत्येक स्थानमा विराजमान छन् ।[१]

ऐतरेयब्राह्मणमा भगवान् ब्रह्मणस्पति नै गणपति र बृहस्पति पनि हुनुहुन्छ भन्ने अभिप्राय भएको मन्त्रमा श्रीगणेशलाई बृहस्पति भनिएको छ ।[२] तिनै बृहस्पति उत्तम संरक्षक अर्थात् सुगोपा हुन् । तिनको संरक्षणमा रहने कुनै पनि प्राणी दुःखी हुनै सक्दैन भन्ने अभिप्राय ऋग्वेदीय मन्त्रमा व्यक्त भएको छ ।[३]

भगवान् श्रीगणेशरूप 'सम्पत्तिशाली, रोगनाशक, धनदाता, पुष्टिवर्द्धक र शीघ्र फलदाता ब्रह्मणस्पतिले हामीमाथि अनुग्रह गरून्' भनी एउटा मन्त्रमा ब्रह्मणस्पतिको विशेषता बताइएको छ ।[४]

शुक्ल यजुर्वेदको गणानां त्वा० मन्त्रलाई भगवान् श्रीगणेशको पूजा आराधनामा प्रयोग गरिन्छ । उक्त मन्त्रद्वारा आवाहित गणपति ब्रह्मणस्पति, प्रियपति, निधिपति र सर्वनियन्ता परमेश्वरका रूपमा प्रसिद्ध हुनुहुन्छ । सामवेदको **प्रैतु ब्रह्मणस्पतिः प्र देवेतु सूनृता** यस मन्त्रमा ब्रह्मणस्पतिका रूपमा रहेका श्रीगणेशको उपासनाको फलका विषयमा सङ्केत गर्दै भनिएको छ - हामीले ब्रह्माण्डका पालक ईश्वर ब्रह्मणस्पति र वाग्देवतालाई प्राप्त गर्न सकौं ।[५]

शतपथब्राह्मणका भाष्यकार हरिस्वामीका गुरु स्कन्दस्वामीले ऋग्वेदभाष्यको प्रारम्भमा श्रीगणेशको वन्दना गर्दै भनेका छन् - 'ब्रह्म, सूर्य, चन्द्र, इन्द्र र विष्णुद्वारा वन्दित हे विघ्नहर्ता गणपति ! मन्त्रहरूका स्वामी हे ब्रह्मणस्पति !

---

१. गणानां त्वा गणपतिं हवामहे । कविं कवीनामुपमश्रवस्तमम् ।। ज्येष्ठराजं ब्रह्मणां ब्रह्मणस्पत आ नः शृण्वन्नूतिभिः सीद सादनम् ।। ऋग्वेद, २/२३/१ ।

२. गणानां त्वा गणपतिं हवामह इति ब्राह्मणस्पत्यं ब्रह्म वै बृहस्पतिर्ब्रह्मणैवैनं तद् भिषज्यति ।। - ऐतरेय ब्राह्मण ४/४/२१ ।

३. न स्महो दुःखं कुतश्चन । नारातयस्तितिरुः द्वयाविनः । विश्वा इदस्माद् ध्वरसो वि बाधसे यं सुगोपा रक्षसि ब्रह्मणस्पते ।। - ऋग्वेद, २/२३/५ ।

४. यो रेवान् यो अमीवहा वसुवित् पुष्टिवर्धनः । स नः सिषक्तु यस्तुरः ।। - पूर्ववत्, १/१८/२ ।

५. [illegible], 'भगवान् ब्रह्मणस्पति', कल्याण, पूर्ववत्, पृ. १३३ ।

हजुरलाई नमस्कार छ ।[६]

यसबाट ब्रह्मणस्पति शब्द श्रीगणेशको वाचकका रूपमा प्राचीन कालदेखि नै प्रसिद्ध रहेको तथ्य प्रमाणित हुन्छ । सबै वेदहरूमा ब्रह्मणस्पति, बृहस्पति र वाचस्पति यी नामहरू एउटै श्रीगणेशका नाम हुन् भन्ने कुरा प्रतिपादन गरिएको छ। एउटा मन्त्रमा **बृहती**- वाक् अथवा संसारका स्वामी बृहस्पति परमव्योमरूप महाशक्तिको महान् तेजबाट सर्वप्रथम उत्पन्न भई सात छन्दरूप मुखले सम्पन्न सात किरण अथवा सात वर्णले सम्पन्न हुँदै नादद्वारा अन्धकारलाई निवारण गर्दछन् भनिएको छ ।[७]

वेदहरूमा वाचस्पति, बृहस्पति, ब्रह्मणस्पति शब्दका प्रचुर प्रयोग पाइन्छन् । यी तीनै शब्दहरूको अर्थ गणपति हो भन्ने कुरा भाष्यकारहरूले समर्थन गरेका छन् । गणपतिलाई वेदमा ज्येष्ठराज पनि भनिएको छ । ऋग्वेदको शाकलसंहिताको एउटा मन्त्रमा शिवजीका जेठा छोराका रूपमा श्रीगणेशको निरूपण गरिएको छ ।[८] यसैगरी शौनकसंहितामा श्रीगणेशलाई ज्येष्ठराजका नामबाट स्मरण गरिएको छ ।[९]

शुक्लयजुर्वेदको **'नमो गणेभ्यो गणपतिभ्यश्चवो'** (१६/२५ ) इत्यादि मन्त्रमा पनि श्रीगणेशको संस्मरण गरिएको छ । शुक्लयजुर्वेदकै **'गणश्रियै स्वाहा गणपतये स्वाहा'** (२२/३०) मन्त्रमा गणपति र गणश्रीका रूपमा श्रीगणेशको निरूपण गरिएको छ। कृष्णयजुर्वेदको तैत्तिरीयसंहितामा – **'तत्कराटाय विद्महे हस्तिमुखाय धीमहि तन्नो दन्ती प्रचोदयात्'** (२/३/१८) भनी श्रीगणेशलाई हस्तिमुख र दन्तीका रूपमा उल्लेख गरिएको छ । यही कुरा कृष्णयजुर्वेदको मैत्रायणीसंहितामा पनि निरूपित छ । यसबाट वेदका द्रष्टा महर्षिहरूले भगवान् श्रीगणेशका हस्तितुण्ड, गजवदन, वक्रतुण्ड र बृहद्दन्तिस्वरूपलाई साक्षात्कार गरेको तथ्य स्पष्ट हुन्छ ।

अथर्ववेदको शौनकीसंहितामा र गणपत्यथर्वशीर्ष – १० मा पनि **'एकदन्ताय विद्महे वक्रतुण्डाय धीमहि तन्नो दन्ती प्रचोदयात्'** मन्त्रको उल्लेख गरिएको छ । सामवेदको विनायकसंहितामा **'एतान् प्रयुञ्जन् विनायकान् प्रीणाति'** भनेर श्रीगणेशपूजाविधिको उल्लेख गरिएको छ । कृष्णयजुर्वेदको तैत्तिरीय आरण्यकको १०/१ मा **'तत्पुरुषाय विद्महे वक्रतुण्डाय धीमहि तन्नो दन्ती प्रचोदयात्'** भनेर गणपतिगायत्रीको उल्लेख गरिएको छ । अथर्ववेदको श्रीगणेशपूर्वतापिन्युपनिषद्मा **गणानां त्वा०** आदि मन्त्रद्वारा श्रीगणेशको स्तुति गरी उहाँको प्रशंसा गरिएको छ । यसैगरी त्यसै उपनिषद्को २/३ मन्त्रमा चतुर्भुज, रक्तवर्ण, गजवदन, वक्रतुण्ड, भक्तवरद, महादेव र पार्वतीपुत्र श्रीगणेशको स्मरण गरिएको छ । अथर्ववेदको बृहज्जाबालोपनिषद् ४/२२ मा शिव, विष्णु, लक्ष्मी आदि देवताहरूका साथ विघ्नेशका नामबाट श्रीगणेशको पनि चर्चा गरिएको छ ।

ऋग्वेदमा बाह्र मन्त्रहरूद्वारा सजिएको श्रीगणेशसूक्त रहेको छ । मन्त्रसाधनाकालमा आइलाग्ने निद्रा, आलस्य, भोक, तिर्खा, काम, क्रोध, लोभ, मोह, माया, प्रमाद र रोगजस्ता विघ्नबाधा हटाउने कार्यमा ऋग्वेद २/२३/१-१३ मा सन्निहित श्रीगणेशसूक्तका मन्त्रहरूको प्रभावकारी भूमिका रहने तथ्य मेरुतन्त्र आदि प्रामाणिक ग्रन्थहरूमा बताइएको छ । श्रीगणेशसूक्तको पाठ गरी मन्त्रजाप गर्दा उच्चारणजनित दोष, भावदोष र संसर्गदोषसमेत निराकृत हुन्छन् । यसबाट माथि बताइएका भौतिक, मानसिक र आध्यात्मिक विघ्न पनि निरस्त हुन्छन् । यसकारण साधकहरूले विधिपूर्वक तल लेखिएअनुसार विनियोग गरी श्रीगणेशसूक्तको पाठ गर्नुपर्दछ ।

---

६. *विघ्नेश ! विधिमार्तण्ड चन्द्रेन्द्रोपेन्द्रवन्दित ! नमो गणपते तुभ्यं ब्रह्मणां ब्रह्मणस्पते ॥ – शिवशङ्कर शास्त्री, 'वेदों में गणपति', कल्याण, पूर्ववत्, पृ. १२३ ।*

७. *बृहस्पतिः प्रथमं जायमानो महो ज्योतिषः परमे व्योमन् । सप्तास्यस्तु विजातो रवेण द्विसप्तरश्मिरधमत्तमांसि ॥ – ऋग्वेद, ४/५०/४ ।*

८. *ज्येष्ठराजं ब्रह्मणां ब्रह्मणस्पत आ नः शृण्वन्नूतिभिः सीद सादनम् । – पूर्ववत्, २/२३/१ ।*

९. *'ज्येष्ठराजं भरे कृत्नुयम् – शौनकसंहिता २०/४४/३ ।*

गणेशसूक्तम्

**विनियोगः** - महात्मनो गणेशस्य अस्य द्वादशर्चस्य समदऋषिः, गणपो देवता आद्यानां त्रिऋचानां त्रिष्टुप्छन्दः, उत्तराणां नवानां गायत्रं छन्दः, महागणपतिर्दैवतम्, मन्त्रसाधनायां जायमानानां दोषाणां निराकरणाय विनियोगः ।

**गणानान्त्वा गणपतिं हवामहे कविं कवीनामुपमश्रवस्तमम् ।**
**ज्येष्ठराजं ब्रह्मणां ब्रह्मणस्पते आ नः शृण्वन्नूतिभिः सीद सादनम् ।।१।।**
**निषुसीदगणपते गणेषु त्वमाहुर्विप्रतमङ्कवीनाम् ।**
**न ऋते त्वत्क्रियते किञ्चनारे महामर्कमधञ्चित्रमर्च ।।२।।**
**त्वेषङ्गणं तव शंखादिहस्तं धृतिव्रतं मा विदानन्ति वारम् । मया भुवो ये ।।३।।**
**आ तून इन्द्र सुमन्तं चित्रं यामं संगृभाय । महाहस्ती दक्षिणेन ।।४।।**
**विद्मा हि त्वा तु विकूर्मिं तु विदेशन्तुवीमघम् । तुविमात्रमवोभिः ।।५।।**
**न हि त्वा शूर देवा न मर्तासो दित्स तम् । भीमं गोवादयन्ते ।।६।।**
**एतोन्विन्द्रं स्तवामेशानं वस्य स्वराज्यम् । न राधसार्थिषं नः ।।७।।**
**प्रस्तोष उपगासिषच्छवत्साम गीयमानम् । अभिशर्धस्य जुगुरत् ।।८।।**
**आ नो मख्यञ्जनं दक्षिणेनभिमध्यन प्रामृजद्वा इन्द्र । मा नो वसोर्निर्भाक् ।।९।।**
**उपक्रमस्याभर घृताधृष्णो जनानां यद्यशुष्ठरस्य वेदः ।।१०।।**
**इन्द्र य उ नु ते अस्ति वोजो विप्रेभिस्तनित्वः । अस्माभिस्तु तं सन्निहि ।।११।।**
**स याजुषो वजा अस्मभ्यं विश्वश्चन्द्राः । बलेश्च मक्षु जरन्तम् ।।१२।।**
**गणानां त्वा निषुसीद त्वेषं गणन्तथैव च ।**
**आ तू न इन्द्र विद्महि न हि त्वा शूरमेव च ।।१३।।**

उपर्युक्त वैदिक प्रमाणहरूबाट श्रीगणेश वैदिक देवता हुनुभएको तथ्य प्रमाणित हुन्छ । वेद, उपनिषद्, पुराण एवं तन्त्रहरूमा निरूपित श्रीगणेशगायत्रीहरूका तत्पुरुष, एकदन्त, हस्तिमुख, वक्रतुण्ड, दन्ती, वराट आदि श्रीगणेशका पर्यायवाची नामहरूको पर्यालोचन गर्दा ती सबैले श्रीगणेशको महत्ता र विशेषता व्यक्त गरेको तथ्य स्पष्ट हुन्छ । जसरी श्रीगणेश वैदिक देवता हुनुहुन्छ, त्यसरी नै उहाँ अनादिसिद्ध आदिदेव पनि मानिनुभएको छ । उहाँलाई नै कर्ता, धर्ता र हर्ता पनि मानिएको छ । उहाँलाई **'त्वं प्रत्यक्षं ब्रह्मासि'** भनेर प्रत्यक्ष ब्रह्मको रूपमा चित्रण गरिएको छ । वास्तवमा श्रीगणेश जीवात्माका प्रतिनिधि र सर्वदेवमय हुनुहुन्छ । त्यसकारण उहाँ सबैका लागि वन्दनीय र पूजनीय पनि हुनुहुन्छ । प्राणीमात्रको मङ्गलविधान गर्नु नै उहाँको प्रमुख कार्य भएकाले उहाँलाई मङ्गलमूर्ति भनिएको छ । भक्तकल्याणकारी देवता हुनुभएकाले उहाँलाई **वरदमूर्तये नमः** भनी वरद र भक्तकामनापूरक मानिएको छ ।

## ५.२ स्मृतिवाङ्मय

स्मृतिहरूमा श्रीगणेशको चर्चा, प्रशंसा र पूजाविधिको निरूपणसमेत भएको छ । बृहत्पाराशरस्मृतिमा श्रीगणेशको नित्यपूजाको विधान गर्दै भनिएको छ - बलिवैश्वदेव कालमा श्रीगणेशका लागि घृताहुति दिनुपर्दछ र सबै प्रकारका विघ्नहरूको शान्तिका लागि उहाँको पूजा गर्नुपर्दछ । फेरि **गणानान्त्वा०** इत्यादि मन्त्रबाट अन्तमा स्वाहाको प्रयोग गर्दै

श्रीगणेशका निमित्त चार आहुति दिनुपर्दछ ।[१०] बृहत्पाराशरस्मृतिमा विविध विघ्नहरूको उल्लेख गर्दै तिनीहरूको शमनका लागि श्रीगणेशपूजन र श्रीगणेशमन्त्रजपको समेत विधान गरिएको छ ।

महर्षि लौगाक्षिले लौगाक्षिस्मृतिमा अरू देवताले केही निर्धारित पदार्थमात्र प्रदान गर्दछन् भने श्रीगणेशले सबै कुरा दिनुहुन्छ भन्ने कुरा खुलाउँदै भनिएको छ – 'सूर्यबाट आरोग्य, अग्निबाट श्री, शिवजीबाट ज्ञान, जनार्दनबाट मोक्ष, दुर्गा आदि देवीहरूबाट रक्षा, भैरव आदिबाट सङ्कटमोचन, सरस्वतीबाट विद्या, लक्ष्मीबाट ऐश्वर्यवृद्धि, पार्वतीबाट सौभाग्य, इन्द्राणीबाट कल्याणपरम्परा, स्कन्दबाट सन्तानवृद्धिको कामना गर्नुपर्दछ भने श्रीगणेशबाट उक्त सबै विषयको कामना गर्नुपर्दछ । किनभने उहाँ सबै कुरा प्रदान गर्न समर्थ हुनुहुन्छ।'[११]

याज्ञवल्क्यस्मृतिको गणपतिकल्पमा गणपति आराधनाविधिको निरूपणका साथै ब्रह्मा र शङ्करले श्रीगणेशलाई विघ्नकर्ताका रूपमा गणहरूको अधिपति बनाएको तथ्य निरूपण गरिएको छ ।[१२] उक्त प्रकरणमा नै विनायकको विघ्नजालमा फँसेका प्राणीहरूको निरूपण गरी त्यसबाट मुक्त हुने उपायसमेत बताइएको छ। विभिन्न पवित्र पदार्थहरूले समन्वित कलशको जलले अभिषेक गर्ने विधि बताएर मित, सम्मित, शाल, कटङ्कट, कूष्माण्ड र राजपुत्र नामहरूमा स्वाहापद जोडेर हवन गर्नुपर्ने निर्देश गरिएको छ ।[१३] तत्पश्चात् बलिदान, श्रीगणेशकी माता अम्बिकाको उपस्थान र ब्रह्मभोजन आदि कर्म गरी विनायकपूजा समाप्ति हुने कुरा बताइएको छ । यसैगरी वीरमित्रोदयको पूजाप्रकाशमा पनि श्रीगणेशको पूजाबाट विघ्ननिवारण हुने तथ्य खुलाइएको छ । यसरी धर्मशास्त्रका विभिन्न ग्रन्थहरूमा श्रीगणेशको चर्चा हुनुले धर्मशास्त्रमा विघ्नविनाशक विशिष्ट देवताका रूपमा श्रीगणेशको मान्यता रहेको तथ्य प्रमाणित हुन्छ ।

## ५.३ तन्त्रवाङ्मय

तन्त्रशास्त्रमा श्रीगणेशको व्यापक चर्चा भएको छ । तन्त्रशास्त्रअनुसार विश्वको आधारशक्तिका रूपमा रहनुभएका श्रीगणपतिको अपूर्व महिमा रहेको छ । आधारशक्ति वस्तुका भेदले अनन्त मानिएको छ । श्रीगणेश आधारशक्तिभन्दा पृथक् नहुनुभएकाले उहाँका रूप पनि अनन्त मानिएका छन् । गणपतिका नाम, रूप, वर्ण, वस्त्र, आयुध, वाहन र कार्य पनि अनेक छन् । तन्त्रशास्त्रका तत्त्ववेत्ताहरूले कतिपय गणपतिहरूका नाम, आकृति, वर्ण, वाहन र आयुधको निर्देश श्रीतत्त्वनिधि, श्रीविद्यार्णव आदि ग्रन्थहरूमा प्रतिपादन गरेका छन् । एउटै गणपतिका एकदन्त, लम्बोदर, गजानन, गणपति, विघ्नराज आदि अनेक पर्याय बताइएका छन् । परन्तु यी सबै नामका आ-आफ्नै भिन्न भिन्न अर्थ पनि छन् ।

तन्त्रका विशिष्ट ग्रन्थहरूमा श्रीगणेशका तान्त्रिक ध्यानका सुन्दर चित्र देखाइएका छन् । त्यहाँ रत्न, कुम्भ, अङ्कुश र कमल, अभयमुद्रा, वरमुद्रा र गदा धारण गर्ने भगवान् श्रीगणेशको ध्यानविधि पनि निरूपण गरिएको छ । ऊर्ध्वगणपतिको ध्यानमा धनुर्धारी श्रीगणेशको ध्यान पनि पाइन्छ । वीरगणपतिको ध्यानको प्रसङ्गमा श्रीतत्त्वनिधिमा शक्तिधारी श्रीगणेशको चर्चा गरिएको छ । अक्षरगणपतिको ध्यानमा दायाँ हातमा दन्त धारण गरेको देखाइएको छ । तरुणगणपतिको ध्यानमा पाश, अङ्कुश, अपूप, जम्बू, स्वदन्त, शालि, इक्षु धारण गरेको देखाइएको छ । हेरम्बगणपतिको ध्यानमा अभय, वरमुद्रा,

१०. *विनायकाय होतव्या घृतस्याहुतयस्तथा । सर्वविघ्नोपशान्त्यर्थं पूजयेत् परतस्तु तम् ।। गणानान्त्वेति मन्त्रेण स्वाहाकारान्तमादृतः । चतस्रो जुहुयात् तस्मै गणेशाय श्वाऽऽहुतीः ।। वैश्वदेव प्रकरण ४/१३५-१३८ ।*

११. *आरोग्यं भास्करादिच्छेत् श्रियमिच्छेद् हुताशनात्। ईश्वराज्ज्ञानमन्विच्छेन्मोक्षमिच्छेद् जनार्दनात्।।*
*दुर्गादिभिस्तथा रक्षा भैरवाद्यैस्तु दुर्गमम् । विद्यासारं सरस्वत्या लक्ष्म्याश्चैश्वर्यवर्धनम् ।।*
*पार्वत्याश्चैव सौभाग्यं शच्याः कल्याणसन्ततिम्। स्कन्दात् प्रजाभिवृद्धिश्च सर्वं चैव गणाधिपात्।।* – रामाधार शुक्ल, 'स्मृतिओं में गणेश', कल्याण, पूर्ववत्, पृ. ३५८ ।

१२. *विनायकः कर्मविघ्नसिद्ध्यर्थं विनियोजितः । गणानामाधिपत्ये च रुद्रेण ब्रह्मणा तथा ।।* – याज्ञवल्क्यस्मृति १/२७१ ।

१३. *मितश्च सम्मितश्चैव तथा शालकटङ्कटौ । कूष्माण्डो राजपुत्रश्चेत्यन्ते स्वाहासमन्वितैः ।।* – पूर्ववत्, १/२८५ ।

पाश, दन्त, अक्षमाला, सृणि, परशु, मुद्गर र मोदक धारण गर्ने स्वरूपको ध्यान प्रस्तुत गरिएको छ। गदाधारी महागणपतिको सौन्दर्यचित्रण गरिएको छ र लक्ष्मीगणपतिको हातमा चक्र रहेको देखाइएको छ। यसैगरी अंशुमद्भेदागममा पनि दायाँ हातमा दन्त र बायाँ हातमा कपित्थ धारण गर्ने श्रीगणेशको चर्चा पाइन्छ। मन्त्रमहार्णवमा उन्मत्तगणपति र उच्छिष्टगणपतिको वर्णन गरिएको छ र श्रीगणेशका सूँढको टुप्पामा मोदक रहेको देखाइएको छ। शिवगण र गणदेवताका स्वामी श्रीगणेशको नाममा रहेको गणशब्दका अनेक अर्थ अनेक तन्त्रमा पाइन्छन्। संख्याविशेषले सम्पन्न सेनाका सेनापतिका रूपमा पनि श्रीगणेशको चर्चा भएको छ। महानिर्वाणतन्त्रमा गणदीक्षाको प्रवर्त्तन गर्ने श्रीगणेशलाई गणप भनिएको छ।[१४]

पाञ्चरात्र आगममा श्रीवैष्णव सम्प्रदाय अथवा विशिष्टाद्वैत सम्प्रदायका मानिसहरूले श्रीगणेशलाई विष्णु परिवारमा गणना गर्ने विषयमा प्रकाश पारिएको छ। सनत्कुमारसंहितामा भगवान्का मन्दिर, प्राङ्गण र विमानहरूमा कौशिक, कन्दर्प, स्कन्द र श्रीगणेशको स्थापना गर्नुपर्ने विधि बताइएको छ। त्यहीं नै श्रीगणेश र सिंहको माझमा मिश्र र श्रीधर एवं श्रीगणेशको बीचमा वरुणको स्थापना गर्नुपर्ने विषयमा प्रकाश पार्दै त्यहाँ स्थापित कुमारी, कुमार, गणेश, विनायक, सिद्ध र किन्नरहरूले हाम्रो कल्याण गरून् भनिएको छ। त्यसै संहितामा शिवरात्रिका दिन गाउँको दक्षिण भागमा गई उत्तराभिमुख गराएर श्रीगणेशको स्थापना गर्ने निर्देश दिइएको छ। '**ॐ नमो गणाधिपतये शूर्पकर्णाय विद्महे कोटिरक्षाय धीमहि तन्नो गणपतिः प्रचोदयात्**' - यस श्रीगणेशगायत्रीको जप र श्रीगणेशपूजाको विधि पनि त्यहाँ बताइएको छ। श्रीप्रश्नसंहितामा श्रीगणेशलाई ओङ्कारका अधिष्ठाता मानिएको छ। यसरी विष्णुपरिवारमा पनि श्रीगणेशको महत्त्वपूर्ण स्थान रहेको तथ्य प्रमाणित हुन्छ।[१५]

वैखानस-आगममा हनुमान् र श्रीगणेशलाई एउटै तत्त्व मानिएको छ। तन्त्रसारमा वैनायक सम्प्रदायका उपास्य देवता महागणपति, हेरम्बगणपति, हरिद्रागणपति, उच्छिष्टगणपति, स्वर्णगणपति र रक्तदन्तगणपतिको ध्यान, पूजाविधि र प्रयोग विधिको विस्तृत रूपमा निरूपण गरिएको छ। श्रीतत्त्वनिधिमा ३२ प्रकारका गणपतिहरूको नाम निर्देश पाइन्छ - बालगणपति, तरुणगणपति, भक्तगणपति, वीरगणपति, शक्तिगणपति, हेरम्बगणपति, द्विजगणपति, सिद्धगणपति, उच्छिष्टगणपति, विघ्नगणपति, क्षिप्रगणपति, लक्ष्मीगणपति, महागणपति, विजयगणपति, नृत्तगणपति, ऊर्ध्वगणपति, एकाक्षरगणपति, वरगणपति, त्र्यक्षरगणपति, क्षिप्रप्रसादगणपति, हरिद्रागणपति, एकदन्तगणपति, सृष्टिगणपति, उद्दण्डगणपति, ऋणमोचनगणपति, ढुण्ढिगणपति, द्विमुखगणपति, त्रिमुखगणपति, सिंहगणपति, योगगणपति, दुर्गागणपति र सङ्कटहरगणपति।[१६] तन्त्र एवं आगममा श्रीगणेशको व्यापक वर्णन पाइन्छ।

गणेशपरक तन्त्रशास्त्रमा लघुषोढान्यासअन्तर्गत ५१ प्रकारका मातृकाहरूलाई सशक्तिक श्रीगणेश मानिएको पाइन्छ। त्यसको वर्णन यस प्रकार छ - **अ** - ह्रीसहित विघ्नेश, **आ** - श्रीसहित विघ्नराज, **इ** - तुष्टिसहित विनायक, **ई** - शक्तिसहित शिवोत्तम, **उ** - पुष्टिसहित विघ्नहृत्, **ऊ** - सरस्वतीसहित विघ्नकर्ता, **ऋ** - रतिसहित विघ्नराट्, **ॠ** - मेधासहित गणनायक, **ऌ** - कान्तिसहित एकदन्त, **ॡ** - कामिनीसहित द्विदन्त, **ए** - मोहिनीसहित गजवक्त्र, **ऐ** - जटासहित निरञ्जन, **ओ** - तीव्रासहित कपर्दिभृत्, **औ** - ज्वालिनीसहित दीर्घमुख, **अं** - नन्दासहित शङ्कुकर्ण, **अः** - सुयशासहित वृषभध्वज, **क**- कामरूपिणीसहित गणनाथ, **ख** - सुभ्रूसहित गजेन्द्र, **ग** - जयिनीसहित शूर्पकर्ण, **घ** - सत्यासहित त्रिलोचन, **ङ**-विघ्नेशीसहित लम्बोदर, **च** - सुरूपासहित महानाद, **छ** - कामदासहित चतुर्मूर्ति, **ज** - मदविह्वलासहित सदाशिव, **झ**- विकटासहित आमोद, **ञ** - दुर्मुखासहित दुर्मुख, **ट** - भूतिदासहित सुमुख, **ठ** - भूमिसहित प्रमोद, **ड** -

१४. रामलाल, पूर्ववत्, पृ. १७२।
१५. डॉ. वरदाचार्य, 'पाञ्चरात्र आगम में गणेश', कल्याण, पूर्ववत्, पृ. ३५६।
१६. राममोहन चक्रवर्ती, कल्याण, पूर्ववत्, पृ. ४६०।

शक्तिसहित एकपाद, ढ - रमासहित द्विजिह्व, ण - मानुषीसहित शूर, त - मकरध्वजासहित वीर, थ - वीरिणीसहित षण्मुख, द - भृकुटीसहित वरद, ध - लज्जासहित वामदेव, न - दीर्घघोणासहित वक्रतुण्ड, प - धनुर्धरासहित द्विरण्डक, फ - यामिनीसहित सेनानी, ब - रात्रिसहित ग्रामणी, भ - चन्द्रिकासहित मत्त, म - शशिप्रभासहित विभक्त, य - लोलासहित मत्तवाहन, र - चपलासहित जटी, ल - ऋद्धिसहित मुण्डी, व - दुर्भगासहित खड्गी, श - सुभगासहित वरेण्य, ष - शिवासहित वृषकेतन, स - दुर्गासहित भक्षप्रिय, ह - कालीसहित गणेश, लम् - कालकुब्जिकासहित मेघनाद, क्षम् - विघ्नहारिणीसहित गणेश्वर । यसरी शब्दब्रह्मरूप श्रीगणेश ओङ्कारको मातृकाहरूका साथ विस्तार गरिएको पाइन्छ ।[१७]

मेरुतन्त्रमा पनि विघ्ननिराकरणका लागि दैनिक उपासना गर्दा सशक्तिक गणेशमातृका न्यासको आवश्यकता औंल्याई विनियोग, ध्यानसहित मातृकान्यासको सरणि प्रकाशित गरिएको छ -

अ - ह्रीसहित विघ्नेश, आ - श्रीसहित विघ्नराज, इ - पुष्टिसहित विनायक, ई - शान्तिसहित शिवोत्तम, उ - स्वस्तिसहित विघ्नहृत्, ऊ - सरस्वतीसहित विघ्नकर्ता, ऋ - स्वाहासहित गण, ॠ - सुमेधासहित एकदन्त, ऌ - कान्तिसहित द्विदन्त, ॡ - कामिनीसहित गजवक्त्र, ए - मोहिनीसहित निरञ्जन, ऐ - नटीसहित कपर्दी, ओ - पार्वतीसहित दीर्घजिह्व, औ - ज्वालिनीसहित शङ्कुकर्ण, अं - नन्दासहित वृषभध्वज, अः - सुयशासहित गणनायक, क - कामरूपिणीसहित गजेन्द्र, ख - उमासहित शूर्पकर्ण, ग - तेजोवतीसहित त्रिलोचन, घ - सत्यासहित लम्बोदर, ङ - विघ्नेशीसहित महानन्द, च - सुरूपासहित चतुर्मूर्ति, छ - कामदासहित सदाशिव, ज - मदजिह्वासहित आमोद, झ - भूतिसहित दुर्मुख, ञ - भौतिकासहित सुमुख, ट - सीतासहित प्रमोद, ठ - रमासहित एकपाद, ड - महिषीसहित द्विजिह्व, ढ - जम्भिनीसहित शूर, ण - विकर्णासहित वीर, त - भृकुटीसहित षण्मुख, थ - लज्जासहित वरद, द - दीर्घघोणासहित वामदेव, ध - धनुर्धरासहित वक्रतुण्ड, न - यामिनीसहित द्विरद, प - रात्रिसहित सिनीश, फ - ग्रामणीसहित कामान्ध, ब - शशिप्रभासहित मत्त, भ - लोललोचनासहित विमत्त, म - चञ्चलासहित मत्तवाहन, य - दीप्तिसहित जटी, र - सुभगासहित मुण्डी, ल - दुर्भगासहित खड्गी, व - शिवासहित वरेण्य, श - भगासहित वृषकेतन, ष - भगिनीसहित भक्तप्रिय, स - भोगिनीसहित गणेश, ह - सुभगासहित मेघनाद, लम् - कालरात्रिसहित व्यापी, क्षम् - कालिकासहित गणेश्वर ।[१८]

श्रीविद्याको उपासना गर्ने शङ्कराचार्यपरम्परामा श्रीयन्त्रको मध्यबिन्दुमा श्रीगणेशका विभिन्न रूप - महागणपति, छिप्रप्रसादनगणपति, वक्रतुण्डगणपति, लक्ष्मीगणपति, हेरम्बगणपति, विरिगणपति, शक्तिगणपति आदिको ध्यान गर्ने विधान रहेको छ ।[१९] मेरुतन्त्र श्रीगणेशपरक बोध र सूचनाको स्रोतका रूपमा रहेको छ । त्यहाँ दशाक्षर शावरमन्त्र श्रीगणेशद्वारा अभिशप्त भएकाले श्रीगणेशको आराधना गरेपछि मात्र सद्गुरुबाट मन्त्रप्राप्त गरी विधिपूर्वक त्यसको उद्दीपन गर्नुपर्ने कुरा बताइएको छ । यदि त्यसो नगरी जथाभावी मन्त्र जपियो भने जापक जन्मजन्मान्तरसम्म मूर्ख रहने कुरा बताइएको छ ।[२०] चन्दन, गुग्गुलधूप, कपूर, रक्तकमल, कुंकुम, कस्तूरी, रक्तचन्दन र रक्तचन्दनसँग मिसिएको जल यी पदार्थ श्रीगणेशका निमित्त अतिशय रुचिकर भएकाले उक्त पदार्थहरूको समूहलाई श्रीगणेशको अष्टगन्ध अथवा गणेशगन्धाष्टक भनिएको छ ।[२१]

कृष्णागण्डकीमा पाइने शालग्रामका अनेक आकार र रूप हुन्छन् । तीमध्ये कुनै सूर्यशालग्राम, कुनै शिवशालग्राम, कुनै विष्णुशालग्राम, कुनै श्रीगणेशशालग्राम हुन्छन् र यस्तै अरू देवतासँग सम्बद्ध शालग्राम पनि । गणेशशालग्रामको

१७. रामानुजाचार्य, 'विविध गणेश', कल्याण, पूर्ववत्, पृ. ५० ।
१८. मेरुतन्त्र, पाँचौँ आह्निक प्रकाश ।
१९. के. वरदाचार्य, पूर्ववत् ।
२०. दशाक्षरस्तु यो मन्त्रः स गणेशस्य शापतः । मन्त्रो जपतस्तु मूर्खत्वं कुर्याज्जन्मनि जन्मनि ॥ - मेरुतन्त्र १/११७ ।
२१. चन्दनागरुकर्पूररोचनाकुंकुमं मदः । रक्तचन्दनजं वारि गन्धाष्टकमुदाहृतम् ॥ - पूर्ववत्, ३/४३१-४३२ ।

चिनारी गराउँदै मेरुतन्त्रमा भनिएको छ – जुन शालग्राममा सूँढको आकार स्पष्ट देखिन्छ त्यसलाई गणेशशालग्राम भन्नुपर्दछ। सूँढको आकारमा रहेको शालग्राम शिला र श्रीगणेशको आकारमा देखिने शालग्रामशिलालाई समेत गणेशशालग्राम मान्नु पर्दछ।[२२]

सनातन संस्कृतिमा रुद्राक्षलाई ज्यादै पवित्र, सिद्धिप्रद र देवरूप मानिएको छ । रुद्राक्षका मुखअनुसारका देवता हुन्छन्। आठ मुख भएको रुद्राक्षलाई श्रीगणेशरूप मानिएको छ । श्रीगणेशका भक्तहरूले आठमुखे रुद्राक्ष विधिवत् धारण गर्नुपर्दछ । गणेशरुद्राक्ष धारण गर्ने साधकका काम, क्रोध, लोभ, मोह, मद, मात्सर्यजस्ता आभ्यन्तर शत्रुहरूको विनाश हुन्छ भनिएको छ।[२३]

कुलार्णव तन्त्रअनुसार सदाशिवका मुखबाट १० दिशाका रूपमा प्रकट भएका तान्त्रिक मन्त्रसहितका मार्गलाई आम्नाय भनिन्छ । ती यसप्रकार छन् – १) पूर्वाम्नाय, २) पश्चिमाम्नाय, ३) दक्षिणाम्नाय, ४) उत्तराम्नाय, ५) ऊर्ध्वाम्नाय, ६) अधराम्नाय, ७) ईशानाम्नाय, ८) आग्नेयाम्नाय, ९) नैर्ऋत्याम्नाय र १०) वायव्याम्नाय । यीमध्ये अधराम्नाय बौद्धतन्त्रको रूपमा रहेको छ । भगवान् शङ्करको पूर्वमुखबाट पूर्वाम्नाय, पश्चिम मुखबाट पश्चिमाम्नाय, दक्षिण मुखबाट दक्षिणाम्नाय, उत्तरमुखबाट उत्तराम्नाय, ऊर्ध्वमुखबाट ऊर्ध्वाम्नाय, अधरमुखबाट अधराम्नाय, ऐशान्य एवं पूर्वमुखबाट ईशानाम्नाय, पूर्व एवं दक्षिण मुखबाट आग्नेयाम्नाय, दक्षिण एवं पश्चिम मुखबाट नैर्ऋत्याम्नाय, पश्चिम एवं उत्तर मुखबाट वायव्याम्नाय प्रकट भएको कुरा कुलार्णव तन्त्रमा बताइएको छ ।[२४]

तन्त्रपरम्परामा आम्नाय बेग्लाबेग्लै भएकाले श्रीगणेशका स्वरूप र नाम पनि बेग्लाबेग्लै छन् । पूर्वाम्नायमा विरञ्चिगणेश, उत्तराम्नायमा उच्छिष्टगणेश, पश्चिमाम्नायमा छिप्रप्रसादनगणेश, दक्षिणाम्नायमा लक्ष्मीगणेश एवं हरिद्रागणेश, ऊर्ध्वाम्नायमा महागणेश प्रसिद्ध छन् । तन्त्रशास्त्रमा पञ्चमुख गणपति र सशक्तिक गणपति आदि अनेक भेदहरूको निरूपण गरिएको छ।

महाकालसंहिताको द्वितीय भाग गुह्यकालीखण्डमा कालीयन्त्रको कर्णिकामा पूजा गरिने ५१ गणेशको निम्नानुसार उल्लेख गरिएको छ । लम्बोदर, एकदन्त, गजवक्त्र, विनायक, विघ्नहर्ता, भीमनाद, हेरम्ब, मूषकवाहन, जितेन्द्रिय, सुमुख, एकानंश, गणेश्वर, कपिल, शूर्पकर्ण, देवीपुत्र, घटोदर, भग्नदन्त, विश्वमूर्ति, महाबल, स्थिरासन, व्यालसूत्री, चलकर्ण, गणाधिप, ऊर्ध्वरोमा, महापद्मी, प्रत्यूहच्छिद्, महास्वन, महाशुण्ड, जगन्नेता, सिद्धिदाता, बलिप्रिय, कार्यकर्ता, कर्मसाक्षी, प्रभिन्न, प्रणतार्तिहृत्, उग्रनाद, महावाग्मी, हेमाङ्ग, अङ्कुशधारी, सटाधर, आखुध्वज, रतित्यागी, महागण्ड, महेश्वर, मत्तरूप, सुरत्राता, महाविघ्नौघमर्दन ।

आम्नायभेदअनुसार श्रीगणेशका स्वरूपमा विभेद हुने भएकाले तिनका ध्यान र मन्त्र पनि भिन्न-भिन्न छन् । जुन आम्नायका देवताको पूजा हुन्छ, त्यस आम्नायका मन्त्रले श्रीगणेशको पूजा गर्नुपर्दछ । मेरुतन्त्रमा विभिन्न आम्नायका गणपतिहरूको वर्णन गरिएको पाइन्छ ।

१. **ऊर्ध्वाम्नाय** – १. महागणपति, २. सिद्धिविनायक, ३. लक्ष्मीविनायक, ४. त्रैलोक्यमोहनविनायकका नामबाट श्रीगणेश ऊर्ध्वाम्नायमा रहनुभएको छ ।

२. **पूर्वाम्नाय** – १. विरिविघ्नेश, २. विरिञ्चिगणनायक, ३. शक्तिगणेश, ४. वक्रतुण्डगणेश पूर्वाम्नायमा रहेका छन् ।

३. **पश्चिमाम्नाय** – पश्चिमाम्नायमा वाराणसीमा रहेका ६४ गणेशहरूलाई आठ आवरणमा विभक्त गरी प्रस्तुत गरिएको छ।

क) **प्रथम आवरण** – १. विघ्नविनायक, २. वीरविनायक, ३. सुरविनायक, ४. वरदाक्षविनायक, ५. इभवक्त्रविनायक, ६. विप्रविनायक, ७. एकदन्तविनायक र ८. लम्बोदरविनायक ।

ख) **द्वितीय आवरण** – १. सिद्धिविनायक, २. अर्कविनायक, ३. दुर्गविनायक, ४. चण्डविनायक, ५. देहलीविनायक,

[२२] गणेशः स तु विज्ञेयो यस्तु शुण्डाङ्कितो भवेत् । शुण्डाकारा शिला वाऽपि गजाननसमाऽपि वा ॥ – पूर्ववत्, ८/६६१ ।

[२३] अष्टवक्त्रो गणेशः स्यात् सर्वविघ्ननिवारकः । नश्यन्ति तज्जपात् सर्वे कामक्रोधादिशत्रवः ॥ – पूर्ववत्, ८/३३३ ।

[२४] नरेन्द्र पाण्डेय, संस्कृत् नेपाली बृहत् शब्दकोष, पृ. १६१-१६२ ।

६. उद्दण्डविनायक, ७. पाशपाणिविनायक र ८. खर्बविनायक ।

ग) **तृतीय आवरण** – १. वेदप्रवर्तकविनायक, २. अभक्तविघ्नकृद्विनायक, ३. भक्तविजयप्रदविनायक, ४. पापिपापहृद्विनायक, ५. वाममार्गप्रसाधकविनायक, ६. तपोवनपरित्रायकविनायक, ७. सीमारक्षाकरविनायक र ८. आयुष्कृद्विनायक ।

घ) **चतुर्थ आवरण** – १. रोगहृद्विनायक, २. निधिदविनायक, ३. द्विजाधिपविनायक, ४. तुन्दिलविनायक, ५. विश्वरक्षाकरविनायक, ६. गणनाथविनायक, ७. गणाधिपविनायक र ८. दुग्धविनायक ।

ङ) **पञ्चम आवरण** – १. लम्बोदरविनायक, २. कूटदन्तविनायक, ३. शालङ्कटङ्कटविनायक, ४. कूष्माण्डविनायक, ५. मुण्डविनायक, ६. विकटदन्तविनायक, ७. राजपुत्रविनायक र ८. प्रवरविनायक ।

च) **षष्ठ आवरण** – १. वक्रतुण्डविनायक, २. एकदन्तुरविनायक, ३. कपिसिंहद्विपाननविनायक, ४. पञ्चास्यविनायक, ५. हेरम्बविनायक, ६. प्रवरविनायक, ७. विघ्नराजविनायक र ८. मोदकप्रियविनायक ।

छ) **सप्तम आवरण** – १. वातुलविनायक, २. सिंहतुण्डविनायक, ३. कुणिताक्षविनायक, ४. क्षिप्रप्रसादनविनायक, ५. चिन्तामणिविनायक, ६. दन्तिहस्तविनायक, ७. पिचिण्डिलविनायक र ८. उद्दण्डमुण्डविनायक ।

ज) **अष्टम आवरण** – १. स्थूलदन्तविनायक, २. कलिप्रियविनायक, ३. चतुर्दन्तविनायक, ४. द्विदन्तादि-द्वितुण्डविनायक, ५. ज्येष्ठविनायक, ६. गजविनायक, ७. कालविनायक र ८. नागेशविनायक ।

यस अतिरिक्त राजमातङ्गी देवीसम्बद्ध मोद, प्रमोद, सुमुख, दुर्मुख, गणनायक, ज्ञानविनायक, द्वारविघ्नेश, मुष्टिगणेश, यक्षविघ्नेश, गजकर्ण, चित्रघण्ट, मङ्गलविनायक, मित्रविनायक, अभिमुक्तविनायक आदि पन्ध्र गणेशहरूको पनि यसै आम्नायमा उल्लेख गरिएको पाइन्छ ।

४. **दक्षिण आम्नाय** – १. विघ्नराज, २. लक्ष्मीगणपति, ३. त्र्यक्षरशक्तिगणपति, ४. चतुरक्षरशक्तिगणपति, ५. क्षिप्र-प्रसादनगणपति, ६. हेरम्बगणपति, ७. सुब्रह्मण्यगणपति र ८. हरिद्रागणपति दक्षिण आम्नायमा रहेका छन् ।

५. **उत्तर आम्नाय** – उच्छिष्टगणेशको उल्लेख गरिएको छ । यिनै उच्छिष्ट गणेशलाई अरू तन्त्रहरूमा अधराम्नायका गणेश पनि मानिन्छ ।[२५]

प्रतापसिंह शाहद्वारा रचित बृहत्पुरश्चर्यार्णवमा ऊर्ध्वाम्नायका महागणपति, दक्षिणाम्नायका विघ्नराज, लक्ष्मीगणेश, शक्तिगणेश एवं हरिद्रागणेश; उत्तर आम्नायका – क्षिप्रप्रसादन एवं उच्छिष्टगणपति, पूर्वाम्नायका महागणपति, पश्चिमाम्नायका विघ्नगणेश, पञ्चास्यगणेश र अधराम्नायका गणपतिका मन्त्र र साधनाविधि प्रस्तुत गरिएका छन् ।

दीक्षा मन्त्र लिँदा द्वारको ऊर्ध्व भागमा विघ्नेश र दक्षिण भागमा गणपतिको पूजा गर्नुपर्ने र गणेशमन्त्रको दीक्षा लिने क्रममा श्रीगणेशको पूजा गर्दा वक्रतुण्ड, एकदंष्ट्र, महोदर, गजानन, लम्बोदर, विकट, विघ्नराज र धूम्रवर्णनामक श्रीगणेशका आत्मीय द्वाररक्षकहरूको पूजा गर्नुपर्ने विधान गरिएको छ । दीक्षाप्रयुक्त हवनका क्रममा अग्निमुखविधिमा महागणपतिका १० थरि मन्त्रद्वारा १० आहुति दिनुपर्ने तथ्य निरूपण गरिएको छ । प्रत्येक देवताका तत्त्वहरूको निरूपणका क्रममा गणेशतत्त्वअन्तर्गत शिव, शक्ति, सदाशिव, ईश्वर, माया, विद्या, माया, कला, राग, काल, नियति, पुरुष, प्रकृति, बुद्धि, अहङ्कार, मन, चक्षु, श्रोत्र, घ्राण, जिह्वा, त्वक्, वाक्, पाणि, पाद, पायु, उपस्थ, शब्द, स्पर्श, रूप, रस, गन्ध, आकाश, वायु, तेज, जल र पृथिवी गरी ३६ तत्त्व उपस्थापित गरिएका छन् ।[२६]

---

२५. प्रेमानन्द, पूर्ववत् ।

२६. प्रतापसिंह शाह, बृहत्पुरश्चर्यार्णव, द्वितीय भाग ।

तन्त्रशास्त्रमा चौरगणपतिको पनि वर्णन पाइन्छ । वास्तवमा यहाँ चौर शब्द विघ्न एवं अज्ञानका हर्ता भन्ने विशेष अर्थद्योतनमा केन्द्रित छ । विघ्नविनाशक गणपतिको आराधना गरेपछि उहाँले विघ्न-बाधा र अज्ञान चोरिदिनुहुन्छ ।

योग र तन्त्र शास्त्रअनुसार शरीरमा रहेका मूलाधार, स्वाधिष्ठान, मणिपूर, अनाहत, विशुद्ध र आज्ञानामक ६ चक्रहरूमध्ये प्रथम मूलाधारचक्रमा सिद्धि-शक्तिसहित श्रीगणेशको पूजा गरिन्छ ।

काठमाडौँ उपत्यकामा पनि तन्त्रानुसार विभिन्न रूपका गणपतिमूर्तिहरूको स्थापना गरिएको छ । वैनायक सम्प्रदायको प्रमुख ग्रन्थ श्रीगणेशपुराणमा बताएभन्दा भिन्न रूपमा कमलासन, नागवाहन आदि रूपका श्रीगणेशमूर्ति काठमाडौँ उपत्यकामा पाइन्छन् । चाबहिल गणेश अथवा चन्द्रविनायक, कमलादी गणेश, भक्तपुर गणेश आदि प्रसिद्ध गणपतिमूर्तिहरू विभिन्न तन्त्रअनुसार निर्मित र प्रतिष्ठापित भएकाले तिनमा स्वरूप, वाहन, आयुध आदिमा एकरूपता पाइँदैन ।

नेपालमा तान्त्रिक विधिअनुसार स्थापित श्रीगणेशमूर्तिहरूको ठूलो संख्या रहेको छ । सबै श्रीगणेशका वाहन मूसा छैनन्। कहीँ वाहनको रूपमा कमल छ, कहीँ नाग छ र कहीँ बेताल पनि छ । तन्त्रानुसार गणेशमूर्तिका भुजा र आयुध पनि भिन्दा-भिन्दै छन् । रानीपोखरीका सोह्रहाते गणेशले शक्तिलाई काखमा लिएका छन्, चाबहिल गणेशको वाहन नाग छ र तिनका अगाडि बेताल सुतिरहेको छ । यसैगरी भादगाउँ गणेशको भिन्दै स्वरूप छ । तसर्थ नेपालका धेरैजसो श्रीगणेशमूर्तिहरू तान्त्रिक विधिबाट स्थापित मूर्ति हुन् भन्नु अत्युक्ति हुनेछैन ।[२७]

## ५.४ महाभारत

श्रीवेदव्यासले मानसिकरूपमा पञ्चम वेद महाभारतको रचना गर्नुभएपछि ब्रह्माजीका सामु गई निवेदन गर्नुभयो- हे भगवन् ! मैले लोकवन्दनीय महाकाव्य महाभारतको रचना गरेको छु । यसमा मैले समस्त वेदहरूका गोपनीय तत्त्व र सबै शास्त्रहरूका सारतत्त्वको सङ्कलन गरेको छु । यसमा उपनिषद्‌हरूको सारदोहनका साथै लोकोपयोगी बोध र सूचना पनि सङ्कलित छन् । तर मेरो यस काव्यलाई मैले भनेअनुसारको गतिमा लेखिदिने लेखक पाएको छैन ।[२८] वेदव्यासको प्रार्थना सुनेर ब्रह्माजीले भन्नुभयो – हे व्यास ! यसलाई लिपिबद्ध गर्न तपाईंले श्रीगणेशको स्मरण गर्नुहोस् ।[२९]

ब्रह्माजीको आदेशअनुसार व्यासले श्रीगणेशको स्मरण गर्नुभयो । व्याससँग प्रसन्न हुनुभएका श्रीगणेशले दर्शन दिनुहुँदा वेदव्यासले निवेदन गर्दै भन्नुभयो – 'हे गणनायक ! तपाईं मेरो मनद्वारा कल्पित र उच्चार्यमाण महाभारतनामक काव्यको लेखक बनिदिनुहोस्।'[३०] व्यासको प्रार्थना सुनेर गणेशले भन्नुभयो – 'हे व्यास! मैले लेख्न थालेपछि एक क्षणका लागि पनि मेरो लेखनी रोकिनु हुँदैन । त्यस्तो हुनसक्छ भने म लेखक बनिदिनेछु ।'[३१] व्यासले श्रीगणेशको शर्त स्वीकार गर्नुभएपछि श्रीगणेशले लेखनकार्य आरम्भ गर्नुभयो । श्रीगणेशको कृपाबाट संसारले महाभारतजस्तो महिमामय ग्रन्थरत्न पाएर धन्य भयो । महाभारतमा गणदेवताका रूपमा पनि भगवान् श्रीगणेशको वर्णन गरिएको पाइन्छ । महाभारतअन्तर्गत अनुशासनपर्वको १५०/२५-२९ मा शुद्धभावले विनायकको कीर्तन गर्दा मानिसहरू पापमुक्त हुन्छन् भनिएको छ ।

---

२७ डा. विद्यानाथ उपाध्याय, तन्त्रविद्यालोक, प्रकाशिका – श्रीमती अन्नपूर्णा उपाध्याय भट्ट, वि.सं. २०६२ ।

२८ कृतं मयेदं भगवन् ! काव्यं परमपूजितम् । ब्रह्मन् ! वेदरहस्यञ्च यच्चान्यत् स्थापितं मया ॥
साङ्गोपनिषदाञ्चैव वेदानां विस्तरक्रिया । यच्चापि सर्वं वस्तु तच्चैव प्रतिपादितम् ॥
परं न लेखकः कश्चिदेतस्य भुवि विद्यते ॥ – महाभारत, आदिपर्व १/६१,६२,७० ।

२९ काव्यस्य लेखनार्थाय गणेशः स्मर्यतां मुने । – पूर्ववत्, १/७४ ।

३० लेखको भारतस्यास्य भव त्वं गणनायक ।। मयैव प्रोच्यमानस्य मनसा कल्पितस्य च ।। – पूर्ववत्, १/७७ ।

३१ श्रुत्वैतत् प्राह विघ्नेशो यदि मे लेखनी क्षणम्। लिखतो नावतिष्ठेत तदा स्यां लेखको ह्यहम्।। – पूर्ववत्, १/७८ ।

## ५.५ पुराणवाङ्मय

पुराण सनातन संस्कृतिका निर्मल प्रतिबिम्ब हुन् । वैदिक संस्कृतिका सूत्रात्मक सन्देशलाई सर्वबोध्य बनाएर विस्तारपूर्वक अग्रसारित गर्ने काम पुराणहरूबाट भएको तथ्य ऐनाझैं छर्लङ्ग छ । वैदिक देवता श्रीगणेशको ओङ्कारमयता, ब्रह्मरूपता, सर्वशक्तिसम्पन्नता, सर्वज्ञता, लीलामयता, सर्वकल्याणकारिता, सर्वमङ्गलमयता, प्रथमपूज्यता, विघ्नविनाशकारिताजस्ता विशेषतालाई विभिन्न कथानकहरूको माध्यमबाट प्रस्तार गर्ने काम पुराणहरूबाट भएको छ । श्रीगणेशको सङ्क्षिप्त एवं विस्तृत रूपमा निरूपण गर्ने काम प्रायः सबै पुराणले गरेका छन् ।

ब्रह्मवैवर्तपुराण (गणपतिखण्ड), पद्मपुराण (सृष्टिखण्ड), भविष्यपुराण (उत्तरपर्व), शिवपुराण (रुद्रसंहिता, कुमारखण्ड), स्कन्दपुराण (काशीखण्ड), अग्निपुराण (अ. ७१, १७९, ३१३, ३१८, ३४८), ब्रह्माण्डपुराण (अ. १-५), वराहपुराण (अ. २३), लिङ्गपुराण (पूर्वार्द्ध, अ . १०४-१०५), ब्रह्मपुराण (अ. ३९), सौरपुराण (अ. ४३), विष्णुधर्मोत्तरपुराण (खण्ड ३, अ १०४), नारदपुराण (अ. ५१, ६५-६६, १४३) मा अपेक्षाकृत विस्तृत निरूपण गरिएको पाइन्छ। श्रीगणेशपुराण र मुद्‌गलपुराण सम्पूर्णतया श्रीगणेशका लीला र कर्मको वर्णनमा आधारित पुराण हुन् ।

### क) पद्मपुराण

पद्मपुराणमा भगवान् विघ्नराजको अति सुन्दर स्तुति रहेको छ । भक्तद्वारा भवसागर संतरणका लागि गरिएको त्यो प्रार्थना आनन्ददायक छ ।[32] पद्मपुराणको सृष्टिखण्ड ६६ अध्यायका २-३, ६-७ यी चार पद्यहरूमा श्रीवेदव्यासले स्तुतिको माध्यमबाट श्रीगणेशको सर्वाङ्गसुन्दर स्वरूप प्रकाशित गर्नुभएको छ । माता-पिताको परिक्रमा नै संसारको परिक्रमा हो भन्ने सिद्धान्तमा पूर्ण निष्ठावान् श्रीगणेशलाई माता पार्वतीले खुसी भई मोदक प्रदान गर्नुभएको थियो । विश्वपरिक्रमाको कार्यमा विजयको प्रतीक मोदक श्रीगणेशका लागि सर्वदा प्रिय वस्तु बनेर रहेको छ । त्यसैले उहाँलाई मोदकप्रिय भनिन्छ भन्ने तथ्य पनि पद्मपुराणमा व्यक्त भएको छ।[33] उक्त सन्दर्भमा नै वेदव्यासले मूषकवाहन श्रीगणेशको वन्दना गरिएको पाइन्छ ।[34] यस पुराणमा श्रीगणेशका दाजु स्कन्दको उत्पत्तिकथाका साथै पार्वतीले आफ्नो शरीरको मयलबाट गजाकार आकृति बनाई गङ्गामा प्रवाहित गर्दा जीवन्त भएको पुरुष नै श्रीगणेशका रूपमा संसारमा प्रसिद्ध भएको विषय पनि बयान गरिएको छ ।

### ख) ब्रह्मवैवर्तपुराण

ब्रह्मवैवर्तपुराण अनुसार पार्वतीको कोखबाट श्रीकृष्णरूप परमतत्त्व नै श्रीगणेशका रूपमा प्रकट हुनुभयो । नारायणले देवर्षि नारदजीलाई श्रीकृष्णरूप परमात्मा गणेशको रूपमा उत्पन्न हुनुभएको कथा ब्रह्मवैवर्तपुराणको गणपति खण्डमा बताउनुभएको छ ।

एक दिन कैलासमा पुगेका रेणुकापुत्र परशुरामले आफ्नो कक्षमा शयन गर्नुभएका शिव-पार्वतीको दर्शन गर्न जाँदा द्वारपालका रूपमा रहनुभएका श्रीगणेशले उनलाई प्रवेश गर्न दिनुभएन । रिसाएका परशुरामले उहाँलाई धक्का दिए। श्रीगणेशले तिनलाई सागरमा फ्याँकिदिनुभयो । त्यसबेला परशुरामले श्रीगणेशको कृपाबाट श्रीकृष्णको गोलोक धामको दर्शन पाए । त्यसपछि परशुराम पृथिवीमा खसेका थिए । त्यति हुँदा पनि परशुरामको श्रीगणेशप्रतिको

३२. गणाधिप ! नमस्तुभ्यं सर्वविघ्नप्रशान्तिद ! उमानन्दप्रद ! प्राज्ञ ! त्राहि मां भवसागरात् ॥ - पद्मपुराण, सृष्टिखण्ड ६१ अध्याय ।
३३. अतो ददामि हेरम्बे मोदकं देवनिर्मितम् । - पूर्ववत्, ६५/१९ ।
३४. मूषकोत्तममारुह्य देवासुरमहाहवे । योद्धुकामं महाबाहुं वन्देऽहं गजनायकम् ॥ - पूर्ववत्, ६६/७ ।

क्रोध शान्त भएन । तिनले श्रीगणेशमाथि परशु प्रहार गरे । श्रीगणेशले दाँतले त्यसलाई समाउनुभयो । परशुले श्रीगणेशको दाँत भाँचिदियो । मुखबाट रगत बग्न थाल्यो । आफ्नो छोराको दुर्दशा देखेर पार्वती परशुरामसँग रिसाउनुभयो र परशुरामलाई दण्ड दिन तयार हुनुभयो । तत्काल त्यहाँ आउनुभएका भगवान् वामनले पार्वतीलाई संझाई एउटा दाँत भाँचिएर एकदन्त बन्नुभएका श्रीगणेशको प्रार्थना गर्नुभयो ।[३५] श्रीगणेशको महिमा थाहा पाई भयभीत भएका परशुरामले आत्मरक्षाका लागि भगवती पार्वतीसँग प्रार्थना गरे ।[३६]

परमकरुणामयी पार्वतीले प्रसन्न भई परशुरामलाई क्षमा र आशीर्वाद दिनुभयो । परशुरामले पनि विधिपूर्वक श्रीगणेशको आराधना गरे । श्रीगणेश प्रसन्न हुनुभयो । त्यसपछि उहाँको आज्ञा पाएर परशुराम तपस्याका निम्ति प्रस्थान गरे । श्रीगणेश पनि तपस्याका निम्ति गङ्गाका तटतर्फ लाग्नुभयो । एक दिन गङ्गातीरमा तपस्या गरिरहनु भएका श्रीगणेशका सामु धर्मात्मजकी नवयुवति पुत्री तुलसी आएर उभिइन्। श्रीगणेशको सौन्दर्यबाट मुग्ध तुलसीले उहाँ समक्ष विवाहको प्रस्ताव राखेपछि परमत्यागी श्रीगणेशले भन्नुभयो– 'विवाह दुःखदायक हुन्छ । त्यसबाट सुख पाईंदैन । विवाह तत्त्वज्ञानको विच्छेदक र संशयको केन्द्र पनि हुन्छ । तिमीले अरू कुनै पुरुषसँग विवाह गर्ने प्रयास गर । मलाई क्षमा देऊ ।' श्रीगणेशका कुरा सुनेर रिसाएकी तुलसीले सराप दिंदै भनिन् – 'तपाईंको अवश्य विवाह हुनेछ ।' श्रीगणेशले प्रत्युत्तर दिंदै भन्नुभयो – 'त्यसो भए तिम्रो विवाह पनि कुनै असुरसँग हुनेछ । त्यसपछि कुनै महापुरुषको सरापबाट तिमी वृक्षयोनिमा प्राप्त हुनेछ्यौ ।' श्रीगणेशको यस कठोर सरापबाट काँपिरहेकी तुलसीले भगवान् श्रीगणेशको स्तुति गरिन् । स्तुतिबाट प्रसन्न हुनुभएका श्रीगणेशले 'मैले बोलेको अन्यथा हुँदैन, तिमी वृक्षयोनिमा जन्मिए पनि पुष्पको सुगन्धले सुगन्धित र भगवान् नारायणकी प्यारी हुनेछ्यौ । तिमीलाई अर्पण गरेपछि भक्तले भगवान्लाई भेट्न पाउनेछन् । किन्तु तिमी मेरो पूजाका निमित्त भने वर्जित हुनेछ्यौ ।' यसरी तुलसीलाई आफ्नो आज्ञा सुनाएर श्रीगणेश तपस्या पूरा गर्न बद्रीनाथतर्फ लाग्नुभयो। कालान्तरमा तुलसी वृन्दाको नामबाट प्रसिद्ध भई दानवराज शङ्खचूडकी पत्नी बनिन् । केही समयपछि शङ्करको त्रिशूलप्रहारबाट शङ्खचूड मारियो । उता तुलसी वृक्षको रूपमा परिणत भइन् र भगवान् नारायणकी प्रिया बनिन्। ब्रह्मवैवर्तपुराणमा निहित गणेशसम्बन्धी कथाको सारसङ्क्षेप यही हो । ब्रह्मवैवर्तपुराणअन्तर्गतका गणेशपरक विशिष्ट सन्दर्भ निम्नानुसार छन् ।

१ ) गणेशकवच

ब्रह्मवैवर्तपुराणमा निहित गणेशकवचलाई सिद्धिदायक कवच मानिएको छ । भगवान् विष्णुले शनिदेवलाई सुनाउनु भएको यो कवच दश लाख जप गर्दा सिद्ध हुने तथ्य बताइएको छ । कवच सिद्ध भएपछि साधक मृत्युञ्जय बन्दछ । सिद्ध कवच धारण गर्नाले मानिस वाग्मी, चिरञ्जीवी, विजयी र पूज्य बन्ने कुरा त्यहाँ बताइएको छ । यस मालामन्त्रको जपका प्रतापले साधकका पापहरू समाप्त हुन्छन् । यस कवचको श्रवणबाट भूत, प्रेत, वेताल, डाकिनी, शाकिनी, योगिनी आदि टाढा भाग्दछन्। कवच धारण गर्ने साधकलाई आधि र व्याधि दुबैले छुन सक्दैनन् । यस कवचको नाम **सर्वविघ्नैकहरण गणेशकवच** हो ।

**विनियोग –**

**संसारमोहनस्यास्य कवचस्य प्रजापतिः । ऋषिश्छन्दश्च बृहती देवो लम्बोदरः स्वयम्।।**
**धर्मार्थकाममोक्षेषु विनियोगः प्रकीर्तितः ।**

---

३५ ज्ञानार्थवाचको गश्च णश्च निर्वाणवाचकः । तयोरीशं परं ब्रह्म गणेशं प्रणमाम्यहम् ॥
एकशब्दः प्रधानार्थो दन्तश्च बलवाचकः । बलं प्रधानं सर्वस्मादेकदन्तं नमाम्यहम् ॥ – ब्रह्मवैवर्तपुराण, गणपतिखण्ड, ४४/८७-८८ ।

३६ रक्ष रक्ष जगन्मातरपराधं क्षमस्व मे । शिशूनामपराधेन कुतो माता हि कुप्यति ॥ – पूर्ववत्, ४५/४७ ।

कवचपाठ -

**सर्वेषां कवचानाञ्च सारभूतमिदं मुने। ॐ गं हुं श्रीगणेशाय स्वाहा मे पातु मस्तकम् ।।**
**द्वात्रिंशदक्षरो मन्त्रो ललाटं मे सदाऽवतु। ॐ ह्रीं क्लीं श्रीं गमिति वै सततं पातु लोचनम्।।**
**तालुकं पातु विघ्नेशः सन्ततं धरणीतले। ॐ ह्रीं श्रीं क्लीमिति परं सन्ततं पातु नासिकाम्।।**
**ॐ गौं गं शूर्पकर्णाय स्वाहा पात्वधरं मम । दन्ताँश्च तालुकां जिह्वां पातु मे षोडशाक्षरः।।**
**ॐ लं श्रीं लम्बोदरायेति स्वाहा गण्डं सदाऽवतु। ॐ श्रीं गं गजाननायेति स्वाहा स्कन्धं सदाऽवतु।।**
**ॐ ह्रीं विनायकायेति स्वाहा पृष्ठं सदाऽवतु। ॐ क्लीं ह्रीमिति कङ्कालं पातु वक्षस्थलं च गम्।।**
**करौ पादौ सदा पातु सर्वाङ्गं विघ्ननिघ्नकृत् । प्राच्यां लम्बोदरः पातु चाग्नेय्यां विघ्ननायकः।।**
**दक्षिणे पातु विघ्नेशो नैर्ऋत्यान्तु गजाननः । पश्चिमे पार्वतीपुत्रो वायव्यां शङ्करात्मजः ।।**
**कृष्णस्यांशश्चोत्तरे च परिपूर्णतमस्य च । ऐशान्यामेकदन्तश्च हेरम्बः पातु चोर्ध्वतः ।।**
**अधो गणाधिपः पातु सर्वपूज्यश्च सर्वतः । स्वप्ने जागरणे चैव पातु मां योगिनां गुरुः ।।**
**इति ते कथितं वत्स सर्वमन्त्रौघविग्रहम् । संसारमोहनं नाम कवचं परमाद्भुतम् ।।**
**श्रीकृष्णेन पुरा दत्तं गोलोके रासमण्डले । वृन्दावने विनीताय मह्यं दिनकरात्मज ।।**
**मया दत्तं च तुभ्यं च यस्मै कस्मै न दास्यसि । परं वरं सर्वपूज्यं सर्वसङ्कटतारणम् ।।**
**गुरुमभ्यर्च्य विधिवत् कवचं धारयेत्तु यः। कण्ठे वा दक्षिणे बाहौ सोऽपि विष्णुर्न संशयः।।**
**अश्वमेधसहस्राणि वाजपेयशतानि च । ग्रहेन्द्र ! कवचस्यास्य कलां नार्हन्ति षोडशीम् ।।**
**इदं कवचमज्ञात्वा यो भजेत् शङ्करात्मजम् । शतलक्षप्रजप्तोऽपि न मन्त्रः सिद्धिदायकः।।**[३७]

अर्थ - 'हे शनैश्चर ! यस संसारमोहन नामक कवचका ऋषि प्रजापति हुन् । बृहती छन्द हो र स्वयं लम्बोदर यसका देवता हुनुहुन्छ । धर्म, अर्थ, काम र मोक्षका लागि यसको विनियोग गर्नुपर्दछ । हे मुनि ! यो कवच कवचहरूको सारभूत कवच हो । '**ॐ गं हुं श्रीगणेशाय स्वाहा**' यस मन्त्रले मेरो मस्तकको रक्षा गरोस् । बत्तीस अक्षर भएको महान् गणेशमन्त्रले मेरा निधारको रक्षा गरोस् । '**ॐ ह्रीं क्लीं श्रीं गम्**' यस मन्त्रले मेरा आँखाको रक्षा गरोस् । विघ्नेशले भूतलमा रहेर मेरा तालुको रक्षा गरून् । '**ॐ ह्रीं श्रीं क्लीं**' यस मन्त्रले मेरो नाकको रक्षा गरोस् । '**ॐ गौं गं शूर्पकर्णाय स्वाहा**' यस मन्त्रले मेरा ओठहरूको रक्षा गरोस् । गणेशको सोह्र अक्षरको मन्त्रले मेरा दाँत, तालु र जिब्राको रक्षा गरोस् । '**ॐ लं श्रीं लम्बोदराय स्वाहा**' यस मन्त्रले मेरा गालाहरूको रक्षा गरोस् । '**ॐ क्लीं ह्रीं विघ्ननाशाय स्वाहा**' यस मन्त्रले मेरा कानहरूको रक्षा गरोस् । '**ॐ श्रीं गं गजाननाय स्वाहा**' यस मन्त्रले मेरा काँधहरूको रक्षा गरोस् । '**ॐ ह्रीं विनायकाय स्वाहा**' यस मन्त्रले मेरा शरीरको पृष्ठभागको रक्षा गरोस् । '**ॐ ह्रीं क्लीं**' मन्त्रले कङ्कालको रक्षा गरोस् र '**गं**' मन्त्रले वक्षस्थलको रक्षा गरोस् । विघ्नहर्ता श्रीगणेशले मेरा हात, खुट्टा र सर्वाङ्गको रक्षा गरून् । पूर्व दिशामा लम्बोदर, आग्नेयकोणमा विघ्ननायक, दक्षिणमा विघ्नेश र नैर्ऋत्यकोणमा गजाननले रक्षा गरून् । पश्चिममा पार्वतीपुत्र, वायव्यमा शङ्करात्मज, उत्तरमा परिपूर्णतम श्रीकृष्णका अंश गणेश, ईशानकोणमा एकदन्त, ऊर्ध्वभागमा हेरम्ब र अधोभागमा सर्वपूज्य गणाधिपले मेरो रक्षा गरून् । शयन र जागरणकालमा योगीहरूका गुरु श्रीगणेशले रक्षा गरून् ।'

३७. पूर्ववत्, १३/७९-९२ ।

हे शनिदेव ! मैले मन्त्रसमूहको विग्रहरूप संसारमोहननामक कवचको परिचय दिएको छु । यो कवच गोलोकको वृन्दावनमा रासमण्डलअन्तर्गत रहनुभएका श्रीकृष्णले मलाई उपदेश गर्नुभएको हो । यसको उपदेश सबैलाई गर्नुहुँदैन । सुपात्रमा मात्र गर्नुपर्दछ । यो कवच सर्वोत्तम, सर्वपूज्य र सङ्कटनिवारक छ। जुन मानिसले आफ्ना सद्गुरुबाट विधिपूर्वक कवचको दीक्षा लिएर कण्ठमा अथवा दायाँ हातमा धारण गर्दछ त्यो विष्णुसमान हुने कुरामा कुनै सन्देह छैन । हे शनिदेव ! हजारौं अश्वमेध यज्ञ र सयौं वाजपेय यज्ञले यस कवचको सोह्र भागको एक भागसँग पनि समानता गर्न सक्दैनन् । जसले यस कवचको ज्ञानविना भगवान् श्रीगणेशको आराधना गर्दछन् तिनको साधना सिद्ध हुँदैन ।

२ ) नामाष्टकस्तोत्र

नारायणले पार्वतीलाई भन्नुभयो – 'हे जगज्जननी ! तपाईंका प्यारा पुत्र श्रीगणेशलाई वेदमा एकदन्त भनिएको छ । सामवेदमा श्रीगणेशका महत्त्वपूर्ण आठ नामहरू यस प्रकार रहेका छन् ।

**गणेशमेकदन्तं च हेरम्बं विघ्ननायकम् । लम्बोदरं शूर्पकर्णं गजवक्त्रं गुहाग्रजम् ।।**[३८]

अर्थात् गणेश एकदन्त, हेरम्ब, विघ्ननायक, लम्बोदर, शूर्पकर्ण, गजवक्त्र र गुहाग्रज यी श्रीगणेशका आठ प्रमुख नाम हुन् । यसरी आठ नामहरूको सङ्केत गरेपछि विष्णुले पार्वतीका समक्ष प्रत्येक नामको व्याख्या गर्दै बताउनुभएको नामाष्टक स्तोत्र यस प्रकार रहेको छ –

**ज्ञानार्थवाचको गश्च णश्च निर्वाणवाचकः । तयोरीशं परं ब्रह्म गणेशं प्रणमाम्यहम् ।।**
**एकशब्दः प्रधानार्थो दन्तश्च बलवाचकः । बलं प्रधानं सर्वस्मादेकदन्तं नमाम्यहम् ।।**
**दीनार्थवाचको हेश्च रम्बः पालकवाचकः । दीनानां पालनं देवं हेरम्बं प्रणमाम्यहम् ।।**
**विपत्तिवाचको विघ्नो नायकः खण्डनार्थकः। विपत्तिखण्डकं देवं नमामि विघ्ननायकम्।।**
**विष्णुदत्तैश्च नैवेद्यैर्यस्य लम्बोदरं पुरा । पित्रा दत्तैश्च विविधैर्वन्दे लम्बोदरं च तम् ।।**
**शूर्पाकारौ च यत्कर्णौ विघ्नवारणकारणौ । सम्पदौ ज्ञानरूपौ च शूर्पकर्णं नमाम्यहम्।।**
**विष्णुप्रसादपुष्पञ्च यन्मूर्ध्नि मुनिदत्तकम् । तद्गजेन्द्रवक्त्रयुक्तं गजवक्त्रं नमाम्यहम् ।।**
**गुहस्याग्रे च जातोऽयमाविर्भूतो हरालये । वन्दे गुहाग्रजं देवं सर्वदेवाग्रपूजितम् ।।**[३९]

**अर्थ** – गकार ज्ञानार्थवाचक र णकार निर्वाणवाचक मानिएको छ । गकार र णकारका ईश परब्रह्मरूप श्रीगणेशलाई प्रणाम गर्दछु । एकशब्दले प्रधान अर्थ बुझाउँछ र दन्तशब्दले बललाई बताउँछ । जसको बल अरूको भन्दा उत्कृष्ट छ ती एकदन्त देवतालाई प्रणाम गर्दछु । 'हे' को अर्थ दीन–दुःखी हुन्छ भने 'रम्ब' को अर्थ पालक हुन्छ । म दीनदुःखीका पालक देवता हेरम्बलाई प्रणाम गर्दछु । विघ्नशब्द विपत्तिको वाचक हो भने नायकशब्दले विपत्ति खण्डन गर्नेलाई बुझाउँछ । विपत्तिलाई खण्डन गर्ने विघ्ननायक श्रीगणेशलाई प्रणाम गर्दछु । पूर्वकालमा विष्णुद्वारा प्रदान गरिएको नैवेद्य र आफ्ना माता–पिता शिव–पार्वतीद्वारा प्रदान गरिएको मिष्टान्न भोजन गर्नाले जसको पेट विशाल बनेको छ त्यस्ता लम्बोदरलाई प्रणाम गर्दछु । सूपो

३८. पूर्ववत्, ४४/८५ ।
३९. पूर्ववत्, ४४/८७-९४ ।

अर्थात् नाङ्लोसमान चौडा, विघ्ननिवारणका उपाय मानिएका, सम्पत्ति र ज्ञानरूप दुई कानले सुहाउनुभएका शूर्पकर्ण श्रीगणेशलाई प्रणाम गर्दछु । जसको मस्तकमा मुनिद्वारा अर्पित विष्णुको प्रसादरूप पुष्प सुहाएको छ, जुन देवता गजानन बनेर रहनुभएको छ, ती गजवक्त्र श्रीगणेशलाई प्रणाम गर्दछु । जुन देवता स्कन्दभन्दा पहिले पैदा भई कैलासमा प्रकट हुनुभएको थियो र जसको देवगणहरूमा नित्य पूजन हुन्छ ती गुहाग्रज श्रीगणेशलाई प्रणाम गर्दछु ।

**एतन्नामाष्टकं दुर्गे नामभिः संयुतं परम् । पुत्रस्य पश्य वेदे च तदा कोपं यदा कुरु ।।**
**एतन्नामाष्टकं स्तोत्रं नानार्थसंयुतं शुभम्। त्रिसन्ध्यं यः पठेन्नित्यं स सुखी सर्वतो जयी।।**
**ततो विघ्नाः पलायन्ते वैनतेयाद् यथोरगः । गणेश्वरप्रसादेन महाज्ञानी भवेद् ध्रुवम् ।।**
**पुत्रार्थी लभते पुत्रं भार्यार्थी विपुलां श्रियम् । महाजडः कवीन्द्रश्च विद्यावाँश्च भवेद् ध्रुवम्।।**[४०]

आठ नामहरूको महिमा बताएपछि फेरि हरिले पार्वतीलाई भन्नुभयो – हे पार्वती ! यो उत्तम नामाष्टकस्तोत्र वेदमा रहेको छ । यसको अनुशीलन गर्नुहोस् । त्यसपछि मात्र तपाईले क्रोध गर्नु उचित हुनेछ। यो स्तोत्र अनेक अर्थले सम्पन्न र मङ्गलकारक छ । जसले तीनै सन्ध्यामा यस स्तोत्रको पाठ गर्दछ त्यो सुखी र विजयी पनि हुन्छ । त्यसका विघ्नहरू गरुडको दर्शनमा सर्पहरू भागेझैं भाग्दछन् । त्यो साधक श्रीगणेशको कृपाबाट ज्ञानी बन्दछ । यस स्तोत्रको पाठ गर्नाले पुत्र चाहनेले पुत्र, भार्या चाहनेले भार्या, सम्पत्तिको चाहना गर्नेले विपुल लक्ष्मी र ज्ञान चाहनेले ज्ञान प्राप्त गर्दछन् । महामूर्ख पनि यस स्तोत्रको पाठबाट विद्वान् र उत्तम कवि बन्दछ ।

## ग) शिवपुराण

शिवपुराण रुद्रसंहितामा श्रीगणेशको उत्पत्तिवर्णनका साथै महिमबोधक अनेक प्रसङ्ग रहेका छन् । शिवजीका पुत्र कुमार र गणेश विवाहयोग्य भइसकेका थिए । एक दिन कुरैंकुरामा श्रीगणेशले मैले पहिल्यै विवाह गर्छु भन्नुभयो भने कार्तिकेयले मेरो विवाह पहिले हुनुपर्छ भने । बालकहरूका कुराबाट चकित हुनुभएका शिव र पार्वतीले भन्नुभयो – 'तिमी दुई भाइमा जो पृथिवीको परिक्रमा गरेर पहिले आइपुग्छ त्यसको विवाह पहिले हुन्छ ।' माता-पिताको आज्ञा पाएपछि मयूरमा सवार भएका कार्तिकेय पृथिवीको परिक्रमा गर्न भनी कैलासबाट प्रस्थान गरे ।

श्रीगणेशले दाजु कार्तिकेय पृथिवीको परिक्रमा गर्न घरबाट हिंडेपछि त्यस विषयमा धेरै बेर विचार गर्नुभयो। अन्तमा आफ्ना माता-पिताका समीपमा पुगेर पाउमा पूजा गर्नुभयो । श्रद्धापूर्वक सात पटक परिक्रमा गरेपछि भन्नुभयो – 'हे कृपालु माता-पिता ! मेरो मङ्गलमय विवाह गरिदिनुहोस् ।' श्रीगणेशका कुरा सुनेर शिवजीले भन्नुभयो- 'हे गणेश ! तिम्रा दाजु कार्तिकेय समुद्र, पर्वत र वनमण्डलसहित पृथिवीको परिक्रमा गर्न गएका छन्। तिमी पनि जाऊ । दाजुभन्दा पहिले फर्केर आयौ भने हामीले तिम्रो पहिले विवाह गरिदिनेछौं ।' श्रीगणेशले भन्नुभयो- 'हे पूज्य माता-पिता ! मैले सम्पूर्ण भूमण्डलको एक पटकमात्र होइन, सात पटक परिक्रमा गरिसकेको छु किनकि जुन पुत्रले माता-पिताको पूजा गरेर प्रदक्षिणा गर्दछ त्यसले सम्पूर्ण पृथिवीको परिक्रमा गरेको फल प्राप्त गर्दछ । जसले आमा-बाबुलाई घरमा छाडी आफूमात्र तीर्थयात्राका लागि प्रस्थान गर्दछ, त्यसले मातृहत्या र पितृहत्याको

४०. पूर्ववत्, ४७/१५-१८ ।

पाप भोग्नुपर्दछ । पुत्रका निमित्त माता-पिताका चरणकमल नै पवित्र तीर्थ हुन् । अरू तीर्थ त टाढा टाढा गएर प्राप्त हुन्छन् तर पितृतीर्थ भने सर्वदा नजिकमा हुन्छन् भन्ने वेदसम्मत वचन रहेको छ । तसर्थ मैले पृथिवीको परिक्रमा पूरा गरेको कुरा स्वीकार गरी हजुरहरूले मेरो छिट्टै विवाह गरिदिनुहोस् ।' यथार्थवादी र प्रतिभाशाली बालक पुत्र श्रीगणेशका कुरा सुनेर शिवजीले भन्नुभयो - 'हे पुत्र ! तिमी आत्मबली भएका कारण तिम्रो हृदयमा निर्मल बुद्धिको उदय भएको छ । तिम्रो कुरा सत्य हो ।'[३३]

उक्त घटनापछि शिव-पार्वतीले प्रजापति विश्वरूपका दुई छोरीहरू सिद्धि र बुद्धिका साथ श्रीगणेशको विवाह सम्पन्न गराउनुभयो । उता पृथिवीको परिक्रमा पूरा गरी घर फर्केका कार्तिकेयले गणेशको विवाह सम्पन्न भइसकेको कुरा थाहा पाएर दुःख माने । अब कैलासमा बस्दिनँ भनी उनी माता-पिताको आग्रहलाई लत्याएर क्रौञ्च पर्वततर्फ गए । त्यस दिनदेखि कार्तिकेय ब्रह्मचारीका रूपमा रहेकाले कुमारका रूपमा प्रसिद्ध भए ।

### घ) लिङ्गपुराण

लिङ्गपुराणमा श्रीगणेशको उत्पत्ति प्रसङ्गका साथै विघ्ननिवारणका लागि विशिष्ट शक्तिको उत्पत्ति गराउन देवताहरूले अभ्यर्थना गरेको उच्चस्तरीय प्रसङ्ग रहेको छ । तदनुसार शिवजीले स्वयं गणेशरूपमा अवतार लिनुभएको तथ्य पुष्ट गरिएको छ । यस पुराणमा ठाउँ–ठाउँमा श्रीगणेश र शिवजीको अभेदसम्बन्ध देखाउँदै उपाधि, विशेषता, अभिधान र लक्षणहरूमा शिवजी एवं श्रीगणेशको एकरूपता देखाइएको छ । श्रीगणेश र शिवजीको अभेदसिद्धिका लागि भगवान् शिवजीमा पनि श्रीगणेशका गुणहरूको आरोप गरिएको छ । भगवान् शिवजीले आफ्ना छोरा गणेशलाई काखमा लिएर भन्नुभयो- वत्स ! यो तिम्रो अवतार दैत्यहरूको विनाश र ब्रह्मवादी एवं देवताहरूको उपकारका लागि भएको छ ।[३४]

### ङ) ब्रह्मपुराण

ब्रह्मपुराणमा श्रीगणेशको उत्पत्तिसन्दर्भको वर्णनका साथै उहाँको महिमा बुझाउने प्रसङ्ग पनि रहेका छन् । गौतमी नदीको तटमा यज्ञ गरिरहेका देवताहरूको यज्ञमा पटक-पटक विघ्न उपस्थित भएपछि ती सबैले ब्रह्मा र विष्णुसँग विघ्नको कारणको विषयमा जिज्ञासा प्रकट गरे । ब्रह्माजी ध्यानस्थ भई कारण जान्न तल्लीन हुनुभयो । रहस्य थाहा पाएपछि उहाँले देवताहरूलाई भन्नुभयो – 'हे देवगण ! यस यज्ञमा भगवान् श्रीगणेश विघ्न पैदा गर्दै हुनुहुन्छ । तपाईंहरूले श्रीगणेशलाई प्रसन्न तुल्याउनुहोस् । त्यसपछि मात्र तपाईंहरूको यज्ञ परिपूर्ण हुनेछ ।' ब्रह्माजीको आज्ञा पाएर देवताहरूले पार्वतीपुत्र श्रीगणेशको स्तुति गरे – 'सर्वदा सबै कार्यहरूमा सम्पूर्ण देवताहरूले जसको पूजा, वन्दना र चिन्तन गर्दछन् ती विघ्नराजका शरणमा हामी आएका छौं । विघ्नराज श्रीगणेशसमान मनोरथ पूरा गर्ने अरू कुनै देवता नभएकाले भगवान् शङ्करले पनि त्रिपुरवधको समयमा हजुरको स्तुति गर्नुभएको थियो । जसको ध्यान गर्नाले सबैका मनोरथ पूरा हुन्छन् ती पार्वतीनन्दन श्रीगणेशले हाम्रो कामना पूरा गरी हाम्रा विघ्नहरूलाई निवारण गरून् । 'देवी पार्वतीले चिन्तन गर्नासाथ श्रीगणेश पैदा हुनुभयो र संसारमा आनन्द छायो' भन्दै देवताहरूद्वारा स्तुति गरिएका श्रीगणेशलाई अहिले पनि हामी नमस्कार गर्दछौं । आमाको काखमा बस्दा पिताको निधारमा रहेको चन्द्रमालाई थुतेर उहाँकै जटामा लुकाई बालविनोद गर्नुहुने श्रीगणेशलाई नमस्कार गर्दछौं । स्वयं तृप्त हुँदाहुँदै पनि

---

३३. पुत्र ते विमला बुद्धिः समुत्पन्ना महात्मनः । त्वयोक्तं यद् वचश्चैव तद् तथैव न चान्यथा ॥ - शिवपुराण, रुद्रसंहिता, कुमारखण्ड, पूर्ववत्, १९/५० ।

३४. तवावतारो दैत्यानां विनाशाय ममात्मज ॥ देवानामुपकारार्थं द्विजानां ब्रह्मवादिनाम् ॥ - लिङ्गपुराण १०५/१५ ।

आमाको स्तन चुसिरहेर दाजु कार्तिकेयलाई स्तनपानको अवसर नदिने श्रीगणेशलाई नमस्कार गर्दछौं ।[४३]

देवताद्वारा प्रार्थना गरिएका श्रीगणेशप्रति प्रसन्न हुँदै सदाशिव शङ्करले पनि उहाँलाई गणेशपदमा अभिषिक्त गर्नुभयो । त्यस बेला पनि देवताहरूले स्तुति गर्दै भनेका थिए – 'जसले एउटा हातमा पाश र दोस्रो हातमा कुठार धारण गर्नुहुन्छ, आफ्नो पूजा नभएमा विघ्न पैदा गर्नुहुन्छ, त्यस्ता प्रभावशाली देवता विघ्नराज श्रीगणेशका चरणमा प्रणाम गर्दछौं । धर्म, अर्थ र कामनामक पुरुषार्थको सिद्धिका लागि प्रथम पूजनीय देवता भगवान् श्रीगणेशको जसले नित्य पूजा गर्दछन् तिनले कहिल्यै पनि कष्ट प्राप्त गर्दैनन् । भगवान् श्रीगणेशजस्ता दयालु देवताका पाउमा हामी प्रणाम गर्दछौं । जसले सरस नृत्य, सङ्गीत, मनोरथसिद्धि र विनोदद्वारा आफ्नी माता पार्वतीलाई प्रसन्न तुल्याउनुभयो ती श्रीगणेशलाई हामी नमस्कार गर्दछौं ।'

ब्रह्मपुराणमा श्रीगणेशको लीला र महत्ताको झलक दिने यस्ता केही प्रसङ्ग रहेका छन् । त्यहाँ शिवजी र श्रीगणेशका लागि समान विशेषणहरूको प्रयोग भएको छ । यसबाट उक्त पुराणले पनि श्रीगणेश र शिवजीको एकरूपता प्रतिपादन गरेको तथ्य प्रमाणित हुन्छ ।

## च) स्कन्दपुराण

सनातनधर्मद्वारा स्वीकृत देवताहरूमा श्रीगणेश ज्यादै प्रसिद्ध र लोकप्रिय रहनुभएको तथ्य स्कन्दपुराण काशीखण्डबाट अवगत हुन्छ । काशीका गणेशका रूपमा ढुण्ढिराज गणेशको अनुपम महत्त्व पुराणवाङ्मयमा व्यक्त भएको छ । स्कन्दपुराणअनुसार ढुण्ढिराज गणेशले आफूलाई सात आवरणमा विभक्त गरी छपन्न विनायकका रूपमा परिणत गर्नुभएको छ । जुन आवरण यसप्रकार रहेका छन् -

**प्रथम आवरण -** अर्थविनायक, दुर्गविनायक, भीमचण्डविनायक, देहलीविनायक, उद्दण्डविनायक, पाशपाणिविनायक, खर्वविनायक र सिद्धिविनायक ।

**द्वितीय आवरण -** लम्बोदरविनायक, कूटदन्तविनायक, शालकटङ्कटविनायक, कूष्माण्डविनायक, मुण्डविनायक, विकटदन्तविनायक, राजपुत्रविनायक र प्रणवविनायक ।

**तृतीय आवरण -** वक्रतुण्डविनायक, एकदन्तविनायक, त्रिमुखविनायक, पञ्चास्यविनायक, हेरम्बविनायक, विघ्नराजविनायक, वरदविनायक र मोदकप्रियविनायक ।

**चतुर्थ आवरण -** अभयदविनायक, सिंहतुण्डविनायक, कूणिताक्षविनायक, क्षिप्रप्रसादनविनायक, चिन्तामणिविनायक, दन्तहस्तविनायक, पिचिण्डिलविनायक र उद्दण्डमुण्डविनायक।

**पञ्चम आवरण -** स्थूलदन्तविनायक, कलिप्रियविनायक, चतुर्दन्तविनायक, द्वितुण्डविनायक, ज्येष्ठविनायक, गजविनायक, कालविनायक र नागेशविनायक ।

**षष्ठ आवरण -** मणिकर्णविनायक, आशाविनायक, सृष्टिविनायक, यक्षविनायक, गजकर्णविनायक, चित्रघण्टविनायक, स्थूलजङ्घविनायक र मङ्गलविनायक ।

**सप्तम आवरण -** मोदविनायक, प्रमोदविनायक, सुमुखविनायक, दुर्मुखविनायक, गणनाथविनायक, ज्ञानविनायक, द्वारविनायक र अविमुक्तविनायक ।[४४]

---

४३. यः सर्वकार्येषु सदा सुराणामपीशविष्णवम्बुजसम्भवानाम् । पूज्यो नमस्यः परिचिन्तनीयः तं विघ्नराजं शरणं व्रजामः ॥
महोत्सवोऽभूदखिलस्य देवा जाताः सुतक्षिन्तितमात्र एव । अतोऽवदन् देवसङ्घाः कृतार्थाः सद्योजातं विघ्नराजं नमन्तः ॥
धर्मार्थकामादिषु पूर्वपूज्यो देवासुरैः पूज्यत एव नित्यम् । यस्यार्चनं नैव विनाशमेति तं पूर्वपूज्यं प्रथमं नमामः ॥ – ब्रह्मपुराण, ११४/६, ९, १० ।

४४. अवधेश नारायणसिंह, 'काशी के छप्पन विनायक', कल्याण, पूर्ववत्, पृ. ४४८ ।

स्कन्दपुराणकै सरणिमा श्रीगणेशपुराणमा पनि काशीका छपन्न विनायकहरूको उल्लेख गरिएको छ । उक्त छपन्न विनायकहरूमध्ये लम्बोदरविनायकलाई चिन्तामणिविनायक, वक्रतुण्डविनायकलाई सरस्वतीविनायक, दन्तहस्तविनायकलाई हस्तदन्तविनायक, द्वितुण्डविनायकलाई द्विमुखविनायक, गजविनायकलाई राजविनायक र स्थूलजङ्घविनायकलाई मित्रविनायक पनि भनिन्छ । काशीखण्डमा वर्णित उक्त विनायकहरूको छुट्टाछुट्टै महत्त्व रहेको छ । पञ्चकोशीयात्राको दृष्टिबाट निम्नलिखित दश विनायकहरूको ज्यादै महत्त्व छ – अर्थविनायक, दुर्गविनायक, देहलीविनायक, उद्दण्डविनायक, पाशपाणिविनायक, सिद्धिविनायक, मोदविनायक, प्रमोदविनायक, सुमुखविनायक र दुर्मुखविनायक । स्कन्दपुराणमा उक्त विनायकहरूको उपासनाबाट सबै मानिसहरूको परमकल्याण हुने कुरा बताइएको छ ।[४५]

स्कन्दपुराणको काशीखण्डमा दिवोदासको राज्यत्यागपछि आफ्नो अनादिनगरीबाट वियुक्त हुनुभएका भगवान् विश्वनाथले श्रीगणेशकै प्रतापबाट केदारक्षेत्रबाट काशी आउने अवसर पाउनुहुँदा गद्गद हुँदै भन्नुभएको थियो – यो वाराणसीपुरी मेरा लागि पनि दुष्प्राप्य छ । मैले आज यी बालक गणेशको प्रतापबाट यहाँ फेरि आउने अवसर पाएँ। त्रिलोकीमा पिताले गर्न नसकेको काम पुत्रले गर्न सक्ने कुरा यस घटनाबाट प्रमाणित भएको छ । वास्तवमा गणेशका कारण म संसारमा पुत्रवान् भएको छु । मेरा छोराले आफ्नो पुरुषार्थबाट मेरो इच्छा पूरा गराएका छन् ।[४६]

यसैगरी स्कन्दपुराणमा भगवान् श्रीगणेशको अर्थगम्भीर स्तुति रहेको छ । त्यसमा भनिएको छ – हे परमकारण श्रीगणेश ! तपाईं कारणका पनि कारण हुनुहुन्छ । वैदिक विद्वान्हरूद्वारा ज्ञेय पुरुष हुनुहुन्छ । तपाईं वेदवाणीमा अनुसन्धेय र अनिर्वचनीय तत्त्व हुनुहुन्छ । यो सम्पूर्ण चराचर जगत् तपाईंको दिव्य स्वरूपको एक अंश हो । तपाईं वाणीका अगोचर चराचररूप दिव्यमूर्ति हुनुहुन्छ ।[४७]

## छ ) अग्निपुराण

अग्निपुराणका अनेक अध्यायहरूमा प्रसङ्गले श्रीगणेशको उपासना र महत्ताको विषयमा केन्द्रित सूचना उपलब्ध हुन्छन् । अग्निपुराणको ३०२ औं अध्यायमा श्रीगणेशको शीघ्र कृपा प्राप्त गर्न पुष्यनक्षत्र भएको रविवारका दिन मन्त्रोच्चारणपूर्वक आँकको जरो उखेली त्यसबाट औँठी बराबरको मूर्ति बनाएर पञ्चामृतले अभिषेक गरी पूजा गरेपछि लक्ष्मीप्राप्त हुने कुरा बताइएको छ । यदि पुष्य नक्षत्रका दिन रविवार परेको छैन भने सेतो आँकको जरो उखेलेर पूजाका लागि उपयोग गर्न सकिने कुरा पनि त्यहाँ बताइएको छ।

अग्निपुराणको ७१ औं अध्यायमा लम्बोदर गायत्रीको वर्णन गरिएको छ – **'लम्बोदराय विद्महे महोदराय धीमहि तन्नो दन्ती प्रचोदयात् ।'** यसैगरी १७९ औं अध्यायमा महोत्कटगायत्रीको निरूपण गरिएको छ – **'महोत्कटाय विद्महे वक्रतुण्डाय धीमहि तन्नो दन्ती प्रचोदयात् ।'**[४८]

---

४५. *षट्पञ्चाशद् गजमुखानेतान् यः संस्मरिष्यति । दूरदेशान्तरस्थोऽपि स मृतो ज्ञानमाप्नुयात् ॥*
*इमे गणेश्वराः सर्वे स्मर्तव्या यत्र कुत्रचित् । महाविपत्समुद्रान्तः पतन्तं पान्ति मानवम् ॥* – स्कन्दपुराण, काशीखण्ड ५७/११५, ११७ ।

४६. *यदहं प्राप्तवानस्मि पुरीं वाराणसीं शुभाम् । मयाप्यतीव दुष्प्राप्या स प्रसादोऽस्य वै शिशोः॥*
*यद् दुष्प्रसाध्यं हि पितुरपि त्रिजगतीतले । तत्सूनुना सुसाध्यं स्यादत्र दृष्टान्तता मयि ॥*
*पुत्रवानहमेवास्मि यच्च मे चिरचिन्तितम् । स्वपौरुषेण कृतवानभिलाषं करस्थितम् ॥* – पूर्ववत्, ५७/१२,१३,१५ ।

४७. *त्वं कारणं परमकारणकारणानां वेद्योऽसि वेदविदुषां सततं त्वमेकः ।*
*त्वं मार्गणीयमसि किञ्चन मूलवाचां वाचामगोचर चराचरदिव्यमूर्ते ॥* – पूर्ववत्, ५७/३० ।

४८. चक्रपाणि भास्कर, कल्याण, पूर्ववत्, पृ. १५०-१५१ ।

## ज ) वाराहपुराण

श्रीगणेशलाई वाङ्मय र चिन्मय ब्रह्म भनिएको छ। सूक्ष्म शरीरमा मूलाधार चक्रलाई परा वाक्को केन्द्र भनिन्छ । ज्ञानको अभिव्यक्ति वाणीद्वारा हुन्छ । श्रीगणेश वाणीका देवता हुनुभएकाले वराहपुराणमा उहाँलाई मूलाधारमा विराजमान देवता भनिएको छ। वाक् अथवा नाद आकाशको गुण हो । श्रीगणेश भूमितत्त्व र आकाशतत्त्वका स्वामी हुनुभएको कुरा त्यहाँ बताइएको छ ।[४९]

वास्तवमा श्रीगणेश भूमितत्त्वका स्वामी हुनुभएका कारण जीवनसँग सम्बद्ध सिद्धिका दाता र विघ्नका हर्ता हुनुहुन्छ । आकाशतत्त्वका स्वामी हुनुभएकाले उहाँ बुद्धि र वाणीका अधिष्ठान हुनुहुन्छ । त्यसैले उहाँले अविद्यारूप महाविघ्नको नाश गरी ब्रह्मविद्यारूप सिद्धि प्रदान गर्नुहुन्छ । यसकारण श्रीगणेश ज्ञानी र योगीहरूका उपास्य हुनुहुन्छ र गुरुका पनि गुरु हुनुहुन्छ भन्ने कुरा वराहपुराणले पुष्टि गरेको छ ।

वाराहपुराणमा नै भगवान् श्रीगणेशको अपूर्व सौन्दर्य र उहाँमाथि परेको सरापका विषयमा पनि चर्चा गरिएको छ । एक दिन देवताहरूले कैलासमा गएर भगवान् शङ्करसँग निवेदन गरे – 'हे प्रभो ! असत् कार्य गर्ने असर्तीहरूको कार्यमा विघ्न पैदा गर्न हजुर समर्थ हुनुहुन्छ ।' त्यसबेला शिवजीले पार्वतीको मुखमा हेरी आकाशतर्फ हेर्नुभयो र हाँस्नुभयो । पार्वतीले पनि आकाशमा चम्किरहेको दिव्य स्वरूपलाई निर्निमेष नयनले हेर्नुभयो । सबैका आँखामा मोहनी लगाउने दिव्य पुरुषको अनुहार हेरेर शिवजीले सराप दिनुभयो – 'हे कुमार ! तिम्रो रूप हात्तीको जस्तै हुनेछ । पेट लामो हुनेछ र तिमीले सर्पको यज्ञोपवीत धारण गर्नेछौ' ।[५०]

## झ ) ब्रह्माण्डपुराण

ब्रह्माण्डपुराणमा भगवान् श्रीगणेशको अनिर्वचनीय महिमा बताइएको छ । श्रीकृष्णले पार्वतीलाई भन्नुभएको छ – हे भाग्यवती देवी ! मैले वेदका माध्यमबाट प्रकट गरेको वचन सुन्नुहोस् । जुन वचन सुनेपछि तपाई निश्चय नै खुसी हुनुहुनेछ । हे भगवती ! तपाईंका पुत्र विनायक महान्‌भन्दा पनि महान् महात्मा हुनुहुन्छ ।[५१]

ब्रह्माण्डपुराणअन्तर्गत ललितोपाख्यानमा महागणपतिको प्रादुर्भावसम्बन्धी कथा रहेको छ । महात्रिपुरसुन्दरीका साथ भण्डासुर दैत्यको युद्ध चलिरहेको थियो । त्रिपुरसुन्दरीका शक्तिहरूद्वारा भण्डासुरका तीन सय पुत्रहरूको नाश भइसकेको थियो । भगवतीको महानिनाद चलिरहेको थियो । त्यसबेला क्षुब्ध भएको भण्डासुरको मन्त्री विशुक्रले जयविघ्नयन्त्र लेखेर ललितादेवीको सैन्यशिविरको एउटा कुनामा राखिदियो । त्यस यन्त्रको प्रभावका कारण ललितादेवीको सेनामा रहेका योद्धाहरू आलस्य, कृपणता, दीनता, निद्रा, तन्द्रा, प्रमीलिका, क्लीवता, विस्मृतिजस्ता आठ दोषले युक्त भए । यो अवस्था देखेर भण्डासुरको मन्त्री विशुक्रले शक्तिसेनामा आक्रमण गरी दिव्य अस्त्रको वर्षा गर्‍यो । अम्बिका, दण्डनाथा आदि ललितादेवीका सेनानायिकाहरू सचेत थिए । विशुक्रको युद्धतत्परता देखेर तिनीहरूले श्रीललितामाताको समीपमा पुगी युद्धको वृत्तान्त बताए । युद्धको वृत्तान्त थाहा पाएपछि ललितादेवीले मन्द मुस्कान छर्दै महाकामेश्वरको अनुहारमा अपलक हेर्नुभयो । हेर्दा हेर्दै त्रिपुरसुन्दरीको हास्यद्वारा उत्पन्न प्रभापुञ्जबाट

४९. 'ततो गणपतिर्वाक्यमाकाशाख्योऽब्रवीत्तदा ।' 'पृथिव्यादिगुणस्त्वेष गजवक्त्रो भविष्यति ।' – वाराहपुराण, १७/३, ६२ ।

५०. ततः शशाप तं देवो गणेशं परमेश्वरः । कुमार ! गजवक्त्रस्त्वं प्रलम्बजठरस्तथा ॥
भविष्यसि तथा सर्पैरुपवीतगतिः स्वयम् ॥ – पूर्ववत्, २३/१८ ।

५१. शृणु देवि ! महाभागे वेदोक्तं वचनं मम । यच्छ्रुत्वा हर्षिता नूनं भविष्यसि न संशयः ॥
विनायकस्ते तनयो महात्मा महतां महान् ॥ – ब्रह्माण्डपुराण ३/४२/३० ।

कुनै अनिर्वचनीय देवता प्रकट भए । ती देवताको मुख हात्तीको मुखजस्तै थियो । तिनका गालाहरूबाट मदका धारा बगिरहेका थिए । तिनको कान्ति जपापुष्पभन्दा पनि रातो थियो । तिनले आफ्ना दश हात र सूँढमा क्रमशः बेल, गदा, इक्षुदण्ड, शूल, खड्ग, पाश, कमल, धानको बाला, वरमुद्रा, अङ्कुश र रत्नमय कलश धारण गरेका थिए । ती देवता लम्बोदर थिए र तिनको शिरमा चन्द्रमाको आकारको चूडामणि सुहाएको थियो । तिनका मुखबाट मदमत्त गर्जनको ध्वनि निस्किरहेको थियो । ती सिद्धिलक्ष्मीद्वारा आलिङ्गित थिए । यस्तो स्वरूपका गजानन देवताले उत्पत्ति हुनासाथ त्यहाँ आएर ललिता त्रिपुरसुन्दरीका पाउमा प्रणाम गरेको कुरा ब्रह्माण्डपुराणमा वर्णन गरिएको छ ।[५२]

भगवती ललितात्रिपुरसुन्दरीबाट आशीर्वाद प्राप्त गरी ती देवता सेनाशिविरमा पुगे । प्राकारको चारैतर्फ घुम्दा तिनले एउटा कुनामा जयविघ्नकर यन्त्रको दर्शन गरे । त्यसपछि आफ्ना दाँतको प्रहारबाट त्यसलाई आकाशमा उडाइदिए। विघ्नयन्त्रको विनाश हुनासाथ शक्तिसेना स्पन्दित, सक्रिय र गतिशील भयो । श्रीमहागणपति आफ्नो मदधाराबाट दैत्यसेनालाई मूर्च्छित तुल्याउँदै आमोद, प्रमोद, सुमुख, दुर्मुख, अरिघ्न र विघ्नकर्तानामक विनायक गणका साथै तीव्रा, ज्वालिनी, नन्दा, सम्भोगदा, कामरूपिणी, उग्रा, तेजोवती, सत्या एवं विघ्ननाशिनी नामक नौ शक्तिहरूका साथ विशुक्रको सैन्यशिविरमा पुग्नुभयो । त्यहाँ तिनले सात अक्षौहिणी सेना र गजासुरनामक पराक्रमी दैत्यको संहार गर्नुभयो । गजासुरलाई मारेपछि श्रीगणपति आफ्नी माता ललिताम्बाका सामु पुग्नुभयो । श्रीगणेशको कर्मबाट प्रसन्न हुनुभएकी ललिताम्बाले हे गणेश! तिमी सबै प्रकारका पूजामा प्रथम पूज्य हुनेछौ भनी आशीर्वाद दिनुभयो ।[५३]

यसरी ललिताम्बाले श्रीगणेशलाई आशीर्वाद दिनुभएपछि गणपति पनि ब्रह्मा, विष्णु आदि सबै देवता, असुर, मुनि, महर्षि र मनुष्यहरूमा प्रथम पूजित हुनुभयो । यसैले पञ्चायतन पूजामा पनि सर्वप्रथम श्रीगणेशको पूजा गर्ने परम्परा रहिआएको छ ।

### ञ ) अन्य महापुराण

मत्स्यपुराण, भविष्यपुराण, नारदपुराण, वायुपुराण, श्रीमद्भागवतपुराण आदि महापुराणहरूमा यत्र तत्र श्रीगणेशको स्वरूप, विशेषता र लीलाबारे सङ्केत गरिएको पाइन्छ ।

१ ) **मत्स्यपुराण** - मत्स्यपुराणमा गणेशोत्पत्तिसम्बन्धी एउटा आख्यान रहेको छ - एक दिन पार्वतीले आफ्नो शरीरको अङ्गलेपबाट एउटा खेलौना तयार गर्नुभयो । त्यसको टाउको हात्तीको टाउको समान थियो । पार्वतीले गङ्गाजलले अभिषेक गर्दा त्यो खेलौना प्राणवान् भयो । त्यसलाई पार्वती र गङ्गा दुवैले आ-आफ्ना पुत्रका रूपमा स्वीकार गर्नुभयो। तिनै बालक पछि गणेशका रूपमा विख्यात भए।[५४]

२ ) **वायुपुराण** - वायुपुराणमा भगवान् शिवजीलाई गजेन्द्रकर्ण, लम्बोदर आदि श्रीगणेशका निमित्त प्रयोग गरिने विशेषण शब्दहरूको प्रयोग गरी श्रीगणेश र शिवजीमा अभेद सिद्ध गरिएको छ ।[५५]

३ ) **भविष्यपुराण** - भविष्यपुराणमा **गणानान्त्वा०** इत्यादि वैदिकमन्त्रलाई गणेशको आराधना गर्ने मन्त्र

५२. *तस्याः स्मितप्रभापुञ्जे कुञ्जराकृतिमान् मुखे । कटक्रोडगलद्दानः कश्चिद् देवो व्यजृम्भत ॥*
*जपापटलपाटल्यपाटच्चरवपुर्द्युतिः । बीजपूरं गदामिक्षुचापं शूलं सुदर्शनम् ॥*
*अब्जपाशोत्पलं व्रीहिमञ्जरीवरदाङ्कुशान् । रत्नकुम्भं च दशभिः स्वकैर्हस्तैः समुद्वहन् ॥*
*तुन्दिलश्चन्द्रचूडालो मदबृंहितनिःस्वनः । सिद्धिलक्ष्म्या समाश्लिष्टः प्रणनाम महेश्वरीम् ॥* - पूर्ववत्, ललितोपाख्यान २७०/६८-७१ ।

५३. *विजितारं महाराज्ञी प्रीयमाणा गणेशितुः । सर्वदेवतपूजायां पूर्वपूज्यत्वमुत्तमम् ॥* - पूर्ववत्, २७/१०४ ।

५४. श्यामाकान्त द्विवेदी, कल्याण, पूर्ववत्, पृ. १२७ ।

५५. पूर्ववत्, पृ. १२८ ।

मानिएको छ । त्यहाँ विभिन्न प्रसङ्गमा भगवान् श्रीगणेशलाई गजानन, मूषकवाहन आदि विशेषणद्वारा वर्णन गरिएको छ ।[५५]

४) **नारदपुराण** – नारदपुराणका ९२, १४४, १६८ र १८८ औं अध्यायहरूमा श्रीगणेशको वर्णन पाइन्छ। त्यहाँ श्रीगणेशलाई ओङ्काररूप मानिएको छ । उहाँ ओङ्काररूप हुनुभएकाले मङ्गलमय हुनुहुन्छ भनिएको छ । त्यसपछि ओङ्कार र अथ शब्दको माङ्गलिकता स्पष्ट गरिएको छ ।[५७] नारदपुराणमा श्रीगणेशको ध्यानविधि प्रस्तुत गरिएको छ । त्यसमा सिद्धिनामक पत्नीद्वारा आलिङ्गित श्रीगणेशको ध्यान बताइएको छ । श्रीगणेश चार भुजाहरूमा पाश, अङ्कुश, अभय र वरमुद्रा धारण गर्ने दिव्य देवताका रूपमा वर्णित हुनुहुन्छ । हातमा कमल धारण गर्ने श्रीगणेशलाई सिद्धि-बुद्धिद्वारा आलिङ्गन गरिएको पनि देखाइएको छ । यसका साथै उहाँलाई त्रिनयन पनि भनिएको छ ।[५८] नारदपुराणमा निहित सङ्कटनाशन गणेशस्तोत्र सनातन धर्मानुयायीहरूमा प्रसिद्ध छ । आयुवृद्धि, कामनासिद्धि, अर्थप्राप्ति र सङ्कटनाशका लागि यसको पाठ गर्ने विधान रहेको छ । यस स्तोत्रमा वक्रतुण्ड, एकदन्त, कृष्णपिङ्गाक्ष, गवजवक्त्र, लम्बोदर, विकट, विघ्नराजेन्द्र, धूम्रवर्ण, भालचन्द्र, विनायक, गणपति र गजानन गरी श्रीगणेशका बाह्र नामहरूको उल्लेख गरिएको छ ।[५९]

५) **श्रीमद्भागवत** – श्रीमद्भागवतको एकादश स्कन्धमा भगवान् श्रीकृष्णले उद्धवलाई क्रियायोगको शिक्षा प्रदान गर्दै भन्नुभएको छ – 'हे उद्धव ! भक्तहरूले मेरो पूजा गर्दा दुर्गा देवी, विनायक, व्यास, विष्वक्सेन, सद्गुरु र देवताहरूको पनि पूजा गर्नुपर्दछ ।'[६०]

श्रीमद्भागवतपुराणमा शुकदेव स्वामीले राजा परीक्षितलाई ब्रह्मतेजका इच्छुक साधकहरूले ब्रह्मणस्पतिरूप श्रीगणेशको उपासना गर्नुपर्ने कुरा बताउनुभएको छ ।[६१]

## ट) विष्णुधर्मोत्तरपुराण

विष्णुधर्मोत्तरपुराणमा श्रीगणेशको प्रतिमा निर्माणको सन्दर्भमा भनिएको छ – गजानन, चतुर्बाहु, शूल र अक्षमाला धारण गर्ने विनायकको प्रतिमानिर्माण गर्नुपर्दछ ।[६२]

## ठ) मुद्गलपुराण

भगवान् श्रीगणेशका परमभक्त मुद्गल ऋषिद्वारा रचित मुद्गलपुराण सर्वात्मना श्रीगणेशको उद्भव र लीलाको प्रकाशनमा समर्पित भक्तिभावपूर्ण उपपुराण हो । यस पुराणमा श्रीगणेशलाई सर्वशक्तिसम्पन्न परमतत्त्वका रूपमा चित्रण गरिएको छ । निराकार ब्रह्मको रूप र साकार अवतारी पुरुषका रूपमा भगवान् श्रीगणेशको सर्वशक्तिमत्ता यस पुराणमा देखाइएको छ । विष्णु आदि विशिष्ट देवताका कुलदेव, स्वानन्दभुवनमा देदीप्यमान,

५५. गजाननेति मन्त्रेण विघ्नसंहुनरे ध्रुवम् । – भविष्यपुराण, मध्यपर्व, द्वितीयभाग, २०/१४२ ।
५७. ओङ्कारश्चाथशब्दश्च द्वावेतौ ब्रह्मणः पुरा । कण्ठं भित्त्वा विनिर्यातौ तस्मात् माङ्गलिकावुभौ ।। – नारदपुराण, पूर्व० ५१/१० ।
५८. पाशाङ्कुशाभयवरान् दधानं कञ्जहस्तया । पत्न्याश्लिष्टं रक्ततनुं त्रिनेत्रं गणपं भजे ।। – पूर्ववत्, ६६/१३९ ।
५९. प्रथमं वक्रतुण्डञ्च एकदन्तं द्वितीयकम् । तृतीयं कृष्णपिङ्गाक्षं गजवक्त्रं चतुर्थकम् ।।
लम्बोदरं पञ्चमञ्च षष्ठं विकटमेव च । सप्तमं विघ्नराजेन्द्रं धूम्रवर्णं तथाष्टमम् ।।
नवमं भालचन्द्रञ्च दशमं तु विनायकम् । एकादशं गणपतिं द्वादशं तु गजाननम् ।। – कल्याण, पृ. ५२२ ।
६०. दुर्गां विनायकं व्यासं विष्वक्सेनं गुरून् सुरान् । स्वे स्वे स्थाने त्वभिमुखान् पूजयेत् प्रोक्षणादिभिः ।। – श्रीमद्भागवत, ११/२७/२९
६१. ब्रह्मवर्चसकामस्तु यजेत ब्रह्मणस्पतिम् । – पूर्ववत्, २/३/२ ।
६२. विनायकस्तु कर्तव्यो गजवक्त्रश्चतुर्भुजः । शूलकं चाक्षमालाञ्च तस्य दक्षिणहस्तयोः ।। – पूर्ववत्, ३/७१/१३ ।

मायामय र अमायी परब्रह्मरूप र परमेश्वररूप श्रीगणेशको स्तुति गर्दै देवताहरूले भनेका थिए – 'हे विघ्नराज ! समाधिबाट योगीहरू जहाँ प्राप्त हुन्छन्, त्यो **ग** निराकार ब्रह्म हो र जसबाट प्रणवात्मक जगत्को उत्पत्ति हुन्छ त्यो ज हो । त्यसकारण **गजशब्द** सम्पूर्ण ब्रह्माण्डको बीजतत्त्व हो । त्यसै गजाकार बीजतत्त्वको अनुशीलन गरी योगीहरूले तपाईलाई जान्दछन् र त्यसै गजाकारमा परिणत भई रमाउँछन् । गजतत्त्वका कारण नै तपाईलाई भक्त र ज्ञानीहरूले गजवक्त्र, गजानन, गजमुख, गजास्य आदि नामबाट पुकार्दछन् । जसको स्तुति गर्न शङ्कर आदि देवता र वेदहरू असमर्थ हुन्छन् त्यस्ता गजानन प्रभुको हामी कसरी स्तुति गरौं ।'[६३]

मुद्‌गलपुराणअन्तर्गतको **एकदन्तशरणागतिस्तोत्रमा** श्रीगणेशलाई अनादिमध्यान्तविहीन, अचिन्त्यबोध, हृत्प्रकाश, प्रकाशमय, निरालम्बसमाधिगम्य, स्वबिम्बद्वाराविलसित मायातत्त्वमा वीर्याधान गर्ने तुरीय परमात्माका रूपमा वर्णन गरिएको छ । यसैगरी त्यहाँ श्रीगणेशलाई गुणेश्वर, तीन लोक, तीन गुण, तीन अवस्था र तीन देवताहरूमा देदीप्यमान, नादद्वारा सुषुप्तिसंसारका रचयिता, अनेकरूप र एकरूप परमतत्त्वका रूपमा वर्णन गरिएको छ । यसैगरी उहाँलाई बिन्दुद्वारा सूक्ष्म संसारको रचना गर्ने, रजोगुणद्वारा जाग्रत् संसारको रचना गर्ने, प्रकृतिसहित जगत्को सृष्टि गरी त्यसमा विराजमान हुने देवता भनिएको छ । फेरि उहाँलाई ग्रह-नक्षत्र आदि ज्योतिर्मय तत्त्वका सञ्चालक, ब्रह्मा, विष्णु र शिवजीका नियामक, भूमि, जल र नदीका प्राणतत्त्व, देवताहरूका उत्प्रेरक देवताका रूपमा पनि वर्णन गरिएको छ । त्यस स्तोत्रमा उहाँलाई शेषनाग, कामदेव र सूर्यका प्रवर्तक, वायु, अग्नि र चराचरका नियन्ता सर्वान्तर्यामी देवताका रूपमा वर्णन गरिएको छ ।[६४]

मुद्‌गलपुराणमा गणेश शब्दअन्तर्गत रहेको गणशब्दका अक्षरहरूको पृथक् पृथक् अर्थ प्रकाशन गरिएको पाइन्छ । मनोमय र वाणीमय जगत्को जुन दृश्य र अदृश्य रूप छ त्यो गकार हो र श्रीगणेश त्यसका धारक ब्रह्म हुनुहुन्छ । यसैगरी मनोवाणीविहीन संयोग र अयोगरूप ब्रह्मको वाचक णकार हो भनिएको छ ।[६५]

मुद्‌गलपुराणको **भक्तमनोरथ सिद्धिप्रद गणेशस्तोत्रमा** गणेशशब्दमा आएको गकार जगत्‌रूप हो र णकार ब्रह्मवाचक हो भनिएको छ ।[६६]

## ५.६ विविध सिद्धान्तमा श्रीगणेश

शैव, वैष्णव, रामोपासक एवं योगसाधनापरक वाङ्मयमा श्रीगणेशको व्यापक प्रभाव रहेको छ । यसै गरी बौद्ध एवं जैन सिद्धान्तहरूमा पनि श्रीगणेशपरक चिन्तन पाइन्छन् । पाठकहरूको सुविधाका लागि ती वाङ्मयहरूमा रहेका श्रीगणेशपरक चिन्तन र महत्तामा आधारित विचारहरूको सारसङ्क्षेप प्रस्तुत गरिन्छ ।

---

६३. क) *गजाननाय पूर्णाय साङ्ख्यरूपमयाय ते । विदेहेन च सर्वत्र संस्थिताय नमो नमः ॥*
*गजः सर्वस्य बीजं यत् तेन चिह्नेन विघ्नप ! । योगिनस्त्वां प्रजानन्ति तदाकारा भवन्ति ते ॥*
*वेदादयो विकुण्ठाश्च शङ्कराद्याश्च देवताः । तेन त्वं गजवक्त्रश्च किं स्तुमास्त्वां गजानन ! ॥*
*अमेयाय च हेरम्ब ! परशुधारकाय ते । मूषकवाहनायैव विश्वेशाय नमो नमः ॥*
*– मुद्‌गल, मुद्‌गलपुराण, गणपति हरिहर पटवर्धन, कुसन्दवाड संस्थान, कुसन्दवाड ।*

ख) ***देवस्तुति, कल्याण, पूर्ववत्, पृ. ५ ।***

६४. *यदन्तरे संस्थितमेकदन्तस्तदाज्ञया सर्वमिदं विभाति अनन्तरूपं हृदि बोधकं यस्तमेकदन्तं शरणं व्रजामः ।*
*सदात्मरूपं सकलादिभूतममायिकं सोऽहमचिन्त्यबोधं अनादिमध्यान्तविहीनमेकं तमेकदन्तं शरणं व्रजामः ॥ – कल्याण, पूर्ववत्, एकदन्तशरणागतिस्तोत्र, पृ. ९-१० ।*

६५. *मनोवाणीमयं सर्वं दृश्यादृश्यस्वरूपकम् । गकारात्मकमेवं तत् तत्र ब्रह्म गकारकः ॥*
*मनोवाणीविहीनञ्च संयोगायोगसंस्थितम् । णकारात्मकरूपं तत् णकारस्तत्र संस्थितः ॥ – मुद्‌गलपुराण, पूर्ववत् ।*

६६. *जगद्रूपो गकारश्च णकारो ब्रह्मवाचकः । तयोर्योगे गणेशाय नाम तुभ्यं नमो नमः ॥ – पूर्ववत् ।*

### क) वैष्णवमत

श्रीवैष्णवसम्प्रदायमा श्रीगणेशको उच्च स्थान रहेको छ । परम पदमा परब्रह्म श्रीमन्नारायण हुनुहुन्छ। उहाँ नै व्यूहरूपमा वासुदेव भगवान् हुनुहुन्छ । परम पदमा जो नित्यसूरि भगवान् अनन्त हुनुहुन्छ उहाँ नै लीलाविभूतिमा भगवान् शङ्कर हुनुहुन्छ । परम पदमा जुन सेनानायक विष्वक्सेन हुनुहुन्छ उहाँ नै लीलाविभूतिमा विघ्ननाशक, सिद्धि एवं बुद्धिका स्वामी र गणहरूका अधिनायक श्रीगणेश हुनुहुन्छ । यसैगरी सरस्वती विद्या एवं ज्ञानकी अधिष्ठात्री हुनुहुन्छ भने विद्या र ज्ञानका अधिष्ठाता श्रीगणेश मानिनुहुन्छ ।

विशिष्टाद्वैत वेदान्तमा **स्वरूप** – जीवात्माको स्वरूप, **परस्वरूप** – परमात्माको स्वरूप, **पुरुषार्थ** – धर्म; अर्थ; काम र मोक्ष, **उपाय** – कर्मयोग; ज्ञानयोग; भक्तियोग; प्रपत्तियोग र आचार्याभिमान, **विरोधी** – जीवात्मालाई परमात्मासँग मिल्न नदिने विघ्नव्यूह, **श्रीगणेश** – विरोधी विघ्नबाधालाई हटाउने शक्ति र ज्ञानले सम्पन्न देवताको रूपमा मानिएका छन् ।

वैष्णवहरूमा मुख्य चार सम्प्रदाय प्रचलित छन् – १. श्रीसम्प्रदाय, २. मध्वसम्प्रदाय, ३. श्रीविष्णुस्वामिसम्प्रदाय, ४ श्री श्री निम्बार्कसम्प्रदाय । उक्त चारै सम्प्रदाय र ती अन्तर्गतका अन्य सम्प्रदायहरूमा पनि विघ्नविनाशक देवताका रूपमा श्रीगणेशको आराधना गर्नुपर्ने कुरा बताइएको छ । उक्त सम्प्रदायहरूले श्रीगणेशलाई परमात्माकै अवतार मानेका छन् । तदनुसार विघ्ननिवारण गर्न र मानवहरूलाई सिद्धि एवं सफलता प्रदान गर्न परमात्माले नै श्रीगणेशको रूपमा अवतार लिनुभएको भन्ने मान्यता रहेको छ । विष्वक्सेनसंहितामा पनि श्रीगणेशको अतुलनीय महिमा बताइएको छ । श्रीवैष्णवसम्प्रदायमा भगवान् श्रीगणेश विष्वक्सेनका रूपमा पूजित हुनुहुन्छ र अन्य वैष्णवसम्प्रदायमा पनि श्रीगणेश प्रथम पूजनीय देवताका रूपमा सम्मानित हुनुहुन्छ ।[५७]

### ख) योगसाधना

श्रीगणेशलाई षट्चक्रसाधना–योगको आधार मानिएको छ । उहाँ मूलाधारचक्रमा विराजमान हुनुहुन्छ। त्यसै मूलाधारचक्रबाट कुण्डलिनीजागरणको प्रक्रिया प्रारम्भ हुन्छ । मूलाधारको तल्लो भागमा गोलाकार वायुमण्डल रहेको छ । त्यसमा वायुबीज यकारको उपस्थिति हुन्छ । त्यस बीजबाट वायु प्रवाहित हुन्छ । त्यसमाथि रहेको त्रिकोणात्मक अग्निमण्डलमा अग्निबीज रकारबाट अग्नि प्रकट हुन्छ । वायु र अग्निका साथ मूलाधारमा कुलकुण्डलिनी सर्पिणीको आकारमा शयनमुद्रामा रहेको हुन्छ । त्यो कुण्डलिनी स्वयम्भू लिङ्गलाई बेरेर रहेको छ । त्यसलाई जगाएर ब्रह्मरन्ध्रसम्म पुऱ्याइन्छ र त्यसलाई त्यहाँको अमृतमा डुबाएर योगीहरूले आत्मचिन्तन गर्दछन् भन्ने तथ्य नारदपुराणमा प्रकट गरिएको छ ।[५८] योगशास्त्रमा मूलाधारचक्रमा रहेको आधारपद्मको ध्यान गर्नाले योगीहरूको पाप समूल नष्ट हुन्छ भनिएको छ ।[५९]

दोस्रो चक्रको नाम स्वाधिष्ठान हो । स्वाधिष्ठान चक्रको ध्यान गर्नाले योगी दिव्यसौन्दर्यसम्पन्न बन्दछ। तेस्रो मणिपूरचक्रको ध्यान गर्नाले योगीका सम्पूर्ण कामना परिपूर्ण हुन्छन् । चौथो अनाहतचक्रको ध्यान गर्नाले योगी

---

५७. क) वेंकटवरदाचार्य, 'पाञ्चरात्र आगम में गणेश', कल्याण, पूर्ववत्, पृ. ३५६–३५७ ।
    ख) जयनारायण मल्लिक, 'श्रीवैष्णव सम्प्रदाय एवं विशिष्टाद्वैत वेदान्त में श्रीगणेश', कल्याण, पूर्ववत्, पृ. ३६०–३६२ ।
    ग) श्रीभाल आचार्य, 'मध्वसम्प्रदाय में श्रीगणेश', कल्याण, पूर्ववत्, पृ. ३६३–३६४ ।

५८. नारदपुराण, पूर्वभाग, अध्याय ६५ ।

५९. मूलपद्मं यदा ध्यायेद् योगी स्वयम्भूलिङ्गकम् । तदा तत्क्षणमात्रेण पापौघं नाशयेद् ध्रुवम् ॥ – शिवसंहिता ५/९६ ।

त्रिकालदर्शी बन्दछ । पाँचौं विशुद्धचक्रको ध्यानबाट योगी वेदार्थको ज्ञाता बन्दछ । विशुद्धचक्रको ध्यान गर्ने योगीले क्रोधपूर्ण आँखाले संसारलाई हेर्दा संसार नै कम्पायमान हुन्छ । छैठौं आज्ञाचक्रको ध्यान गर्ने योगीले साक्षात् विश्वनाथ, भूतभावन शङ्करको दर्शन गर्दछ र त्यो दुःख एवं शोकबाट मुक्त हुन्छ भनिएको छ ।[30]

यसरी चक्र-कमलहरूको ध्यान गर्ने योगीले ब्रह्मरन्ध्रमा स्थित सहस्त्रारपद्मबाट प्रवाहित अमृतको पान गर्दछ। उक्त दिव्यसहस्त्रारपद्मले योगीलाई मुक्ति प्रदान गर्दछ । त्यस पद्मको अर्को नाम कैलास पनि हो। कुण्डलिनी अर्थात् जीवनशक्तिलाई जाग्रत बनाउँदै आत्मरूप चैतन्य जीव उक्त कैलासमा शिवजीलाई साक्षात्कार गरी अमरपदवीमा प्रतिष्ठित हुन्छ भनिएको छ ।[31]

### १ ) मूलाधारचक्र र श्रीगणेश

मूलाधारचक्रमा चारपाते कमल रहेको छ । त्यो रातो रङ्गको छ । त्यसका चार पातहरूमा क्रमशः व श ष श अक्षर अङ्कित छन् । त्यस कमलमाथि आफ्नो शक्तिका साथ मूषकवाहन श्रीगणेश विराजमान हुनुहुन्छ । उहाँले आफ्ना चार हातमा क्रमशः पाश, अङ्कुश, अमृतपात्र र मोदक धारण गर्नुहुन्छ भन्ने कुरा बताइएको छ। मूलाधारचक्रमा स्थित श्रीगणेशका पादपद्ममा रही योगसाधना आरम्भ गर्ने योगीले षट्चक्रभेदन गरी सहस्त्रारकैलासमा विराजमान शिवजीको साक्षात्कार गर्दछ र त्यो परमपदमा प्रतिष्ठित हुन्छ ।[32] यसरी योगसाधनाका परमाधार एवं मूलाधारचक्रमा विराजमान श्रीगणेश आराध्य हुनुहुन्छ भन्ने तथ्य स्पष्ट हुन्छ । त्यहाँ श्रीगणेश पूर्णानन्द, परानन्द र पुराणपुरुषोत्तम हुनुहुन्छ भनिएको छ ।[33]

योगस्थ श्रीगणेशमा समस्त मायिक प्रपञ्चको अवसान हुन्छ । उहाँ अव्यक्त ज्योतिरूप र मायातीत हुनुहुन्छ । श्रीगणेश चिदानन्दरूप, वेदागोचर, निर्गुण, परब्रह्मस्वरूप र योगप्रतिपाद्य परमतत्त्व हुनुहुन्छ ।[34]

योगको साधनाभूमिमा श्रीगणेश सद्, असद्, व्यक्त एवं अव्यक्त सबै कुरा हुनुहुन्छ भनिएको छ ।[35] गणपति अथर्वशीर्षमा इच्छा, ज्ञान र क्रियाशक्तिमा व्याप्त एवं मूलाधारचक्रमा विराजमान, योगिध्येय श्रीगणेशको वर्णन गरिएको छ ।[36] गणपत्युपनिषद्मा सृष्टिको आदिमा प्रादुर्भूत प्रकृति र पुरुषभन्दा पर रहनुभएका श्रीगणेशको नित्य ध्यान गर्ने योगी सबै योगीहरूमा उत्तम हुन्छ भनिएको छ ।[37] स्वर्णिम वर्णले सम्पन्न मूलाधारचक्रमा श्रीगणेशको ध्यान गर्नुपर्ने कुरा शङ्करदिग्विजयमा बताइएको छ ।

### २ ) योगीश्वर श्रीगणेशको योगमार्गद्वारा उपासना

अनादिकालदेखि नै श्रीगणेश योगीश्वरहरूद्वारा पूजित हुनुहुन्छ । श्रीगणेशपुराणको उपासनाखण्डमा

---

३०. *पुमान् परमहंसोऽयं यज्ज्ञात्वा नावसीदति । - पूर्ववत्, ५/१२० ।*

३१. *अत ऊर्ध्वं दिव्यरूपं सहस्रारं सरोरुहम् । ब्रह्माण्डाख्यस्य देहस्य बाह्ये तिष्ठति मुक्तिदम् ॥*
*कैलासो नाम तस्यैव महेशो यत्र तिष्ठति ॥ - पूर्ववत्, ५/११६-११७ ।*

३२. *मूलाधारे वादिसान्तबीजयुक्ते चतुर्दले। बन्धूकाभे स्वशक्त्या तु सहितायाखुगाय च।।*
*पाशाङ्कुशसुधापात्रमोदकोल्लासपाणये ॥ - नारदपुराण, पूर्व. तृ. ६५/८१-८२ ।*

३३. *पूर्णानन्दः परानन्दः पुराणपुरुषोत्तमः । - श्रीगणेशपुराण, १/४६, सहस्रनाम प्रकरण ।*

३४. *परब्रह्मस्वरूपाय निर्गुणाय नमो नमः । चिदानन्दस्वरूपाय वेदानामप्यगोचरः ॥ - पूर्ववत्, २/२७/४ ।*

३५. *सदसद्व्यक्तमव्यक्तं सर्वं हि गणनायकः । - पूर्ववत्, १/१२/९ ।*

३६. *त्वं मूलाधारस्थितोऽसि नित्यम् । शक्तित्रयात्मकः। त्वां योगिनो ध्यायन्ति नित्यम् । - गणेश अथर्वशीर्ष ६ ।*

३७. *रामलाल, 'योगसाधना में श्रीगणेशका चिन्तन', कल्याण, पूर्ववत्, पृ. ३६९ ।*

योगीश्वर श्रीविष्णुद्वारा प्राणायामपूर्वक श्रीगणेशको ध्यान एवं मन्त्रजपपूर्वक आराधना गरिएको विषयमा प्रकाश पारिएको छ ।[७८]

श्रीगणेश गुणातीत, परात्पर परमात्मा हुनुहुन्छ । उहाँ शुद्धसत्त्वरूप र समस्त जीवहरूका भुवनेश्वर हुनुहुन्छ । श्रीगणेशपुराणअन्तर्गत श्रीगणेशगीतामा अनादि, अनन्त, विश्वव्यापक र सर्वविघ्नविनाशक श्रीगणेशलाई योगविद्याका परमज्ञाता मानिएको छ । श्रीगणेशले राजा वरेण्यलाई म तिमीलाई योगमार्ग प्रकाशक गीता सुनाउँछु भनेर आफ्नो योगविज्ञता व्यक्त गर्नुभएको छ ।[७९]

गणेशगीताअनुसार ज्ञानीहरूलाई संसारबाट विरक्त गराउने अमृतमय तत्त्वलाई नै योग मानिएको छ । श्रीगणेशपुराणमा ज्ञानयोगीहरूले हृदयमा विराजमान परब्रह्मको दर्शन गर्ने तथ्य यसरी व्यक्त गरिएको छ - ज्ञानयोगीहरूले जीवन्मुक्त भई ब्रह्मानन्दमा लीन भएर हृदयमा स्थित परब्रह्मको दर्शन गर्दछन्। तिनीहरूले चित्तमा योगद्वारा वशीकृत परब्रह्मको ध्यान गर्दै सम्पूर्ण प्राणीहरूलाई आत्मवत् मान्दछन् ।[८०]

श्रीगणेशले योगसाधनापद्धति प्रकाशित गर्दै भन्नुभएको छ - योगीले आफ्ना मनबाट समस्त कर्महरूको परित्याग गरी सुखपूर्वक जीवनयापन गर्नुपर्दछ।[८१] आत्मानन्दमा रमाउने योगीहरू ब्रह्मा आदि देवताहरूद्वारा वन्दनीय हुने तथ्य व्यक्त गर्दै श्रीगणेशले भन्नुभएको छ - आफ्नो आत्मामा रमाउने र संसारका भोगहरूमा अनासक्त योगीहरूले परम आनन्दको अनुभव गर्दछन् । आत्माको सुख नै अविनाशी सुख हो । विषयमा पाइने सुख सुख होइन । जुन योगी परमात्मरूप श्रीगणेशमा रमण गर्दछन्, ती जीवन्मुक्त हुन्छन् । देहवान् भएर पनि ती विदेह नै हुन्छन् ।[८२]

यस्ता योगीहरू तीनै लोकमा ब्रह्मा आदि देवताहरूद्वारा वन्दनीय हुन्छन् । यस्ता योगप्रतिपाद्य परमशक्ति, चिन्मयज्योति श्रीगणेश आकाशरूप र वायुरूप विकारका आदिकारण, कला एवं कालका कारण हुनुहुन्छ । उहाँ अनेक क्रिया र शक्तिका स्वरूप पनि हुनुहुन्छ भनिएको छ ।[८३] योगसाधनाका प्रबलस्तम्भरूप श्रीगणेश निश्चय नै योगलभ्य परब्रह्म हुनुहुन्छ ।

## ग ) श्रीरामोपासक-सम्प्रदाय

श्रीरामानन्दसम्प्रदायमा श्रीगणेशको पूजा गर्ने विधान रहेको विषय श्रीरामतापिनी उपनिषद्बाट ज्ञात हुन्छ । श्रीरामार्चापद्धतिअनुसार श्रीरामपूजनको प्रारम्भमा श्रीगणेशको पूजा गर्नुपर्दछ । त्यस बेला गरिने श्रीगणेश आवाहनको मन्त्रमा भनिएको छ - हे गणाधिप ! तपाईंलाई नमस्कार छ, हे गजानन ! तपाईं यस पूजास्थलमा आउनुहोस्, पूर्व दिशामा बस्नुहोस् र यो पूजा स्वीकार गर्नुहोस् ।[८४]

गणेश, दुर्गा, क्षेत्रपाल र वाणी यी चार देवता श्रीरामका अङ्ग हुन् भन्ने सिद्धान्त मात्रे रामका उपासकहरूले

७८. प्राणानायम्य मूलेन ध्यात्वा देवं गजाननम् । आवाहन्यादिमुद्राभिः पूजयित्वा मनोमयैः ॥
द्रव्यैर्नानाविधैश्चैव षोडशैरुपचारकैः । जजाप परमं मन्त्रं विष्णुर्योगीश्वरेश्वरः ॥ - श्रीगणेशपुराण, १/२८/६-७ ।

७९. अथ गीतां प्रवक्ष्यामि योगमार्गप्रकाशिनीम् । - पूर्ववत्, २/३८/४ ।

८०. ध्यायन्तः परमं ब्रह्म चित्ते योगवशीकृतम्। भूतानि स्वात्मना तुल्यं सर्वाणि गणयन्ति ते।। - पूर्ववत्, २/१३८/१५-१६ ।

८१. मनसा सकलं कर्म त्यक्त्वा योगी सुखं वसेत् । - पूर्ववत्, २/१४१/११ ।

८२. आनन्दमश्नुते सक्तः स्वात्मारामो निजात्मनि । अविनाशं सुखं तद्धि न सुखं विषयादिषु।।
विषयोत्थानि सौख्यानि दुःखानां तानि हेतवः। उत्पत्तिनाशयुक्तानि तत्रासक्तो न तत्त्ववित्।। - पूर्ववत्, २/१४१/२०-२२ ।

८३. प्रकाशस्वरूपं नभोवायुरूपं विकारादिहेतुं कलाकालभूतम् । अनेकक्रियाऽनेकशक्तिस्वरूपं सदा शक्तिरूपं गणेशं नमामः।। - पूर्ववत्, १/१३/२१ ।

८४. गणाधिप ! नमस्तुभ्यमिहागच्छ गजानन । पूर्वभागे समातिष्ठ पूजनं गृह्यतामिदम् ।। - अवधकिशोर दास, 'रामोपासना में भगवान् गणेश', कल्याण, पूर्ववत्, पृ. ३६५ ।

श्रीरामको मान्त्रिक आराधनाका साथै श्रीगणेशको पनि '**ॐ नमो रामचन्द्राय गं गणेशाय ते नमः**' भन्ने मान्त्रिक आराधना गर्दछन् ।[८५] श्रीरामको स्तुतिप्रसङ्गमा उहाँलाई ब्रह्मरूप, विष्णुरूप र रुद्ररूपका साथै करिरूप पनि मानी नमस्कार गरिएको छ ।[८६] श्रीरामपरक उपासनासाहित्यमा अन्यत्र पनि श्रीगणेशका पवित्र संस्मरण र कीर्तनमा आधारित प्रसङ्गहरू प्राप्त हुन्छन् ।

## घ) शङ्कराचार्य-परम्परा

शङ्कराचार्यको अद्वैत सम्प्रदायमा एकेश्वरवादको विशिष्ट स्थान रहेको छ । अद्वैतपरम्पराका पोषक स्वामी ब्रह्मानन्दसरस्वतीले भनेका छन् – हे शङ्खपाणि नारायण ! कसैले ध्यान गर्न योग्य देवता शिवजीमात्र हुन् भन्दछन्, अरूले ध्येय देवता आद्याभगवतीमात्र हुन् भन्दछन्, कसैले ध्येय देवताका रूपमा सूर्यलाई मात्र स्थान दिन्छन्, अर्काथरि मानिसहरू ध्येय देवता श्रीगणेशमात्र हुन् भन्दछन् । तपाईं भने ती सबै देवताका रूपलाई आत्मसात् गरेर सुहाउनुहुन्छ अर्थात् तपाईंको ध्यान गर्नेले स्वतः ती सबै देवताको ध्यान गर्ने अवसर र पुण्य पाउँछन् । त्यस कारण तपाईं नै मेरा शरणदाता बक्सिनुहोस् ।[८७] श्रीशङ्कराचार्यले '**गणेशपञ्चरत्नम्**' भनेर शिव, शक्ति, गणेश, सूर्य र विष्णुमा एकस्वरूपको दर्शन गरी श्रीगणेशलाई नारायणकै कोटिमा राखेर सम्मान गरेका छन् । शङ्कराचार्यले उपास्य देवताको परिगणना गर्दा आदित्य, देवी, विष्णु, गणेश र महेश्वरको गृहस्थले नित्य पूजा गर्नुपर्ने विधान गरेका छन् ।[८८] शङ्करपरम्पराका मूर्धन्य विद्वान् स्वामी विद्यारण्यले भक्ति प्राप्त गर्न शैव, वैष्णव, शाक्त, सौर, वैनायक र स्कान्द गरी ६ वटा दर्शनको अनुशीलन गर्नुपर्ने कुरा बताएका छन् ।[८९]

शङ्कराचार्यको मतानुसार मूलाधारचक्रमा श्रीगणेशको सत्ता रहेको र सबै देवता गणपतिकै विभिन्न रूप भएको विषय विभिन्न प्रसङ्गमा प्रमाणित गरेका छन् । तिनले सबै देवता निर्गुण र सगुण दुवै रूपमा रहने कुरा बताउँदै भनेका छन् – सम्पूर्ण प्राणीहरूको कल्याण कार्यमा निरन्तर सम्पृक्त रहने, दैत्यरूप हात्तीहरूलाई प्रबल पराक्रमले निरस्त गर्ने, असामान्य उदरका कारण लम्बोदरका नामबाट विख्यात, उत्तम गजाकारको मुखमण्डलले सुहाउनुभएका, भक्तमाथि कृपा एवं क्षमा गर्ने, भक्तहरूलाई यश र हर्ष प्रदान गर्ने, आफूलाई वन्दना गर्ने भक्तहरूको कल्याण गर्ने, सबैभन्दा चहकिला देवता श्रीगणेशलाई प्रणाम गर्दछु ।[९०]

यसरी श्रीगणेशमा लौकिक दृष्टि राखे पनि उनले श्रीगणेशको निर्गुण स्वरूपमा दृष्टिपात गर्दै भनेका छन् – सम्पूर्ण ज्ञानीहरू ओङ्काररूप एकाक्षर, निर्मल, निर्विकल्प, गुणातीत, आनन्दरूप, निराकार, परमपार ओङ्कारको रूपमा जसको आराधना गर्दछन्, ती प्रगल्भ पुराणरूप श्रीगणेशको स्तुति गर्दछु ।[९१]

श्रीगणेशको परम सार यही हो कि उहाँ ओङ्कारका व्यक्त रूप हुनुहुन्छ । माथि जे भनिएता पनि श्रीगणेश शङ्करचार्यका अनुयायीहरूका निमित्त निर्गुण ब्रह्मका रूप हुनुहुन्छ । शङ्कराचार्यद्वारा स्थापित पीठहरूमा श्रीगणेशपूजाको

---

८५. *पूर्ववत् ।*

८६. *नमस्ते ब्रह्मरूपाय विष्णुरूपाय ते नमः । नमस्ते रुद्ररूपाय करिरूपाय ते नमः ॥ – पूर्ववत्, पृ. ३६६ ।*

८७. *ध्येयं वदन्ति शिवमेव हि केचिदन्ये शक्तिं गणेशमपरे तु दिवाकरं वै ॥
रूपैस्तु तैरपि विभासि यतस्त्वमेव तस्मात् त्वमेव शरणं मम शङ्खपाणे ॥ – डा. लक्ष्मीनरसिंह शास्त्री, 'शङ्कराचार्य परम्परा में गणेश', कल्याण, पूर्ववत्, पृ. ६० ।*

८८. *आदित्यमम्बिकां विष्णुं गणनाथं महेश्वरम्। पञ्चयज्ञपरो नित्यं गृहस्थः पञ्च पूजयेत्॥ – पूर्ववत् ।*

८९. *शैवं च वैष्णवं शाक्तं सौरं वैनायकं तथा । स्कान्दञ्च भक्तिमार्गस्य दर्शनानि षडेव हि ॥ – पूर्ववत्, पृ. ६१ ।*

९०. *समस्तलोकशङ्करं निरस्तदैत्यकुञ्जरं दरेतरोदरं वरं वरेभवक्त्रमक्षरम् ॥
कृपाकरं क्षमाकरं मुदाकरं यशस्करं नमस्करं नमस्कृतां नमस्करोमि भास्वरम् ॥ – पूर्ववत्, पृ. ६२ ।*

९१. *यमेकाक्षरं निर्मलं निर्विकल्पं गुणातीतमानन्दमाकारशून्यम् । परम्पारमोङ्कारमाम्नायगर्भं वदन्ति प्रगल्भं पुराणं तमीडे ॥ – पूर्ववत्, पृ. ६३ ।*

परम्परा रहिआएको छ । उच्छिष्टगणपतिसहस्रनाम स्तोत्रमा भनिएको छ – कामकोटिपीठमा विराजमान श्रीशङ्कराचार्यद्वारा पादुकासेवित श्रीगणेश, शृङ्गेरीपुरमा विराजमान सुरेशाचार्यद्वारा सम्पूजित श्रीगणेश, द्वारकापीठमा विराजमान पद्मपादाचार्यद्वारा चरणकमलमा सेवित श्रीगणेश र जगन्नाथपुरमा विराजमान तोटकाचार्यद्वारा सेवित ज्योतिष्पीठमा विराजमान श्रीगणेश हुनुहुन्छ ।[६२]

यसरी शङ्कराचार्यद्वारा स्थापित मठहरूमा श्रीगणेशको बाह्यपूजा आत्मसाक्षात्कारसाधनाको आवश्यक अङ्ग मानिएको तथ्य प्रमाणित हुन्छ । शङ्कराचार्यका अनुयायीहरूका निमित्त श्रीगणेश र अन्य देवतामा कुनै अन्तर छैन। साम्प्रदायिकता, धर्मान्धता र तान्त्रिकताको आडमा गरिने अनाचारका लागि पनि त्यहाँ कुनै ठाउँ छैन । तिनीहरूका दृष्टिमा गणपति सगुण ईश्वर र निर्गुण ब्रह्म पनि हुनुहुन्छ । यसै तथ्यलाई प्रतीत गराउने राघवचैतन्यरचित **महागणपतिस्तोत्र**को मन्त्रात्मक पद्यमा भनिएको छ – 'विष्णु, शिव आदि तत्त्व जसका शरीर हुन्; जसले आफ्नो हुङ्कारबाट समस्त दैत्यसमूहलाई समाप्त पारिदिनुभएको छ; जसको दीप्ति अत्यन्त चमत्कृत छ; जसले आनन्दमय ज्ञानलहरीबाट समस्त वासनाका ऊर्मिहरूलाई विध्वस्त पार्नुभएको छ; जसको सम्मोहक र मनोहर तेज सर्वत्र व्याप्त भएर रहेको छ; ती परमात्मा वक्रतुण्ड गणेशलाई नमस्कार गर्दछु ।'[६३]

उक्त सबै तथ्यहरूको आधारमा शङ्कराचार्यपरम्परामा श्रीगणेश परिपूर्ण ब्रह्मका रूपमा सम्मानित हुनुहुन्छ भन्न सकिन्छ ।

## ङ) जैनसिद्धान्त

महाभारतको सङ्कलन गरी लिपिबद्ध गर्ने श्रीगणेशको मान्यता सनातनधर्ममा रहेझैं जैनमतमा पनि ज्ञानको सङ्कलन गर्ने गणधर अर्थात् श्रीगणेशको मान्यता रहँदै आएको छ । सर्वज्ञता प्राप्त गरेका अरहन्त अर्थात् तीर्थङ्करहरूले दिने उपदेशका ग्राहक गणधर नै हुन्छन् । तिनले ज्ञानको सङ्कलन १२ अङ्ग र १४ पूर्वाहरूमा गर्दछन् । गणधरहरू मति, श्रुत, अवधि (परोक्षविषयको सीमित ज्ञान) र मनःपर्ययज्ञान (अरूको मन तुरुन्तै बुझ्न सक्ने ज्ञान) ले सम्पन्न हुन्छन् । तीर्थङ्करहरूले कसैलाई शिष्य बनाउने र उपदेश दिने काम गर्दैनन् । तीर्थङ्करहरूका साथ जुन साधुसङ्घ रहन्छ त्यसका नियामक गणधरहरू हुन्छन् । तीर्थङ्कर अनादिसिद्ध भएझैं गणधर पनि अनादिसिद्ध मानिन्छन् ।

वर्तमान कल्पका अन्तिम तीर्थङ्कर महावीर स्वामीलाई केवलज्ञान भयो । उहाँको दिव्यध्वनि (उपदेश) श्रवण गर्न दिव्य सभाभवनमा इन्द्र आदि देवता, मनुष्य, पशु एवं पक्षी बसिरहेका थिए । तर योग्यपात्रको अभावमा ६३ दिनसम्म भगवान्ले दिव्यध्वनिको उच्चारण गर्नुभएन । इन्द्रले रहस्य थाहा पाएर तत्कालीन महाविद्वान् र ५०० शिष्यहरूद्वारा घेरिएका इन्द्रभूति गौतमलाई महावीरसँग शास्त्रार्थ गर्न निमन्त्रणा गरे । दिव्य सभाभवनबाहिर रहेको मानस्तम्भको दर्शनपछि गौतमको गर्व गलित भयो र ती विनयशील भए । त्यसपछि ती दिव्य सभाभवन (समवशरण) मा प्रविष्ट भए । गौतमको प्रवेशसाथ महावीरको दिव्य-ध्वनि फैलिन थाल्यो । त्यसबाट गौतमको शङ्का समाधान भयो र गर्व गलित भयो । निर्मल भावोदयका कारण इन्द्रभूति गौतम बुद्धि, औषध, अक्षय, ऊर्ज, रस, तप र विक्रिया नामक सात प्रकारका शक्ति, मति, श्रुत, अवधि एवं मनःपर्ययज्ञान गराउने ज्ञानका धारक भए । त्यस कारण ती

---

६२. *कामकोटिपीठवासः शङ्करार्चितपादुकः । शृङ्गेरीपुरस्थः स सुरेशार्चितविभवः ॥*
*द्वारकापीठसम्बद्धः पद्मपादार्चिताङ्घ्रिकः । जगन्नाथपुरस्थस्तु तोटकाचार्यसेवितः ॥*
*ज्योतिर्मण्डलमध्यस्थो हस्तामलकपूजितः ॥* – पूर्ववत्, पृ. ६१ ।

६३. *इत्थं विष्णुशिवादितत्त्वतनवे श्रीवक्रतुण्डाय हुङ्कारक्षिप्तसमस्तदैत्यपृतनाव्राताय दीप्तत्विषे ।*
*आनन्दैकरसावबोधलहरीविध्वस्तसर्वोर्मये सर्वत्र प्रथमानमुग्धमहसे तस्मै परस्मै नमः ॥* – एस. नरसिंह शास्त्री, 'शङ्कराचार्य परम्परा में श्रीगणेश', कल्याण, पूर्ववत्, पृ. ६२ ।

महावीर स्वामीका मुख्य गणधरका पदमा नियुक्त भए । तिनले त्यसै दिन एक मुहूर्त्तमा नै १२ अङ्ग र १४ पूर्वाहरूको सङ्कलन गरे । जैनमतमा यिनै इन्द्रभूति गौतम गणधरलाई गणेश भनिन्छ । सबै तीर्थङ्करहरूद्वारा पूजित महावीर स्वामीको दिव्य-ध्वनि ओङ्काररूप निरक्षरात्मक भएता पनि सर्वभाषामय थियो अर्थात् त्यो मनुष्य, पक्षी, पशु आदि श्रोताहरूको कर्णकुहरमा पुगे पछि तिनकै भाषाको रूपमा परिणत हुन्थ्यो । त्यस दिव्य-ध्वनिमा समस्त विश्वका सम्पूर्ण पदार्थ र विषयहरूको शाब्दिक ज्ञान-विज्ञान सबै विद्या र कला प्रकट हुन्थे । तसर्थ गणधरद्वारा सङ्कलित शास्त्र पनि सबै विषय, पदार्थ, विद्या र कलाहरूको शाब्दिक ज्ञान एवं विज्ञानरूप थिए ।

यद्यपि सर्वत्र तीर्थङ्करहरूको सम्पूर्ण ज्ञानको अत्यल्प अंशमात्र दिव्य-ध्वनिद्वारा प्रकट हुन्थ्यो तापनि त्यो प्रकटित शाब्दिक ज्ञान पनि ज्ञान-विज्ञानको महासागरसमान थियो । यसबाट पनि गणेशरूप गणधरको अनन्तज्ञान प्रमाणित हुन्छ । जैनधर्म भारतीयोपमहाद्वीपको प्राचीन धर्म हो । यसका श्वेताम्बर र दिगम्बर गरी दुई समुदाय प्रसिद्ध छन् । माथि चर्चा गरिएको विषय श्वेताम्बर समुदायको हो । दिगम्बर सम्प्रदायको साहित्य, परम्परा, संस्कृति र धर्ममा गणेशसम्बन्धी सामग्री पाइँदैन ।[१४]

जैन सम्प्रदायमा विवाहकालमा विनायकयन्त्रको पूजा गर्ने प्रचलन छ । त्यस-बेला पढिने श्लोकहरूमध्ये दुई श्लोकको तात्पर्यार्थ यस्तो छ – 'हे गणधर ! तपाईं नै गण र मुनिगणका अधीश्वर हुनुहुन्छ । जसले गणेशनामबाट तपाईंको स्तुति गर्दछन्, ती आयतश्रेयस (विस्तृत कल्याण)का अधिकारी हुन्छन् र अनेक विघ्नहरूको शमन गर्न समर्थ हुन्छन् अर्थात् विघ्नशान्ति तिनको सामान्य कौतुकको विषय बन्दछ । तपाईं मेरा विनायक हुनुहुन्छ, तपाईंको भाव प्रत्यक्ष योगबाट अवरुद्ध हुँदैन । अतः तपाईंको नाम लिनाले मात्र विघ्नरूप शत्रु पराजित हुन्छन् भने यसमा विस्मय गर्नुपर्ने कुनै कुरा छैन ।'[१५] यसरी जैनसिद्धान्तमा भगवान् गणेशको स्मरण, आराधना र उपासना प्रचलित रहेको तथ्य प्रमाणित हुन्छ ।

## च) बौद्धसिद्धान्त

बौद्ध धर्म, संस्कृति र साधनाबाट विश्वको ठूलो भाग प्रभावित छ । शील, समाधि र प्रज्ञा यी तीन विशेषताका कारण बौद्धहरू जहाँ जहाँ गए त्यहाँको समाजलाई तिनीहरूले सहजतापूर्वक प्रभावित गरे । बौद्धहरूले जहाँ गए पनि र जहाँ रहे पनि त्यस जाति र राष्ट्रमा प्रचलित देवी-देवताहरूको अनादर र विरोध नगरी तिनलाई पनि आफ्नो धर्मको अङ्गका रूपमा स्वीकार गरे । भारतवर्षमा प्रचलित श्रीगणेश, इन्द्र, ब्रह्मा, सनत्कुमार, प्रजापति, सूर्य, चन्द्रमा, वरुण, लक्ष्मी, श्रद्धा, आशा, चतुर्महाराजिकदेव, यक्ष, नाग, वृक्ष, गन्धर्व, गरुड, वृषभ, कुबेर आदि देवी-देवता र ती समानका विषयलाई त्यसैरूपमा अङ्गीकार गरी पूजा र आराधना गरे । रूपलाई राष्ट्रिय र विचारलाई बौद्ध राख्ने कलाका कारण बौद्धधर्म संसारमा लोकप्रिय भयो।

सनातन धर्मको देववाद ज्यादै प्रसिद्ध छ । देवताहरूको लामो सूचीमा श्रीगणेशको विशिष्ट स्थान रहेको छ। सनातन-धर्मका अनुयायीहरू प्रत्येक कार्यलाई **श्रीगणेशाय नमः** भनेर प्रारम्भ गर्दछन् । बौद्ध धर्मको महायान सम्प्रदायका वज्रयान शाखाका साधकहरूले पनि त्यसरी नै साधना र सिद्धिका लागि श्रीगणेशलाई सहयोगी देवताको रूपमा स्वीकार गरी आराधना गर्ने परम्परा बसाएको पाइन्छ ।

---

१४. *ताराचन्द पाण्ड्या, 'जैनमत में गणेशका स्वरूप', कल्याण, पूर्ववद्, पृ. ३७४ ।*

१५. *गणानां मुनीनामधीशस्त्वमेव गणेशाख्यया ये भवन्तं स्तुवन्ति । सदाविघ्नसन्दोहशान्तिर्जनानां करे संलुठत्यायतश्रेयसानाम् ॥*
*अतस्त्वमेवासि विनायको मे इष्टेष्टयोगानलरुद्धभावः । त्वन्नाममात्रेण पराभवन्ति विघ्नारयस्तर्हि किमत्र चित्रम् ॥*
*– भवरलाल नाहटा, श्वेताम्बर जैन कवियों द्वारा श्रीगणेशका स्मरण, कल्याण, पूर्ववत्, पृ. ३७२ ।*

**गणपतिहृदय** नेपाली बौद्धसाहित्यको प्रमुख ग्रन्थ हो । यस ग्रन्थरत्नमा प्रस्तुत **गणपतिवन्दनालाई** अध्ययन गरेपछि बौद्धमतमा र बौद्धसाहित्यमा श्रीगणेशपूजाको विशिष्ट स्थान रहेको तथ्य ज्ञात गर्न सकिन्छ। **गणपतिहृदयअनुसार** तथागतबुद्धले राजगृहमा विहार गर्नुहुँदा आफ्ना शिष्य आनन्दलाई भन्नुभयो – हे आनन्द ! जसले गणपतिहृदयको श्रद्धापूर्वक अध्ययन गर्दछ र सुन्दछ, त्यसका सबै इच्छा पूरा हुन्छन् । गणपतिहृदयका प्रत्येक मन्त्र **ॐ नमोऽस्तु ते गणेशाय, गणपतये स्वाहा, ॐ गणपतये स्वाहा,** आदि मन्त्रहरूबाट आरम्भ गरिएका छन् ।

गणपतिहृदयका प्रारम्भिक पङ्क्ति यसप्रकार छन् – '**ॐ नमो भगवते आर्यगणपतिहृदयाय, ॐ नमो रत्नत्रयाय, एवं मयाश्रुतमेकस्मिन् समये राजगृहे विहरति स्म गृद्धकूटपर्वते, महता भिक्षुसङ्घेन सार्द्धम् । त्रयोदशचभिक्षुशतैश्च सम्बहुलैश्च बोधिसत्त्वो महासत्त्वः। तेन खलु पुनः समये भगवान् आयुष्मान् आनन्दमामन्त्रयते स्म । यः कश्चित् कुलपुत्र आनन्द ! इमानि गणपतिहृदयानि धारयिष्यति वाचयिष्यति पर्यवाप्स्यति प्रवर्तयिष्यति, तस्य सर्वाणि कार्याणि सिद्धानि भविष्यन्ति । तद् यथा – ॐ नमोऽस्तु ते गणेशाय, गणपतये स्वाहा ।**'

बौद्धधर्मको वज्रयान-शाखाका बौद्धहरूले श्रीगणेशको स्तुतिविना कुनै पनि मन्त्र सिद्ध नहुने कुरामा विश्वास गर्दछन् । नेपाल र तिब्बतका बौद्ध धर्मावलम्बीहरूका घर-घरमा तथागतका मूर्तिका साथ श्रीगणेशका मूर्ति पनि राखिएका हुन्छन् । यी बौद्धहरूले श्रीगणेशको पूजा विघ्नको नाश र ऐश्वर्यको प्राप्तिका लागि गर्दछन् ।

नेपाल, भारत, बर्मा, थाइल्याण्ड, चीन, जावा, तिब्बत, अफगानिस्तान, मध्य एशिया, श्याम, कम्बोडिया, तुर्किस्तान, मङ्गोलिया, बोर्नियो, बालीद्वीप, जापान, इण्डोनेशिया, भियतनाम आदि तमाम बौद्धधर्मबाट प्रभावित देशहरूका साहित्य र साधनामा श्रीगणेशपूजाको विशेष स्थान रहेको छ । उक्त राष्ट्रहरूमा प्राप्त पुरातात्त्विक सामग्रीले पनि त्यहाँ रहेको श्रीगणेश पूजाको प्राचीन परम्परालाई प्रमाणित गर्दछन् । वास्तवमा श्रीगणेशपूजाको परम्परा बौद्धसम्प्रदायको माध्यमबाट विश्वका अनेक देशहरूमा व्याप्त भएको छ । महायान बौद्ध सम्प्रदायमा श्रीगणेशपूजन संस्कार र संस्कृतिको अङ्ग बनेर रहेको छ ।[१६]

१६. *अक्षयवरपाणि त्रिपाठी, 'बौद्धधर्म साहित्य एवं संस्कृति में श्रीगणेश' कल्याण, पूर्ववत्, पृ. ३७५ ।*

## परिच्छेद - छ

# नेपाली जनजीवनमा श्रीगणेश

## ६.१ नेपालीहरूका आराध्य देवता श्रीगणेश

नेपाल भगवान् श्रीगणेशको क्रीडाभूमि र श्रीगणेशभक्तहरूको साधनाभूमि पनि हो । नेपालका घरघरमा गरिने पञ्चायन देवताको आराधनाअन्तर्गत श्रीगणेशको पूजन, माङ्गलिक एवं धार्मिक अवसरमा विघ्ननिवारणका लागि गरिने श्रीगणेशको प्रथम पूजा, परब्रह्मरूप श्रीगणेशको प्रीतिका लागि गरिने श्रीगणेशपुराण यज्ञ, विभिन्न कामनासिद्धिका लागि गरिने श्रीगणेशव्रत, श्रीगणेशमन्त्रको जपानुष्ठान र वैदिक एवं तान्त्रिकविधिबाट मूर्ति प्रतिष्ठा गरी गरिने श्रीगणेशको उपासनाका कारण गौरीशंकरको विहारभूमि नेपाल परब्रह्मरूप गौरीनन्दन श्रीगणेशको लीलाभूमिका रूपमा पनि यशस्वी बनेको छ ।

काठमाडौं उपत्यकाका चार एवं आठ विनायकका मन्दिर एवं अन्य प्रसिद्ध श्रीगणेशमन्दिर, श्रीगणेशपीठ, नेपाल अधिराज्यका प्रत्येक जिल्लामा रहेका श्रीगणेशका प्राचीन एवं अर्वाचीन मन्दिर, श्रीगणेशमूर्ति एवं श्रीगणेशतीर्थहरूका कारण नेपाल श्रीगणेशको आराधनाका लागि अत्यन्त उपयोगी पवित्रभूमिका रूपमा पनि गौरवशाली बनेको छ ।

नेपाल राष्ट्रका विभिन्न भागमा रहेका श्रीगणेशमूर्ति, श्रीगणेशमन्दिर एवं श्रीगणेशतीर्थ र काठमाडौं, पाटन एवं भक्तपुरका स्थानीय श्रीगणेशमन्दिर एवं मूर्ति, श्रीगणेशमा अपरिमित आस्थाको उद्रेकका कारण हिमशृङ्गलाई नै श्रीगणेशको आकार मानी श्रीगणेशहिमालका रूपमा सम्मान गर्ने जनताको मनोवृत्तिजस्ता विशेषताका कारण नेपाल श्रीगणेशको उपासना गर्ने पवित्र एवं संस्कारधायक क्षेत्रका रूपमा परिचित छ । विनायकका असंख्य स्थानीय मूर्तिहरूका कारण विनायकपुरीका रूपमा विख्यात बनेपा, विभिन्न स्थानमा रहेका श्रीगणेशकुण्ड, श्रीगणेशगुफा, श्रीगणेशपीठ एवं श्रीगणेशतीर्थहरूको उपस्थिति, गणेशखोला, गणेश गाविस, गणेशपुर, विनायकपुरजस्ता नामहरूलाई आत्मसात् गरी प्रसिद्ध भएका गाउँ वा नगरक्षेत्र, श्रीगणेशसँग सम्बन्धित संस्था एवं व्यक्तिहरूका नामले समेत नेपाल र श्रीगणेशको आत्मीय सम्बन्ध प्रकट गर्दै नेपाललाई श्रीगणेशमय तुल्याएका छन्।

## ६.२ नेपालमा श्रीगणेश-आराधनाको ऐतिहासिक पर्यवेक्षण

संस्कृति, साधना र कलाका माध्यमले श्रीगणेशलाई आत्मैदेखि पछ्याउने वर्तमान नेपाली समाजको श्रीगणेशप्रतिको परिपक्व आस्था, भक्ति, श्रद्धा र सम्मान हुनुको कारण ऐतिहासिककालदेखि नै गर्दै आएको श्रीगणेशको उपासना नै हो।

लिच्छविकाल नेपालको स्वर्णयुग हो । यो युगभन्दा पहिलेको किरात शासनकालको सामाजिक, सांस्कृति, धार्मिक र राजनीतिक चित्र त्यति स्पष्ट छैन । लिच्छविकाल (वि.सं. ५२१-७९० सम्म) भाषा, साहित्य, धर्म, दर्शन, कला एवं राजनीतिका दृष्टिबाट ज्यादै माथि उठेको समृद्ध समय हो भन्ने कुरा लिच्छविकालका उच्चस्तरीय शिलालेखहरूबाट प्रमाणित हुन्छ । लिच्छविकालका शिलालेखहरूमा अधिक मात्रामा श्रीगणेशसम्बन्धी चर्चा नपाइएकाले त्यति बेला नेपाली समाज श्रीगणेशसँग अपरिचित थियो कसैले भन्न सक्छ । तर, त्यसो होइन । नेपालमा लिच्छविवंशका राजाहरूको शासन चलिरहँदा भारतमा गुप्तवंशी राजाहरू शासन गरिरहेका थिए । भौगोलिक निकटता र धार्मिक एवं सांस्कृतिक समानताका कारण भारत र नेपालको सुमधुर सम्बन्ध थियो । वैवाहिक आदान-प्रदान हुन्थे । गुप्तहरू वैष्णवधर्मका अनुयायी भए तापनि श्रीगणेशका पनि भक्त थिए । त्यस बेला भारतमा श्रीगणेशमन्दिर र श्रीगणेशमूर्तिहरूको प्रतिष्ठा भएझैं नेपालमा पनि

श्रीगणेशमन्दिर र श्रीगणेशमूर्तिको निर्माण एवं प्रतिष्ठा अवश्य गरिएको हुनुपर्छ । वि.सं. ६१७ मा स्थापित छवटा अभिलेखमा गणदेवनामक राजाको उल्लेख गरिएको छ । यसबाट तत्कालीन समाजको नामकरण संस्कारमा गणहरूका देवता श्रीगणेशको प्रभाव परेको बुझिन्छ ।

यसैगरी वि.सं. ९२४ को हस्तलिखित ग्रन्थ सहोत्तरतन्त्रमा गणदेवकुलको उल्लेख गरिएको छ । देवकुलको अर्थ मन्दिर हुन्छ । यसबाट शिवगणका रूपमा श्रीगणेशलाई प्रधानता दिने चलन लिच्छविकालमा रहेको कुरा सिद्ध हुन्छ ।[१] उत्तर लिच्छविकालमा निर्मित उमामहेश्वरका मूर्तिहरूको मुन्तिर शिवगणका रूपमा नन्दी, भृङ्गी, वीरभद्र र श्रीगणेशलाई देखाइएको पाइन्छ । उमामहेश्वर मूर्तिफलकमा देखाइने श्रीगणेशमूर्तिहरू नृत्यमुद्रामा र आसनमुद्रामा रहेका छन् । लिच्छविकालका त्यस्ता मूर्तिहरू चतुर्भुज, सरल र मुकुटरहित छन् । ती मूर्तिहरूको घाँटीमा रत्नमाला र पेटमा यज्ञोपवीतका रूपमा सर्पहरू रहेका छन् । तिनीहरूको घाँटीदेखि घुँडासम्म अथवा पाउसम्म दुई खुट्टाको बीचबाट धोती लत्रेको देखाइएको छ । चार हातमा क्रमशः परशु, अक्षमाला, मूला र लड्डु रहेका हुन्छन् । यस्ता मूर्तिहरू काठमाडौं उपत्यकामा छ्यापछ्याप्ती पाइन्छन्। उमामहेश्वर-मूर्तिफलकबाहेक कार्तिकेय-मूर्तिफलकमा पनि त्यस्ता मूर्ति पाइन्छन् । काठमाडौं उपत्यकामा छरिएर रहेका श्रीगणेशमूर्तिहरूमा अभिलेखसमेत भेटिएका भए धेरै कुरा खुल्ने थियो । धेरै मूर्तिहरूको अभिलेख नपाइएता पनि मूर्तिका विशेषताहरूबाट काल निर्णय गर्न भने गाह्रो छैन । काठमाडौंमा व्यापक रूपमा पाइने श्रीगणेशमूर्तिहरूबाट लिच्छविकाल, मल्लकाल र शाहकालमा समेत नेपालमा श्रीगणेश-उपासना गर्दैआएको वास्तविकता प्रकट हुन्छ । लिच्छविकालका अभिलेखहरूको आरम्भमा ओङ्कार राखिनु र श्रीगणेशलाई उपनिषद्हरूमा ओङ्काररूप मानिनुले पनि नेपालमा श्रीगणेश आराधना प्राचीनकालदेखि नै हुँदै आएको स्पष्ट हुन्छ ।

विष्णु, शिव, सूर्य र देवीका स्वतन्त्र मूर्तिजस्तै श्रीगणेशका पनि स्वतन्त्र मूर्तिहरू पाइने हुनाले लिच्छविकालमा श्रीगणेशको राम्ररी महत्त्वबोध गरिएको पुष्टि हुन्छ । लिच्छविकालको एक्लो श्रीगणेशमूर्ति देवपाटनको पिङ्गलास्थानमा रहेको छ । अर्धपर्यङ्कासनमुद्रामा अवस्थित यो द्विभुज मूर्ति मुकुटरहित र सादा छ । कालो ढुङ्गामा बनेको यो मूर्ति उमामहेश्वरफलकमा भेटिने श्रीगणेशमूर्तिकै शैलीमा कुँदिएको छ । पाँचौं शताब्दीतिरका हुनसक्ने द्विभुज, गजानन, सर्पयज्ञोपवीतधारी लम्बोदर श्रीगणेशमूर्तिहरू उपत्यकाका देवपाटन, साँखुबजार, पाटनढोका, धोबीचौर, धुम्वाराही, टङ्गाल आदि स्थानमा रहेका छन् । चाँगुनारायणस्थानमा सातौं शताब्दीतिर लिच्छविलिपिमा लेखिएको श्रीगणेशमूर्तिसमेतको अभिलेख प्राप्त भएको छ । त्यस मूर्तिका स्थापक प्राणधर शर्मा भनी उल्लेख गरिएको छ । यसैताका काठमाडौं यङ्गाल मजिमपाटमा समेत श्रीगणेशमूर्ति स्थापना गरिएका प्रमाण भेटिएका छन् ।[२]

फर्पिङका गोरे श्रीगणेश, पाटनका पिलाँछे श्रीगणेश र पशुपतिबाहिर पश्चिम ढोकामा रहेका श्रीगणेश पनि लिच्छविकालको उत्तरार्धमा स्थापित श्रीगणेश हुन् । हाँडीगाउँ टङ्गाल दरबारनेर उत्तर लिच्छविकालको विशाल श्रीगणेशमूर्ति रहेको छ । राजा शिवदेवले गजकर्णक श्रीगणेशको पत्ता लगाई जगाएको तथ्य पनि जानकारीमा आएको छ ।[३] पाटन गैंचाननीको शिवपरिवार मूर्तिको तल्लो भागमा श्रीगणेशको आकृति कुँदिएको छ । ने.सं. १३२ अर्थात् ई. १०१२ मितिमा त्यहाँ थापिएको अभिलेखमा शिवपरिवारगण र श्रीगणेशको स्तुति गरिएको छ ।[४]

पशुपतिको बाहिरी मूल ढोकानेर नृत्यमुद्रामा रहेको श्रीगणेशमूर्तिलाई नवौं वा दसौं शताब्दीको मानिएको छ ।

---

१. डा. गोविन्द टन्डन, काठमाडौं अधित्यकाका गणेशमूर्तिहरू, एसियाली अध्ययन संस्था, कीर्तिपुर, २०४२, पृ. ३० ।

२. डा. जगदीशचन्द्र रेग्मी, 'श्रीगणेश नेपालको धार्मिकपरम्परामा', अप्रकाशित शोधनिबन्ध ।

३. पूर्ववत् ।

४. पूर्ववत् ।

लुमडी भद्रकालीस्थानमा रहेको भव्य श्रीगणेशमूर्तिलाई पनि उक्त समयकै मानिन्छ ।[५]

लिच्छविकालदेखि नै प्रख्यात श्रीगणेश मल्लकालमा झन् प्रसिद्ध भए । मध्यकालकाजस्ता देखिने श्रीगणेशमूर्तिहरू उपत्यकामा धेरै पाइन्छन् । तर, तीमध्ये अनेक मूर्तिहरूको अभिलेख नभेटिएकाले कसले कसरी कुन उद्देश्यले कतिबेला ती मूर्तिहरूको स्थापना गरे भन्न सजिलो छैन । जयस्थिति मल्लले कुम्भेश्वर मन्दिरनेरको तलाउ सफा गर्दा प्राप्त गरेका देवताका मूर्तिहरूमा श्रीगणेशको मूर्ति पनि थियो । पछि उनले ती सबै मूर्तिहरूको स्थापना गरेका थिए ।[६] राजा जयस्थिति मल्लको पालामा असन र ज्याठाटोलको बीचमा रहेको त्यौडमा श्रीगणेशमूर्ति स्थापना गरिएको कुरा वंशावलीमा उल्लेख गरिएको छ ।[७]

मध्यकालीन नेपालको साहित्यिक स्रोतको अनुशीलन गर्दा ई. १३३९ मा विनायकस्तवराजनामक स्तोत्रग्रन्थको पाण्डुलिपि तयार गरिएको तथ्य अवगत हुन्छ ।[८] पाटन विक्रमबहिलको ने.सं. ५३६ अर्थात् ई. १४१६ को अभिलेखमा श्री श्री श्री यंदुविनायक देवको स्थापना गरिएको अभिलेख रहेको छ । श्रीगणेशको स्तुतिसमेत रहेको उक्त अभिलेख आश्विन शुक्ल पूर्णिमा मङ्गलबारका दिन थापिएको थियो ।[९] पशुपतिनाथ मन्दिरमा रहेको ने.सं. ५९१ अर्थात् ई. १४७१ को अभिलेखमा पञ्चमुखी पशुपतिको भैरवका रूपमा स्तुति गर्दा श्रीगणेशको पनि स्मरण गरिएको छ ।[१०]

राजा यक्ष मल्लले भक्तपुरको राजधानीमा सुन्धारा बनाएको उपलक्ष्यमा लेखिएको अभिलेखमा धारास्थापनाको उपलक्ष्यमा होम गर्दा श्रीगणेशका लागि पनि होम गरिएको कुरा उल्लेख गरिएको छ ।[११] भक्तपुर इमाडोलमा रहेको श्रीगणेशमूर्तिको पादपीठमा स्थापित ई. १५०० को अभिलेखमा कसैले दिवंगत पुत्र जयहरिको मोक्षप्राप्तिका लागि श्रीगणेशमूर्तिको प्रतिष्ठा गरेको कुरा उल्लेख गरिएको छ ।[१२] नालाको श्रीगणेशमूर्तिको पादपीठमा रहेको ने.सं. ६३७ अर्थात् ई. १५१७ को अभिलेखमा शुभराज भारी नामक भक्तले आफ्ना दिवंगत छोराको नाममा श्री ३ विनायक मूर्ति प्रतिष्ठा गरेको कुरा उल्लेख गरिएको छ ।[१३]

भादगाउँदेखि दुई माइल पूर्व साँगामा ने.सं. ५७३ को एउटा श्रीगणेशमूर्तिको पादपीठको अभिलेखमा श्रीगणेशको स्तुति रहेको छ । त्यसमा सपत्नीक भीमदत्त वर्माले छोरा, छोरी र धनसम्पत्तिको वृद्धिका लागि गणेश्वर देव नामक श्रीगणेशको स्थापना गरेको कुरा उल्लेख गरिएको छ ।[१४] बकुटोल बनेपाको श्रीगणेश मन्दिरमा रहेको मूर्तिमा ने.सं. ६३७ लेखिएको छ ।[१५] नुवाकोट श्रीगणेश मन्दिरको श्रीगणेशमूर्तिको पादपीठमा रहेको अभिलेखबाट उक्त श्रीगणेशमूर्ति ने.सं. ६७६ अर्थात् ई. १५५६ मा उजोत सिंहहरूले श्री श्री श्री विनायक मूर्तिको प्रतिष्ठा गरेको कुरा उल्लेख गरिएको छ ।[१६]

भक्तपुरका राजा त्रैलोक्य मल्लले बिस्केट जात्रा चलाएको अवसरमा टोलटोलमा श्रीगणेशको खटजात्रा चलाएको

---

५ पूर्ववत् ।
६ पूर्ववत् ।
७ पूर्ववत् ।
८ *Milan Ratna Shakya, Ganesh in Medieval Nepal. Published by Rupa Co. 7/16, Ansari Road, Darya ganj, New Delhi, 2006, P. 23.*
९ डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।
१० पूर्ववत् ।
११ पूर्ववत् ।
१२ पूर्ववत् ।
१३ पूर्ववत् ।
१४ डा. गोविन्द टण्डन, पूर्ववत्, पृष्ठ ३९ ।
१५ पूर्ववत् ।
१६ डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।

कुरा भाषावंशावली- भाग २ बाट ज्ञात हुन्छ ।[१७] भक्तपुर तौमडीको ने.सं. ६९२ अर्थात् ई १५७२ को अभिलेखमा त्रैलोक्य मल्लले शैवमठ तयार गरेर शिवजीको स्थापना गरी गुठी बन्दोबस्त गरेका थिए । पछि आएर राजा रणजित मल्लले ने.सं. ८६२ अर्थात् ई. १७४२ मा अनेक देवीदेवताका साथै श्रीगणेशको प्रीतिका लागि जग्गा गुठी राखेको विवरण प्राप्त भएको छ ।[१८] पाटनका राजा सिद्धिनरसिंह मल्लले ने.सं. ७४१ अर्थात् ई. १६२१ मा आफ्नो दरबारको दायाँतर्फ पञ्चमुखी श्रीगणेशको स्थापना गरेको कुरा भाषावंशावली भाग-२ बाट ज्ञात हुन्छ ।[१९] भक्तपुर सुमधिटोलको ने.सं ७५१ अर्थात् ई. १६३१ को अभिलेखबाट वरवमसिंह दर्शनधारीले बाबुको नाममा महाभैरव, छोराको नाममा महालक्ष्मी र आफ्नो नाममा सिद्धिविनायकको स्थापना गरेको विषय ज्ञात हुन्छ ।[२०]

भक्तपुर गोलमाडी टोलमा रहेको श्रीगणेश मन्दिरमा ने.सं. ७६२ अर्थात् ई. १६४२ मा थापिएको अभिलेखमा त्यस टोलका मुख्य मुख्य मानिसहरूले मिलेर टोलगणेशका रूपमा त्वारगणेशको स्थापना गरेको कुरा खुलाइएको छ ।[२१] भक्तपुर कुमालटोल श्रीगणेशस्थानको ने.सं. ७७१ को अभिलेखमा यट्खा टोलका शिल्पकार नारायण सिंहले श्रीगणेशको प्रीतिका लागि देवालय बनाई गजुर चढाएर प्रतिष्ठा गरिएको विषयमा प्रकाश पारिएको छ ।[२२] ने.सं. ७७४ मा ठिमी चपाचोटोलको श्रीगणेशमन्दिरको अभिलेखमा उक्त मन्दिर बनाएको उल्लेख गरिएको छ ।[२३] ने.सं. ७७४ मा श्रीगणेशको मूर्तिमा पसिना आएकाले होम र बलिद्वारा स्वस्तिशान्ति गरिएको वर्णन पाइन्छ ।[२४]

कान्तिपुरका राजा प्रताप मल्लले मरुटोल काठमाडौंमा नृत्यनाथमन्दिर बनाएपछि नृत्योत्सवको आयोजना गर्दा श्री श्री श्री श्रीगणेशपरिवारको स्थापना गरिएको तथ्य त्यहाँ रहेको अभिलेखबाट ज्ञात हुन्छ । वर्तमान समयमा पनि सङ्गीतका देवता नाट्येश्वरको आराधना गर्दा श्रीगणेशको पनि सम्मान गर्ने परम्परा रहिआएको छ । यिनै प्रताप मल्लले उपत्यकाका अनेक पीठहरूको मान्यता गर्दा श्रीगणेशको पनि मान्यता गरेको उल्लेख पाइन्छ ।[२५] प्रताप मल्लको समयमा चाबहिलका श्वेतविनायक, चोभारका चन्द्रविनायक र भक्तपुरका सूर्यविनायक तीन सहरका मूल श्रीगणेश हुन् भन्ने धारणा उपत्यकावासीहरूमा रहेको तथ्य भाषावंशावली भाग-२ बाट ज्ञात हुन्छ ।[२६]

ने.सं. ७७५ र ने.सं ९३५ का कमलविनायक मन्दिरका अभिलेखहरूबाट त्यस बेला कमलविनायकप्रति जनजीवनमा असीम आस्था रहेको तथ्य ज्ञात हुन्छ ।[२७] देवपाटन जयवागीश्वरी मन्दिरनेरको श्रीगणेशको सानो मन्दिरमा रहेको ने.सं. ७७७ अर्थात् ई. १६५७ को अभिलेखबाट पशुपतिका अडिर सुरपुरी भारोले आफ्ना दिवंगत छोरा विश्वनाथको स्वर्गप्राप्तिको कामनाले श्रीगणेशमन्दिरको फलैंचा निर्माण गरेको कुरा गरेको ज्ञात हुन्छ ।[२८] टेबहालको ने.सं. ७८५ अर्थात् ई. १६६५ को अभिलेखमा नरसिंह कटुवालले महादेव, नारायण र श्रीगणेशको प्रसन्नताका लागि केही गुठी राखिदिएको कुरा उल्लेख गरिएको छ ।[२९] ठिमी पतारसीटोल श्रीगणेशमन्दिरको ने.सं. ७९४ अर्थात् ई. १६७४ को अभिलेखमा भक्तपुरका तत्कालीन

१७. पूर्ववत् ।
१८. पूर्ववत् ।
१९. पूर्ववत् ।
२०. पूर्ववत् ।
२१. पूर्ववत् ।
२२. पूर्ववत् ।
२३. पूर्ववत् ।
२४. पूर्ववत् ।
२५. पूर्ववत् ।
२६. पूर्ववत् ।
२७. पूर्ववत् ।
२८. पूर्ववत् ।

मन्त्री भागीराम र तिनका पारिवारिक मानिसहरूले मिलेर पतारसीको श्रीगणेशमन्दिरको स्थापना गरेको कुरा उल्लेख गरिएको छ ।[३०] बोडे वाकोचो टोलका श्रीगणेशमन्दिरको ने.सं. ८०९ अर्थात् ई. १६८८ को अभिलेखमा श्री ३ पाकोचो श्रीगणेशको सानो मन्दिर बनाएको उल्लेख गरिएको छ ।[३१]

बनेपा भालोंछे टोल श्रीगणेश मन्दिरको ने.सं. ८१० अर्थात् ई. १६९० को अभिलेखमा रामचन्द्र भारो र अरू भक्तहरूले मिलेर श्रीगणेशलाई शिलानिर्मित सिंह एवं सिंहिनी चढाएको तथ्य उजागर गरिएको छ ।[३२] ने.सं. ८२६ अर्थात् ई. १७०६ मा लुइनारायण श्रीगणेश पश्चिमतिर फर्केकाले अपशकुन भएको कुरा भाषावंशावली भाग–२ मा उल्लेख गरिएको छ ।[३३] भक्तपुर हनुमानघाटमा ने.सं. ८३२ मा पाञ्चायन देवताको स्थापना गर्दा राजा भूपतीन्द्र मल्लले श्रीगणेशको पनि स्थापना गरेका थिए । उक्त स्थानमा तीनमुखे श्रीगणेशको मूर्ति अहिलेसम्म रहेको छ । यो भूपतीन्द्र मल्लले स्थापना गरेको श्रीगणेशमूर्ति नै हुनुपर्छ भन्ने जानकारहरूको भनाइ रहेको छ ।[३४]

ने.सं. ८५४ अर्थात् ई. १७३४ को धुलिखेल गोखुरेश्वर मन्दिरको अभिलेखमा स्फटिकेश्वर र गोखुरेश्वरको स्थापना गरी प्रतिमान भारोद्वारा पाटी निर्माण गरेर श्री ३ श्रीगणेशको स्थापना गरेको कुरा उल्लेख गरिएको छ ।[३५] भक्तपुर हनुमान् घाटमा श्रीगणेशलाई १० रोपनी जग्गा गुठी राखेको कुरा त्यहाँ स्थापना गरिएको ई. १७४१ को अभिलेखबाट ज्ञात हुन्छ ।[३६] उक्त मितिकै हनुमान् घाटको अर्को अभिलेखमा त्यहाँ कुमार र श्रीगणेशको मन्दिर बनाएको कुरा उल्लेख गरिएको छ ।[३७] मध्यकालीन नेपालका धार्मिक गतिविधिसमेत अंकित गरिएको भाषावंशावलीमा कुमारी रथयात्रामा चलाइने तीन रथमध्ये पहिलो रथ श्रीगणेशको हुने र उक्त रथमा श्रीगणेशरूप जीवित बालक रहने कुरा उल्लेख गरिएको छ ।[३८]

उत्तम प्रकृतिका मानिसहरूलाई एउटा एउटा देवताको रूपमा लिने चलन नेपालमा रहिआएको छ । कवि सुन्दरानन्द बाँडाले पाटनका ६ प्रधानमध्ये एउटा प्रधान कालिदासलाई ठमेलनेर सल्लाघारीमा रहेका हेरम्ब श्रीगणेशका अवतार भनी सम्बोधन गरेका थिए ।[३९]

सिनामङ्गलमा रहेको श्रीगणेशको मूर्तिको स्थापना ने.सं. ९३० अर्थात् ई. १८१० मा ठिमीका श्रीकृष्णमान र उनका छोरा सिंहधनसिंहद्वारा गरिएको भन्ने कुरा त्यहाँ रहेको अभिलेखबाट ज्ञात हुन्छ ।[४०] धुलिखेल ओटोलको श्रीगणेशमन्दिरमा रहेका ने.सं. ९४० र ९५३ का अभिलेखहरूमा श्रीगणेश र सत्यनारायणको मन्दिर बनाएको कुरा उल्लेख गरिएको छ ।[४१]

नेपाल उपत्यकाका प्रसिद्ध श्रीगणेशहरू क्रमशः चोभारका चन्द्रविनायक, भक्तपुरका सूर्यविनायक, देवपाटनका रक्तविनायक र चाबहिलका श्वेतविनायकलाई उपत्यकाका संरक्षक आदिगणेश भनी भाषा वंशावलीमा महत्त्वगान गरिएको छ ।[४२]

२९. पूर्ववत् ।
३०. पूर्ववत् ।
३१. पूर्ववत् ।
३२. पूर्ववत् ।
३३. पूर्ववत् ।
३४. डा. गोविन्द टण्डन, पूर्ववत्, पृ. ३९ ।
३५. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।
३६. पूर्ववत् ।
३७. पूर्ववत् ।
३८. पूर्ववत् ।
३९. पूर्ववत् ।
४०. पूर्ववत् ।
४१. पूर्ववत् ।
४२. पूर्ववत् ।

शिलालेखहरूको आरम्भमा 'श्रीगणेशाय नमः' लेख्ने चलन मल्लकालमा आरम्भ भएको देखिन्छ । ने.सं. ८१० को कार्तिक महिनामा स्थापित ऋद्धिलक्ष्मीको माजुदेवलको अभिलेखको आरम्भमा श्रीगणेशाय नमः लेखिएको छ । यो चलन शाहकालमा अझ व्यापक हुँदै गयो । पृथिवीनारायण शाहको वसन्तपुरको अभिलेखको प्रारम्भ र नासलचोकको अभिलेखको प्रारम्भमा पनि श्री श्रीगणेशाय नमः लेखिएको छ ।[४३] यसरी नेपालको इतिहास पर्यवेक्षण गर्दा नेपालमा प्राचीनकालदेखि नै श्रीगणेशको आराधना गर्ने परम्परा अनवरत रूपमा चल्दै आएको कुरा सिद्ध हुन्छ । उक्त सबै ऐतिहासिक साक्ष्यहरूबाट श्रीगणेशका मूर्ति बनाउने, मन्दिर बनाई मूर्ति प्रतिष्ठा गर्ने र गुठी राखिदिने कामहरूसमेत नेपालमा हुँदै आएको कुरा सिद्ध हुन्छ ।

श्रीगणेश हिन्दुजगत्का अत्यन्त श्रद्धेय र अग्रपूज्य देवता हुनुहुन्छ । काठमाडौं उपत्यकामा श्रीगणेश अग्रपूज्य हुनुका साथै अत्यन्त लोकप्रिय देवताका रूपमा सम्मानित भएको तथ्य पनि माथिका विवरणहरूबाट पुष्टि हुन्छ । ऐतिहासिक साक्ष्य र वर्तमान दृश्य दुवैले विशेषरूपमा काठमाडौं उपत्यका र सामान्यरूपमा नेपाल अधिराज्यभरि श्रीगणेशको आराधना हुने गरेको तथ्यलाई सत्यापित गर्दछन् ।

## ६.३ नेपालमा हिन्दूहरूको गणेश-उपासनापरम्परा

पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म र उत्तर हिमालदेखि दक्षिण तराईसम्म श्रीगणेश प्रथमपूज्य, मङ्गलमूर्ति, शुभ एवं लाभका दाता, सर्वसिद्धिप्रदाता, विघ्ननिवारक देवताका रूपमा प्रसिद्ध हुनुहुन्छ । नेपाली समाजमा धार्मिक, सांस्कृतिक र आध्यात्मिक दृष्टिबाट श्रीगणेश देवता प्रत्येक नरनारीका रगतका थोपाहरूमा भिजेर रहनुभएको छ । प्रत्येक धार्मिक कार्यमा नेपालमा श्रीगणेशको अग्रपूजा गरिन्छ । घरघरमा आयोजना गरिने पूजा एवं आराधनामा दीप, कलश एवं श्रीगणेशको पूजापछि मात्र प्रधान देवताको पूजा गरिन्छ । विवाह, व्रतबन्ध आदि माङ्गलिक अवसरमा गाइने मङ्गलगीतहरूमा सर्वप्रथम श्रीगणेशको स्मरण गरिन्छ । नेपालका गाउँगाउँमा र घरघरमा भजन गाउँदा भगवान् श्रीगणेशको आरतीभजन गाएपछि मात्र अरू देवताको भजन गाउने परम्परा रहिआएको छ । विभिन्न जातिका मानिसहरूले सांस्कृतिक कार्यहरूमा गाउने गीतहरूमा श्रीगणेशको प्रारम्भिक स्मरण गरेको पाइन्छ । हिमाल, पहाड एवं तराई-मधेशका विभिन्न जातजातिहरूका सांस्कृतिक एवं धार्मिक पर्व, उत्सवहरूमा पनि श्रीगणेशको श्रद्धापूर्वक स्मरण गरिन्छ । अवधी, भोजपुरी र मैथिलीभाषाका माङ्गलिक गीतहरूमा श्रीगणेशको प्रथम वन्दना गरिन्छ । नेपालका गाउँ-गाउँ र ठाउँ-ठाउँमा बालुन, नचरी, भोलाउरो, चैत, खैंजडी, धमारी, होरी, फाग, भजन, चुड्का, गाइने गीत आदिमा पार्वती-परमेश्वरका प्यारा पुत्र श्रीगणेशको वन्दना गरिन्छ । विवाह र चाडवाडका गीतहरूमा विभिन्न भाषाभाषी नरनारीहरूले श्रीगणेशको स्मरण गर्दछन् । सुदूरपश्चिमाञ्चलको डोटेली समाजमा 'गणेश फाग' गाउने प्रचलन छ ।

**जै जै गणपति जैजै हेरम्ब, गँवरी के नन्दन, मूषकवाहन**
**लाडू के प्रिय, जय लम्बोदर पूजा करूँ मैं गोसाईं तुमारी ।**
**अग्नि विना हूम नै, वर्षा विना वेद नै गणपति गुसाईं विना जग्य नै**
**पुत्र धनदायक जगत् रचाएक, पूजा करूँ मै गुसाईं तुमारी ।।[४४]**

श्रीगणेशाय नमः भनेर अथवा लेखेर कुनै पनि कार्य प्रारम्भ गर्ने दरिलो संस्कार भएकाले नेपालीहरूले कुनै पनि

४३. डा. गोविन्द टन्डन, पूर्वोक्त पृ. ३९ ।
४४. जयराज पन्त, अञ्जुलीभरि सगुन चोल्टाभरि फाग, नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान, पृष्ठ २११, वि.सं. २०५५ ।

कार्यको आरम्भ गर्नुलाई श्रीगणेश गर्नु भन्ने बानी बसालेको पाइन्छ । हिन्दू, बौद्ध, जैन र सिखजस्ता धार्मिक सम्प्रदायका नरनारीहरूले मन्त्रको उच्चारण गर्दा सर्वप्रथम ओङ्कारको उच्चारण गर्दछन् । श्रीगणेशलाई शास्त्रहरूमा ओङ्कार रूप मानिएकाले सबै सम्प्रदायका मानिसहरूले श्रीगणेशको आराधना गर्दछन् भन्ने कुरामा अत्युक्ति हुने छैन । हाम्रो समाजमा श्रीगणेशपुराण आदि श्रीगणेशसम्बन्धी मूर्धन्य ग्रन्थ र अन्य तन्त्रग्रन्थहरूमा बताइएको प्रतिमा लक्षणानुसार श्रीगणेशको मूर्ति बनाई मन्दिरहरूमा प्रतिष्ठा गर्ने परम्परा धेरै समयदेखि चलिआएको छ । नेपालका स्वतन्त्र श्रीगणेशमन्दिर र मूर्तिहरूका साथै विष्णु, शिव र शक्तिका मन्दिरहरूमा पनि अङ्गमूर्तिका रूपमा श्रीगणेशका मूर्ति रहेका छन् । काठमाडौं उपत्यका र नेवारजातिको बसाई भएका सहर एवं गाउँहरूमा श्रीगणेशमन्दिर एवं मूर्तिहरूको बाहुल्य देख्न सकिन्छ । नेपालका श्रीगणेशभक्त एवं संस्कारवान् व्यापारीहरूले आफ्नो बहिखाताहरूमा श्रीगणेशको रूप मानिने स्वस्तिक चिह्नको प्रयोग गर्दै आएका छन् । वैदिक वाङ्मयबाट बताइएको संस्कार र संस्कृतिलाई अङ्गीकार गर्ने आर्यहिन्दूहरूको श्रीगणेशोपासनाको गम्भीर प्रवाह नेपालका गाउँगाउँ र ठाउँठाउँमा गङ्गाको निर्मल प्रवाहझैं प्रवाहित छ ।

हिन्दूहरूका घरघरका पूजाकोठा र ठाउँठाउँमा बनेका पाञ्चायन मन्दिरहरूमा श्रीगणेशको अग्रपूजा अखण्ड रूपमा चल्दै आएको छ । नेपाली समाजमा कतै पाँचै देवदेवीका छुट्टाछुट्टै पाञ्चायनमन्दिर बनेका छन् भने कतै आफ्नो सम्प्रदायअनुसारका पाञ्चायनमन्दिरहरू छन् । ती सबैमा श्रीगणेशको अग्रपूजा र प्रधानपूजा देख्न सकिन्छ । नेपाली जनजीवनमा कतै श्रीगणेशलाई ओङ्कार रूपमा, कतै शिवपुत्रका रूपमा, कतै कृष्णका अवतारपुरुषका रूपमा, कतै हनुमान्का रूपमा, कतै रुद्रका रूपमा, कतै नटराजका रूपमा, कतै विश्वकर्माका रूपमा र कतै जीवित शाक्यपुत्रका रूपमा पनि सम्मान गर्ने परम्परा रहिआएको छ । तर, मूलरूपमा नेपालमा श्रीगणेश पार्वती एवं परमेश्वरका प्यारा पुत्रका रूपमा अग्रपूज्य देवता बनेर रहनुभएको छ ।

नेपालमा खास गरेर काठमाडौं उपत्यकाका सहरहरूका प्रत्येक टोलमा स्थानगणेशको स्थापना गर्ने परम्परा रहिआएको छ । मूर्तिमात्र नभई श्रीगणेशको आकृति मिल्ने शिलालाई समेत श्रीगणेश मानी पूजा गर्ने प्रवृत्ति पाइन्छ । माङ्गलिक अवसरहरूमा नरनारीहरूले आफ्ना टोलका श्रीगणेशको प्रथमपूजा गर्दछन् । मङ्गलबारका दिन विशेष रूपमा श्रीगणेशको पूजा गर्ने प्रचलन रहेको छ । धेरैजसो मन्दिरहरूमा शिलामूर्तिलाई छोपी पित्तलमूर्ति राख्ने चलन देखिन्छ । नेपालमा गृहस्थीहरूले आफ्ना छोराको व्रतबन्ध गरेपछि विभिन्न देवदेवताको दर्शन गराउने क्रममा श्रीगणेशस्थानमा अनिवार्य रूपमा लैजाने चलन रहेको छ ।

हिन्दूहरू कुनै पनि धार्मिक कार्य गर्दा कलश अथवा सानो सिङ्गो सुपारीलाई श्रीगणेश मानेर कार्यको आरम्भ गर्दछन् । नेवारसमुदायमा पनि श्रीगणेशको कलशमाथि बत्ती बाल्ने दियोसमेत रहेको सुकुन्डालाई माङ्गलिक मानी श्रीगणेशको पूजामा प्रयोग गर्ने प्रचलन रहेको देखिन्छ । काठमाडौं उपत्यकामा रहेका श्रीगणेशका स्थानकमूर्ति, आसनमूर्ति र नृत्यमूर्तिहरूले नेपाली जनजीवनमा प्राचीनकालदेखि अहिलेसम्म श्रीगणेशप्रति अपार श्रद्धा, विश्वास, आस्था, आदर, सम्मान र भक्ति रहेको तथ्यलाई प्रमाणित गर्दछन् ।

नेपालमा प्रस्तरकला, काष्ठकला, मृत्तिकाकला, चित्रकला र धातुकलामा पनि श्रीगणेशको सर्वोपरि स्थान रहेको छ। श्रीगणेशका प्रस्तरमूर्ति, काष्ठमूर्ति, मृन्मूर्तिका साथै हस्तिहाड, मुगा आदि माध्यममा पनि श्रीगणेशमूर्ति बनेका पाइन्छन् । काठमा कुँदिएका श्रीगणेशमूर्तिहरूका साथै टुँडाल, पौभा, तोरण, स्तम्भ आदिमा चित्रित गणेशका चित्र पाइन्छन्। पाटनको गोकर्णेश्वरमन्दिर र स्वठटोलको नारायणमन्दिरलाई उदाहरणका रूपमा लिन सकिन्छ । यत्रतत्र गुफाहरूमा श्रीगणेशका गुफाचित्र पाइन्छन् । झ्याल, ढोका वरिपरि तोरणहरूमा श्रीगणेशका चित्र अङ्कित छन् । शिलालेखहरूका सिरानमा र

पाण्डुलिपिहरूका मुखपृष्ठमा पनि श्रीगणेशका चित्र अङ्कित गरिएका छन् । रेखाचित्रहरूमा श्रीगणेशका मूर्ति रेखाङ्कन गरिएका पाइन्छन् । मल्लकालीन मुद्राहरूमा श्रीगणेशका मूर्तिहरू चिह्नित गरिएका छन् । विशेषगरी चक्रवर्तीन्द्र मल्लका मुद्राहरूमा श्रीगणेशचित्रका साथै पाश, अङ्कुश आदि अङ्कित गरिएको पाइन्छ । विभिन्न भित्तिचित्र अर्थात् पौभाचित्रहरूमा पनि अनेक मुद्राका श्रीगणेशमूर्तिहरूको दर्शन गर्न सकिन्छ । नेपाल संवत् २९४ अर्थात् ई. ११७४ को रुद्रदेवको समयमा निर्मित **पिङ्गलमतम्** नामक पाण्डुलिपिको मुखपृष्ठमा श्रीगणेशको चित्र कुँदिएको छ । रत्न मल्लको शासनकालमा लेखिएको '**पाण्डवविजयनाटकम्**'मा श्रीगणेशसँग कुनै पात्रको संवाद देखाइएको छ ।[३५]

## ६.४ नेपालमा बौद्धहरूको गणेश-उपासनापरम्परा

शील, समाधि र प्रज्ञालाई सर्वोपरि मान्यता दिने बौद्ध धर्मका अनुयायीहरूले उक्त तीन तत्त्वलाई सैद्धान्तिक र प्रायोगिक दुवै सरणिबाट आत्मसात् गरी बौद्ध धर्मलाई संसारका अनेक राष्ट्रहरूमा पुऱ्याए । आफ्नो धर्म, संस्कृति र साधनाबाट नेपाल, भारत, श्रीलंका, बर्मा, चीन, जापान, कोरिया, मङ्गोलिया, आफगानिस्तान, तिब्बत, मेसोपोटामिया, मलाया आदि देश सम्मिलित विश्वको ठूलो भूभागलाई प्रभावित गरे । बौद्ध धर्मअन्तर्गत महायान सम्प्रदायको विकास भएपछि हिन्दू धर्मअन्तर्गतका देवताहरूले त्यहाँ पूज्य स्थान प्राप्त गरे । श्रीगणेश, हनुमान्, इन्द्र, ब्रह्मा, सनत्कुमार, प्रजापति, सूर्य, चन्द्र, प्रजन्य, लक्ष्मी, श्रद्धा, आशा, लोकपाल, चतुर्महाराजिक देव, धृतराष्ट्र महाराज, गन्धर्व, गरुड, यक्ष, नाग, वृषभ, कुबेर आदि देवताहरूलाई बौद्ध धर्मावलम्बीहरूले जस्ताको तस्तै त्यस्तै स्वीकार गरे । सनातनधर्मको देववाद प्रसिद्ध छ । देवताहरूमध्ये श्रीगणेश अत्यन्त प्रसिद्ध देवता हुनुहुन्छ । पुरातात्त्विक उत्खनन गर्दा विश्वका अनेक देश र बौद्ध देशहरूमा समेत श्रीगणेशका मूर्ति प्राप्त भएका छन् । बौद्धधर्मको महायान सम्प्रदायअन्तर्गत वज्रयानशाखाका साधकहरूले श्रीगणेशलाई आफ्नो साधनाको सिद्धिका लागि निर्विकल्प सहयोगी देवताको रूपमा स्वीकार गरेका छन् ।

गणपतिहृदयम् नेपाली बौद्ध साहित्यको संस्कृतभाषामा लेखिएको विशिष्ट ग्रन्थ हो । यसमा रहेको गणपति वन्दनालाई अनुशीलन गरेपछि बौद्ध धर्ममा श्रीगणेशको कति महत्त्वपूर्ण स्थान रहेछ भन्ने कुरा जान्न सकिन्छ । वज्रयान शाखाका साधकहरू श्रीगणेशको स्तुतिबाट मन्त्र सिद्ध हुने कुरामा विश्वास राख्दछन् । नेपाल र तिब्बतका वज्रयानी बौद्धहरूका घरघरमा तथागतको मूर्तिसँगै श्रीगणेशको मूर्ति पनि रहेको हुन्छ । तिनीहरू विघ्नविनाश र ऐश्वर्यप्राप्तिका लागि विघ्नान्तक र विघ्नराजको रूपमा श्रीगणेशको पूजा आराधना गर्दछन् । काठमाडौं उपत्यकामा निर्मित बौद्धमूर्तिहरूमा भगवान् बुद्धको मूर्तिसँगै श्रीगणेशका अनेक मुद्राका मूर्ति रहेका छन् । काठमाडौंमा मञ्जुश्रीनामक बौद्धमूर्तिसँगै श्रीगणेशको मूर्ति पनि स्थापना गरिएको छ । **कल्पद्रुमावदानम्** महायानीमिश्रित संस्कृतको ग्रन्थ हो । त्यसमा श्रीगणेशस्तुतिसम्बन्धी एउटा आख्यान रहेको छ- 'बौद्ध उपासक श्रावस्तीका एउटा वणिक्पुत्र व्यापारका लागि आफ्नो मित्रहरूका साथ रत्नाकरद्वीपमा जान प्रस्थान गरे। तिनको डुँगा तूफानमा धक्का खाएर समुद्रमा डुब्यो । ती वणिक्पुत्रले प्राणरक्षाका लागि अनेक देवीदेवताका साथै श्रीगणेशको पनि स्तुति गरे ।' यसबाट बौद्ध धर्ममा श्रीगणेशको अति उच्च स्थान रहेको प्रमाणित हुन्छ ।[३६]

नेपालमा हिन्दू धर्म र बौद्ध धर्मका अनुयायीहरूले श्रीगणेशको आदरपूर्वक पूजा गर्छन् । मध्यकालका विहारहरूमा मूलढोकाको लगको देब्रेपट्टि श्रीगणेश र दाहिनेपट्टि महाकाललाई स्थान दिइएबाट बौद्धहरूको श्रीगणेशप्रतिको उच्च आस्था प्रकट हुन्छ । पञ्चमुखी श्रीगणेशलाई हेरम्बगणेशको रूपमा बौद्धधर्मको वज्रयानशाखामा मान्यता प्रदान गरी पूजा

३५. मिलनरत्न शाक्य, पूर्ववत्, पृ. ३५-३६ ।

३६. ब्रह्मचारिणि त्रिपाठी, बौद्ध धर्म साहित्य एवं संस्कृति में गणेश, कल्याण वर्ष ४८, अङ्क १, पृष्ठ ३७५-३७६ ।

गर्ने चलन नेपाली बौद्धसमाजमा रहेको छ । मध्यकालिक कैयौं विहार आजसम्म यथावत् रहेका छन् । तीमध्ये केही विहारहरू त लिच्छविकालका पनि हुन सक्छन् । लिच्छविकालमा नेपालमा केही बौद्धविहार रहेको कुरा लिच्छविकालका अभिलेखबाट थाहा पाउन सकिन्छ ।[५७]

बौद्धधर्मका अनुयायीहरूको श्रीगणेशाराधनामा कसरी प्रवृत्ति भयो भन्ने प्रश्नको उत्तरमा भनिएको छ – प्राचीनकालमा ओदियाचार्य एउटा पर्वतमा सबै देवीदेवता डाकी पूजा गर्दै थिए । तिनले श्रीगणेशलाई भने डाकेका थिएनन् । रिसाएका श्रीगणेशले पूजामा विघ्न पैदा गरे । यस्तो विघ्न पैदा भएपछि लोकेश्वर पद्मपाणिले क्षितिगर्भ बोधिसत्त्वलाई विघ्नान्तकको उत्पत्ति गरी विघ्न हटाउन लगाए । विघ्नान्तकले हिन्दूदेवता श्रीगणेशलाई वशमा ल्याएपछि श्रीगणेशको रूपमा मान्यता प्रदान गरी विघ्ननिवारणका लागि तिम्रो पूजा गरिनेछ भन्ने वचन दिए । त्यसपछि विघ्न शान्त भयो ।[५८]

भक्तपुर तुलाँछे टोल गुरुबहालभित्र ई. १५९२ को शिलालेखमा बौद्धचैत्यको स्थापना गर्दा श्रीगणेशमूर्तिको पनि स्थापना गरिएको वर्णन गरिएको छ ।[५९] चापागाउँ दुमख्यो बाहालको ने.सं. ७५९ ई १६३९ को शिलालेखमा सो बाहालमा बौद्ध चैत्य, चक्रसंवर र महाकालहरूको स्थापना गर्दा श्री ३ श्रीगणेश र हनुमान्को पनि स्थापना गरिएको उल्लेख गरिएको छ ।[६०]

काठमाडौं मुसंबहालभित्रको ने.सं. ८०९ अर्थात् ई १६८९ को अभिलेखमा कुनै भक्तले श्रीगणपतिमूर्ति बनाई स्थापना गरेको उल्लेख गरिएको छ ।[६१] श्यामर्पा लामाले ने.सं. ८७८ मा स्वयम्भूचैत्यको जीर्णोद्धार गरी राखिएको शिलालेखमा भनिएको छ– 'जीर्णोद्धारको समयमा शिव, कुमार र श्रीगणेशले आफ्नै आफ्नै रूपमा प्रकट भई चैत्यको जीर्णोद्धार गर्दा आवश्यक पर्ने सुवर्ण र अन्य सामग्री हामी ल्याइदिन्छौं भन्नुभयो ।' उक्त अभिलेखबाट हिन्दूदेवता र बौद्धदेवताको पारस्परिक सौमनस्य रहेको कुरा सिद्ध हुन्छ ।[६२] बुद्धमार्गीहरूले आगमगणेशको पूजा गर्दछन् । कीर्तिपुरको बौद्धमन्दिरमा आगमगणेशको पूजाआजा गर्न श्री ५ पृथ्वीनारायण शाहले २५ रोपनी खेत गुठी राखिदिएको वर्णन पाइन्छ ।[६३] मृगस्थलीमा विश्वरूप स्थाननेर राम्रो डीलडालको श्रीगणेशमूर्ति रहेको छ । मूर्तिको अगाडि बौद्धचैत्य बनाइएको छ । बौद्धचैत्य र श्रीगणेशमूर्तिको सामीप्यलाई हेर्दा यो श्रीगणेशमूर्ति कुनै बौद्धभक्तद्वारा स्थापना गरिएको मूर्ति हो भन्न सकिन्छ ।[६४]

शान्तिकर आचार्यले स्वयम्भू ज्योतिलाई छोपी चैत्य बनाएपछि सोको रक्षा गर्न चारैतिर चारवटा पुर तयार गरे । ती पुरहरूमा देवीदेवताको स्थापना गर्दा पूर्वतर्फ श्रीगणेशको मूर्ति स्थापना गरिएको अनुश्रुति रहेको छ ।[६५] शान्तिकरले सबै कार्यमा सिद्धि प्राप्त गर्न श्रीगणेशको स्थापना गरेको विषय स्वयम्भूपुराणमा उल्लेख गरिएको छ ।[६६]

स्वयम्भू जंगलको पूर्वतर्फ सूर्यमुख वा सूर्यविनायकको मूर्ति रहेको छ । यी श्रीगणेशलाई दक्षिणाभिमुख श्रीगणेश भनिन्छ । यिनलाई मञ्जुश्रीको आगमनसँग पनि जोडिन्छ । चौपायामा लाग्ने रोगनिवारण गर्न सूर्यमुख श्रीगणेशको उपासना

---

५७. *डा. गोविन्द टन्डन, पूर्ववत्, पृष्ठ ३९–४० ।*
५८. *डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।*
५९. *पूर्ववत् ।*
६०. *पूर्ववत् ।*
६१. *पूर्ववत् ।*
६२. *पूर्ववत् ।*
६३. *पूर्ववत् ।*
६४. *पूर्ववत् ।*
६५. *पूर्ववत् ।*
६६. *ततोऽपि च गणेशौ द्वौ अमिन जने प्रस्थापितम् । शान्तिकरः सिद्धाचार्यः सर्वकार्यप्रसिद्धकात् ॥*
*प्रथमं सूर्यमुखेन सूर्यमुखं गणेश्वरम् । विधिभिश्च तस्मै पूजा स्थापितश्च शान्तिकरः ॥*
*पश्चाद् द्वितीयं गणेशं दक्षिणाभिमुखस्थितम् । अनेकविघ्ननाशाय दक्षिणस्यां प्रस्थापितम् ॥ – पूर्ववत् ।*

गर्ने चलन रहेको छ ।[५७]

काठमाडौंको उत्तरतर्फ रहेको धर्मपुर श्रीगणेशमन्दिरको अभिलेखमा ने.सं. ७९५ अर्थात् ई. १६७५ मा श्री सिद्धिमहागणेशको मन्दिरसम्बन्धी कुनै काम भएको उल्लेख गरिएको छ । त्यहाँ रहेको ने.सं. ८६५ अर्थात् ई. १७४५ को अभिलेखमा बौद्धधर्मानुयायी चक्रसिंह महर्जनहरूले मन्दिरको दुवै भागको जीर्णोद्धार गरेको वर्णन गरिएको छ ।[५८]

पाटन बल्खु श्रीगणेशस्थानको ने.सं. ८०५ अर्थात् ई. १६८५ को अभिलेखमा केशवराज जोशी र सिद्धिराज जोशी नामक दाजुभाइले राखेको शिलालेखमा श्री ३ श्रीगणेशको मन्दिर बनाएको उल्लेख गरिएको छ ।[५९] म्हैपीपीठमा बौद्ध श्रीगणेशको मूर्ति रहेको कुरा धनशमशेर जबराद्वारा उल्लेख गरिएको छ । त्यहीं बौद्धस्तूपमा पनि श्रीगणेशको मूर्ति रहेको छ ।[६०]

उक्त तथ्यहरूबाट नेपालको समन्वयात्मक धार्मिक आदर्शअनुरूप नै बुद्धमार्गीहरूले पनि हिन्दूहरूले झैं श्रीगणेशको आराधना गर्दै आएको कुरा सिद्ध हुन्छ ।

## ६.४ काठमाडौं उपत्यकाका नेवार समुदायको श्रीगणेश आराधना

काठमाडौं उपत्यका बहुरङ्गी संस्कृतिको सुन्दर उद्यान हो र समन्वयात्मक संस्कृतिको मुहान पनि । यहाँ हिन्दूधर्म र बौद्धधर्म दुवै सँगै हुर्के, बढे र विकसित भए । हिन्दू देवता बौद्धहरूका श्रद्धेय बने र बौद्ध देवता हिन्दूहरूका श्रद्धास्पद बनेर रहे । काठमाडौं उपत्यकामा दुवै समुदायका समानरूपमा श्रद्धेय देवता श्रीगणेश हुन् । यहाँ श्रीगणेशका जति मूर्ति र मन्दिर छन् त्यति अरू देवताका छैनन् । यसैगरी यहाँ जति उपासना श्रीगणेशको गरिन्छ त्यति अरू देवताको गरिँदैन । नेवारसमुदायका नरनारीहरू श्रीगणेशका प्रमुख उपासक हुन् । हिन्दू-नेवारसमुदाय एवं बौद्ध-नेवारसमुदाय दुवैले विघ्नपरिहार, मङ्गलोदय, सुख, समृद्धि, आत्मज्ञान अथवा निर्वाण आदि प्राप्त गर्ने उद्देश्यले परम्परागत रूपमा श्रीगणेशको आराधना गर्दै आएका छन् । नेपालभाषामा श्रीगणेशलाई गनेद्यो, विनायकलाई इनाय र चतुर्थीतिथिलाई चथा भनिन्छ ।

काठमाडौं उपत्यकाका नेवारसमुदायको धार्मिक क्रियाकलापमा वैदिक र तान्त्रिक विधि अवलम्बन गरी श्रीगणेशलाई आफ्नो भाषा र संस्कृतिमा ढालेर आराधना गर्ने लामो परम्परा रहिआएको छ । यसै परम्परामा श्रीगणेशका टोलगणेश र टोलविनायकका रूपमा अनेक नाम रहेका पाइन्छन् । नामअनुसारका मन्दिर एवं मूर्ति बनाई श्रीगणेशको उपासना गर्ने क्रम मल्लकालदेखि गतिशील छ । आख्यान, अनुश्रुति र परम्पराको आधारमा श्रीगणेशमा अतिशय आस्था राख्ने नेवारसमुदायले आफ्नै संस्कृतिमा ढालेर श्रीगणेशको उपासना गरेता पनि साधना र फलश्रुतिका आधार भने प्राच्य वाङ्मय नै हुन् ।

उत्तम जीवन, उत्तम आचार, उच्चस्तरीय नैतिकता, सौभाग्य, मङ्गलोदय, शुभ-लाभको प्राप्ति एवं विघ्न, दुर्भाग्य, दौर्मनस्य आदि मानवजीवनका घातक तत्त्वहरूको निवारणका लागि श्रीगणेशको उपासना गर्ने नेवारसमुदायले टोलटोलमा स्थापना गरेका श्रीगणेशका प्रमुख नाम निम्नानुसार रहेका छन्-

पाकोगनेद्यो, मुस्याकाला गनेद्यो, स्वाचापु गनेद्यो, स्वोमघु गनेद्यो, हसिपोटा गनेद्यो, खुयान गनेद्यो, भौंडी गनेद्यो, चारखुड्डा गनेद्यो, हुमा गनेद्यो, चोंगापेंगा गनेद्यो, कथुस्या गनेद्यो, नायापान्स्या गनेद्यो, तुन्कान्यो गनेद्यो, बुनिनाया गनेद्यो, थानिना गनेद्यो, कोइना गनेद्यो, चोपो गनेद्यो आदि । यी स्थानीय श्रीगणेशमूर्ति हुन् । यी मूर्तिहरूसँग काठमाडौं उपत्यकाको सामाजिक, सांस्कृतिक र धार्मिक इतिहास गाँसिएको छ । यी श्रीगणेशमूर्तिहरूको स्थापनासम्बन्धी इतिवृत्त र महिमाबोध

५७. पूर्ववत् ।
५८. पूर्ववत् ।
५९. पूर्ववत् ।
६०. पूर्ववत् ।

गराउने अनेक आख्यान र अनुश्रुति नेवारसमुदायमा प्रसिद्ध छन् ।[६१]

काठमाडौं उपत्यकामा मल्लकालको सांस्कृतिक जीवन इनाय अथवा विनायकद्वारा प्रभावित थियो । शुभ, लाभ र मङ्गलका दाता, ओङ्काररूप श्रीगणेश, अखिलविदितनाथ एवं सिद्धिप्रदाता, विघ्ननायक र विनायकका रूपमा प्रसिद्ध हुनुभयो । विनायकका अनेक रूपहरूमध्ये सिद्धिविनायकको रूप औधि लोकप्रिय थियो र आज पनि छ । विनायक-आस्थाका प्रतीक स्थानीय विनायकहरूका केही नाम यस प्रकार छन् - कोइनाइत्वा विनायक, कमलादी विनायक, कमलाक्षी विनायक, थामामाण्डु विनायक, इनायत्वा विनायक, इनायामाचो विनायक, पाकोइनाय विनायक, थानिनाय विनायक, बुनिनाय विनायक, इनायकचो विनायक, येनदेवा विनायक, बोनदेवा विनायक, मरुगनेद्यो, लोहनशाला गनेद्यो, चाल्खु गनेद्यो, क्वालाखु गनेद्यो, बहालखु गनेद्यो, जोर गनेद्यो आदि ।

काठमाडौं उपत्यकाका गल्ली र टोलहरूका नाममासमेत स्थानीय श्रीगणेशका नाम जोडिएका छन् । काठमाडौं, भक्तपुर र ललितपुरमा रहेका ज्याठाटोलहरूमा वैदिक देवता ज्येष्ठराज श्रीगणेशको स्थानीय नाममा ज्येष्ठको अर्थमा ज्याठापद जोडिएको छ ।

भक्तपुरमा प्रजापति (कुमाले) हरूले विश्वकर्माको नामबाट श्रीगणेशको आराधना गर्दछन् । भक्तपुरको सुरक्षाका लागि २४ ठाउँमा स्थापित गरिएका २४ विश्वकर्मा श्रीगणेशहरूका नाम यस प्रकार छन् - मार्वाचो, इटाचेन, हेरवाचो, खौपा, मङ्गलाचे, लस्कुडोमा, बोलाचे, लाकुलाचेन, तमाही, क्वाचेन, यालाचेन, तुलाचेन, तिबुकचेन, कोचेन, याचेन, ग्वाभारी, भोलाचेन, धलाचेन, तन्चापाल, इनाचो, क्वाथान्डो, गाचेन, तौलाचेन र जन्ला ।

श्रीगणेशलाई आफ्नो संस्कृतिमा ढालेर आफ्नो वृत्ति र प्रवृत्तिअनुसार उपचारहरू टक्र्याई आराधना गर्ने उपत्यकावासी नेवारसमुदायको मनमस्तिष्कमा श्रीगणेशको गहिरो छाप परेको तथ्य माथि उल्लेख गरिएका गनेद्यो र इनाय देवताप्रतिको अतिशय भक्तिबाट प्रमाणित हुन्छ । भक्तपुरका प्रजापतिहरूले विश्वकर्माका रूपमा श्रीगणेशको आराधना गरेझैं केही जातिहरूले कुलदेवताका रूपमा पनि श्रीगणेशको आराधना गर्दछन् । नासाद्यौ र हेमाद्यौको संयुक्त आराधना गर्दा नृत्यनाथ शिवजी र श्रीगणेशको आराधना गरिन्छ भन्ने मान्यता रहेको पाइन्छ ।[६२]

उपत्यकाका नेवारसमुदायले प्राकृतिक निरलङ्कार श्रीगणेशमूर्तिका साथै सायुध, सालङ्कार र सौम्य श्रीगणेशमूर्तिहरूको उपासना गर्दछन् । पृथिवीतत्त्वको प्रतीक किसली- पवित्र मदिरा, जलतत्त्वको प्रतीक कलश, आद्यज्योतिको प्रतीक कलशाकार श्रीगणेशाङ्कित आरतीपात्र - कुसुण्डा, कसार, लड्डु, आदि पूजाका उपचारबाट अर्चना गर्ने नेवारसमुदायले विघ्नका देवता श्रीगणेशबाट विघ्ननिवारणका साथै ज्योतिर्मय, समृद्धिमय, प्रीतिस्निग्ध, गतिशील र आध्यात्मिक सौन्दर्यसम्पन्न जीवनको आकांक्षा गरेका हुन्छन् । तिनीहरूले ज्योतिर्मय, शुभलाभदायक, पवित्रतादायक, अग्रपूज्य, आदिदेव, स्वयंज्योति, आद्यज्योति, ज्येष्ठराज, अध्यात्मज्योति, बृहस्पति, वाचस्पति र ब्रह्मणस्पतिका रूपमा पनि श्रीगणेशको आराधना गर्दछन् ।

उपत्यकावासी नेवार समुदायको सांस्कृतिक जीवनशैलीमा कुमारी, श्रीगणेश र भैरवको केन्द्रीय भूमिका रहेको हुन्छ । यी तीनै देवतालाई शाक्यकुलका कुमार एवं कुमारीको माध्यमबाट प्रत्यक्षीकरण गरिन्छ । कुमार र कुमारीलाई देवदेवी मानी पूजा-आराधना गरेर रथयात्रा गराउने काठमाडौं उपत्यकाका निवासी नेवारसमुदायको संस्कृतिलाई विश्वदुर्लभ संस्कृति मान्नुपर्दछ ।

कुमारी, श्रीगणेश र भैरवरूप मानवदेवताको चयन शाक्यपरिवारभित्रबाट गरिन्छ । चयनको क्रममा बालक एवं

६१. डा. मिलनरत्न शाक्य, पूर्ववत् पृष्ठ २७ ।

६२. पूर्ववत्, पृष्ठ ६१-६२ ।

बालिकाको ज्योतिषशास्त्रअनुसार कुण्डली हेरी उत्तम प्रकृतिको कुण्डलीको आधारमा कुमारी, श्रीगणेश र भैरवको चयन गरिन्छ । वर्तमान शाक्य कुमाररूप श्रीगणेशको चयन ई. २००० मा गरिएको हो । ई. १९९५ मा ओट्टु, ताघल बहाल काठमाडौंका पूर्णरूपी शाक्य र कल्याणरत्न शाक्यका पुत्रका रूपमा जन्मिएका कपिलरत्न शाक्य वर्तमान श्रीगणेश हुन् । धर्मचक्रदर्शन महाविहार ताघाल बहालसँग सम्बन्धित वर्तमान श्रीगणेश कपिलरत्न शाक्य अहिले १३ औं वर्षको उमेरमा प्रवेश गरेका छन् । ई. २००० आश्विन बडा दसैं सप्तमीका दिन यिनको चयन गरिएको हो । जीवित श्रीगणेशलाई वर्षमा दुईपटक कुमारीघर जानुपर्ने हुन्छ । कुमारीको रथयात्रामा सर्वप्रथम श्रीगणेशको रथसञ्चालन गरी श्रीगणेशको प्रथमपूज्यतालाई सम्मान गरिन्छ ।

यी सबै विशेषताका कारण काठमाडौं उपत्यकाका नेवारसमुदायको श्रीगणेशाराधना गम्भीर, अर्थपूर्ण एवं वैदिक संस्कृति र बौद्ध संस्कृतिको समन्वयको सुन्दर उदाहरण बनेर विश्वसामु आफ्नो विलक्षणताको बोध गराउँदै गतिशील बनेर रहेको छ । श्रीगणेशमा भक्ति गर्ने जातिहरूमध्ये नेवारजातिको श्रीगणेशाराधना क्षेत्रमा मूर्धन्य स्थान रहेको तथ्य माथिका विवरणहरूबाट प्रमाणित हुन्छ ।

ॐ

## परिच्छेद - सात

# गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्तिहरू

श्रीगणेशपुराणमा भगवान् श्रीगणेशका क्षेत्रहरूको महिमा र उपासनाको प्रभावकारिता प्रकाशन गर्ने उद्देश्यले उहाँका उपासक ब्रह्मा, विष्णु, शिव, इन्द्र आदि देवता; ऋषि-मुनि र अन्य भक्त नर-नारीहरूले स्थापना गरेका गणेशमन्दिर र गणेशमूर्तिका साथै गणेशतीर्थ एवं क्षेत्रहरूको वर्णन गरिएको छ । नेपाल, भारतलगायत संसारका अनेक देशहरू प्राचीनकालदेखि अहिलेसम्म भक्तहरूका आस्था र आराधनाका केन्द्र बनेर रहेका गणेशक्षेत्र, गणेशतीर्थ, गणेशमन्दिर एवं गणेशमूर्तिले सुहाएका छन् । ईशाको प्रथम शताब्दीदेखि यता निर्माण गरिएका गणेशमन्दिर र प्रतिष्ठा गरिएका गणेशमूर्तिहरू भारत र नेपालमा प्रशस्त पाइन्छन् । समयको गतिसँगै भक्तहरूले मन्दिर बनाउँदै रहे, मूर्ति प्रतिष्ठा गर्दै गए र आराधना एवं उत्सवका कार्यक्रम चलाउँदै रहे । अहिले आएर जनसंख्या वृद्धिका कारण बसाइएका नयाँ बस्तीहरूमा पनि मन्दिरनिर्माण र मूर्तिप्रतिष्ठाका कार्य भइरहेका छन् । नेपाल र भारतमा मात्र नभई हिन्दु र बौद्धहरूको बाहुल्य भएका देशहरूमा पनि गणेशमूर्ति प्रतिष्ठा गरी गणेशोत्सव मनाउने काम गर्न थालिएको छ । सर्वपूज्यता र अग्रपूज्यताका कारण श्रीगणेश विश्वव्यापी देवताका रूपमा वन्दित हुनुहुन्छ ।

यस परिच्छेदमा गणेशपुराणमा वर्णित गणेशमन्दिर, गणेशमूर्ति, गणेशतीर्थ एवं गणेशक्षेत्रहरूको वर्णनका साथै नेपाल एवं भारतमा रहेका गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्तिहरूको प्राप्त सामग्रीका आधारमा सङ्क्षिप्त परिचय प्रस्तुत गरी नेपाल एवं भारतबाहिरका देशहरूमा पाइने गणेशमन्दिर र गणेशमूर्तिहरूको विषयमा पनि छोटो चर्चा गरिनेछ । पौराणिक कालदेखि वर्तमान कालसम्म नेपाल, भारत एवं विश्वका अनेक देशहरूमा स्थापित गणेशका मूर्ति एवं मन्दिरहरूले श्रीगणेशको विश्वव्यापी प्रसिद्धि उजागर गर्दछन् ।

यहाँ प्रस्तुत गरिने गणेशमन्दिर, मूर्ति, तीर्थ र क्षेत्रसम्बन्धी विवरण पूर्ण छैन तापनि यसले थाहा पाउन बाँकी रहेका गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्तिहरूको अनुसन्धानमा अनुसन्धाताहरूलाई प्रेरणा प्रदान गर्नेछ । यस विवरणबाट पाठकले गणेशको विश्वव्यापी प्रभावबारे जानकारी पाउनेछन् र नेपाललगायत धेरै देशहरूमा पौराणिक कालदेखि नै श्रीगणेशको उपासनाको सुदृढ परम्परा रहेको तथ्यबाट अवगत हुनेछन् । श्रीगणेशपुराणको नेपाली भाषानुवादको सन्दर्भमा भूमिकामा प्रस्तुत श्रीगणेशसँग सम्बद्ध मूर्ति र मन्दिरहरूको वर्णनात्मक प्रस्तुतिबाट पाठकहरूले प्राचीन एवं अर्वाचीन वाङ्मयमा श्रीगणेशको जति प्रसिद्धि छ, त्यति नै भौतिक व्यवहारमा पनि उहाँको प्रत्यक्ष प्रभाव छ भन्ने कुरा आत्मसात् गर्नेछन् ।

यस प्रकरणमा गणेशपुराणमा वर्णन गरिएका गणेशतीर्थहरूको सङ्क्षिप्त परिचय प्रस्तुत गरी नेपालमण्डलका प्रसिद्ध विनायकहरू एवं मेचीदेखि महाकालीसम्मका केही प्रसिद्ध गणेशमन्दिर, गणेशमूर्ति र गणेशतीर्थहरूको सङ्क्षिप्त परिचय प्रस्तुत गरिनेछ । सम्पूर्ण नेपालमा छरिएर रहेका गणेशमन्दिर एवं मूर्तिहरूको जिल्लागत आधारमा सङ्क्षिप्त परिचय भने परिशिष्ट एकमा प्रस्तुत गरिएको छ । यसैगरी भारतका २१ गणपतिक्षेत्रको सङ्क्षिप्त वर्णन र विश्वका अनेकौं देशहरूमा रहेका गणेशमन्दिर एवं मूर्तिसम्बन्धी सैद्धान्तिक चर्चा पनि यहाँ प्रस्तुत गरिनेछ । ती सबैको सङ्क्षिप्त परिचय परिशिष्ट एकको अध्ययनबाट अवगत हुनेछ ।

## ७.१ गणेशपुराणमा वर्णित गणेशका मूर्ति, मन्दिर एवं तीर्थ

श्रीगणेशपुराण सनातन संस्कृतिका सबै पक्षलाई प्रतिबिम्बित गराउने सिद्ध एवं प्रसिद्ध पौराणिक ग्रन्थ हो । यस प्रकरणमा गणेशका उपासकहरूलाई प्राचीन गणेशमूर्ति, गणेशमन्दिर र गणेशतीर्थहरूसँग परिचित गराई उनीहरूको गणेशोपासना पक्षलाई अझ तीव्रतम बनाउने उद्देश्यले श्रीगणेशपुराणमा वर्णित गणेशमूर्ति, गणेशमन्दिर एवं गणेशतीर्थहरूको वर्णन क्रमअनुसार परिचय प्रस्तुत गरिँदैछ ।

### क ) पल्लीपुरीको बल्लाल विनायकमन्दिर

सिन्धुदेशको पल्लीपुरीमा कल्याणवैश्यका छोरा बल्लाल सानैदेखि श्रीगणेशका उपासक थिए । आफ्ना बालमित्रहरूका साथ बालक्रीडा गर्दा पनि बल्लाल गणेशपूजनमा आधारित क्रीडा गर्दथे । एकदिन बालमित्रहरूका साथ वनमा गई श्रीगणेशको मन्दिर तयार गरेर उनी बालभावले गणेशपूजा गरिरहेका थिए । त्यसबेला 'तिम्रो छोरा बल्लालका कारण हाम्रा छोरा बिग्रिए' भन्ने नगर एवं गाउँका भद्रभलाद्मीहरूको भनाइ सुनेर रिसाउँदै आएका तिनका पिता कल्याण वैश्यले सहसा आएर मन्दिर भत्काए, पूजास्थल लथालिङ्ग बनाए र छोरा बल्लाललाई नराम्रोसँग पिटेर रगताम्मे बनाए । त्यसपछि बालक बल्लालले आर्तभावले श्रीगणेशको प्रार्थना गरे, उहाँ प्रकट हुनुभयो ।[१] बल्लालले खुसी भई हजुर यस क्षेत्रमा विराजमान हुनुहोस् भनी बिन्ती गरेपछि म यहाँ मेरो नाममा तिम्रो नाम जोडेर बल्लालविनायकका नामबाट रहनेछु । भाद्रशुक्ल चतुर्थीका दिन जसले यहाँ आई पूजा गरेर रथयात्रा गर्नेछन्, तिनका मनोरथ पूर्ण हुनेछन् भनी श्रीगणेश अन्तर्धान हुनुभयो । त्यसपछि बल्लालले गणेशभक्त सज्जनहरूको सहयोगमा बल्लालविनायकको मूर्ति तयार गराई मन्दिर बनाएर ब्राह्मणहरूद्वारा मूर्तिप्रतिष्ठा गराएका थिए ।[२]

### ख ) कोह्लारनगरको अनादिगणेशमन्दिर

राजा सोमकान्त प्रतापी, परोपकारी एवं आस्थावान् राजाका रूपमा जनप्रिय बनेर शासन गरिरहेका थिए। एक्कासि उनलाई कुष्ठरोगले समात्यो । उपचार गर्दागर्दै पनि निको हुन सकेन । शरीर दुर्गन्धित हुँदै गयो, पीपका धारा लाग्न थाले र असह्य पीडा भयो । उनलाई आफ्नै शरीरप्रति घृणा लाग्यो र मनमा वैराग्य जाग्यो । राजपात छाडेर सपत्नीक महर्षि भृगुका शरणमा पुगे । भृगु ऋषिले ध्यानबाट हेर्दा सोमकान्तका पूर्वजन्मका घोर पापका साथै एउटा विशिष्ट पुण्यकर्म पनि देखे । उनले भने – हे राजन् ! घना जंगलको जीर्ण मन्दिरमा विना पूजाआजा रहेको अनादिगणेश मूर्तिका निमित्त सुन्दर मन्दिर बनाई स्थापना गर्नु नै तिम्रो पूर्वजन्मको विशिष्ट पुण्यकर्म थियो। तिमीले पाप र पुण्यका फलमध्ये पहिले पुण्यफल भोग गर्छु भनेकाले केही कालसम्म प्रतापी राजाको रूपमा राजपात भोग्यौ, अब पापको फल भोग गर्ने समय आएकाले तिमी कुष्ठरोगी भएका छौ । श्रीगणेशको आराधना गर्दै गणेशपुराण श्रवण गर तिम्रो कल्याण हुनेछ । तिमीले अघिल्लो जन्ममा कारिगर लगाएर विशाल

---

१. *गणेशपुराण १/२२/१–५१ ।*

२. *त्वन्नामपूर्वं मन्नाम भविष्यति जने शुभम् । बल्लालविनायकेति नगरे सुप्रतिष्ठितम् ॥*
*मयि चित्तं स्थिरं ते स्याद् भक्तिरव्यभिचारिणी । यात्रां मम करिष्यन्ति नगरे पल्लीसंज्ञके ॥*
*भाद्रशुक्लचतुर्थ्यां ये तेषां कामान् ददाम्यहम् । इति दत्वा वरं देवस्तत्रैवान्तरधीयत ॥*
*ततो विनायकं स्थाप्य बल्लालो ब्राह्मणैः सह । प्रासादं कारयामास नानाशोभासमन्वितम् ॥ – पूर्ववत्, १/२२/५२–५६ ।*

आकारको चार ढोका, चार तोरण र चार गुम्बजले सजिएको; अनेक स्तम्भ एवं मण्डपले सम्पन्न, मणि-रत्न एवं मोतीद्वारा झकिझकाउ र फराकिलो आँगन भएको; चारैतिर सुन्दर उद्यान रहेकाले अत्यन्त शोभायमान, चारै दिशामा रहेका निर्मल जल र कमलसहितका तलाउले घेरिएको कलात्मक गणेशमन्दिर बनाएर वनको जीर्ण देवालयमा रहेको अनादिगणेश मूर्तिको प्रतिष्ठा गराई नयाँ मन्दिर बनाएर स्थापना गरेका थियौ । अहिले तिमीले बनाएको मन्दिर कोह्लारपुरको शोभा बनेर रहेको छ । भृगु ऋषिका मुखबाट आफ्ना पूर्वजन्मका पुण्य र पाप थाहा पाई राजा सोमकान्तले श्रीगणेशपुराण श्रवण गरे र त्यसका पुण्यले गणेशधाममा प्राप्त भए ।[३]

### ग ) बङ्गाल गणेशपुरको गणेशमन्दिर

मुनि गृत्समदबाट गणानान्त्वा० इत्यादि वैदिक मन्त्रको दीक्षा प्राप्त गरी तपस्यामा लीन भएको त्रिपुरासुरलाई चतुर्बाहु श्रीगणेशको दर्शन गर्ने सौभाग्य प्राप्त भयो । श्रीगणेशले वर माग भन्नुहुँदा त्यसले अरू अनेक वरका साथै मेरो नगरमा हजुर विराजमान हुनुहोस् र हजुर विराजमान हुनुभएका कारण यो नगर गणेशपुरका नामबाट प्रख्यात होस् भनी वरयाचना गर्दा श्रीगणेश तथास्तु भनी अन्तर्धान हुनुभयो । त्यसपछि त्रिपुरासुरले बङ्गाल देशमा रहेको आफ्नो नगरमा काश्मीर देशमा पाइने चिल्लो शिलाद्वारा गणेशमूर्ति तयार गराई मणि, मोती, सुवर्ण आदिद्वारा सुसज्जित दिव्य मन्दिर बनाएर गणेशमूर्तिको स्थापना गरी विधिवत् आराधना गरेको थियो । मन्दिरस्थापनापछि त्रिपुरासुरको नगर लोकमा गणेशपुरका नामबाट प्रसिद्ध भयो ।[४]

### घ ) कदम्बपुरको चिन्तामणिविनायक मन्दिर एवं चिन्तामणितीर्थ

गौतम ऋषिको सराप परी दुःखी भएका इन्द्रले देवताहरूको सहयोगमा उनै ऋषिबाट षडक्षर मन्त्रको दीक्षा लिएर श्रीगणेशको आराधना गरेका थिए । श्रीगणेशले प्रसन्न भई दर्शन दिनुभयो । वर माग भनी प्रेरित गर्दा इन्द्रले - मेरो चित्त हजुरमा लागिरहोस्, यो क्षेत्र चिन्तामणिका नामबाट प्रसिद्ध होस्, चिन्तामणितीर्थ एवं गणेशसरोवरको महिमा बढोस् र यहाँ आई हजुरको आराधना गर्ने आराधकले चिताएका कुरा पूरा होऊन् भनी वर मागेका थिए । भगवान् गणेश तथास्तु भनी अन्तर्धान हुनुभयो । त्यसपछि इन्द्रले चिन्तामणिविनायकको प्रतिमा तयार गरी मन्दिर बनाएर स्थापना गरे ।[५]

### ङ ) दण्डकारण्यको महागणेशमन्दिर

भगवान् सदाशिव युद्धमा दुर्जेय दानवराज त्रिपुरासुरबाट पराजित हुनुभयो । त्यस बेला देवर्षि नारदजीले सदाशिवलाई भगवान् श्रीगणेशको आराधना गर्नुपर्ने परामर्श दिएपछि उहाँले आराधनाद्वारा श्रीगणेशको दर्शन

---

३. ततोऽनादिः परा मूर्तिर्गणेशस्य वने शुभा । जीर्णदेवालये क्षुद्रे स्थिता ते कथिता द्विजैः ॥
ततोऽतिविस्तृतं दीर्घं चतुस्तोरणसंयुतम् । चतुर्द्वारं सुरुचिरं चतुःशिखरशोभितम् ॥
नानास्तम्भाचितं नानावेदीभिः परिवारितम् । मुक्ताप्रवालरत्नाद्यैः खचितं रचिराङ्गणम् ॥
नानापुष्पद्रुमयुतं नानाफलद्रुमैर्वृतम् । चतुर्दिक्षु चारुवारिमद्वापीविराजितम् ॥ - ग.पु. १/८/२२-२४ ।

४. ततः काश्मीरपाषाणभवां मूर्तिं गजाननीम् । स्थापयामास विधिवत् ब्राह्मणैर्मन्त्रकोविदैः ॥
महान्तं काञ्चनं दिव्यं मणिरत्नादिभूषितम् । गणेशपुरमध्ये स प्रासादं कृतवान् शुभम् ॥
उपचारैः षोडशभिः पूजयामास तं विभुम् । ततस्तदभवत् स्थानं बङ्गाले त्रिपुरस्य ह । गणेशपुरमित्येव सर्वेषां सर्वसिद्धिदम् ॥ - गणेशपुराण, १/३९/२-४, ६।

५. इन्द्र चिन्तामणिपुरं ख्यातं भुवि भविष्यति । चिन्तितं च प्रदास्यामि चिन्तामणिविनायकः ॥
पूजितः सुरनाथेन तत्रैवान्तर्दधे विभुः । स्थापयामास शक्रोऽपि स्फाटिकां मूर्तिमादरात् ॥
कारयामास विपुलं प्रासादं रत्नकाञ्चनैः ॥ - ग.पु. १/३४/३३,३५,३७ ।

पाउनुभयो र गणेशसहस्रनामको उपदेश पनि । यसै अवसरमा उहाँले दण्डकारण्यमा गणेशमन्दिर बनाई महागणेशमूर्तिको प्रतिष्ठा गराउनुभयो । त्यसपछि गणेशमन्दिरको निर्माण, गणेशसहस्रनामको पाठ र आराधनाद्वारा सदाशिवले त्रिपुरासुरमाथि विजय प्राप्त गर्नुभयो ।[६]

## च ) पारिनेर नगरको मङ्गलमूर्ति मन्दिर

भारद्वाज ऋषि र पृथिवीका पुत्रका रूपमा पैदा भएका मङ्गलले आफ्ना पिता भारद्वाजबाट शिक्षा र गणेशमन्त्रको दीक्षासमेत प्राप्त गरे । गणेशमन्त्रको जपानुष्ठान गरी मङ्गलले श्रीगणेशलाई प्रसन्न तुल्याए । श्रीगणेशले दर्शन दिएर मङ्गललाई देवताहरूको माझमा रही अमृतपान गर्ने अधिकार प्रदान गर्दै सम्पूर्ण मनोरथ पूर्ण तुल्याइदिनुभयो । त्यसपछि मङ्गलले श्रीगणेशको दशभुज मूर्ति बनाई मङ्गलमूर्ति भनी नामकरण गरेर मन्दिरमा प्रतिष्ठा गराएका थिए । मङ्गलमूर्ति क्षेत्र त्यसपछि गणेशतीर्थका रूपमा प्रसिद्ध भयो ।[७]

## छ ) दण्डकारण्यको गणेशमूर्ति र नामलतीर्थ

मुद्गल ऋषिका शिष्य र धर्मपुत्र भ्रुशुण्डी तल्लीनतापूर्वक दीर्घकालिक श्रीगणेशको आराधनाका कारण श्रीगणेशकै स्वरूपमा परिणत भएका थिए । उनको आँखीभौंबाट सूँढ निस्किनाले उनलाई भ्रुशुण्डी भनिएको थियो । उनको प्रभाव पनि आफ्ना आराध्य श्रीगणेशकै समान भएकाले उनलाई मानिसहरू श्रीगणेश नै मान्दथे। वास्तवमा उनले श्रीगणेशको एकाक्षर मन्त्र गं को जपानुष्ठान गर्दै लामो समय बिताए । भगवान् गणेशको मूर्ति आफ्नो अगाडि राखी नित्य षोडशोपचारद्वारा अर्चना गरे । उनको आराधना र जपानुष्ठानबाट प्रसन्न हुनुभएका श्रीगणेशले उनलाई दर्शन दिएर भन्नुभयो - तिमी मेरा प्यारा भक्त हौ, तिम्रो कल्याण हुनेछ र तिमीले तपस्या गरेको यो क्षेत्र नामलतीर्थका नामबाट प्रसिद्ध हुनेछ ।[८]

## ज ) गङ्गातीरको भालचन्द्र मन्दिर

सौन्दर्यगर्वित चन्द्रमाले एकदिन श्रीगणेशको सूँढ देखेर उपहास गरे । फलस्वरूप श्रीगणेशबाट ज्योतिहीन एवं कुष्ठरोगी हुने सराप पर्न गयो । पछुतो मानिरहेका चन्द्रमाले श्रीगणेशको एकाक्षर मन्त्रजप गरी १२ वर्षसम्म अखण्डरूपमा आराधना गरेपछि उहाँ प्रसन्न हुनुभयो । भाद्र शुक्ल चतुर्थी तिथिमा चन्द्रको दर्शन गर्ने मानिसले सरापको फल बेहोर्ने गरी श्रीगणेशले चन्द्रमालाई पहिलेझैं ज्योतिर्मय र सुन्दर तुल्याउनुभयो । त्यसपछि चन्द्रमाले श्रीगणेशको वरदनामबाट मूर्ति तयार गराएर मन्दिरमा राखी प्रतिष्ठा गराएर पूजा गरे । देवता र ऋषिहरूले त्यस मूर्तिलाई भालचन्द्रमूर्ति भनी सम्बोधन गरे । भालचन्द्रमन्दिर रहेको यो क्षेत्र सिद्धिक्षेत्रका रूपमा प्रसिद्ध भयो ।[९]

---

६. श्रुत्वा तु वाक्यं द्विरदाननस्य । तं पूज्य सम्यक् शिव उत्सहर्षं ॥
संस्थापयामास महागणेशम् । प्रासादमुच्चैर्द्विमवातु पक्के ॥ - गणेशपुराण १/४८/१९ ।

७. ततस्तु मङ्गलो देवं स्थापयामास भक्तितः । शुण्डामुखं दशभुजं सर्वावयवसुन्दरम् ॥
प्रासादं कारयामास गजाननमुदावहम् । संज्ञां मङ्गलमूर्तीति देवदेवस्य सोऽकरोत् ॥ - ग.पु. १/६०/३७-३८ ।

८. पुनः पद्मासनगतो जजापैकाक्षरं मनुम् । पुरो मूर्तिं प्रतिष्ठाप्य गणेशस्य मनोहराम् ॥
इदं क्षेत्रं सुविख्यातं नामलेति भविष्यति । अनुष्ठानकृतामत्र नानासिद्धिप्रदं नृणाम् ॥ - ग.पु. १/५७/५१, ५५ ।

९. स्थापयामास वरदमूर्तिं देवर्षिभिः सह । भालचन्द्रेति नामास्य चक्रुस्ते मुनयः सुराः ॥
प्रासादं कारयामास काञ्चनं रत्नसंयुतम् । उपचारैः षोडशभिः पूजयामास सादरम् ॥ - ग.पु. १/६०/५१-५२ ।

### झ) जाम्बानगरीको गणनाथमन्दिर

दक्षिण भारतको जाम्बा नगरीमा अतिप्राचीन गणनाथ मन्दिर रहेको छ । यो सिद्धक्षेत्र मानिएकाले यसमा गणेशका उपासक योगीहरू नित्य निवास गर्दछन् । भाद्रशुक्ल चतुर्थीका दिन यहाँ गणेशमहोत्सवको आयोजना गरिन्छ । यो महोत्सव गणेशमन्दिरका साथै जाम्बा नगरीका घर-घरमा मनाइन्छ । यसै क्षेत्रमा गोरु, गधा र दलित नारीले अज्ञानमै भए पनि श्रीगणेशमा दूर्वार्पण गर्दा श्रीगणेश प्रसन्न हुनुभयो । फलस्वरूप ती तीनवटै प्राणीहरूले गणेशधाम प्राप्त गरेका थिए ।[१०]

### ञ) मयूरेश्वर क्षेत्रको महागणेशमन्दिर

राजा कार्तवीर्यद्वारा जमदग्नि ऋषिको वध गरियो । उनका छोरा परशुराम ठूलो चोटमा परे । माता रेणुकाको उपदेशअनुसार तिनले भगवान् शिवको आराधना गरे । शिवले प्रसन्न भई दर्शन दिएर श्रीगणेशको ६ अक्षरको मन्त्र **वक्रतुण्डाय हुम्**को दीक्षा दिनुभएपछि परशुराम जपानुष्ठानमा प्रवृत्त भए । परशुरामको भक्तिपूर्ण साधनाबाट प्रसन्न हुनुभएका श्रीगणेशले दर्शन दिएर मनकामना सिद्धि हुने वरका साथै परशु पनि प्रदान गर्नुभयो । वर एवं परशु प्राप्त गरेपछि परशुरामले श्रद्धापूर्वक महागणपतिको प्रतिमा तयार गरी विशाल मन्दिर निर्माण गरेर उक्त प्रतिमाको प्रतिष्ठा गराएका थिए । मयूरेश्वर सिद्धक्षेत्रमा अवस्थित यो मन्दिर तीर्थका रूपमा सम्मानित छ ।[११]

### ट) एल नगरको लक्षविनायकको मूर्ति

भगवान् शिवबाट श्रीगणेशमन्त्रको दीक्षा लिएर हिमालीक्षेत्रको सघन वनमा तपस्या गर्न गएका स्वामी कार्तिकेयको कठोर तपस्याबाट प्रसन्न भई श्रीगणेशले दर्शन दिएर वर माग्न प्रेरित गर्नुभयो । स्वामी कार्तिकेयले मनकामनासिद्धि, देवताहरूमा वरिष्ठता, चरणारविन्दको अविस्मृति एवं अपराजेयताजस्ता विषयहरूको प्राप्तिका साथै चिन्तन गर्नासाथ श्रीगणेशको दर्शन प्राप्त गर्ने सौभाग्यका लागि प्रार्थना गरेका थिए । श्रीगणेश स्वीकृति प्रदान गरी आफ्नो वाहन मयूर पनि दिएर स्वामी कार्तिकेयलाई मयूरध्वज भनी सम्बोधन गर्दै अन्तर्धान हुनुभयो। स्वामी कार्तिकेयले पनि श्रीगणेशको महामूर्ति स्थापित गरी एक लाख दूर्वार्पण गर्दै अर्चना गरे । उनीद्वारा एलनगरमा स्थापित गणेशमूर्ति लक्षविनायक मूर्तिका रूपमा प्रसिद्ध भयो ।[१२]

### ठ) नासिक जनस्थानको महोत्कट गणेशको मूर्ति

भगवान् शङ्करको सराप परी खरानी भएका कामदेवको आत्मा भट्किरहेको थियो । कामदेवकी पत्नी रतिको विलापपूर्ण प्रार्थनाबाट करुणामय भई भगवान् शङ्करले शरीर नरहे पनि कामदेवलाई प्रत्येक प्राणीका मनमा बस्ने व्यवस्था मिलाइदिनुभयो । मनमा बसेका कारण कामदेवसँग रतिको पुनर्मिलन भयो । कामदेवले

---

१०. प्रासादं गणनाथस्य ददर्श परमाद्भुतम् । नानावृक्षलताजालैर्नानापक्षिगणैर्वृतम् ॥
अत्र योगीश्वराः केचिदनुष्ठानरताः सदा । उपासका गणेशस्य नियमस्था वसन्ति हि ॥
कदाचिद् भाद्रमासस्य चतुर्थ्यां तु गृहे गृहे । तस्मिन् पुरे सम्प्रवृत्तो गणनाथमहोत्सवः ॥ – ग.पु. १/६२/२१-२४ ।

११. रामोऽपि स्थापयामास महागणपतिं तदा । ब्राह्मणैर्वेदवेदाङ्गशास्त्रविद्भिः समं मुदा ॥
प्रासादं कारयामास रत्नस्तम्भयुतं दृढम् । – ग.पु. १/८२/४३-४५ ।

१२. पराजयो मे न कदापि भूयात् । प्रत्यक्षतामेहि विचिन्त्यमानः ॥
अविस्मृतिः स्यात् तव पादपद्मे । सर्वेषु देवेषु वरिष्ठता च ॥
[illegible] [illegible] यतस्ततो लक्षविनायकः । नाम्ना ख्यातो भवान् त्वं भक्तकामसुरद्रुमः ॥ – ग.पु. १/८७/४०-४२ ।

एक दिन भगवान् शिवसमक्ष गएर विनाशरीर प्राणीहरूका मनमा मात्र बसिरहँदा आफूले कष्ट भोग्नुपरिरहेको कुरा निवेदन गरे । भगवान् शिवले श्रीगणेशको एकाक्षर मन्त्र सुनाई आराधना गर्न लगाउनुभयो । कामदेवले आराधनाबाट श्रीगणेशको दर्शन पाए । उहाँले तिनलाई त्रिलोकीमा विजयी हुने वरका साथै द्वापरयुगमा कृष्ण र रुक्मिणीका छोरा प्रद्युम्नका रूपमा पैदा हुने वर दिएर अन्तर्धान हुनुभयो । यसै खुसियालीमा कामदेवले आफ्नी पत्नी रतिका माध्यमबाट श्रीगणेशको महामूर्ति तयार गराई नासिकको जनस्थानमा स्थापना गराएर उपासना गरे। पहिले श्रीरामले शूर्पणखाको नाक काटिदिनुभएको ठाउँमा भगवान् महोत्कट विराजमान हुनुभयो ।[१३]

## ङ) प्रवालनगरको धरणीधर गणेशमन्दिर

अत्यन्त अभिमानी स्वभावका कारण भगवान् शिवद्वारा तिरस्कृत र महत्त्वहीन अवस्थामा रही दीनतापूर्वक समययापन गरिरहेका शेषनागले नारदजीको उपदेशअनुसार श्रीगणेशको आराधना गरी दर्शन पाए । त्यसपछि उनले आफ्नो वेदना सुनाए । श्रीगणेशले शेषनागलाई पुरानो स्वरूप एवं गौरवका साथै पृथ्वी धारण गर्ने सामर्थ्य पनि दिनुभयो र आफ्नो पेटमा यज्ञोपवीतकै रूपमा धारण गर्नुभयो । यसरी शेषनागलाई पेटमा धारण गर्नुभएका कारण श्रीगणेशको नाम 'व्यालबद्धमहोदर' हुन गयो । त्यसबेला शेषनागले भनेका थिए – हे प्रभु ! अब उप्रान्त हामी दुवै धरणीधरका नामबाट प्रसिद्ध होऔँ र हजुर प्रवालनगरमा धरणीधर नामबाट विराजमान हुनुहोस् । श्रीगणेश तथास्तु भनेर अन्तर्धान हुनुभयो । शेषनागले प्रवालनगरमा श्रीगणेशको धरणीधर मूर्ति बनाई सुन्दर मन्दिर तयार गरेर मूर्तिस्थापना गरेका थिए । प्रवालनगरको यो गणेशमन्दिर श्रीगणेशको पवित्र तीर्थका रूपमा समादृत छ ।[१४]

## ढ) कश्यपसन्ततिद्वारा स्थापित गणेशमूर्तिहरू

महर्षि कश्यपका सबैथरि सन्तानले सृष्टिसामर्थ्य प्राप्त गर्न श्रीगणेशको आराधना गरेका थिए । उहाँले दर्शन दिएर मनोरथ पूर्ण गराउनुभएपछि प्रसन्न भएका ती सबैले आ-आफ्नै किसिमका गणेशमूर्तिहरूको स्थापना गरे । देवताहरूले सुमुखमूर्ति, मुनिहरूले एकदन्तमूर्ति, गन्धर्व एवं किन्नरहरूले कपिलमूर्ति, गुह्यक, चारण एवं सिद्धहरूले गजकर्णमूर्ति, मानिसहरूले लम्बोदरमूर्ति, वन्यजन्तुहरूले विकटमूर्ति, वन र पर्वतहरूले विघ्ननाशकमूर्ति, चराचुरुङ्गीहरूले विनायकमूर्ति, सर्पहरूले धूम्रकेतुमूर्ति, जलाशयहरूले गणाध्यक्षमूर्ति, कृमि, कीट, वनस्पति एवं औषधिहरूले भालचन्द्र मूर्ति र अरू सचेतन प्राणीहरूले गजाननमूर्ति तयार गरी प्रतिष्ठा गरेका थिए । उक्त सबै नाम मन्त्रसमान पवित्र र प्रभावकारी मानिएका छन् ।[१५]

## ण) सह्यपर्वतको हेरम्बमन्दिर

यज्ञमा श्रीगणेशको स्मरण नगर्नाले र सावित्रीको उपेक्षा गरी गायत्रीको अर्चना गर्नाले सावित्रीको सराप परेर देवताहरू जलको रूपमा परिणत भए । देवताहरूको उद्धारका लागि देवपत्नीहरूले कर्नाटकको वक्रतुण्ड

१३. तत्र कामो महामूर्तिं गणेशस्य तथाविधाम् । सम्पाद्य स्थापयामास पूजयामास वै तदा ॥
महोत्कटेति नामास्य तेजस्वित्वात् तथाऽकरोत् ॥ – ग.पु. १/६९/३-८ ।

१४. शेषोऽपि तादृशीं मूर्तिं कृत्वाऽस्थापयदादरात् । अकरोद् बहुरत्नाढ्यं प्रसादं काञ्चनं द्रुतम् ॥
प्रवालनगरे ख्यातो गणेशो धरणीधरः ॥ – ग.पु. १/१०/५३, ५६ ।

१५. सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः । लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः ॥
धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः । द्वादशैतानि नामानि यः पठेत् शृणुयादपि ॥
विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा । संग्रामे संकटे चैव विघ्नस्तस्य न जायते ॥ – ग.पु. १/९२/३०-३२ ।

मन्दिरमा गई श्रीगणेशको आराधना गर्दा उहाँले दर्शन दिनुभयो । दर्शन पाएपछि रमाएका देवपत्नीहरूले स्तुति र दु:ख निवेदन गरे । वर दिँदै भगवान् गणेशले भन्नुभयो - अब देवताहरूले अंशरूपमा मात्र जलमा रही पूर्ववत् स्वरूप धारण गर्नेछन् । यसै प्रसन्नताको अवसरमा देवताहरूले हेरम्बगणपतिको मूर्ति बनाई सुन्दर मन्दिर तयार गरेर मूर्तिप्रतिष्ठाका साथै दूर्वाङ्कुर चढाई अर्चना-उपासना गरेका थिए ।[१६]

## त ) भगवान् विश्वनाथद्वारा काशीमा स्थापित ढुण्ढिराज मन्दिर

भस्मासुरको छोरा दुरासद दानवले शिवको आराधना गरी उहाँको वरदानबाट तीनै लोकमाथि पूर्ण अधिकार कायम गरेपछि त्यसको कठोर शासन र अत्याचारका कारण देवता, मुनि र सबै मानवहरू त्राहि त्राहि भन्न थाले । आफूले दिएको वरदानका कारण दुरासदलाई उन्मत्त भएको देखेर भगवान् विश्वनाथले पनि केदारेश्वर क्षेत्रमा गई एकान्तवास गर्नुभयो । 'शक्तिपुत्रले मात्र तिमीमाथि विजय प्राप्त गर्नेछन् र जीवनदान पनि दिनेछन्' भन्ने वर दुरासदले प्राप्त गरेको थाहा पाएर देवताहरूले श्रीशक्तिको आराधना गरे । श्रीशक्तिले दर्शन दिएर तिमीहरूले आफ्नो कार्यसिद्धिका लागि श्रीगणेशको आराधना गर भन्नुभयो । देवताहरूले आराधना गरी स्तुति गर्दै दुरासदबाट पाएका पीडाको विषयमा श्रीगणेशलाई निवेदन गरे । त्यस बेला श्रीगणेशको आकाशवाणी भयो - 'तिमीहरू चिन्ता नगर, मैले दुरासदमाथि विजय प्राप्त गर्नेछु ।' त्यसपछि देवताहरूले पार्वतीछेउमा गएर गणेशबाट आकाशवाणी भएको कुरा अवगत गराए । एक्कासि पार्वतीको मुद्रा बदलियो, रिसाउनुभयो । रिसाउँदा खुल्न गएको उहाँको मुखबाट एउटा तेजको पुञ्ज प्रकट भयो र त्यो गणेशका रूपमा परिणत भयो । देवताहरूले स्तुति गरे अनि पार्वतीले पूजा गर्नुभयो । उहाँले आफ्नो वाहन सिंह प्रदान गरी वक्रतुण्ड भनी नामकरण गर्नुभयो । त्यसपछि पार्वतीनन्दन गणेश र दुरासदका बीचमा घोर युद्ध भयो । दुरासदले आफ्ना सम्पूर्ण योद्धाहरू लगाएर श्रीगणेशलाई चारैतिरबाट घेऱ्यो । त्यसबेला श्रीगणेशले काशीमा आफ्ना तेजबाट छपन्न विनायक प्रकट गरी युद्ध गर्न लाग्नुभयो । श्रीगणेश एवं विनायकहरूको पराक्रमबाट दुरासदको सेना पराजित भयो । महाबली दुरासदले पनि युद्धभूमिबाट पलायन गऱ्यो । यस्तो अवस्था देखेर श्रीगणेशले विराट्रूप धारण गरी त्यसलाई समात्नुभयो । त्यसबेला उहाँले एउटा पाउले काशीमा र अर्को पाउले त्यसको टाउकोमा टेक्नुभएको थियो । श्रीगणेशले भन्नुभयो - शिवको वर पाएका कारण तेरो मृत्यु हुँदैन, तँ अबदेखि काशीमा पर्वतझैं अचल भएर बस्नुपर्दछ । दुरासदले बिन्ती गऱ्यो - हे प्रभु ! हजुरले पनि यसरी नै मेरो टाउकोमा टेकिरहनुपर्दछ । भगवान् गणेश तथास्तु भनी छपन्न विनायकहरूका साथ काशीविश्वनाथका समीपमा ढुण्ढिराज गणेशका नामबाट विराजमान हुनुभयो । उहाँको अर्को मूर्ति तुण्डिनपुरमा एकपादविनायकका रूपमा शोभायमान भयो ।

भगवान् ढुण्ढिराजको प्रयासबाट केदारक्षेत्रमा एकान्तवास गरिरहनुभएका भगवान् विश्वनाथ पनि अविमुक्त पुरी काशीमा फर्किनुभयो । त्यसपछि विश्वनाथले ढुण्ढिराज गणेशको भावपूर्ण स्तुति गरी नेपालको कालीगण्डकीमा पाइने शालग्राम शिलाद्वारा गणेशको मूर्ति तयार गराएर सुन्दर मूर्ति बनाई सकल भक्तहरूलाई खोजी-खोजी तिनीहरूले चाहेका वस्तु प्रदान गर्नुहुने अर्थमा उक्त मूर्तिको ढुण्ढिराज गणेश नामकरण गरी प्रतिष्ठा गराउनुभयो ।[१७]

१६. *सोऽपि तत्प्रतिनन्द्याथ पिदधे विघ्ननाशनः । ततस्ते सुन्दरां मूर्तिं कृत्वा पाषाणतः शुभाम् ॥*
*चतुर्भुजां करिकराननां हीरकनिर्मिताम् । प्रासादं परमं कृत्वा स्थापयामासुरादरात् ॥* - ग.पु. २/३६/१८-२ ।

१७. *अन्वेषयित्वा सर्वार्थान् विदधासि नृणामिह । अतो ढुण्ढिरिति ख्यातस्त्रिलोक्यां त्वं भविष्यसि ॥*
*ढुण्ढिरित्येव ते नाम मुक्तिदं पापनाशनात् । स्मरणात् सर्वकार्याणां सिद्धिदं च भविष्यति ॥*
*एवमुक्त्वाऽस्थापयत् स गण्डकीशोपलैः कृताम् । मूर्तिं ढुण्ढेर्महादेवः प्रासादे चारुनिर्मिते ॥* - ग.पु. २/४६/१८-२१ ।

### थ) श्रीरामद्वारा स्थापित कर्नाटकको वक्रतुण्डमूर्ति

भगवान् श्रीरामले रावणमाथि विजय प्राप्त गर्न कर्नाटक देशमा गई मन्दारवृक्षको फेंदमा वक्रतुण्ड गणेशको मूर्ति स्थापना गर्नुभयो । वक्रतुण्डको अनुकम्पाबाट उहाँले स्वर्ग, मर्त्य र पातालका लागि काँडोसमान पीडादायक रावणमाथि विजय प्राप्त गर्नुभएको थियो ।[१८]

### द) सनक-सनन्दनद्वारा स्थापित काशीको वरदविनायक मन्दिर

भगवान् श्रीगणेशको मानुषलीला अवलोकन गर्न काशी पुगेका सनक र सनन्दनले उहाँको अद्भुत लीला र विलक्षण स्वरूप दर्शन गर्नुका साथै अवाङ्मनसगोचर महिमा पनि अनुभव गरे । उनीहरूले श्रीगणेशको अन्तर्यामिता र विश्वसत्ता आत्मसात् गरे । त्यसपछि श्रद्धा एवं भक्तिले अनुप्राणित भई सुन्दर गणेशमूर्ति तयार गर्न लगाएर काशीमा वरदविनायकको नामबाट श्रीगणेशको प्रतिष्ठा गरे । मन्दिरको छेउमा कुण्ड तयार गराई गणेशकुण्ड एवं गणेशतीर्थ भनी नामकरण गरेका थिए । उक्त गणेशतीर्थमा स्नान गरी वरदविनायकको आराधना गर्नाले भक्तहरूका मनोरथ पूर्ण हुने कुरा गणेशपुराणमा बताइएको छ ।[१९]

### ध) पार्वतीद्वारा स्थापित लेखनाद्रिको गिरिजात्मज गणेशमन्दिर

त्रिसन्ध्याक्षेत्रमा विराजमान हुनुभएका भगवान् शङ्करले नित्य श्रीगणेशको उपासना गर्नुभएको देखेर पार्वतीलाई गणेशमा भक्ति गरी उहाँको दर्शन गर्ने प्रबल इच्छा जागृत भयो । श्री पार्वतीले भगवान् शङ्करबाट गणेशको एकाक्षर मन्त्रको दीक्षाग्रहण गरी लेखनाद्रिमा गई आराधना प्रारम्भ गर्नुभयो । आराधनाबाट प्रसन्न हुनुभएका श्रीगणेशले एकदिन श्रीपार्वतीलाई दशभुज स्वरूप लिएर दर्शन दिनुभयो । हे माता पार्वती ! हजुर के चाहनु हुन्छ ? भनी प्रश्न गर्नुहुँदा पार्वतीले म हजुरलाई पुत्रका रूपमा पैदा गर्न चाहन्छु भन्नुभएपछि श्रीगणेश तथास्तु भनी अन्तर्धान हुनुभयो । श्रीगणेशको दर्शनपछि भगवती पार्वतीले लेखनाद्रिमा गिरिजात्मज नामबाट गणेशमूर्ति तयार गराई गणेशमन्दिर बनाएर मूर्तिस्थापना गर्नुभयो । त्यसपछि तपस्याको महत्तम प्राप्तिबाट प्रफुल्लित हुँदै पार्वती शिवसमक्ष जानुभएको थियो ।[२०]

### न) विश्वकर्माद्वारा निर्मित मयूरेशपुरको गणेश-शङ्करमन्दिर

भगवान् श्रीगणेशले सदाशिवको सहयोग लिएर पापाचारी कमलासुरको वध गर्नुभयो । देवताहरूले स्तुति गर्दै श्रीगणेश एवं श्रीशङ्करलाई मयूरेशपुरमा विराजमान हुन अनुरोध गरे । उहाँहरूले अनुमति दिनुभएपछि विश्वकर्माले श्रीगणेश एवं श्रीशङ्करका मूर्ति बनाई मन्दिरमा प्रतिष्ठा गरेर श्रीगणेश एवं श्रीशङ्करको अर्चना-उपासना गरेका थिए ।[२१]

---

१८. रामेण स्थापितं पूर्वं वक्रतुण्डेति नामतः । यद्वरैर्विजयी रामो हत्वा राक्षसपुङ्गवान् । दशाननश्च विख्यातं वधी पत्न्या निजं पदम् ॥ - ग.पु. २/३६/२७-२९ ।

१९. स्थापयामासतुर्नाम वरदोऽयं विनायकः । प्रासादं परमं कृत्वा मूर्तिं वैनायिकीं शुभाम् ॥
गणेशतीर्थमिति च तत्र चक्रुः सर उत्तमम् । स्थापिता नाम तस्यापि तत्र तद् ख्यातिमागमत् ॥
अत्र स्नानेन दानेन गणेशपूजनेन च । सर्वान् कामानवाप्नोति हित्वा पापं पुरातनम् ॥ - ग.पु. २/५४/४८-५१ ।

२०. ततोऽहं परमप्रीता मूर्तिं प्रासादमेव च । विधाय स्थापयित्वा तां तवान्तिकमुपागता ॥ - ग.पु. २/८१/२९ ।

२१. विश्वकर्मा व्यधात्तत्र मन्दिरं सुन्दरं ततः । असङ्ख्यशिखरद्वारमसङ्ख्याश्चर्यसंयुतम् ॥
तन्नाभूत्नगरं चारु सर्वलोकसमन्वितम् । मयूरेशपुरं नाम तस्य चक्रुर्महर्षयः ॥ - ग.पु. २/१०४/३२-३३ ।

### प) राजा चक्रपाणिद्वारा स्थापित गण्डकीनगरको गणेशमन्दिर

भगवान् श्रीगणेशले मयूरेश अवतार लिएर आफ्नो अद्‌भुत पराक्रमद्वारा दुर्जेय दानवराज सिन्धुको वध गर्नुभएपछि सिन्धुका पिता राजा चक्रपाणिले भक्तिपूर्वक श्रीगणेशको स्तुति गरे । आफ्नो राजधानी गण्डकीनगरमा श्रीगणेशलाई पुऱ्याए । सम्पूर्ण जनताद्वारा श्रीगणेशको जय जयकार गराई उहाँको भावपूर्ण विदाई गर्न चार कोशको बाटोसम्म आफू पनि गए । श्रीगणेशले प्रसन्न भई तिनलाई पारमार्थिक कल्याण हुने आशीर्वाद प्रदान गर्नुभयो । श्रीगणेशबाट आशीर्वाद पाएका राजा चक्रपाणिले गण्डकीनगर अर्थात् अहिलेको नेपालमा पर्ने चितवन-नारायणगढमा श्रीगणेशलगायत सबै पाञ्चायन देवताका छुट्टाछुट्टै मन्दिर बनाई मूर्तिप्रतिष्ठा गरेका थिए । चक्रपाणिद्वारा स्थापित गणेशपाञ्चायनमन्दिर अहिले पनि नारायणगढमा प्राचीन गणेशमन्दिरका रूपमा रहेको छ ।[२२]

### फ) ब्रह्माजीद्वारा स्थापित गजाननमन्दिर

मयूरेश अवतारमा भगवान् श्रीगणेशले सिन्धु दैत्यको वधपछि कारागारमा थुनिएका देवताहरूलाई छुटाउनुभयो। अन्त्यमा लीला तिरोहित गरी धाममा फर्किनुभयो । भगवान् गणेश अनर्धान हुनुभएपछि ब्रह्मा, विष्णु र शिवले आ-आफ्ना हृदयमा मयूरेश श्रीगणेशको दर्शन पाउनुभयो । त्यसबेला ब्रह्माजीले बालुवाद्वारा गजानन मूर्ति तयार गरी गणेशमन्दिर बनाएर मूर्तिको प्रतिष्ठा गराउनुभयो । उक्त मन्दिरक्षेत्र मयूरेशक्षेत्रका रूपमा प्रसिद्ध भयो ।[२३]

### ब) नर्मदातटको गणेशतीर्थ र गणेशशिला

श्रीगणेशले शिव-पार्वतीका पुत्रका रूपमा पैदा भई राजा वरेण्यका पुत्रका रूपमा पनि लीला गर्नुभयो । त्यसबेला पृथिवीमा सिन्दूरासुरको अत्याचारले सीमा नाघेको थियो । सिन्दूरासुरले एक दिन आकाशवाणी सुन्यो - 'तेरो घमण्ड तोड्ने वीर बालक पार्वतीको कोखबाट पैदा भई राजा वरेण्यको दरबारमा पुगेको छ ।' सिन्दूरासुर बालकको खोजी गर्दै पर्यलीवनमा पुग्यो । पार्वतीको निवासकक्षमा बालक नदेखी पार्वतीलाई नै मार्न तम्सिएर तरबार उठायो। त्यसबेला त्यसका सामु चतुर्भुज बालकका रूपमा श्रीगणेश देखिनुभयो । सिन्दूरासुरले यो बालकलाई महासागरमा डुबाउँछु भनी आफ्नो पिठ्यूँमा धारण गऱ्यो । गणेशले आफ्नो शरीर बढाउँदै लग्नुभएपछि त्यसले थाम्न सकेन र उहाँलाई नर्मदानजिकै भुइँमा फ्याँकिदियो । त्यसबेला ठूलो आवाज भयो र पृथिवी कम्पायमान भइन् । भगवान् गणेश नर्मदातटमा तपस्या गरिरहेका मुनिहरूको समीपमा भुइँमा लड्नुभएको थियो । उहाँको शरीर भुइँमा खस्दा चोट लागेर रगतका धारा बगिरहेका थिए । त्यहाँका सबै ढुंगा रगतमा मुछिएर राता देखिए । जहाँनिर श्रीगणेश लड्नुभएको थियो त्यो ठाउँ नार्मद तीर्थका रूपमा प्रसिद्ध भयो। कालीगण्डकीका शालग्रामझैं नर्मदाका राता गणेशशिला पनि सिद्धशिला मानिए । त्यसबेलादेखि त्यो क्षेत्र मायूरक्षेत्र एवं पुण्यक्षेत्रका रूपमा प्रख्यात भयो र मन्त्रसाधकहरूलाई मन्त्रसिद्धि प्रदान गर्ने सिद्धक्षेत्रका रूपमा पनि प्रसिद्ध भयो ।[२४]

### भ) देवताहरूद्वारा स्थापित माहिष्मतीको गणेशमन्दिर

द्वापरयुगमा भगवान् गणेशले गौरीशङ्करका पुत्रका रूपमा गजाननका नामबाट अवतार लिनुभयो ।

---

२२. नागराः स्वगृहं प्रापताश्चक्रपाणिर्निजालयम् । पञ्चानामपि देवानां प्रासादानप्यकारयत् ॥ प्रत्यहं पूजयामास भक्तिभावसमन्वितः ॥ - ग.पु. २/१२६/१३-१४ ।

२३. तस्मिन्नन्तर्हिते देवा अपश्यन् हृदि तं सदा । ततो ब्रह्मा वालुकाभिः कृत्वा मूर्तिं गजाननीम् ॥
स्थापयामास विधिवत् प्रासादे सुमनोहरे । मैयूरेशं पुण्यक्षेत्रं यत्र देवः स्थितः स्वयम् ॥ मयूरेशो विघ्नहरो भक्तानां कामपूरकः ॥ - ग.पु. २/१२७/५७-५९।

२४. स बालः पतितो रेवाजलान्ते मुनिसन्निधौ । तत्र तीर्थमभूत् श्रेष्ठं गणेशकुण्डमित्युत ॥
तद्देहरुधिरात्तत्र प्रस्तरा रक्ततां गताः । त एव नार्मदाः ख्याता गणेशाः पापनाशनाः ॥ - ग.पु. २/१३२/२३,२५-२६ ।

दुराचारी सिन्दूरासुरको वध गरेर उहाँले लोककल्याण र विश्वशान्ति गर्नुभयो । यसै प्रसन्नताको अवसरमा देवताहरूले गणेशको स्तुति गरी सिन्दूरहन्ता गणेशको मूर्ति तयार गराएर माहिष्मती नगरको राजसदनक्षेत्रमा मन्दिर बनाई मूर्तिको स्थापना गरेका थिए । त्यो राजसदनक्षेत्र त्यसबेलादेखि तीर्थका रूपमा प्रसिद्ध भयो ।[२५]

### म ) व्यासद्वारा भृगुतीर्थमा स्थापित गजाननमन्दिर एवं सिद्धिक्षेत्र

वेदव्यासले अठार महापुराणहरूको रचना गर्ने पूर्ण सामर्थ्य प्राप्त गर्न श्रीगणेशको आराधना गरेका थिए । श्रीगणेशले दर्शन दिनुभएपछि व्यासले आफ्ना मनमा आउने भ्रान्ति निवारण गराई आफूलाई पुराणरचना गर्ने पूर्ण शक्ति प्रदान गर्न बिन्ती गरे । भगवान् गणेश तथास्तु भनी व्यासका हृदयमा प्रविष्ट हुनुभयो । त्यसपछि वेदव्यास तेजस्वी पुराणरचनाकार बने । दर्शन पाएपछि प्रसन्न भई व्यासले श्रीगणेशको गजाननमूर्ति तयार गर्न लगाई सिद्धिक्षेत्रमा मन्दिर बनाएर मूर्तिप्रतिष्ठाका साथै पूजा-उपासना गरे । त्यसपछि त्यो सिद्धिक्षेत्र पवित्र तीर्थका रूपमा प्रसिद्ध भयो ।[२६]

### य ) काशीमा रहेका ५६ विनायक

भगवान् गणेशले दुरासद नामक दानवसँग युद्ध गर्नुहुँदा सहयोगी कोही भएन । एक्लै युद्ध गरिरहँदा थाक्नुभयो । त्यसबेला उहाँले आफ्नै तेजबाट ५६ विनायकहरूलाई प्रकट गर्नुभएको थियो । पछि आफू ढुण्ढिविनायकका रूपमा विराजमान हुनुभयो । श्रीगणेशद्वारा प्रकट गरिएका ५६ विनायकहरूको आवरणअनुसार नामनिर्देश गरिँदैछ - दुर्गविनायक, अर्कविनायक, भीमचण्डविनायक, देहलीविनायक, उद्दण्डविनायक, पाशपाणिविनायक, सर्वविघ्नहरविनायक र सिद्धसिद्धिविनायक गरी ८ विनायक भगवान् विश्वनाथको प्रथम आवरणमा रहेका छन् । लम्बोदरविनायक, कूटदन्तविनायक, शालटङ्कविनायक, कूष्माण्डविनायक, मुण्डविनायक, विकटदन्तविनायक, राजपुत्रविनायक र प्रणवविनायक गरी ८ विनायक भगवान् विश्वनाथको द्वितीय आवरणमा रहेका छन् । वक्रतुण्डविनायक, एकदन्तविनायक, त्रिमुखविनायक, विघ्नराजविनायक, वरदविनायक, पञ्चास्यविनायक, हेरम्बविनायक र मोदकप्रियविनायक गरी ८ विनायक भगवान् विश्वनाथको तृतीय आवरणमा रहेका छन् । अभयप्रदविनायक, सिंहतुण्डविनायक, कूणिताक्षविनायक, क्षिप्रप्रसादविनायक, चिन्तामणिविनायक, दन्तहस्तविनायक, प्रचण्डविनायक र उद्दण्डमुण्डविनायक गरी ८ विनायक भगवान् विश्वनाथको चतुर्थ आवरणमा रहेका छन् । स्थूलदन्तविनायक, कलिप्रियविनायक, चतुर्दन्तविनायक, द्वितुण्डविनायक, ज्येष्ठविनायक, गजविनायक, कालविनायक र नागेशविनायक गरी ८ विनायक भगवान् विश्वनाथका पाँचौं आवरणमा रहेका छन् । मणिकर्णविनायक, आशाविनायक, सृष्टिविनायक, यक्षविनायक, गजकर्णविनायक, चित्रघण्टविनायक, सुमङ्गलविनायक र मित्रविनायक गरी ८ विनायक विश्वनाथको छैठौं आवरणमा रहेका छन् । मोदविनायक,

२५. *एवमुक्त्वा सुरास्ते तु व्यदधुः सर्व एव ते । प्रासादं रम्यशिखरं स्थापयित्वा गजाननम् ॥*
*यस्य दर्शनमात्रेण मुच्यते पातकाज्जनः । कुलानि तारयेत् सप्त स्मरणादस्य मानवः ॥*
*पूजयित्वा प्रणम्यैनं परितुष्टिं ययुः सुराः । ततस्ते मुनयः सर्वे पुपुजुः परमादरात् ।*
*सिन्दूरहेति नामास्य चक्रुः सिन्दूरनाशनात् ॥ - ग.पु. २/१३७/३५-३९ ।*

२६. *एवमुक्त्वा प्राविशत् स तन्मुखेन्दरं मुनेः । प्रकाशमतुलं लेभे सूर्यकोटिसमं पुनः ॥*
*दीपयामास ककुभस्तातो मूर्तिं विधाय च । गजाननस्य महतीं प्रासादेऽस्थापयच्च सः ॥*
*पूजयामास विविधैरुपचारैः पृथक् पृथक् ॥ - ग.पु. २/१५०/१७-१९ ।*

प्रमोदविनायक, सुमुखविनायक, दुर्मुखविनायक, गणपविनायक, ज्ञानविनायक, द्वारविनायक र मुक्तिदाता अविमुक्तविनायक गरी ८ विनायक विश्वनाथका सातौं आवरणमा रहेका छन् । यसरी काशीमा विश्वनाथका आवरणका रूपमा ५६ विनायकहरूको अवस्थिति छ । यी सबै विनायकहरूको स्मरणबाट साधकले सम्पूर्ण चिताएका कुरा प्राप्त गर्दछ ।[२३]

## ७.२ नेपालका गणेशमन्दिर, गणेशतीर्थ र गणेशमूर्तिहरू

नेपालमा लिच्छविकालदेखि नै गणेशको उपासना र मूर्ति निर्माणको क्रम प्रारम्भ भएको थियो । लिच्छविकालभन्दा पहिले के थियो भन्ने कुरा प्रमाणका अभावका कारण निश्चित रूपमा भन्न सकिँदैन । वंशावलीहरूको विवरण, लिच्छविकालका शिलालेखमा पाइने संस्कृतेतर शब्दहरू, समकालिक भारतसँगको सम्बन्धका बारेमा प्राप्त भएका सामग्रीहरूबाट नेपालको बारेमा केही बुझ्न सकिन्छ । प्रचलित वंशावलीहरूले लिच्छविहरूभन्दा अगाडि किरात, त्योभन्दा अगाडि महिषपाल र त्योभन्दा पनि अगाडि गोपालवंशी राजाहरूले राज्य गरेको विवरण खुलाएका छन् । वंशावलीका विवरणहरू धेरै पछि देखिएका हुनाले ती कत्तिको प्रामाणिक हुनसक्छन्, यसबारेमा विवाद नै छ । अरू कुरा जे भए तापनि प्राप्त प्रमाणहरूको आधारमा लिच्छविकालपूर्व पनि नेपालमा गणेशोपासना प्रचलित थियो भन्ने कुरा अनुमान गर्न सकिन्छ ।

नेपालमा गणेशका मूर्तिहरू अरू कुनै देवीदेवताका मूर्तिहरूभन्दा अधिक मात्रामा पाइन्छन् । काठमाडौं उपत्यकाका पुराना टोल र गल्ली गल्लीमा गणेशका स्थान र मूर्तिहरू छन् । आधुनिक कालमा पनि गणेशका उपासकहरूले टोलछिमेक मिलेर नयाँ बस्तीहरूमा गणेशको मन्दिर बनाई मूर्ति स्थापना गर्ने गरेका प्रशस्त उदाहरण पाइन्छन् ।

नेपाली समाजमा पञ्चायतन देवताहरूमध्येमा र सिद्धिदाताका रूपमा गणेशको प्रसिद्धि रहेको छ । जुनसुकै धार्मिक कृत्य, रथयात्रा, विवाह, व्रतबन्ध आदि धार्मिक र माङ्गलिक कार्यमा विघ्नविनाशका निमित्त श्रीगणेशको अग्रपूजा हुने परम्परा नेपालमा रहिआएको छ । नेपालको सामाजिक एवं धार्मिक क्षेत्रमा गणेशको अतिशय प्रभाव रहेका कारण समाजमा विद्यमान विविध धर्मका अनुयायीहरूद्वारा गणेशको उपासना गरिने कुरा स्मरणीय छ ।

---

२३. *गणेशान् क्रमशो राजन् ! शृणु सर्वभयापहान् । दुर्गविनायकोऽथार्कभीमचण्डविनायकौ ॥*
*देहलीगणपश्चाथ उद्दण्डविनायकः । पाशपाणिः सर्वविघ्नहरणोऽथ विनायकः ॥*
*प्रथमावरणे सिद्धिसिद्धिरूपो विनायकः । लम्बोदरः कूटदन्तः शालकङ्कविनायकः ॥*
*कूष्माण्डाख्यश्चतुर्थश्च पञ्चमो मुण्डसंज्ञकः । विकटद्विजसंज्ञस्तु राजपुत्रविनायकः ॥*
*प्रणवाख्योऽथापरश्च द्वितीयावरणे स्थिताः । वक्रतुण्ड एकदन्तस्त्रिमुखश्च विनायकः ॥*
*विघ्नराजश्चतुर्थोऽथ वरदश्च विनायकः । पञ्चास्यश्चापरश्चात्र हेरम्बश्च विनायकः ॥*
*मोदकप्रिय इत्येव तृतीयावरणे स्थिताः । विनायकोऽभयप्रदः सिंहतुण्डविनायकः ॥*
*कूणिताक्षश्चापरश्च क्षिप्रप्रसादसंज्ञकः । चिन्तामणिरिति ख्यातो दन्तहस्तविनायकः ॥*
*प्रचण्डश्चाप्यपरश्चोद्दण्डमुण्डविनायकः । चतुर्थावरणे ज्ञेया अष्टावेते विनायकाः ॥*
*स्थूलदन्तो द्वितीयस्तु कलिप्रियविनायकः । चतुर्दन्तो द्वितुण्डश्च ज्येष्ठो गजविनायकः ॥*
*कालाख्यश्च तथा ज्ञेयो नागेशाख्योऽपरोऽपि च । पञ्चमावरणे ज्ञेया अष्टावेते विनायकाः ॥*
*मणिकर्णिविनायक आशासृष्टिविनायकौ । पक्षाख्यो गजकर्णाख्यश्चित्रघण्टविनायकः ॥*
*सुमङ्गलश्च मित्राख्य एते षष्ठे विनायकाः । मोदः प्रमोदः सुमुखो दुर्मुखश्च विनायकः ॥*
*गणपाख्योऽथापरश्च तथा ज्ञानविनायकः । सप्तमावरणे ज्ञेयास्तथा द्वारविनायकः ॥*
*अविमुक्तोऽष्टमो यत्र मोक्षदोऽथ विनायकः । अन्यो भगीरथाख्यो हि हरिश्चन्द्रविनायकः ॥*
*कपर्दीति परो ज्ञेयस्तथा बिन्दुविनायकः । एतेषां स्मरणं नित्यं सर्वकामफलप्रदम् ॥* – ग.पु. २/१५४/५-२० ।

## क) काठमाडौं उपत्यकाका अष्टविनायक एवं प्रमुख गणेशमन्दिरहरू

### १) सूर्यविनायक

नेपालका प्रमुख चार विनायकमध्ये प्रसिद्ध, पौराणिक दृष्टिले महत्त्वपूर्ण र ऐतिहासिक दृष्टिबाट गरिमामय मानिएका सूर्यविनायक नामक श्रीगणेशको पूजित मन्दिर भक्तपुरबजारबाट एक किमि टाढा कोदारी राजमार्गको दक्षिणतर्फको जङ्गलको फेदीमा अवस्थित छ । त्यहाँ खुला आकाशको मन्दिरको भित्तामा गणेशको आकार देखिने प्राकृतिक शिलामूर्ति पूर्वाभिमुख अवस्थामा आसनमुद्रामा रहेको छ । गणेशमूर्तिको अगाडि शिलास्तम्भमा गणेशको वाहन मूसो रहेको छ । यो मन्दिरभन्दा केहीमाथि डाँडामा गणेशकी माता पार्वतीको मन्दिर अवस्थित छ ।[२८] सूर्यविनायकको प्रादुर्भाव, विशेषता र महिमाबारे स्कन्दपुराण - हिमवत् खण्डको नेपाल माहात्म्यअन्तर्गत सूर्यविनायकको प्रादुर्भाव शीर्षकान्वित छैठौं अध्यायमा एउटा कथा प्रस्तुत गरिएको छ ।

डोलेश्वरको पश्चिमतर्फ रहेको जङ्गलमा गुणनिधि नामक मुनि आफ्नी पत्नी लीलावती र पुत्र प्राणनाथका साथ वेदवेदाङ्गको अध्ययन-अध्यापन गर्दै तपस्या गरिरहेका थिए । छोरा प्राणनाथमा ती दुवैको घनीभूत वात्सल्य थियो । शिवका भक्त मुनि गुणनिधि नित्य पाशुपतक्षेत्रमा गई बागमतीमा नुहाएर पशुपतिको दर्शन गरी घर फर्किन्थे । घरमा आएपछि छोरा प्राणनाथलाई वेद-वेदाङ्ग पढाउँथे ।

एक दिन कार्यवश प्राणनाथ जङ्गलमा गएका थिए । दैवगत्या ती भुइँमा लडे । तपोवनमा तपस्या गरिरहेका मुनिहरूले प्राणनाथ भुइँमा लडेको थाहा पाएर आआफ्ना पत्नीहरूसहित त्यहाँ आई प्राणनाथलाई हेरे । त्यति बेला प्राणनाथको प्राणपन्छी उडिसकेको थियो । सुन्दर मुनिबालकको आकस्मिक मृत्यु भएकोमा ती सबै रुन कराउन थाले । तिनीहरूले तुरुन्तै प्राणनाथको घरमा गई हवन गरिरहेका गुणनिधिलाई भेटेर प्राणनाथको परिस्थिति बताउँदा गुणनिधि एवं तिनकी धर्मपत्नीलाई ठूलो चोट पर्‍यो र ती दुवै मूर्च्छित भए । केही समयपछि चेतमा आएका ती दुवै दम्पती मुनिहरूका साथ छोरालाई हेर्न गए । छोराको निष्प्राण शरीर देखेर शोकविह्वल ती मुनिले विलाप गर्दै भने - 'अनाथका नाथ भगवान् पशुपतिनाथ विराजमान हुनुभएको पाशुपतक्षेत्रमा अकालमरण हुँदैन, सर्पले टोक्दैन, बाघ लाग्दैन र ग्रहनक्षत्रको प्रभाव पर्दैन । यसर्थ हामी छोरा प्राणनाथको यो निष्प्राण शरीरलाई त्यहाँ पुर्‍याउँछौं ।' यसरी सङ्कल्प गरेर ती मुनिले आफ्नी धर्मपत्नीसमेत भई प्राणनाथको शरीर बोकेर पाशुपतक्षेत्रमा पुर्‍याए । त्यस क्षेत्रमा तपस्या गरी बस्ने मुनि र मुनिपत्नीहरू पनि पछि लागेर त्यहाँ पुगे । त्यसपछि गुणनिधिले आफ्ना पुत्र प्राणनाथको निष्प्राण शरीरलाई पशुपतिनाथको ढोकामा तेर्स्याएर राखे । 'जबसम्म बालकको प्राण फर्किंदैन तबसम्म अनशनमा रही तपस्या गर्छौं' भनी ती सबै तपस्यारत भए । हप्तौंसम्म तिनीहरूलाई तपस्या गरिरहेको अवस्थामा देखेर भगवान् पशुपतिनाथले 'मुनिपुत्र कुन कारणले मरे होलान्' भन्ने विषयमा ध्यान गर्नुभयो । ध्यान गरेपछि मुनिपुत्र प्राणनाथको मृत्युको कारण थाहा पाएर मनमनै भन्नुभयो- 'म वास्तवमा मेरा सुपुत्र श्रीगणेशलाई बिर्सिएर पाशुपतक्षेत्रको मोहमा फसें । फलस्वरूप मेरा पुत्र विघ्ननायकले मुनिपुत्र प्राणनाथको प्राण खिँचेर आफ्नो रोष प्रकट गरे । यस क्षेत्रमा श्रीगणेशलाई प्रकट नगराएसम्म यस्ता विघ्न भइरहनेछन् ।' यसरी मनमनै विचार गरेपछि पशुपतिनाथले गुणनिधिलगायतका

२८. पुरुषोत्तम ढकाल, पूर्ववत् ।

सबै मुनिहरूसमक्ष भन्नुभयो – 'हे मुनिहरू ! तपाईहरू निर्भय हुनुहोस् । मेरा पुत्र गणेशलाई मैले बिर्सनाले ती रिसाएछन् । तिनकै रीसका कारण मुनिपुत्रको प्राणहरण भएको रहेछ । तपाईहरू आश्रमतर्फ जानुहोस्। श्रीगणेशले बालकलाई जीवित तुल्याउनेछन् । भोलि बिहान सूर्योदय हुँदा सूर्यको पहिलो किरण जुन ठाउँमा पर्छ, त्यहाँ मेरो छोरा गणेश गुप्त रूपले रहनेछन् ।' यति भनेर भगवान् पशुपतिनाथ अन्तर्धान हुनुभयो ।

भगवान् पशुपतिनाथको आज्ञा पाएपछि गुणनिधिसहित सबै मुनि र मुनिपत्नीहरु आश्रमतर्फ गए । त्यो दिन र रातभरि बालकलाई आफ्ना अगाडि राखेर ती सबैले पशुपतिनन्दन श्रीगणेशको स्तुति गरे । बिहान भयो र सूर्यको प्रथम किरण परेको ठाउँ सूर्यविनायक मन्दिर रहेको क्षेत्रमा भगवान् श्रीगणेश पृथिवी फुटाउँदै प्रकट हुनुभयो । उहाँको हातमा मृतसञ्जीवनी बूटीको लता थियो । उहाँले ती मुनिहरूलाई भन्नुभयो – 'हे मुनिहरू ! यो लताको रस प्राणनाथको शिर र आँखामा लगाई उपचार गर ।' श्रीगणेशको आज्ञानुसार रस लगाएपछि प्राणनाथ निद्राबाट ब्युँझे झैं जागे । पुष्पवृष्टिका साथ जयजयकार भयो । श्रीगणेशले मुनिहरूलाई बर माग्न प्रेरित गर्नुभयो । तिनीहरूले 'हजुर यहीं विराजमान हुनुहोस्' भने । श्रीगणेशले पनि 'म यहाँ सूर्यको किरण पर्नासाथ प्रकट भएकाले सूर्यविनायकका नामबाट रहनेछु । मंगल चौथीका दिन जसले मेरो दर्शन गर्नेछ, त्यसलाई कहिल्यै पनि विघ्नभय हुने छैन' भन्नुभयो । त्यसपछि सूर्यविनायक विराजमान हुनुभएको त्यो प्रकाण्ड वन गणेशतीर्थका रूपमा प्रसिद्ध भयो ।[२९]

प्रकाण्ड वनमा विराजमान सूर्यविनायकको दर्शन गर्ने भक्तले कहिल्यै पनि कुनै किसिमको विघ्न व्यहोर्नुपर्दैन भन्ने कुरा पुराणमा बताइएको छ ।[३०] त्यसपछि ती मुनिहरू श्रीगणेशको सामर्थ्य र महिमाबाट अभिभूत भई उत्तर दिशातर्फको वनमा गए । त्यहाँ गएर तिनीहरूले मङ्गलविघ्नहाको नामबाट श्रीगणेश र मङ्गलेश्वर नामबाट शिवलिङ्गको स्थापना गरे । त्यसपछि त्यो स्थान मङ्गलतीर्थका रूपमा प्रसिद्ध भयो ।[३१]

भाषावंशावलीमा पनि नेपालमाहात्म्यको कथालाई आधार बनाएर कथावस्तुमा कतै विस्तार र कतै संकोच गरी सूर्यविनायकको आविर्भावबारे प्रकाश पारिएको छ । त्यहाँ भगवान् शिव काशीबाट नेपाल आउनुहुँदा आफ्ना छोरा गणेशलाई ल्याउन बिर्सनुभएका कारण गणेशले रिसाई प्राणनाथको प्राणहरण गरेर आफ्नो रोष प्रकट गरेको तथ्य प्रस्तुत गरिएको छ । ३२००० वर्ष कलि जाँदासम्म बागमती नदीको प्रभाव र महिमा अक्षुण्ण रहने हुँदा गङ्गा आदि नदीहरूभन्दा बागमती नदी चारगुना श्रेष्ठ भएकाले भगवान् शिव काशीबाट नेपाल आउनुभएको रहस्य पनि उजागर गरिएको छ ।[३२]

कुनै अर्को वंशावलीमा सूर्यविनायकको आविर्भाव सम्बन्धमा अर्कै किसिमको कथा प्रस्तुत गरिएको छ । भारतका राजा विक्रमजित नेपाल आई बसोबास गरेका थिए । एक दिन सूर्यविनायकमाथिको पर्वतीय गाउँमा घुम्न गएका थिए । त्यहाँ तिनलाई जनताको दयनीयता, ऋण, अभाव आदि देखेर करुणा जाग्यो । 'म कसरी यी जनतालाई सुखी, समृद्ध र स्वस्थ तुल्याऊँ' भनी चिन्तन गरिरहँदा श्रीगणेशले दर्शन दिनुभयो । त्यसपछि विक्रमजित राजा मनमनै 'मैले ऋण तिरिदिने, दुःख हेर्ने र सफलता प्रदान गर्ने देवताको दर्शन पाएँ' भनी खुसी हुँदै घर फर्किए । उनले गणेशदर्शनको पुण्य अवसरमा सूर्यविनायक

२९. *नेपालमाहात्म्य, छैटौं अध्यायको कथावस्तुमा आधारित ।*

३०. *प्रकाण्डविपिने नित्यं स्थितः सूर्यविनायकः। तस्य दर्शनमात्रेण न विघ्नैः परिभूयते ।। – नेपालमाहात्म्य, छ अध्याय, पृष्ठ ३९ ।*

३१. *अतो गणेशनामेदं जातं मङ्गलविघ्नहा । मङ्गलेश्वरनामापि शिवस्य परिकीर्तितम्।। – नेपालमाहात्म्य, पूर्ववत्, पृष्ठ ४० ।*

३२. *डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।*

गणेशको स्थापना गरेका थिए ।[३३]

कुनै वंशावलीमा भक्तपुरका सूर्यविनायक एवं मङ्गलगणेश र पाटनका मणिगणेशको स्थापना राजा गुणकामदेवले गरेका हुन् भनिएको छ ।[३४] शिवगण भृङ्गीलाई सराप पर्दा ती गुणाढ्य ब्राह्मणका रूपमा पैदा भए । एक दिन तिनी पीठहरूको दर्शन गर्न गए । यात्राको क्रममा एक दिन तिनले भक्तिपूर्वक सूर्यविनायकको दर्शन गरेको कुरा भाषावंशावलीमा वर्णन गरिएको छ ।[३५] नेपाल क्षेत्रको परिक्रमा गर्दा यात्रामा विघ्न नपरोस् भनी सूर्यविनायकको वन्दना गर्नुपर्ने कुरा नेपालमाहात्म्यमा उल्लेख गरिएको छ ।[३६]

सूर्यविनायक मन्दिरको ने.सं. २७७ मितिको अभिलेखमा भाजुमनि कोजुले सूर्यविनायकको प्रसन्नताका लागि फलैंचा बनाई अर्पण गरेको कुरा उल्लेख गरिएको छ ।[३७] सूर्यविनायक ऋणनाशक, सिद्धिदायक, समृद्धिदायक, आयुष्यदायक र सन्तानदायक देवता हुन् भन्ने जनविश्वास रहेको छ । उक्त तथ्यका साथै सूर्यविनायक भक्तपुरक्षेत्रमा बसोबास गर्ने जनताका सिद्धिदाता देवता हुन् भन्ने प्रसिद्ध रहेको छ ।

### सूर्यविनायक प्रार्थना

**जय देव गणाधीश ! विघ्नराज ! नमोऽस्तु ते । जय त्र्यक्ष ! महादेवप्रियपुत्र ! नमोऽस्तु ते ।।**
**नमस्ते भक्तिगम्याय देवदेवाय ते नमः । पार्वतीप्रियपुत्राय नमो गजमुखाय च ।।**
**चतुर्हस्ताय देवाय नमः परशुधारिणे । भक्तानां भयहन्त्रे च नमस्ते मोदकप्रिय ।।**
**पाशहस्त नमस्तेऽस्तु देवदेव ! नमोऽस्तु ते । गणनाथ ! नमस्तुभ्यं नमः सूर्यविनायक ।।**[३८]

### २ ) अशोकविनायक

काष्ठमण्डप सत्तलको नजिकै अङ्गको रूपमा स्थापित अशोक विनायक मन्दिरमा श्रीगणेशको चतुर्भुज मूर्ति रहेको छ । उक्त मूर्तिका चार हातमा परशु, अक्षमाला, फल र लड्डु रहेका छन् । आसनमुद्रामा रहेको यो मूर्ति द्वापरमा पार्वती–शङ्करबाट उत्पन्न हुनुभएका चतुर्भुज गजाननको प्रतीक हो भन्न सकिन्छ । मन्दिरको आकारप्रकार सानो भएता पनि अशोक विनायकलाई उपत्यकाका चार विनायकहरूमध्ये एक मानिएकाले अशोकविनायक–मन्दिर अथवा मण्डपगणेश–मन्दिर अथवा मरुगणेशमन्दिरको रूपमा यो मन्दिर ज्यादै प्रसिद्ध छ ।

अशोकविनायकको मूर्ति एघारौं–बाह्रौं शताब्दीको मूर्तिशैलीमा आधारित भएकाले उक्त समयमा स्थापित गरिएको हो भनी ठम्याउन सकिन्छ । यस मन्दिरको छानो स्वर्णनिर्मित छ भने यसमा गजूर रहेको छैन । गजूर नहुनु यस मन्दिरको आफ्नै विशेषता हो । वि.सं. १९०४ मा सुरेन्द्रविक्रम शाहद्वारा सुनको छानो राख्ने काम भएको तथ्य उक्त छानोमा रहेको अभिलेखबाट प्रमाणित हुन्छ ।

प्राचीन समयदेखि नै अशोक विनायक हनुमानढोका राजदरबारका स्थानगणेशका रूपमा सम्मानित

३३. पूर्ववत् ।
३४. मिलनरत्न शाक्य, पूर्ववत्, पृ. १६–१८ ।
३५. डा. जगदीशचन्द्र रेग्मी पूर्ववत् ।
३६. पूर्ववत् ।
३७. पूर्ववत् ।
३८. नेपालमाहात्म्य ६ अध्याय पृ. ३७–३८ ।

हुँदै आएका छन् । राजदरबारका धार्मिक कार्यमा राजकीय सम्मानपूर्वक अशोक विनायकको पूजा-आराधना गर्ने परम्परा रहिआएको छ । राज्याभिषेक हुँदा सिन्दूरयात्रा हुनुभन्दा पहिले राजाद्वारा हनुमानढोका बाहिर गई अशोक विनायकको दर्शन गर्ने परम्परा रहेको छ । राजकुमारको पास्नीको अवसरमा विधिविधानपूर्वक निकालिएको जुलुससहित राजकुमारलाई अशोक विनायकमा ल्याई दर्शन गराउने प्रचलन छ ।[३९]

परापूर्वकालमा मन्दिरनजिकै एउटा सत्पात्र गृहस्थको बसोबास थियो । अहिले मन्दिर रहेको ठाउँमा अशोक वृक्ष थियो । एक दिन राति ती गृहस्थले अशोकवृक्षमा झलमल्ल उज्यालो देखे । के हो भन्ने उत्सुकता भयो र नजिकै गई हेर्दा तिनले अशोकवृक्षको फेंदमा विशालकाय श्रीगणेशको स्वरूप दर्शन गरे । उत्सुकता लिई फेंदतर्फ जाँदा तिनले श्रीगणेशलाई अशोकवृक्षमा आरोहण गरी विराजमान हुनुभएको दर्शन गरे । त्यहाँ अशोकविनायक श्रीगणेशको स्थापना गरी पूजा-आराधनाको परम्परा प्रवर्तित भयो ।[४०] अशोकवृक्षमा देखिनुभएकाले श्रीगणेश अशोकविनायकका नामबाट प्रसिद्ध हुनुभयो भन्ने कुरा वंशावलीहरूमा उल्लेख गरिएको पाइन्छ ।[४१]

पृथिवीनारायण शाहको बसोबास हनुमानढोका दरबारमा भएकाले अशोकविनायक हनुमानढोका राजदरबारका स्थानगणेशका रूपमा सम्मानित हुनुभएको तथ्यलाई विद्वान्हरूले अनुमोदन गरेका छन् ।[४२] राजा गुणकामदेवको शासनकालमा कुनै व्यक्तिले अशोकवृक्षको फेंदमा श्रीगणेशको स्थापना गरेकाले यी गणेशलाई अशोकविनायक भनिएको हो भन्ने एकथरि वंशावलीमा उल्लेख गरिएको छ ।[४३] कान्तिपुर नगरका निर्माता गुणकामदेवले काष्ठमण्डप बनाए । मण्डपनिर्माण गरेपछि गणेशको स्थापना गर्नुपर्ने चलनअनुसार अशोकविनायकको स्थापना गरिएको हो । सत्तलकै एउटा अंश भएकाले उक्त मन्दिरमा गजूर राखिएको छैन ।[४४]

प्राचीनकालमा राजा शङ्करदेवले पूर्णावती (कान्तिपुर) सहरको निर्माण गरेपछि कामनादायक गणेशको स्थापना गरेको वर्णन वंशावलीमा पाइने हुँदा यिनै अशोक विनायक नै कामनादायक गणेश हुन् भन्ने सम्भावना गर्न सकिन्छ ।[४५] वंशावलीमा वर्णित कामनादायक गणेश पनि उहाँ नै हो भने अशोकविनायकलाई कामनापूरक गणेशका रूपमा पनि मान्नुपर्ने हुन्छ ।

अशोकविनायक-मन्दिरमा गजूर नराखी छानो खुला राखिएको विषयमा आधारित एउटा प्राचीन किंवदन्ती रहेको छ- 'श्रीगणेश पृथिवीतत्त्वका प्रतिनिधि उच्चस्तरीय देवता हुनुभएकाले दिनको तीनपटक उहाँलाई पृथिवीतलका प्रतिनिधिका रूपमा स्वर्गको सभामा भाग लिन जानुपर्ने हुन्छ । हतारहतारमा ऊर्ध्वगमन गर्न परिरहने हुँदा अशोकविनायक-मन्दिरको छानो खुला राखिएको हो ।[४६]

जेजस्ता किंवदन्ती र प्रसिद्धि रहेतापनि भगवान् श्रीगणेश शोकविनाशक एवं शोकरहित देवता हुनुभएकाले उहाँलाई अशोक भनिन्छ । अशोक पदमा विनायक पदको संयोजन गर्दा अशोकविनायक

३९. डा. गोविन्द टण्डन, पूर्ववत्, पृ. ५७ ।
४०. पूर्ववत् ।
४१. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।
४२. पूर्ववत् ।
४३. पूर्ववत् ।
४४. पूर्ववत् ।
४५. पूर्ववत् ।
४६. मिलनरत्न शाक्य, पूर्ववत्, पृ. १२–१३ ।

पदको निष्पत्ति हुन्छ । वस्तुतः अशोकविनायक आफ्नो नामअनुसार भक्तहरूलाई अशोक अर्थात् चिन्ताहीन तुल्याई पूर्ण आनन्द प्रदान गर्ने भाग्यविधायक देवताका रूपमा प्रसिद्ध हुनुहुन्छ । अशोकविनायकका आराधक एवं उपासकहरू शोकविनाशक भगवान् अशोकविनायकको आराधनाबाट अशोक यद्वा आनन्दमग्न हुने कुरामा कसैको पनि विमति हुने छैन ।

**अशोक विनायकको प्रार्थनापद्य**

**गजाननं भूतगणादिसेवितं कपित्थजम्बूफलचारुभक्षणम् ।**
**उमासुतं शोकविनाशकारकं नमामि विघ्नेश्वरपादपङ्कजम् ।।**

### ३ ) कार्यविनायक

उपत्यकाका चार प्रमुख विनायकमध्ये एक कार्यविनायक मानिएका छन् । कार्यविनायकको मन्दिर ललितपुर जिल्लाको भैंसेपाटीनजिकै बुङ्मती गाविसको सैंभूमा रहेको छ । दक्षिणाभिमुख, कलात्मक तोरणले सजिएको, प्यागोडा शैलीको, एकतले कार्यविनायक मन्दिरको अगाडि गणेशको वाहन छुचुन्द्रो रहेको छ । मन्दिरमा चाँदीको विनायक मूर्ति छ । मत्स्येन्द्रनाथलाई कामरूप कामाख्याबाट यहाँ ल्याएपछि आजभन्दा १४६१ वर्षअगाडि कार्यविनायक गणेशको स्थापना गरिएको हो भनिन्छ । यस मन्दिरको पश्चिम भागमा जल विनायकको शिलामूर्ति रहेको छ ।[४७]

मुकुटले सजिएको कार्यविनायकको मूर्ति गजानन, त्रिनयन र चतुर्भुज छ । कार्यविनायकलाई कामाख्या कामरूपका कामरूपविनायककै रूप पनि मानिन्छ । कामरूप कै अपभ्रंश कार्य भएको हो भन्नेसमेत भनाइ रहेको छ ।[४८] कार्यविनायकलाई बौद्धधर्मावलम्बीहरू बुङ्मती लोकेश्वर अथवा पद्मपाणि लोकेश्वर मानेर आराधना गर्दछन् । उपत्यकाका बौद्धधर्मावलम्बी किसानहरू कार्यविनायकलाई धनधान्यको अभिवृद्धि गराउने बुझाइमा लोकेश्वरका रूपमा मान्दछन् ।[४९]

हयग्रीव, रुण्डमुण्ड, आनन्द, संहार आदि भैरवहरूलाई कामाख्याबाट यहाँ ल्याएसरह कार्यविनायकलाई पनि यहाँ ल्याइएको हो । बौद्धहरूका बुङ्माहा लोकेश्वर पनि कामरूपबाट नै यहाँ ल्याइएका हुन् भन्ने अनुश्रुति रहेको छ । कामरूप कामाख्या र बुङ्माहा लोकेश्वरका साथै कार्यविनायकको घनिष्ट सम्बन्ध मत्स्येन्द्रनाथसँग पनि रहेको छ ।[५०] कार्यविनायकको मन्दिरमा प्रत्येक मङ्गलबार र मङ्गलचौथीमा भक्तहरूको ठूलो भीड लाग्दछ । कुनै पनि कार्यको शुभारम्भ गर्दा श्रीगणेशको पूजाआराधना गरेमा कार्यसिद्धि हुने विश्वास भएकाले कार्यविनायक वा सिद्धिविनायकको पूजाआराधना गर्ने परम्परा रहिआएको छ ।

**कार्यविनायकका मन्त्रात्मक प्रार्थनापद्य**

**वक्रतुण्ड ! महाकाय ! सूर्यकोटिसमप्रभ । अविघ्नं कुरु मे देव ! सर्वकार्येषु सर्वदा ।।**
**यं निर्जरासुरनरा अखिलार्थसिद्ध्यै भूर्यन्तरायहतयेऽनुदिनं नमन्ति ।**
**तं भक्तकामपरिपूरणकल्पवृक्षं भक्त्या गणेशमखिलार्थदमानतोऽस्मि ।।**[५१]

४७ पुरुषोत्तम ढकाल, पूर्ववत् ।
४८ मिलनरत्न शाक्य, पूर्ववत् पृ. १५ ।
४९ पूर्ववत्, पृ. १४ ।
५० पूर्ववत्, पृ. १५ ।
५१ कल्याण अङ्क ४८ बाट साभार ।

४) चन्द्रविनायक

काठमाडौं चाबहिलको गणेशस्थान ऐतिहासिककालदेखि नै प्रसिद्धिप्राप्त देवस्थान हो । यहाँका देवता श्रीगणेश चन्द्रविनायक, श्वेतविनायक, रक्तविनायक, लोहन्शाला विनायक, धन्वन्तरिविनायक र श्रीगुरुसिद्धिविनायकजस्ता अनेक नामबाट प्रख्यात हुनुहुन्छ । उहाँका उक्त प्रत्येक नामले आफ्नै किसिमको आख्यान, अनुश्रुति र विशेषता संवहन गर्दछन् ।

श्वेतविनायक नाममा जोडिएको श्वेत पद र चन्द्रविनायक नाममा जोडिएको चन्द्र पदले चाबहिल गणेशको निरतिशय पवित्रता र सात्त्विकभावलाई व्यक्त गर्दछन् । रक्तविनायक नाममा जोडिएको रक्तपदले यी गणेश रगतसम्बन्धी रोगहरूका नाशक देवता हुन् भन्ने जनाउँछ । लोहन्शालाविनायक नामसँग सम्बद्ध लोहन्शाला पदले लोहशिलानामक कुमारीगणको उत्पात र चाबहिल गणेशको उत्पत्तिसम्बन्धी अनुश्रुतितर्फ ध्यान केन्द्रित गराउँछ । धन्वन्तरिविनायक नामा जोडिएको धन्वन्तरि पदले चाबहिल गणेश आयुर्वेदशास्त्रका प्रवर्तक भगवान् धन्वन्तरि र श्रीगणेशको घनिष्ठ सम्बन्ध अवगत गराउँदै आयुर्वेदविद्या र आयुर्वेदचिकित्साका साधकहरूद्वारा प्राज्ञिक पूर्णता, व्यावसायिक सफलता र समृद्धिका लागि उपासना गरिने देवताको रूपमा चाबहिल गणेशको चिनारी गराउँछ । श्री गुरुसिद्धविनायक नाममा रहेका श्रीगुरु एवं सिद्धि पदहरूले मन्त्रसिद्धिका लागि चाबहिल गणेशलाई परम गुरु मानी उहाँकै साक्ष्यमा आयुर्वेदशास्त्रका गुरुहरूले शिष्यलाई मन्त्रोच्चारणपूर्वक प्रदान गरिने मन्त्रदीक्षाको परम्परालाई बोध गराउँछन् । उक्त प्रतीकात्मक अर्थका साथै श्वेतविनायक नाममा रहेको श्वेतपदले इन्द्रको वाहन सेतो रङ्गको हात्ती ऐरावतको टाउको जोडिएका पार्वतीपुत्र श्रीगणेशको आविर्भावकथालाई इङ्गित गर्दै सेतो हात्तीलाई मङ्गलरूप मानेर श्रीगणेशको आराधना गर्ने बौद्धधर्मावलम्बी जनसमुदायद्वारा पनि चाबहिल गणेशमा आराधना गर्ने परम्परा रहिआएको तथ्य उजागर गर्दछ ।[५२]

चाबहिल गणेशको उत्पत्ति, गणेशस्थानको निर्माण, मर्मत, सेवा, यात्रा, गुठी आदि विषयसँग सम्बद्ध ऐतिहासिक सामग्री पर्याप्त भेटिन्छन् र नामहरूसँग सम्बद्ध अनुश्रुति पनि । मारवाड देशबाट कारणवश नेपाल आई तपस्विनीको रूपमा रहेकी पिङ्गलानामक रानी तपस्या गरिरहेकी थिइन् । एक दिन उनी तपोनिरत रहेको अस्थामा उनका सामु आई लोहवान् नामक देवगणले लोहक्रीडा गरे । लौह खण्डित भई चारैतिर फैलिँदा लोहशालानामक कुमारीगण पैदा भई उत्पात मच्चाउन थाले । रानी पिङ्गलाले भयभीत भई भगवती गुह्येश्वरीको प्रार्थना गरिन् । गुह्येश्वरीले 'विघ्ननाशक श्वेतविनायकको स्थापना गरी आराधना गर, तिम्रो विघ्न नाश हुनेछ' भन्नुभएपछि रानी पिङ्गलाले श्वेतविनायकको स्थापना गरी आराधना गरिन् । तिनका विघ्न शान्त भए र तपस्या पनि सफल भयो ।[५३]

चाबहिल गणेशको बाह्यमूर्ति द्विभुज, दक्षिणाभिमुख र आसन अवस्थामा रहेको छ । यस मूर्तिलाई निकै प्राचीन मानिएको छ । बाह्यमूर्तिअगाडि हस्तिमुख नामक प्रतिहार कल्पवृक्षमाथि रही रक्तविनायकको ध्यान गरिरहेका छन् भन्ने कुरा गणेशमूर्तिअगाडि दिस्को उठाई राखिएकोबाट स्पष्ट हुन्छ ।[५४] पहिले यो मूर्ति यहाँ थिएन । पशुपति मन्दिर पारिपट्टि गुह्येश्वरीनजिकै बागमतीकिनारमा थियो । पछि यसलाई

५२. मिलनरत्न शाक्य, पूर्ववत्, पृ. १८-२० ।
५३. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।
५४. पूर्ववत् ।

चाबहिलमा स्थापना गरियो भन्ने जनविश्वास रहेको छ ।[५५] मूर्ति निर्माणशैलीको आधारमा यस मूर्तिको निर्माण नवौं अथवा दसौं शताब्दीमा भएको हुन सक्ने सम्भावना गरिएको छ ।[५६]

प्रचलित किंवदन्तीअनुसार यो मूर्ति पहिले हाँडीगाउँको धनविनायकसँगै थियो । केही दुष्ट मानिहरूले रातको समयमा यसलाई कतै लैजाने उद्देश्यले अपहरण गरेका थिए । चाबहिलनेर आइपुग्दा बिहानीका कुखुरा बास्न थाले । ती दुष्टहरू अरूले हामीलाई देख्छन् भन्ने डरले मूर्ति कतै लुकाएर भागे । पछि खोजी गर्दा यो मूर्ति चाबहिल स्तूपनेर भेटियो । हाँडीगाउँका बासिन्दाले अथक परिश्रम र उपाय गर्दा पनि मूर्तिलाई हाँडीगाउँ फर्काउन सकेनन् । भेटिएकै ठाउँमा मूर्तिस्थापना गरियो । त्यसपछि यी गणेश चाबहिल गणेशका नामबाट प्रसिद्ध भए ।

चाबहिल गणेश अनेकौं रोगका नाशक, स्वास्थ्यका दाता र सौभाग्यका प्रदाता भएकाले आयुर्वेद विद्याका साधकहरू धन्वन्तरिविनायकका नामबाट आराधना गर्दछन् । वैद्य थरका मानिसहरू परम्परागत रूपमा आफ्नो व्यवसायमा सफलता र समृद्धिका लागि यिनको उपासना गर्दै आएका छन् ।[५७] चाबहिल गणेशलाई रक्तसम्बन्धी रोगका नाशक देवता भनी आराधना गर्ने प्रचलन रहेको छ । यसैले धेरै मानिसहरू रक्तविनायकका नामबाट यिनको आराधना गर्दछन् ।

आयुर्वेद विद्याका साधकहरू विशेष गरेर देवपाटनतिरका वैद्यहरू मङ्गलचौथीजस्ता पवित्र पर्वहरूमा चाबहिल गणेशका सामु आई उहाँलाई परमगुरु मानेर उहाँकै सामु पवित्र मन्त्रोच्चारण गर्दै मन्त्रदीक्षा प्रदान गर्दछन् । विद्याध्ययनको शुभारम्भ गर्दछन् र गराउँछन् । त्यसैले यिनलाई धन्वन्तरिविनायकका साथै श्रीगुरुसिद्धिविनायकका रूपमा पनि मान्यता दिने गरेको पाइन्छ ।[५८] नेपालमण्डल अर्थात् काठमाडौं उपत्यकाको रक्षा गर्ने चार विनायकमध्ये एउटा चन्द्रविनायक हुन् भनी विश्वास गर्ने मानिसहरूको ठूलो संख्या रहेको छ । भाषावंशावलीमा पनि यिनलाई चार विनायकमध्ये एक विनायक मानिएको छ ।[५९]

भाषावंशावलीमा प्रताप मल्लको शासनकालमा चाबहिलका श्वेतविनायक, चोभारका चन्द्रविनायक र भक्तपुरका सूर्यविनायकलाई तीन सहरका मूल विनायक मानिएको र प्रताप मल्लले ती सबै गणेशपीठहरूलाई जगाएको भन्नेसमेत उल्लेख पाइनुले चाबहिल गणेशको मल्लकालमा पनि महत्त्वबोध गरिएको तथ्य स्पष्ट हुन्छ ।[६०] भाषावंशावलीमा चन्द्रविनायकलाई चार विनायकमध्ये एक विनायक मानिएता पनि काठमाडौं मरुटोलको मरुसत्तलभित्र चार दिशामा अशोकविनायक, सूर्यविनायक, जलविनायक र कार्यविनायकका मात्र मूर्ति रहेका छन् । यहाँ चन्द्रविनायकलाई चार विनायकमा सामेल गराइएको छैन । चन्द्रविनायकलाई चार विनायकमध्ये एक विनायक मान्नेहरूले कार्यविनायकलाई छाडेको देखिन्छ र कार्यविनायकलाई चार विनायकमध्ये एक विनायक मान्नेहरूले चन्द्रविनायकलाई छाडेको देखिन्छ ।

भाषावंशावलीमा चाबहिलका श्वेतविनायक काठमाडौं भेगका मूल गणेश हुन् भनिएको छ । चाबहिल

---

५५. मिलनरत्न शाक्य, पूर्ववत्, पृ. १८ ।
५६. डा. गोविन्द टण्डन, पूर्ववत्, पृ. २६ ।
५७. मिलनरत्न शाक्य, पूर्ववत्, पृ. २० ।
५८. पूर्ववत् ।
५९. डा. जगदीशचन्द्र रेग्मी पूर्ववत् ।
६०. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।

गणेशस्थानमा दिनदिनै देखिने भक्तहरूको भीडबाट पनि उक्त भनाइ यथार्थ साबित हुन्छ ।[६१] देवमालावंशावलीमा चाबहिल रक्तविनायकको अर्चना–उपासना गरेमा शारीरिक व्याधि निको हुने कुरा बताइएको छ ।[६२] कान्तिपुरका राजा भूपालेन्द्र मल्ले चाबहिलका श्वेत विनायकको मूर्ति बनाई गुठीको व्यवस्था गरेको, कार्तिक शुक्ल पूर्णिमा एवं त्यसपछिको प्रतिपदामा रथयात्राको चलन चलाएको र बाँडाहरूलाई समेत गुठियार बनाएको कुरा भाषावंशावलीमा उल्लेख गरिएको छ ।[६३]

चाबहिल गणेशस्थानमा रहेको प्रताप मल्लका पालाको अभिलेखमा विश्वदेव मानन्धरले चतुर्दशीव्रत पूरा गरेपछि श्री ३ गणेशको मन्दिरमा छानो हाली गजूर चढाएको र मन्दिरको जीर्णोद्धार गरेको कुरा उल्लेख गरिएको छ । उक्त अभिलेखबाट जीर्णोद्धार गर्ने कार्यमा गणेश सेवा कुलका थकाली, थकाली भिक्षु र अन्य श्रद्धालु सज्जनहरूको पनि सहभागिता रहेको कुरा अवगत हुन्छ ।[६४] यसबाट बौद्ध गृहस्थहरूले पनि चाबहिल गणेशको मान्यता गर्दै आएको तथ्य प्रमाणित हुन्छ । यसका साथै चाबहिल गणेशमूर्तिलाई एउटा बौद्धचैत्यसँग जोडेर स्थापित गरिएबाट पनि बौद्धमार्गीहरूको चाबहिलगणेशसँग घनिष्ठ सम्बन्ध प्रमाणित हुन्छ । उक्त सबै प्रमाण र वर्तमान मान्यताको आधारमा चाबहिल गणेश उपत्यकाका महत्त्वपूर्ण विनायकहरूमध्ये एक हुन् भन्ने कुरा सिद्ध हुन्छ ।

**चन्द्रविनायकका मन्त्रात्मक प्रार्थनापद्य**

**नमामि देवं द्विरदाननन्तं यः सर्वविघ्नं हरते जनानाम् ।**
**धर्मार्थकामान् तनुतेऽखिलान् यो तस्मै नमो विघ्नविनाशनाय ।।**
**कृपानिधे ! ब्रह्ममयाय देव ! विश्वात्मने विश्वविधानदक्ष ।**
**विश्वस्य बीजाय जगन्मयाय त्रैलोक्यसंहारकृते नमस्ते ।।**
**त्रयीमयायाखिलबुद्धिदात्रे बुद्धिप्रदीपाय सुराधिपाय ।**
**नित्याय सत्याय च नित्यबुद्धे ! नित्यं निरीहाय नमोऽस्तु तुभ्यम् ।।**[६५]

५ ) श्रीजलविनायक

जलविनायक अर्थात् चोभार गणेश काठमाडौंका प्रसिद्ध चार विनायकमध्ये एक हुन् । पौराणिक कालमा नै प्रसिद्धि पाएका देवता हुनाले नेपाली समाजमा चोभारस्थित गणेशस्थान पवित्रतीर्थका रूपमा श्रद्धास्पद बनेर रहेको छ । हिमवत्खण्डअन्तर्गत 'नेपालमाहात्म्यम्' मा जलान्तर्वासी गणेशका रूपमा जलविनायकको निरूपण गरिएको छ । श्रीकृष्णले नेपालयात्रामा आउँदा नेपालका पवित्र स्थानहरूको निरूपण गर्दै भन्नुभएको छ- कूर्मगिरिको फेंदी बागमतीको पश्चिमतर्फ लोकपूजित जलविनायक रहनेछन्। त्यहाँ साधारण मानिसहरूद्वारा थाहा नपाइने गरी मेरो पनि पवित्र स्थान रहनेछ । यस पवित्र स्थानमा आई जलविनायक एवं मेरोसमेत दर्शन गर्नाले र बागमतीमा स्नान गर्नाले मानिसहरू पुण्यवान् हुने छन् ।[६६]

६१. पूर्ववत् ।
६२. पूर्ववत् ।
६३. पूर्ववत् ।
६४. पूर्ववत् ।
६५. गणेशपुराण उपासना खण्ड ६१/४१-४३ ।
६६. अस्य कूर्मगिरेर्मूले बाग्वत्याः पश्चिमेन तु। भविष्यति जलादन्तर्गणेशो लोकपूजितः।।
तत्रापि च मम स्थानं दुर्विज्ञेयं भविष्यति। स्नानादपि च बाग्वत्यां पुण्यवान् जायते नरः ।। - नेपालमाहात्म्यम् ११/११४-११६, पृ. ८० ।

पुराणमा समेत चर्चित देवता भएकाले जलविनायकको जनसाधारणमा प्रसिद्धि रहेको छ । ऐतिहासिक दृष्टिकोणबाट हेर्दा पनि वंशावली र अभिलेखहरूमा जलविनायकको वर्णन गरिएको पाइन्छ । चोभार गणेशस्थानमा रहेको ने.सं. ८०८ अर्थात् ई. १६८८ को अभिलेखमा पाटनका राजा श्रीनिवास मल्लकी छोरी कीर्तिमङ्गला र तिनका श्रीमान् अमर सिंहले चोभार गणेशस्थानमा पूजाउपासना गर्न आउने भक्तहरूको विश्रामका लागि धर्मशाला बनाएको उल्लेख गरिएको छ । कवि हरिवंशद्वारा लेखिएको उक्त अभिलेखमा सिंहदम्पतीले पूजाउपासना निरन्तर चलाउन गुठी राखेकोसमेत वर्णन गरिएको छ । त्यस अभिलेखमा चोभार गणेशलाई 'श्री ३ को इनाय भट्टारक' भनिएकाले प्राचीनकालदेखि नै चोभारगणेश जलविनायकका रूपमा प्रसिद्ध रहेको विषय पनि स्पष्ट हुन्छ ।[६७] जलविनायकको दोस्रो नाम चन्द्रविनायक हो । भाषा-वंशावलीमा चोभारका चन्द्रविनायक उपत्यकाका चार विनायकमध्ये एक हुन् भनिएको छ ।[६८]

भाषावंशावलीमा पाटनका राजा सिद्धिनरसिंह मल्लले चोभारमा चन्द्रविनायकको देवालय बनाएको उल्लेख गरिएको छ ।[६९] देवमाला वंशावलीमा ललितपुरका राजा श्रीनिवास मल्लले चोभार गणेशस्थानमा मन्दिर निर्माण गरेको विषयमा प्रकाश पारिएको छ ।[७०] राज्यप्रकाश मल्ललाई आँखाको रोग हुँदा श्रीगणेशको दोषबाट यो रोग भएको हो भन्ने ज्योतिषीको भनाइलाई विचार गरी तिनले चोभारगणेशको मन्दिर बनाई गजूर चढाएको कुरा भाषावंशावलीमा उल्लेख गरिएको छ ।[७१]

देवमालावंशावलीमा चोभार गणेशको मूर्ति र गणेशस्थानको विषयमा चलेको अनुश्रुतिलाई स्पष्ट गर्दै भनिएको छ– 'चोभार गणेशमन्दिरमा प्रत्यक्ष देखिने माथिको मूर्ति महादेवको मूर्ति हो । त्यो मूर्तिमुन्तिर श्रीगणेशको सानो आकारको मूर्ति रहेको छ । सिंहासन झिकेर हेर्दा गणेशको दर्शन हुन्छ । भित्र अन्धकार हुनाले त्यो गणेशको मूर्ति त्यति स्पष्ट देखिँदैन । सत्ययुगमा महादेवलाई ब्रह्महत्या लागेकाले गणेशले महादेवलाई तीर्थयात्रा गराएका थिए । तीर्थबाट फर्की चोभारमा आइपुग्दा गणेशलाई थकाई लाग्यो र त्यहीँ थचक्क बसे । त्यसैले माथि देखिने विशाल मूर्ति महादेवको हो र तल नदेखिने मूर्ति श्रीगणेशको हो।' कसैले माथिल्लो मूर्तिलाई भैरवको मूर्ति पनि भन्ने गरेका छन् ।[७२]

पौराणिक एवं ऐतिहासिक दृष्टिबाट महत्त्वपूर्ण र अपार जनआस्थाको केन्द्रका रूपमा रहेको जलविनायक-मन्दिरमा रहेका श्रीगणेशलाई ललितपुर भेगका जनताका सिद्धिदाता देवता हुन् भनिएको छ ।[७३] संवत् १९७४ मा देवशमशेरले चोभार गणेश मन्दिरको चौघेरा र सत्तल बनाएका थिए । संवत् १९९० को महाभूकम्पमा पनि चोभार गणेशस्थानमा कुनै क्षति नभएको तथ्य प्रसिद्ध छ । जलविनायकलाई आदिविनायकका रूपमा आराधना गरिन्छ । पृथिवी, जल, तेज, वायु र आकाश यी पाँच तत्त्वमध्ये सर्वप्रथम जलतत्त्वको सृष्टि भएको र श्रीगणेश जलका अधिष्ठाता मानिएकाले जलविनायकलाई आदिविनायक भनिने कुरा युक्तिसंगत देखिन्छ ।[७४]

६७. डा. जगदीशचन्द्र रेग्मी पूर्ववत् ।
६८. पूर्ववत् ।
६९. पूर्ववत् ।
७०. पूर्ववत् ।
७१. पूर्ववत् ।
७२. पूर्ववत् ।
७३. पूर्ववत् ।
७४. मिलनरत्न शाक्य, पूर्ववत्, पृ. १२ ।

बौद्धधर्मावलम्बीहरूले जलविनायकलाई वीरविघ्नान्तकका रूपमा आराधना गर्दछन् । मञ्जुश्रीले चोभारको डाँडो काटेर उपत्यकाको जल निष्कासन गराउँदा श्रीगणेश घटनाका प्रत्यक्षदर्शी देवताका रूपमा रहनुभएको भन्ने कुरामा बौद्धधर्मावलम्बीहरूको विश्वास रहेको पाइन्छ ।[३५] वास्तवमा चोभार गणेश त्यस क्षेत्रका विघ्नहर्ता र सिद्धिदाता देवताका रूपमा प्रसिद्ध हुनुहुन्छ । पानी र बाढीको समयमा चोभार गणेशमा आजापूजा गर्ने भक्तहरूले केही मनका कामनाहरू पूरा गराउन भाकल गरेर पूजा गर्नेसमेत चलन रहेको छ ।

### जलविनायकप्रार्थनापद्य

**नमस्ते सर्वरूपाय सर्वान्तर्यामिणे नमः । नमः सर्वकृते तुभ्यं सर्वदात्रे कृपालवे ॥**
**नमः सर्वप्रकाशाय नमस्तेऽनन्तशक्तये । नमः सर्वप्रबोधाय सर्वपात्रेऽखिलादय ॥**
**परब्रह्मस्वरूपाय निर्गुणाय नमो नमः । चिदानन्दस्वरूपाय वेदानामप्यगोचर ॥**
**मायाश्रयायामेयाय गुणातीताय ते नमः । सत्यायासत्यरूपाय गुणविक्षोभकारिणे ॥**
**शरणागतपालाय दैत्यदानवभेदिने । नमो नानावताराय विश्वरक्षणतत्पर ॥**
**अनेकायुद्धहस्ताय सर्वशत्रुनिवर्हण । अनेकवरदात्रे ते भक्तानां हितकारक ॥**
**देवानां जलरूपाणां स्वरूपाणि प्रयच्छ भोः । नास्मृतिः सर्वदा ते स्यात् तथा कर्तुमिहार्हसि ॥**[३६]

### ६ ) श्रीसिद्धिविनायक

भक्तपुर जिल्लाको मध्यपुर नगरपालिका वडा नं. ४ नगदेशमा श्रीसिद्धिविनायकको मन्दिर रहेको छ । यो मन्दिर कला र धर्म दुवै दृष्टिबाट महत्त्वपूर्ण मानिएको छ । यस गणेशस्थानमा आई साधकहरूले श्रीगणेशको उपासना गरेर सिद्धि प्राप्त गरेका कारण यो मन्दिर सिद्धिविनायक मन्दिर अथवा सिद्धिगणेशका नामबाट प्रसिद्ध छ । भगवान् गणेश सिद्धिविनायकका रूपमा भक्तहरूका लागि अतिश्रद्धेय देवता हुनुहुन्छ । भारतको मुम्बईमा प्रभादेवी क्षेत्रमा रहेको सिद्धिविनायकको मन्दिर यस्तै प्रसिद्ध देवस्थान हो । यो प्राचीन मन्दिर भारतवासीहरूका लागि अतिश्रद्धेय आराधनातीर्थका रूपमा रहेको छ । यसैगरी महाराष्ट्रको सिद्धटेकमा रहेको सिद्धिविनायक मन्दिरमा श्रीगणेशको स्वयंभूप्रतिमा रहेको छ । उडीसा प्रान्तको पुरी नामक सहरमा रहेको सिद्धिविनायक मन्दिरलाई उस्तै प्रभावशाली तीर्थ मानिन्छ । काशीमा विश्वनाथका सात आवरणमध्ये प्रथम आवरणमा रहेका सिद्धिविनायक अपूर्व आस्थास्पद बनेर रहेका छन् । नेपालमा पनि भक्तपुरमा विराजमान सिद्धिविनायक मन्दिरसरह अनेकौं ठाउँमा सिद्धिविनायकका मन्दिर एवं मूर्तिहरू रहेका छन् । तीमध्ये सिनामङ्गलको सिद्धिविनायक मन्दिर, गोर्खाको सिद्धिविनायक मन्दिर, देवघाटको सिद्धिगणेश मन्दिर र पाटनदरबारको सिद्धिविनायक मूर्ति ज्यादै प्रसिद्ध छन् ।

भाद्र शुक्ल चतुर्थीका दिन विशेष रूपमा आराधना गरिने भगवान् सिद्धिविनायकको गुणकीर्तन र महिमप्रकाशन अनेकौं पुराणहरूमा गरिएको पाइन्छ । भविष्यपुराणमा निरूपित सिद्धिविनायक पूजाविधि नेपाली समाजमा ज्यादै लोकप्रिय छ । यस पूजाविधिमा सिद्धिविनायकको ध्यानमा एकदन्त, शूर्पकर्ण,

---

३५ पूर्ववत् ।
३६ गणेशपुराण क्रीडाखण्ड, ३७/२-९ ।

चतुर्भुज, गजानन एवं पाशाङ्कुशधारी सिद्धिविनायकको प्रार्थना गरिएको छ ।[७७] काठमाडौं उपत्यकाका अशोकविनायक, जलविनायक, कार्यविनायक, सूर्यविनायक, सिद्धिविनायक, कमलविनायक, चन्द्रविनायक र रक्तविनायक गरी आठ विनायकमध्ये एउटा विनायकका रूपमा प्रसिद्ध यी सिद्धिविनायक तत्काल सिद्धि प्रदान गर्ने गणेशका रूपमा प्रसिद्ध छन् ।[७८]

पुराणहरूमा सिद्धिविनायकको अविर्भावसम्बन्धी कथा रहेका छन् । तीमध्ये गणेशपुराणको कथा यहाँ प्रस्तुत गरिँदै छ – मधु र कैटभ नामक दानवहरूसँग दीर्घकालसम्म युद्ध गर्दा भगवान् विष्णु पराजित हुनुभयो । चिन्तित श्रीविष्णुले युद्धमा सफलता प्राप्त गर्न आशुतोष भगवान् शङ्करको उपासना गर्नुभयो । श्रीविष्णुको तपस्याबाट प्रसन्न भई उहाँको चिन्ता बुझेर भगवान् शङ्करले भन्नुभयो - ती दुर्जेय दानवहरूमाथि विजय प्राप्त गर्न श्रीगणेशको आराधनामात्र एउटा अमोघ उपाय हो । तपाईं श्रीगणेशको स्मरण चिन्तन केही नगरीकन युद्धमा जानुभएकाले पराजय व्यहोर्नुपऱ्यो । तपाईंलाई श्रीगणेशको छ अक्षरको मन्त्र **'वक्रतुण्डाय हुम्'** प्रदान गर्दछु । यो सबै प्रकारका सिद्धि प्रदान गर्ने मन्त्र हो । यही मन्त्रको महिमा बताएर उहाँले श्रीविष्णुलाई मन्त्रदीक्षा दिनुभयो । त्यसपछि श्रीविष्णुले भूमण्डलमा विख्यात तपोवनमा गई विधिपूर्वक श्रीगणेशको पूजा गरेर षडङ्गन्यासपूर्वक उक्त मन्त्रको जपानुष्ठान गर्नुभयो ।

वर्षौंको अनुष्ठानपछि भगवान् विष्णुले करोडौं सूर्यसमान तेज र प्रभाले चम्किनुभएका, प्रसन्नवदन श्रीगणेशको दर्शन पाउनुभयो। दर्शन दिएपछि श्रीविष्णुलाई सम्बोधन गर्दै श्रीगणेशले भन्नुभयो- हे विष्णुदेव! तपाईंको आराधनाबाट म प्रसन्न भएको छु । तपाईंले चिताएका सबै कामना पूर्ण तुल्याउनेछु। तपाईं वर माग्नुहोस् । श्रीविष्णुले हात जोडेर बिन्ती गर्नुभयो - हे सिद्धिदाता प्रभु! ब्रह्मादि देवताहरूका लागि पनि दुर्लभ मानिएको हजुरको दर्शन मैले आज पाएको छु । अनेक रूप लिएर लीला गर्नुहुने र एउटै ब्रह्मका रूपमा पनि विराजमान हुनुहुने, कहिले निराकार, कहिले साकार, अणुभन्दा अणुरूप, महान्भन्दा पनि महत्तमरूप, सर्वसाक्षी, सृष्टि, पालन र संहारका देवता हजुरको दर्शन पाएर म कृतकृत्य भएको छु । हजुरको दर्शनसौभाग्य पाएको हुँदा मैले अवश्य सिद्धि पाउनेछु । हे ओङ्काररूप प्रभु! म मधु र कैटभको वध गर्न सफल हुन सकूँ, अरू दैत्यहरूमाथि विजयी भएर रहन पाऊँ । मेरो कीर्ति संसारमा फैलियोस् र हजुरका चरणमा मेरो निरन्तर भक्ति लागिरहोस् । भगवान् विष्णुको यो प्रार्थना सुनेर श्रीगणेश तथास्तु भनी अन्तर्धान हुनुभयो ।[७९] त्यसपछि देवता र मुनिहरूले सिद्धिविनायक नामकरण गरी श्रीगणेशको वन्दना एवं आराधना गरे । भगवान् विष्णुले सिद्धि प्राप्त गर्नुभएका कारण त्यो क्षेत्र संसारमा सिद्धिविनायक-क्षेत्रका नामबाट प्रसिद्ध भयो । यस प्रसङ्गबाट भगवान् सिद्धिविनायकको उपासना ऐहिक अभ्युदय र पारमार्थिक निःश्रेयसको प्राप्तिको लागि अमोघ उपाय हो भन्ने कुरा स्पष्ट हुन्छ ।[८०]

७७. *एकदन्तं शूर्पकर्णं गजवक्त्रं चतुर्भुजम् । पाशाङ्कुशधरं देवं ध्यायेत् सिद्धिविनायकम्।। - कर्मकाण्ड भास्कर, म.सं.वि. २०६४ ।*

७८. *पुरुषोत्तम दहाल, मन्दिरै मन्दिरको देश... ।*

७९. *गणेशपुराण उपासनाखण्ड १८ अध्याय ।*

८०. *तत आनन्दपूर्णोऽसौ मेने लब्धपुरी हरिः । प्रासादं निर्ममे तत्र स्फाटिकं भूरिरत्नकम्।।*
*लसत्काञ्चनशिखरं चतुर्द्वारसुशोभनम् । प्रतिमां स्थापयामास गण्डकीयोपलैः कृताम् ।।*
*देवाश्च मुनयः सिद्धिविनायक इति प्रथाम् । चक्रुरत्र यतः सिद्धिः प्राप्तेयं हरिणा शुभा।।*
*सिद्धिक्षेत्रं ततस्तत्तु पप्रथे भुवि सर्वशः । - गणेशपुराण, उपासनाखण्ड १८/२०-२३ ।*

**श्रीसिद्धिविनायकप्रार्थनापद्य**

ब्रह्मेशानाविन्द्रमुख्याश्च देवा यं त्वां द्रष्टुं नैव शक्तास्तपोभि: ।
तं त्वां नानारूपमेकस्वरूपं पश्ये व्यक्ताव्यक्तरूपं गणेशम् ।।
त्वं योऽणुभ्योऽणुस्वरूपो महद्भ्यो व्योमादिभ्यस्त्वं महान् सत्त्वरूप: ।
सृष्टिं चान्तं पालनं त्वं करोषि वारं वारं प्राणिनां दैवयोगात् ।।
सर्वस्यात्मा सर्वग: सर्वशक्ति: सर्वव्यापी सर्वकर्ता परेश: ।
सर्वद्रष्टा सर्वसंहारकर्ता पाता धाता विश्वनेता पिताऽसि ।।
एतादृशस्य ते देव ! दर्शनान्मम सिद्धय: । संभविष्यन्ति सर्वत्र तथाऽप्येकं वदामि ते ।।
ममैव योगनिद्रान्ते श्रुतेर्मलसमुद्भवौ । मधुकैटभौ महासत्त्वौ कं खादितुं समुद्यतौ ।।
ताभ्यामहं ततो युद्धं कृतवान् बहुवत्सरम् । तत: क्षीणबलश्चाहं शरणं समुपागत: ।।
अतो यथा तयोर्मत्तो वध: स्यात् तद् विचार्यताम् । अन्येषामपि दैत्यानां जयेन यश उत्तमम्।।
देहि मे परमेशान ! भक्तिं ते ह्यनपायिनीम् । यया मे कीर्तिरतुला त्रैलोक्यं पावयिष्यति ।।[८१]

७ ) कमलविनायक

भक्तपुर नगरपालिकाको पूर्वीभागको बजारक्षेत्रमा ठूलो पोखरीको डिलमा कमलविनायकको मन्दिर रहेको छ । कमलविनायकलाई उपत्यकाका आठ विनायकमध्ये एक विनायक मानिन्छ । भक्तपुर क्षेत्रमा कमलविनायकको ठूलो महिमा र मान्यता रहेको पाइन्छ । भक्तपुर कमलपोखरीको कमलविनायकको मन्दिरमा रहेका ने.सं. ७७५ र ने.सं. ९३५ का दुई अभिलेखमध्ये ७७५ को अभिलेखबाट धेरै भक्तहरूले कमलविनायकमा तोरण चढाएको कुरा ज्ञात हुन्छ । पहिलो अभिलेखमा भक्त तेजनारायणले कमलविनायकमा धर्मशाला तयार गरी प्रतिष्ठा गरेको तथ्य अवगत हुन्छ ।[८२]

कमलविनायकमा प्रत्येक मंगलबार, गणेशचौथी र माघ महिनामा दर्शनार्थीहरूको घुइँचो लाग्छ । कमलको आसनमा विराजमान भएका कारण यी गणेशको नाम कमलविनायक राखिएको सम्भावना गर्न सकिन्छ । पोखरीको डिलमा कमलविनायकको मन्दिर रहेकाले कमलका फूलहरूद्वारा पूजा गरिएको गणेश भन्ने अर्थमा पनि कमलविनायक नामकरण गरिएको हुनसक्छ । अर्कोतर्फ पौराणिक आधारलाई हेर्ने हो भने भगवान् गौरीनन्दन श्रीगणेशले त्रेतायुगमा पार्वतीको कोखबाट मयूरेश्वर अवतार लिनुभयो । त्यस अवतारमा १० वर्षको उमेरमा उहाँले घोरदैत्य कमलासुरको वध गर्नुभएको थियो । कमलासुरको वध गरिएता पनि त्यसको अतिशय पराक्रमबाट खुसी भई त्यसलाई उहाँले आफ्नो विश्वरूप दर्शन गराएको कुरा गणेश पुराणमा वर्णन गरिएको छ ।[८३] गणेशलीलाको यसै घटनालाई आधार बनाई श्रीगणेशको नाम कमलविनायक रहन गएको हुनसक्छ । कमलासुरको वध गरिएपछि मुनिहरूले कमलासुर गणेशको भावपूर्ण स्तुति गरेका थिए ।

८१. पूर्ववत् ।
८२. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।
८३. गणेशपुराण, २/१०३/२-३ ।

कमलविनायकका प्रार्थनापद्य

कमलाकान्तहृदय हृदयानन्दवर्धन । कमलाकान्तनमित कमलासुरनाशन ।।
कमलासेवितपद जय त्वं कमलाप्रद । कमलासनवन्द्येश कमलाकरशीतल ।।
कमलाङ्कसुपादाब्ज कमलाङ्कितसतकर । कमलाबन्धुतिलक, भक्तानां कमलाप्रद ।।
कमलासूनुरिपुज कमलासूनुसुन्दर । कमलापितृरत्नानां मालया जय शोभित ।।
कमलासुरवाणानां कमलेन निवारक । कमलाक्रान्त कमलकोशजित्कर पद्मज ।।
कमलापतिहस्तस्थपद्मकोशनिभेक्षण । सर्वहृत्कमलानन्द जय सर्वाघनाशन ।।
कमलाङ्कुशहस्ताब्ज जय विघ्नहराव्यय । एवं स्तुत्वा पुपूजुस्ते गौतमाद्या महर्षयः ।।[८४]

८) देवपत्तन पशुपतिका रक्तविनायक अथवा लालगणेश

भाषावंशावलीमा काठमाडौं–उपत्यकालाई चार भागमा विभाजन गरेर चार विनायकलाई क्रमशः ती ती विभागका रक्षक मानी विनायकहरूको महिमा प्रकाशन गरिएको छ । ती विनायकहरूमध्ये क्रमशः चोभारका चन्द्रविनायक, भक्तपुरका सूर्यविनायक, चाबहिलका श्वेतविनायक र देवपत्तनका रक्तविनायक रहेका छन् । यी चारै विनायकलाई आदिविनायक पनि भनिएको छ ।[८५] देवपत्तनमा त्यति प्रसिद्ध रक्तविनायकको छुट्टै मन्दिर नरहेकाले ती रक्तविनायक कुन हुन् त भन्ने जिज्ञासा हुन्छ । जिज्ञासाको समाधानका लागि प्राचीन वाङ्मय हेर्नुपर्ने हुन्छ । नेपाल माहात्म्यमा पशुपतिका द्वारपालविनायकको उल्लेख गरिएको छ । नेपालमण्डलको परिक्रमा गर्दा अन्तिममा पशुपतिमा आई द्वारपालविनायकको दर्शन गर्नुपर्नेसमेत उल्लेख भएकाले पशुपति मन्दिरको पूर्वपट्टिको प्राङ्गणमा रहेका लालगणेश नै द्वारपालविनायक हुन् भन्न सकिन्छ ।[८६]

भाषावंशावलीमा पशुपति क्षेत्रका गणेशमूर्तिहरूको उल्लेख गरिएको छ । पशुपतिनाथका दक्षिणढोकामा रहेका श्रीगणेश, पश्चिमढोकामा रहेका लम्बोदर दण्डपाणि गणेश, उत्तरढोकामा रहेका एकदन्त गणेश र पूर्वीढोकामा रहेका द्वारविनायक अथवा द्वारपालगणेश भनेर उल्लेख गरेको पाइन्छ ।[८७] धेरैजसो विद्वान्हरूले नेपालमाहात्म्यमा वर्णन गरिएका द्वारपाल गणेशलाई नै रक्तविनायक अथवा लालगणेश मानेका छन् । यिनलाई नमान्ने हो भने देवपाटनक्षेत्रमा अर्को प्रसिद्ध रक्तविनायकको मन्दिर जानकारीमा आएको छैन । आजका लालगणेशलाई नै भाषावंशावलीमा नेपालमण्डलको रक्षा गर्ने आदिविनायक मानिएको कुरा ठम्याउन सकिन्छ । शास्त्रीय महत्त्वका आधारमा प्रताप मल्लद्वारा बनाइएको रानीपोखरीको छेउमा रहेका सोह्रहाते गणेशलाई पनि उपत्यकाका महत्त्वपूर्ण आठ विनायकमध्ये एउटा विनायक मान्ने मत पनि रहेको छ ।

रक्तविनायकप्रार्थनापद्य

रक्तो रक्ताङ्गरागांशुककुसुमयुतस्तुन्दिलश्चन्द्रमौलिः
नेत्रैर्युक्तस्त्रिभिर्वामनकरचरणो वीजपूरातनासः ।

८४. पूर्ववत्, २/१०२ अध्याय ।
८५. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।
८६. पूर्ववत् ।
८७. पूर्ववत् ।

**हस्ताग्रक्लृप्तपाशाङ्कुशरदवरदोनागवक्त्रोऽहिभूषो**
**देवः पद्मासनो वो भवतु नतसुरो भूतये विघ्नराजः ।।**[८८]

**९ ) रानीपोखरीका सोह्रहाते गणेश**

काठमाडौंस्थित रानीपोखरीको नैऋत्य कोणमा सोह्रहाते गणेशको सानो मन्दिर रहेको छ । यसमा अठारौं शताब्दीको आरम्भमा राखिएको शक्तिसहित गणेशको मूर्ति रहेको छ । श्रीगणेशको मूर्ति विपरीत दिशातिर फर्केका दुई मुसामाथि उभिएको छ । देब्रे छातीपट्टि दुईपत्रे कमलमाथि सिद्धिको मूर्ति रहेको छ। यी गणेशका सोह्र हात छन् अर्थात् यी गणेश षोडशभुज छन् । यहाँको मूर्ति कालो रङ्गको साह्रो ढुङ्गाबाट बनाइएकाले मानिसहरू यिनलाई कालागणेश पनि भन्दछन् । दुवै मूर्तिमा घुँडासम्म वनमाला लत्रेको छ। गणेशले नाभिमा सर्पको यज्ञोपवीत धारण गरेका छन् ।[८९] लम्बोदर मूर्ति भएकाले यी गणेशलाई भुँडेगणेश पनि भनिन्छ । हुन त उपत्यकामा भुँडेगणेशका नामबाट अनेक गणेश प्रसिद्ध छन् तर आठ विनायकमध्ये गणना गरिने भुँडेगणेश रानीपोखरीका गणेशमात्र हुन् भन्ने धेरै मानिसहरूको विश्वास रहेको पाइन्छ ।[९०] रानीपोखरीको शक्तिसहित शोभायमान गणेशमूर्ति नेपालमा पाइने गणेशमूर्तिहरूमा प्रभावशाली मानिएको छ । राजा प्रताप मल्लले तीर्थहरूको समष्टि रूप रानीपोखरी तयार गरी त्यसको प्रतिष्ठा गर्दा ने.सं. ७९० मा अभिलेख राखेका थिए ।[९१]

नेपालमा शक्तिसहित गणेशलाई लक्ष्मीगणपति मानिने हुनाले रानीपोखरी गणेशमूर्तिलाई मन्त्रमहोदधिको निरूपणअनुसार लक्ष्मीगणपतिको मूर्ति हो भन्न सकिन्छ । लक्ष्मीगणपतिको शास्त्रीय स्वरूपसँग रानीपोखरीका सोह्रहाते गणेशको मूर्ति मिल्दोजुल्दो हुनाले यी विनायकलाई महत्त्वकै आधारमा आठ विनायकमध्ये एक मानिएको हुन सक्छ । अर्काथरि विद्वान्हरूको मतमा पशुपतिका लालगणेशलाई नै आठ विनायकमध्ये एक मानिएको कुरा उल्लेख गरिसकिएको छ। आठ विनायकमध्ये पर्नु र नपर्नुभन्दा पनि महत्त्वका दृष्टिबाट रानीपोखरीको सोह्रहाते श्रीगणेश उपत्यकाका सिद्धिदाता रक्षक र मनःकामनापूरक गणेशका रूपमा प्रसिद्ध छन् ।

**रानीपोखरीका लक्ष्मीगणपतिको प्रार्थनापद्य**

**दन्ताभये चक्रदरौ दधानं कराग्रगस्वर्णघटं त्रिनेत्रम् ।**
**धृताब्जयालिङ्गितमब्धिपुत्र्या लक्ष्मीगणेशं कनकाभमीडे ।।**

**१० ) कमलादी गणेशमन्दिर**

कमलादीमा रहेको प्राचीन गणेशमन्दिर घण्टाघरदेखि पूर्वतर्फ पर्दछ । कमलादी गणेशलाई काठमाडौंका प्रसिद्ध गणेशमध्येका एक गणेश मानिन्छ । यी गणेशलाई श्वेतगणेश पनि भनिन्छ । भुइँतले यस मन्दिरभित्र सुनको जलपले सुन्दर गराइएको मूर्तिले प्राचीन मूर्तिलाई छोपेको छ । यी गणेशको उत्पत्तिका सम्बन्धमा

---

८८. प्रपञ्चसार, १६/४९ ।
८९. गोविन्द टण्डन, पूर्ववत्, पृ. ६० ।
९०. पुरुषोत्तम डकाल, पूर्ववत् ।
९१. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।

भनिएको छ – 'प्राचीन कालमा हाल गणेशको मन्दिर रहेको ठाउँमा मानिस हराउने गरेकाले त्यसको कारण पत्ता लगाउन उत्खनन गर्दा गणेशको मूर्ति फेला पारी स्थापना गरिएको थियो ।'

कमलादी गणेशको पूजाआराधना गरेमा सिद्धि प्राप्त हुने र सन्तान नहुनेलाई सन्तान प्राप्त हुने जनविश्वास रहेको छ । कमलादी गणेशनामले यी गणेशको प्रसिद्धि भए तापनि कमलादि, कमलादी, कमलाति र कमलाक्षीसमेत गरी अनेकौं नामबाट सम्बोधन गरिने कमलादी शब्दको सम्बन्ध कमलातीर्थसँग रहेको छ । वास्तवमा उक्त गणेशसँग जोडिएका ती सबै नामहरू कमलातीर्थकै अपभ्रंश हुन् । कान्तिपुरका राजा जयज्योतिप्रकाश मल्लका पालाको ने.सं. ८७० को अभिलेखमा कमलादीलाई कमरात्रि भनिएको छ । श्री ५ राजेन्द्रका पालाको अर्को अभिलेखमा कमलातीर्थ भनिएको छ ।

श्री ५ पृथ्वीवीरविक्रम शाहले कमलादी गणेशको आराधनाबाट पुत्रसन्तान प्राप्त गरेपछि विशाल गणेशमन्दिर निर्माण गराउने उद्देश्यले तत्कालीन एकलाख मुद्रा मन्दिरमा अर्पण गरेका थिए । तान्त्रिकविधिद्वारा निर्मित उक्त गणेशमन्दिरको स्वरूप परिवर्तन गर्न नमिल्ने हुँदा मन्दिरका व्यवस्थापकहरूको अनुरोध अनुसार त्यो धनराशि उपत्यकाका अरू गणेशमन्दिरहरूको जीर्णोद्धार एवं नयाँ मन्दिर निर्माण गर्ने कार्यमा खर्च गरिएको अनुश्रुति रहेको छ ।[१२]

कमलादी गणेशको धातुमूर्ति सवा दुई फिट जति अग्लो छ । नागको आसन छ । नागका फणाहरू गणेशको शिरमाथि गई छाताको आकारमा रहेका छन् । चतुर्बाहुमूर्ति दक्षिणाभिमुख भएर रहेको छ । दाया भागमा अक्षमाला र मूला रहेका छन्, बायाँ भागमा बन्चरो र लड्डु छन् । शिरमा मुकुट छ । मूर्तिको शिरोभागमा रहेको धातुको चँदुवामा गणेशकै मूर्ति बनाइएको छ । मन्दिरको शैली अनौठो छ । मुख्य मन्दिर गुम्बजाकार छ र चार दिशामा चार खोपा रहेका छन् । सुनको मोलम्मा लगाइएको पीतलका पाताले छाइएको यो मन्दिर हिन्दू एवं बौद्ध दुवैथरिका भक्तहरूको आस्था केन्द्र बनेर रहेको छ ।

ने.सं. ८७० मा स्थापित कमलादी मन्दिरको अभिलेखमा महर्जन गुठीका गुठियारहरूले देवल बनाई छाना राखेको विवरण रहेकाले प्राचीन समयदेखि नै बौद्धधर्मानुयायी महर्जनहरूको यस मन्दिरसँग सम्बन्ध रहेको तथ्य प्रमाणित हुन्छ । यसै कारण मूर्तिको एउटा हातमा मूला रहेको देखिन्छ । मन्दिरको समीपमा नै बौद्धमूर्ति रहेको छ । त्यहाँ हालै स्थापित एउटा चैत्यका साथै त्यसको छेउमा रहेको सानो तलाउमा चैत्यस्तम्भ पनि रहेको छ । यी सबै तथ्यहरूबाट कमलादी गणेश मन्दिर हिन्दू एवं बौद्धमार्गीहरूको पवित्र आराधनास्थल हो भन्ने कुरा पुष्ट हुन्छ । कमलादी गणेशमन्दिरमा रहेका मूर्तिहरूबाट बौद्धमार्गीहरूले यी गणेशलाई विघ्नान्तक गणेशका रूपमा मान्दछन् भन्ने कुरा अवगत हुन्छ । लिच्छविकालिक जमयम्बीटोल अर्थात् हालको जमलटोलका स्थानगणपतिका रूपमा कमलादी गणेशले मान्यता पाउँदै आएको बुझिन्छ ।[१३]

## ११) चाँगुनारायणका आदिगणेश

भाषावंशावलीमा चाँगुनारायण स्थानमा गणेशपीठ रहेको वर्णन गरिएको छ । दोलागिरिमा गरुडनारायणको स्वरूप प्रकाशित भएपछि श्रीगणेशको पनि स्वरूप प्रकाशित भएको वर्णन त्यहाँ रहेको अभिलेखमा गरिएको छ ।[१४]

---

१२. प्रा.डा. मुकुन्द अर्यालबाट प्राप्त सूचनाको आधारमा ।
१३. डा. जगदीशचन्द्र रेग्मी, पूर्ववत् ।
१४. पूर्ववत् ।

१२ ) मणिगणेश पाटन

ललितपुरको मङ्गलबजारमा रहेको मणिगणेशको मन्दिर ऐतिहासिक एवं धार्मिक दृष्टिले महत्त्वपूर्ण मानिएको छ । राजा गुणकामदेवले सूर्यविनायक, मङ्गलविनायक र मणिगणेशको स्थापना गरेको ऐतिहासिक वर्णन पाइन्छ । यस मन्दिरको निर्माण राजा मणिचूडबाट भएको भन्ने तथ्य भाषावंशावलीहरूबाट ज्ञात हुन्छ । साकेत नगरका राजा मणिचूडले मणिचूड पर्वतमा यज्ञ सम्पन्न गरेपछि मणिगणेशको स्थापना गरेका हुन् भन्ने वर्णन अर्कोथरि वंशावलीमा पाइन्छ । गुणकामदेवले अनावृष्टि निवारण गर्न पाटनका अनेक देवी-देवताका साथै मणिगणेशको पनि स्थापना गरेका हुन् भन्ने कुरा भाषावंशावलीमा लेखिएको छ । उक्त सन्दर्भहरूबाट मणिगणेशको स्थापनाविषयमा बेग्लाबेग्लै मतहरू देखिए पनि मणिगणेशको व्यापक महत्त्व भने उजागर हुन्छ ।[१५]

१३ ) भक्तपुर तुलजामन्दिरको गणेशमूर्ति

भक्तपुर तुलजा मन्दिरको ढोकैनिर स्थापना गरिएको गणेशमूर्तिको धार्मिक र ऐतिहासिक महत्त्व रहेको छ । तुलजाको द्वारमा रहेका श्रीगणेशको पूजा गरेपछिमात्र तुलजा भवानीको पूजा गर्ने परम्परा रहिआएको छ । भाषावंशावलीमा यी गणेशसँग सम्बद्ध एउटा आख्यान रहेको छ – सिम्रौनगढका राजा हरिसिंह देवलाई आफ्नी इष्टदेवता तुलजा भवानीले सपनामा भनिन् – 'यहाँ विधर्मीहरूको उपद्रव बढ्दै गयो, तिमीले मेरो मूर्ति र यन्त्र साथमा लिई उत्तरदिशातर्फ भक्तपुरमा गएर मेरो स्थापना गर ।' तुलजा भवानीको सन्देश पाएर ती राजा भक्तपुर आइपुगे । भक्तपुरका राजा जयभीमले हरिसिंह देवलाई तुलजाको मन्दिर बनाउने अनुमति दिए । तुलजाले सपनामा भक्तपुरमा दाक्षिणात्य ब्राह्मणको घरजग्गा रहेको ठाउँ साह्रै पवित्र छ, त्यहीं मेरो मन्दिर बनाऊ भनिन् । त्यसपछि हरिसिंह देवले दाक्षिणात्य ब्राह्मणसँग मन्दिर बनाउन जग्गा दिन अनुरोध गरे, तर ती ब्राह्मणले स्वीकार गरेनन् । यो कुरा थाहा पाएर भक्तपुर नरेश जयभीमदेवले ती ब्राह्मणको जग्गा जबर्जस्ती खोसेर लिए । जग्गा हरिएको चोटमा ती दाक्षिणात्य ब्राह्मणले घाँटी सेरी आत्महत्या गरे । हरिसिंह र जयभीमलाई ब्रह्महत्या लागेकोमा साह्रै पीर पर्‍यो । तिनीहरूले सात दिनसम्म अन्न-जल त्याग गरी तुलजा मूर्तिका सामु धर्ना दिए । तुलजा ईश्वरीले सपनामा – 'ती ब्राह्मण स्वयं गणेशरूप हुन्, तिनको घाँटी पहिलेदेखि नै सेरिएको थियो, तिमीहरूलाई हत्याको दोष लाग्दैन, मेरो मन्दिरको ढोका रहने ठाउँमा तिनको लाश गाडी मेरो मन्दिर तयार गरेर प्रतिष्ठा गर । सर्वप्रथम ती द्वारगणेशको पूजा गरी मेरो पूजा गर्नुपर्दछ' भनी आज्ञा दिइन् । तदनुसार मन्दिर तयार गरियो र गणेशमूर्ति प्रतिष्ठाका साथ तुलजाको यन्त्र एवं मूर्तिको प्रतिष्ठा पनि गरियो । अहिले त्यहाँ दैनिक पूजामा सर्वप्रथम द्वारगणेशको पूजा गरिन्छ र त्यसपछि तुलजा भवानीको पूजा-उपासना गरिन्छ ।[१६]

१४ ) कमलाक्षी गणेशमूर्ति

कमलाक्षीमा हाल रानीपोखरी राष्ट्रिय नाचघरबाट असनतिर जाँदा सडकको देब्रेतिर पर्खालमा अड्याएर राखिएको एक गणेशमूर्ति रहेको छ । यस मूर्तिमा बलि नचढ्ने हुँदा शाकाहारी भक्तहरूले यहाँ

१५. पूर्ववत् ।
१६. पूर्ववत् ।